रहेथे ॥१८॥ अतिशय शीतल र स्नेहयुक्त नेत्र भएका महाराज पृथुले सर्वतिर हेरेर सम्पूर्ण सभालाई प्रसन्न पारेर भन्न आरम्भ गरे ॥१९॥ तिनको भाषा सार्है मीठो, मनोहर विचित्र शब्दहरूले युक्त, अतिशय मधुर, सुन्दर, गम्भीर तथा भ्रान्तिहीन थियो। जस्तै सबैको उपकारार्थ ती आफ्ना अनुभव प्रकट गरिरहेका हुन् ॥२०॥ राजा पृथुले भने–हे सभ्यगण! तपाईं सबैको कल्याण होस्। जो-जो यहाँ आउनु भएको छ—मेरो कथनसुन्नोस्। साधुपुरुषका समक्ष धर्मका जिज्ञासुहरूलाई आफ्नू मनको कुरा निवेदन गरिदिनु आवश्यक हुन्छ ॥२१॥ यस लोकमा मलाई सबैले प्रजाको दण्डधर राजा तुल्याए। म प्रजालाई दण्ड दिने, तिनको रक्षा गर्ने, तिनलाई आजीविका प्रदान गर्ने र तिनलाई पृथक्-पृथक् आफाफ्ना मर्यादामा

रस्निग्धताराक्षः समैक्षतः समन्तत ॥ ऊचिवानिदमुर्वीशः सदः संहर्षयन्निव ॥ १६ ॥ चारु चित्रपदं श्लक्ष्णं मृष्टं गूढमविक्लवम् ॥ सर्वेषामुपकारार्थं तदा अनुवदन्निव ॥ २० ॥ राजोवाच ॥ सभ्याः शृणुत भद्रं वः साधवो य इहागताः ॥ सत्सु जिज्ञासुभिर्धर्ममावेद्यं स्वमनीषितम् ॥ २१ ॥ अहं दण्डधरो राजा प्रजानामिह योजितः ॥ रक्षिता वृत्तिदः स्वेषु सेतुषु स्थापिता पृथक् ॥ २२ ॥ तस्य मे तदनुष्ठानाद्यानाहुर्ब्रह्मवादिनः ॥ लोकाः स्युः कामसंदोहा यस्य तुष्यति दिष्टदृक् ॥ २३ ॥ य उद्धरेत्करं राजा प्रजा धर्मेष्वशिक्षयन् ॥ प्रजानां शमलं भुंक्ते भगं च स्वं जहाति सः ॥ २४ ॥ तत्प्रजा भर्तृपिण्डार्थं स्वार्थमेवानसूयवः ॥ कुरुताधोक्षजधियस्तर्हि मेऽनुग्रहः कृतः ॥ २५ ॥ यूयं तदनुमोदध्वं पितृदेवर्ष-

स्थित राख्ने राजा हुँ ॥२२॥ अतः कर्महरूका साक्षी भगवान् जोसित प्रसन्न हुन्छन्, ती पुरुषहरूको निम्ति जुन सबै कामनाहरू पूर्ण गर्ने भएका लोक ब्रह्मवादीहरूद्वारा बताइएका छन्, प्रजा-पालन गर्नाले मलाई पनि ती लोक प्राप्त होउन् ॥२३॥ जुन राजा प्रजालाई धर्ममार्गको शिक्षा दिँदैनन् र प्रजाबाट कर लिन्छन्, त्यो राजा प्रजाका पापको भागी बन्दछ र आफ्नो ठूलो ऐश्वर्यबाट भ्रष्ट भएर जान्छ ॥२४॥ अतएव हे प्रजागण! आफ्नो स्वामीस्वरूप म राजाको परलोक सपार्ने साधन गर्दै तपाईंहरू दोषदृष्टिले रहित भएर ❁नारायणको इच्छानुसार चल्दै र उनैको चिन्तन गर्दै आफाफ्नू धर्म पालन गर्दै रहो। मप्रति यहाँहरूको यही ठूलो कृपा हुनेछ ॥२५॥ हे निर्मल स्वभावका देवता! पितृ! ऋषिगण! यहाँहरू सबै जना मेरो

---

❁ उदाहरण (हरि इच्छा)—पौटा लुगा बुन्ने बुनकर उद्योगी, सत्यवक्ता र प्रभुप्रेमी थियो। गाउँका मानिस त्यसको विश्वास र प्रेम गर्दथे। त्यो सबै कर्ममा रामको इच्छाधीन रहन्थ्यो। जब त्यो लुगा बुनेर बजारमा बेच्न जान्थ्यो र मानिस मूल्य सोध्थे, अनि ऊ भन्दथ्यो—'रामको इच्छाले सूतको मोल एक रुपैयाँ, रामको इच्छाले पारिश्रमिक चार आना, रामको इच्छाले नाफा दुइ आना, रामको इच्छाले एक रुपैयाँ छ आना।' एक दिन बेलुका अबेरसम्म त्यो बाहिर दलानमा बसेको थियो। त्यसै बखत चोरहरू आइपुगे। तिनले त्यसलाई बलपूर्वक भारी बोकाउन समातेर लगे। चोरहरूले मालको पोको पारेर बुनकरको टाउकोमा राखे। त्यसै बखत पुलिस आइपुग्यो। चोर भागिगए, त्यो बुनकर पक्रियो। पुलिसले भोलिपल्ट त्यसलाई अड्डामा हाजिर गरे। तर सारा गाउँका मानिस भएर भने—'यो बुनकर सार्है असल मानिस छ।' हाकिमले भन्यो—'ए बुनकर! सत्य-सत्य भन, के भयो?' बुनकरले उत्तर दियो—'रामको इच्छाले म घरको बाहिर दलानमा बसेको थिएँ, रामको इच्छाले चोरको जमात आयो, रामको इच्छाले तिनले मलाई आज्ञित समातेर लगे, रामको इच्छाले चोरहरूले चोरीको मालको पोको मेरो टाउकामा राखे, रामको इच्छाले पुलिस आइपुग्यो, रामको इच्छाले उसले समाती मलाई यहाँ हाजिर गरायो।' बुनकरको स्पष्ट र निर्दोष कुराले हाकिम धेरै प्रसन्न भयो र त्यसलाई छाडिदियो। बाटोमा कसैले सोध्यो—'किन भाई! कहाँबाट आइरहेका हौ?' बुनकरले भन्यो—रामको इच्छाले पुलिस द्वारा पक्रिएँ, तर अब रामको इच्छाले घर गइरहेको छु।'

मनाइको अनुमोदन गरून् किनकि कुनै कर्म भए पनि देह-त्याग गरेपछि त्यसको कर्ता, शिक्षक तथा उसको अनुमोदन गर्ने व्यक्तिलाई समान फल प्राप्त हुन्छ ॥२६॥ हे पूजनीय साधु-श्रेष्ठ जन ! केही महानुभावहरूको मतमा—कर्महरूको फल दिने एकमात्र भगवान् यज्ञपति हुन्, किनकि इहलोक तथा परलोक दुवै ठाउँमा केही स्थान बर्ता तेजयुक्त देखिन्छन् ॥२७॥ मनु, उत्तानपाद, ध्रुव, राजर्षि प्रियव्रत तथा हाम्रा पिता महाराज अङ्ग, यसै प्रकार ब्रह्मा, महादेव, प्रह्लाद तथा बलि आदि अन्य महापुरुषहरूका मतमा सबै कार्य विष्णु भगवान्‌के प्रेरणाले सम्पन्न हुन्छन् ॥२८॥२९॥ जो अत्यन्त शोचनीय मानिस धर्ममार्गबाट विमुख रहन्छन्, ती मृत्युका दौहित्र वेन आदिलाई छाडेर प्रायः सबै मतमा धर्म, अर्थ, काम, मोक्षरूपी चतुर्वर्ग र स्वर्गलोक प्रदान गर्ने एक मात्र भगवान् नै कहिएका छन् ॥३०॥ उनका चरणको सेवाले सदासर्वदा बढ्ने प्रीति तपस्वीहरूको विविध जन्मका संचित मनोमललाई उसै प्रकार नष्ट पारिदिन्छन्, जसरी भगवान्‌का चरण-नखबाट निस्केकी श्रीगङ्गाजी सबै पापलाई हरण गरिदिन्छिन् ॥३१॥ तिनका चरणको आश्रय लिने प्राणी मनोमलबाट मुक्त भएर जान्छ र

योऽमला: ॥ कर्तुः शास्तुरनुज्ञातुस्तुल्यं यत्प्रेत्य तत्फलम् ॥ २६ ॥ अस्ति यज्ञपतिर्नाम केषांचिदर्हसत्तमाः ॥ इहामुत्र च लक्ष्यन्ते ज्योत्स्नावत्यः क्वचिद्भुवः ॥ २७ ॥ मनोरुत्तानपादस्य ध्रुवस्यापि महीपतेः ॥ प्रियव्रतस्य राजर्षेरङ्गस्यास्मत्पितुः पिता ॥ २८ ॥ ईदृशानामथान्येषामजस्य च भवस्य च ॥ प्रह्लादस्य बलेश्चापि कृत्यमस्ति गदाभृतः ॥ २९ ॥ दौहित्रादीनृते मृत्योः शोच्यान्धर्मविमोहितान् ॥ वर्गस्वर्गापवर्गाणां प्रायेणैकात्म्यहेतुना ॥ ३० ॥ यत्पादसेवाभिरुचिस्तपस्विनामशेषजन्मोपचितं मलं धियः ॥ सद्यः क्षिणोत्यन्वहमेधती सती तथा पदाङ्गुष्ठविनिःसृता सरित् ॥ ३१ ॥ विनिर्धुताशेषमनोमलः पुमानसङ्गविज्ञानविशेषवीर्यवान् ॥ यदङ्घ्रिमूले कृतकेतनः पुनर्न संसृतिं क्लेशवहां प्रपद्यते ॥ ३२ ॥ तमेव यूयं भजतात्मवृत्तिभिर्मनोवचःकायगुणैः स्वकर्मभिः ॥ अमायिनः कामदुघाङ्घ्रिपङ्कजं यथाधिकारावसितार्थसिद्धयः ॥ ३३ ॥ असाविहानेकगुणोऽगुणोऽध्वरः पृथग्विधद्रव्यगुणक्रियोक्तिभिः ॥ संपद्यतेऽर्थाशयलिङ्गनामभिर्विशुद्धविज्ञानघनः स्वरूपतः ॥ ३४ ॥ प्रधानकालाशयधर्मसंग्रहे शरीर एष प्रतिपद्य चेतनाम् ॥ क्रियाफलत्वेन विभुर्विभाव्यते यथाऽनलो दारुषु तद्गुणात्मकः ॥ ३५ ॥ अहो ममामी वितरन्त्यनुग्रहं हरिं गुरुं यज्ञभुजामधीश्वरम् ॥ स्वधर्मयोगेन यजन्ति मामका निरन्तरं क्षोणितले दृढव्रताः ॥ ३६ ॥ मा जातु तेजः प्रभवेन्महर्द्धिभिस्तितिक्षया तपसा

आत्मज्ञानबाट विशेष बल प्राप्त गरेर यस दुःखमय संसार-चक्रमा पर्दैन ॥३२॥ अतएव हे प्रजावर्ग ! सबैलाई आफ्‌आफ्ना अधिकारको अनुसार फल अवश्य प्राप्त हुन्छ, यो सोचेर तपाईं-हरू—जसका चरण-कमल सबै कामनाका दाता छन्, ती प्रभुको नै न्यायपूर्वक उपार्जित सामग्रीहरू, मन, वाणी, शरीरका क्रियाहरू एवं स्वधर्म पालनद्वारा छल-कपट त्यागेर भज्नुपर्दछ ॥३३॥ ती निर्गुण भगवान्—जो आफ्नो स्वरूपले विशुद्ध विज्ञानघन छन्—विविध प्रकारका द्रव्य, गुण, क्रिया तथा स्तोत्र आदिले पूजित भएपछि अर्थ, आशय, लिङ्ग तथा नामादिले युक्त पार्दछन् ॥३४॥ ती सर्वव्यापक प्रभु स्वयं प्रकृति, काल, अन्तःकरण तथा वासनाहरूका समूहरूपी शरीरमा चेतना भावमा प्राप्त भएर, जस्तै—यति अग्नि भिन्न-भिन्न काठहरूमा उनकै आकृतिको अनुरूप देखिन्छन्, त्यस्तै नै यज्ञादि क्रियाहरूको फलले ती विविध प्रकारका देखिन्छन् ॥३५॥ यस पृथ्वीतलमा मेरो जो प्रजाजन यज्ञभाग भोक्ताहरूका पनि अधीश्वर

एवं सद्गुरु भगवान्‌लाई आफ्नो वर्णाश्रमधर्महरूद्वारा सर्वदा पूजा गर्दछन्, तिनको ममाथि असाधारण कृपा छ ॥ ३६ ॥ अतुल ऐश्वर्ययुक्त राजकुलमा प्रकट हुने भएको तेज, महा- शीलता, तप तथा विद्याले देदीप्यमान एवं एकमात्र विष्णु भगवान्‌लाई नै इष्टदेव मान्ने ब्राह्मणहरूका वंशमा हामी कहिल्यै आफ्नो प्रभाव पार्न नसकौं ॥३७॥ ब्रह्मादि देवताहरूका परम आराध्य, ब्राह्मण-भक्त एवं पुराण-पुरुष नारायणले पनि सर्वदा इनै ब्राह्मणहरूका चरणको वन्दना गरेर नै कहिल्यै पनि पर नहुने लक्ष्मी तथा समस्त संसारलाई पवित्र पार्ने कीर्ति पाएको छ ॥ ३८ ॥ अतएव जसको सेवाले अन्तःकरणमा स्थित, स्वप्रकाश तथा ब्राह्मणहरूका अतिशय प्रिय श्रीहरि साह्रै प्रसन्न हुन्छन्, ती श्रीहरिका धर्महरूको नै आचरण गर तपाईंहरूले पनि नियमपूर्वक सबै प्रकारले ती ब्राह्मण-कुलको सेवा गर्नुपर्दछ ॥ ३९ ॥ जसको सेवा गर्नाको कारणले नै मनुष्य सहजै स्वतः शुद्ध चित्तले तत्काल अत्यन्त शान्ति प्राप्त गर्दछ, ती ब्राह्मणहरू बाहेक देवताहरूको अरु कुन मुख हुन सक्दछ ? । ४० ॥ सबै उपनिषद् जसलाई 'ज्ञानानन्दस्वरूप' प्रतिपादन गर्दै एकमात्र जसलाई नै मनन गर्दछन्,

विद्यया च ॥ देदीप्यमानेऽजितदेवतानां कुले स्वयं राजकुलाद्द्विजानाम् ॥ ३७ ॥ ब्रह्मण्यदेवः पुरुषः पुरातनो नित्यं हरिर्यच्चरणाभिवन्द- नात् ॥ अवाप लक्ष्मीमनपायिनीं यशो जगत्पवित्रं च महत्तमाग्रणीः ॥ ३८ ॥ यत्सेवयाऽशेषगुहाशयः स्वराड्विप्रप्रियस्तुष्यति काममीश्वरः ॥ तदेव तद्धर्मपरैर्विनीतैः सर्वात्मना ब्रह्मकुलं निषेव्यताम् ॥ ३९ ॥ पुमाँल्लभेतानतिवेलमात्मनः प्रसीदतोऽत्यन्तशमं स्वतः स्वयम् ॥ तन्नित्यसम्बन्धनि- षेवया ततः परं किमत्रास्ति मुखं हविर्भुजाम् ॥ ४० ॥ अश्नात्यनन्तः खलु तत्त्वकोविदैः श्रद्धाहुतं यन्मुख इज्यनामभिः ॥ न वै तथा चेतनया बहिष्कृते हुताशने पारमहंस्य पर्यगुः ॥ ४१ ॥ यद्ब्रह्म नित्यं विरजं सनातनं श्रद्धातपोमङ्गलमौनसंयमैः ॥ समाधिना बिभ्रति सार्थदृष्टये यत्रेदमादर्श इवावभासते ॥ ४२ ॥ तेषामहं पादसरोजरेणुमार्या वहेयाधिकिरीटमायुः ॥ यं नित्यदा बिभ्रत आशु पापं नश्यत्यमुं सर्वगुणा भजन्ति ॥ ४३ ॥ गुणायनं शीलधनं कृतज्ञं वृद्धाश्रयं संवृणुतेऽनु संपदः ॥ प्रसीदतां ब्रह्मकुलं गवां च जनार्दनः सानुचरश्च मह्यम् ॥ ४४ ॥ मैत्रेय उवाच ॥ इति ब्रुवाणं नृपतिं पितृदेवद्विजातयः ॥ तुष्टुवुर्हृष्टमनसः साधुवादेन साधवः ॥ ४५ ॥ पुत्रेण जयते लोकानिति सत्यवती श्रुतिः ॥ ब्रह्मदण्डहतः पापी

ती भगवान् अनन्त तत्त्वज्ञानीहरूद्वारा पूजनीय इन्द्रादि देवगणको नामले ब्राह्मणहरूको मुखमा श्रद्धापूर्वक हवन गरिएका पदार्थ जति स्वादले ग्रहण गर्दछन्, त्यति नै प्रेमले अचेतन अग्निमा हवन गरिएको पदार्थहरू गर्दैनन् ॥४१॥ जसमा यो सारा प्रपञ्च दर्पणमा दृश्यमान प्रतिबिम्ब झैं प्रतीत भइरहेको थियो । त्यस नित्य, शुद्ध तथा सनातन वेदलाई जो परमार्थ जान्नको निम्ति श्रद्धा, तप, मङ्गलमय आचरण, मौन, संयम तथा समाधिद्वारा धारण गर्दछन् । हे आर्यगण ! ती ब्राह्मणका चरण-कमलको धूलो म यावज्जीवन आफ्नो मुकुटमा धारण गर्दछु, किनकि त्यसलाई धारण गर्ने व्यक्तिका सबै पाप तत्काल क्षीण भएर जान्छन् र त्यसमा समस्त गुण स्वयं आएर उपस्थित हुन्छन् ॥ ४२॥४३ ॥ त्यस अखिल गुणधाम, शीलधन, कृतज्ञ तथा गुरुजनका आश्रय-दाता पुरुषलाई सबै सम्पत्तिहरू वरण गरिलिन्छन् । अतः म त यति चाहन्छु कि ब्राह्मण वंश, गोवंश तथा आफ्ना सबै भक्तसमेत श्रीभगवान् ममाथि प्रसन्न होउन् ॥ ४४ ॥ मैत्रेयजी भन्दछन्—हे विदुरजी ! महाराज पृथुले यति भनिसकेपछि देवता, पितृ र विप्रगण धेरै सन्तुष्ट

भए र सबै साधुजन प्रसन्न चित्तले 'साधु-साधु' भन्दै तिनको प्रशंसा गर्नलागे ॥ ४५ ॥ उनले भने—'पुत्रका कर्मले पिता पुण्यलोक प्राप्त गर्दछन्'—यो श्रुति वाक्य उचित छ, किनकि पापी राजा वेन ब्राह्मणका श्रापले नष्ट भएर पनि आफ्ना पुत्र महाराज पृथुको प्रभावले नरक लोकलाई नाघिसकेका छन्' ॥ ४६ ॥ यसै प्रकार हिरण्यकशिपु पनि भगवान्को निन्दा गर्नाले नरकमा पर्न आँटेको थियो, तर छोरो प्रह्लादको पुण्यले उसले पनि नरक नाघिसकेको थियो ॥४७॥ हे पृथ्वीका पिता महाराज पृथु ! सबै लोकका यौटै प्रभु श्रीहरिमा हजुरको यस्तो प्रौढ भक्ति छ, अतः हजुर अनन्त वर्षसम्म बाँचिरहनोस ॥ ४८ ॥ हे पवित्रकीर्ति ! ठूलो हर्षको कुरा यो हो कि हजुर ब्राह्मण-भक्त उत्तमश्लोक-शिरोमणि हरिका कथाहरू व्यक्त गर्ने गर्नुहुन्छ । अनि हजुर झैं स्वामी पाएर आज हामीले भगवान्लाई नै आफ्ना स्वामीरूपमा पाए झैं छ ॥४९॥ हे नाथ ! आफ्ना आश्रितलाई उपदेश दिनु हजुरको निम्ति कुनै आश्चर्यको कुरा होइन, आफ्ना प्रजामा प्रेम गर्नु दयालु महापुरुषको स्वभाव नै हुन्छ ॥ ५० ॥ हे प्रभो ! हामीहरू दैव नामक प्रारब्ध कर्मको कारणले नै विवेक-भ्रष्ट

यद्वद्वेनोऽप्यतरत्तमः ॥ ४६ ॥ हिरण्यकशिपुश्चापि भगवन्निन्दया तमः ॥ विविक्षुरत्यगात्सूनोः प्रह्लादस्यानुभावतः ॥ ४७ ॥ वीरवर्य पितः पृथ्व्याः समाः संजीव शाश्वतीः ॥ यस्येदृश्यच्युते भक्तिः सर्वलोकैकभर्तरि ॥ ४८ ॥ अहो वयं ह्यद्य पवित्रकीर्ते त्वयैव नाथेन मुकुन्दनाथाः ॥ य उत्तमश्लोकतमस्य विष्णोर्ब्रह्मण्यदेवस्य कथां व्यनक्ति ॥४९॥ नात्यद्भुतमिदं नाथ तवाजीव्यानुशासनम् ॥ प्रजानुरागो महतां प्रकृतिः करुणात्मनाम् ॥५०॥ अद्य नस्तमसः पारस्त्वयोपासादितः प्रभो ॥ भ्राम्यतां नष्टदृष्टीनां कर्मभिर्दैवसंज्ञितैः ॥ ५१ ॥ नमो विवृद्धसत्त्वाय पुरुषाय महीयसे ॥ यो ब्रह्मक्षत्रमाविश्य बिभर्तीदं स्वतेजसा ॥ ५२ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे एकविंशोऽध्यायः ॥ २१ ॥ मैत्रेय उवाच ॥ जनेषु प्रगृणत्स्वेवं पृथुं पृथुलविक्रमम् ॥ यत्रोपजग्मुर्मुनयश्चत्वारः सूर्यवर्चसः ॥१॥ ताँस्तु सिद्धेश्वरान्राजा व्योम्नोऽवतरतोऽर्चिषा ॥ लोकानपापान्कुर्वत्या सानुगोऽचष्ट लक्षितान् ॥ २ ॥ तद्दर्शनोद्गतान्प्राणान्प्रत्यादित्सुरिवोत्थितः ॥ सदस्यानुगो वैन्य इन्द्रियेशो गुणानिव ॥ ३ ॥ गौरवाद्यन्त्रितः सभ्य प्रश्रयानतकन्धरः ॥ विधिवत्पूजयाञ्चक्रे गृहीताध्यर्हणासनान् ॥ ४ ॥ तत्पादशौचसलिलैर्मार्जितालकबन्धनः ॥ तत्र शीलवतां वृत्तमाचरन्मानयन्निव ॥ ५ ॥

भएर भौंतारी रहेथ्यौं, आज बल्ल हजुरले यस अज्ञानान्धकारबाट पल्लोतिर पुन्याउनु भयो ॥ ५१ ॥ अतः जो ब्राह्मण तथा क्षत्रियरूपले यस जगत्को पालन गर्दछन् ती बुद्धिमान तथा सत्त्वगुण सम्पन्न पूजनीय पुरुषोत्तमलाई मेरो प्रणाम छ ॥ ५२ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां एकविंशोऽध्यायः ॥ २१ ॥ ( महाराज पृथुलाई सनकादि मुनिहरूको उपदेश ) मैत्रेयजी भन्दछन्—हे विदुर ! जब सबै प्रजाजन महापराक्रमी राजा पृथुको यसरी स्तुति गर्दै थिए, उसै बखत सूर्य झैं तेजस्वी सनकादि चारै जना मुनीश्वर त्यहाँ आउन लागेका देखिए ॥१॥ अनुचर सहित राजा पृथुले पनि सबैलोकलाई निष्पाप पार्न आफ्नो कान्तिले बल्दा ती सिद्धेश्वरहरूलाई आकाशमार्गबाट तल बर्तन लागेका देखे ॥२॥ जस्तै जीव गुणहरूमा लोभिएर इन्द्रियतिर ढल्कन्छन्, त्यसै गरी तिनको दर्शनले उनीतिर जाँदो आफ्नो प्राणलाई मानौं रोक्ने इच्छाले नै ती आफ्ना अनुचरसहित जुरुक्क उठे ॥ ३ ॥ अनि तिनको गौरवले कुण्ठित-बुद्धि शिष्ट-सम्राट् पृथुले विनयवश घाँटी न्यूराएर तथा आसनादि प्रदान गरेर ती मुनिहरूको विधिवत् अभ्यर्थना गरे ॥ ४ ॥ जसका केशमाथि मुनिहरूः।

चरणोदक परेको थियो, ती महाराज पृथुले उनी सदाचार-सम्पन्न पुरुषहरूको आचारको आदर गर्नका लागि त्यस्तै आचरण गर्दै अतिशय प्रसन्न भएर आफ्ना आश्रममा स्थित अग्नि-को समान दीप्त सुवर्ण-सिंहासनमा बसेका भगवान् शङ्करका अग्रज ती सनकादि मुनीश्वरसित श्रद्धा र संयमपूर्वक भने ॥ ६ ॥ महाराज पृथु भन्दछन्—हे मङ्गलमूर्त ! मैले यस्तो कुन शुभ कर्म गरेछु, जसले गर्दा मलाई हजुरजस्ता महानुभावहरूको दर्शन प्राप्त भयो—योगिहरूलाई पनि अतिशय दुर्लभ छ ॥ ७ ॥ जसमा सबै ब्राह्मण, अनुचर सहित शिवजी र विष्णु भगवान् प्रसन्न होउन्, उसलाई इहलोक र परलोकमा कुन पदार्थ दुर्लभ हुन सक्छ ? ॥ ८ ॥ जस्तै दृश्य-प्रपञ्चको कारणस्वरूप सबै महत्तत्त्वादि गुण आफ्ना सर्वसाक्षी आत्मालाई चिन्दैनन्, त्यस्तै सबै लोकमा डुलिरहे पनि हजुरलाई साधारण जन देख्न सक्तैनन् ॥९॥ जसका घरमा हजुरहरू जस्ता पूज्य पुरुषद्वारा स्वीकार गरिने योग्य जल, कुशासन, भूमि र घरका स्वामी अथवा अन्य पुरुष बस्तछन् ती साधुस्वभावका गृहस्थ पुरुष धन-हीन भए पनि ठूला भाग्यमानी हुन्छन् ॥१०॥ जुन घर भगवद्भक्तहरूको परम पवित्र चरणोदकरहित हुन्छन्

हाटकासन आसीनान्स्वधिष्ण्येष्विव पावकान् ॥ श्रद्धासंयमसंयुक्तः प्रीतः प्राह भवाग्रजान् ॥ ६ ॥ पृथुरुवाच ॥ अहो आचरितं किं मे मङ्गलं मङ्गला·
यनाः ॥ यस्य वो दर्शनं ह्यासीद्दुर्दर्शानां च योगिभिः ॥ ७ ॥ किं तस्य दुर्लभतरमिह लोके परत्र च ॥ यस्य विप्राः प्रसीदन्ति शिवो विष्णुश्चसानुगः
॥८॥ नैव लक्षयते लोको लोकान्पर्यटतोऽपि यान् ॥ यथा सर्वदृशं सर्व आत्मानं येऽस्य हेतवः ॥६॥ अधना अपि ते धन्याः साधवो गृहमेधिनः ॥
यद्गृहा ह्यर्हवर्याम्बुतृणभूमीश्वरा पराः ॥ १० ॥ व्यालालयद्रुमा वै तेऽप्यरिक्ताखिलसम्पदः ॥ यद्गृहास्तीर्थपादीयपादतीर्थविवर्जिताः ॥ ११ ॥
स्वागतं वो द्विजश्रेष्ठा यद्व्रतानि मुमुक्षवः ॥ चरन्ति श्रद्धया धीरा बाला एव बृहन्ति च ॥ १२ ॥ कच्चिन्नः कुशलं नाथा इन्द्रियार्थार्थवेदिनाम् ॥
व्यसनावाप एतस्मिन्पतितानां स्वकर्मभिः ॥ १३ ॥ भवत्सु कुशल प्रश्न आत्मारामेषु नेष्यते ॥ कुशलाकुशला यत्र न सन्ति मतिवृत्तयः ॥१४॥
तदहं कृतविश्रम्भः सुहृदो वस्तपस्विनाम् ॥ संपृच्छे भव एतस्मिन्क्षेमः केनाञ्जसा भवेत् ॥ १५ ॥ व्यक्तमात्यवतामात्मा भगवानात्मभावनः ॥
स्वानामनुग्रहायेमां सिद्धरूपी चरत्यजः ॥१६॥ मैत्रेय उवाच ॥ पृथोस्तत्सूक्तमाकर्ण्य सारं सुष्ठु मितं मधु ॥ स्मयमान इव प्रीत्या कुमारः

सबै सम्पत्तिले सम्पन्न भएर पनि सर्पको निवासस्थान भएको वृक्षहरूको समान रहन्छन् ॥ ११ ॥ हे द्विजपुङ्गव ! हजुरहरू यहाँसम्म आउनु भयो, यो हर्षको कुरा हो। धैर्यशील मुमुक्षुजन जुन महान् व्रतको श्रद्धापूर्वक आचरण गर्दछन्, तिनलाई हजुरले बाल्यकालदेखि नै धारण गर्नुभएको छ ॥१२॥ हे नाथ ! कर्मको चक्रमा परेर म यस संसारमा अनेक क्लेश भोग्दैछु, अतः हामी इन्द्रिय परायण प्राणिहरूका कल्याणको कुनै बाटो छ ? ॥१३॥ हे भगवन् ! हजुरहरू आफ्नो आत्मामै रमण गर्नुहुन्छ। अतः हजुरसित कुशल प्रश्न गर्नु उचित छैन, किनकि हजुरमा कुशल र अकुशलरूपिणी बुद्धिका वृत्तिहरू रहन्छन् ॥ १४ ॥ हजुरका वचनमा विश्वास राखेर तपस्वीहरूका सुहृत्स्वरूप हजुरसित म यो सोधिरहेको छु कि संसारमा मनुष्यहरूको कसरी सजिलै कल्याण हुन सक्छ ? ॥१५॥ यो कुरा त स्पष्ट नै छ कि अजन्मा भएर पनि सिद्धगणको रूपमा प्रकट हुने आत्मज्ञानीहरूका अन्तरात्मा-स्वरूप भगवान् नै आफ्ना भक्तहरूमा कृपा गर्नको निम्ति यस पृथ्वीमा डुलिरहन्छन् ॥१६॥ मैत्रेयजी भन्दछन्—हे विदुर ! राजा पृथुका ती सारयुक्त, सुन्दर, परिमित र मीठावचनहरू सुनेर

सनत्कुमार मुसु-मुसु हाँस्तै प्रसन्नतापूर्वक भन्दछन् ॥१७॥ उनले भने—हे महाराज ! सबै कुरा जानेर पनि हजुरले सबै प्राणीहरूको कल्याणको यो राम्रो प्रश्न गर्नु भएको छ । साँच्चै असल हो, सज्जनहरूको बुद्धि यस्तै नै हुन्छ ॥१८॥ साधुजनको समागम श्रोता तथा वक्ता दुवैलाई नै अभीष्ट हुन्छ, किनकि तिनको प्रश्न दुवै पक्षको निम्ति कल्याणकारी हुन्छन् ॥ १९ ॥ हे राजन् ! मधुसूदन भगवान्को गुणानुवादमा हजुरको यस्तो नैष्ठिकी प्रीति छ, जो प्राप्त हुन धेरै कठिन छ । यो अन्तःकरणको वासनारूपी सबै मललाई नष्ट पारिदिन्छ ॥२०॥ आत्माको अतिरिक्त देह गेह आदि अनात्म पदार्थहरूमा अनासक्त रहनु र आफ्नो अन्तरात्माद्वारा निर्गुण ब्रह्ममा बलियो अनुराग राख्नु नै राम्रो विचार हुने मनुष्यहरूका कल्याणको हेतु मानिएको छ ॥२१॥ गुरु तथा शास्त्रका वचनहरूमा विश्वास राख्नाले, भागवत धर्मको आचरण गर्नाले, अध्यात्म योगसित सम्बन्ध राख्ने जिज्ञासाले, योगेश्वरहरूको उपासनाले, नित्यप्रति पवित्र-कीर्ति श्रीहरिको परम पावन कथाहरू सुन्नाले, धन तथा इन्द्रियहरूको विषयमा नै सुख मान्ने भएका मण्डलीमा प्रेम नगर्नाले, आफ्ना प्रिय पदार्थहरूको

प्रत्युवाच ह ॥ १७ ॥ सनत्कुमार उवाच ॥ साधु पृष्टं महाराज सर्वभूतहितात्मना ॥ भवता विदुषा चापि साधूनां मतिरीदृशी ॥ १८ ॥ सङ्गमः खलु साधूनामुभयेषां च सम्मतः ॥ यत्सम्भाषणसम्प्रश्नः सर्वेषां वितनोति शम् ॥ १९ ॥ अस्त्येव राजन्भवतो मधुद्विषः पादारविन्दस्य गुणानुवादने ॥ रतिर्दुरापा विधुनोति नैष्ठिकी काम कषायं मलमन्तरात्मनः ॥ २० ॥ शास्त्रेष्वियानेव सुनिश्चितो नृणां क्षेमस्य सध्र्यग्विमृशेषु हेतुः ॥ असङ्ग आत्मव्यतिरिक्त आत्मनि दृढा रति ब्रह्मणि निर्गुणे च या ॥ २१ ॥ सा श्रद्धया भगवद्धर्मचर्यया जिज्ञासयाऽऽध्यात्मिकयोगनिष्ठया ॥ योगेश्वरोपासनया च नित्यं पुण्यश्रवःकथया पुण्यया च ॥ २२ ॥ अर्थेन्द्रियारामसगोष्ठ्यतृष्णया तत्सम्मतानामपरिग्रहेण च ॥ विविक्तरुच्या परितोष आत्मन् विना हरेर्गुणपीयूषपानात् ॥ २३ ॥ अहिंसया पारमहंस्यचर्यया स्मृत्या मुकुन्दाचरिताग्र्यसीधुना ॥ यमैरकामैर्नियमैश्चाप्यनिन्दया निरीहया द्वन्द्वतितिक्षया च ॥ २४ ॥ हरेर्मुहुस्तत्परकर्णपूरगुणाभिधानेन विजृम्भमाणया ॥ भक्त्या ह्यसङ्गः सदसत्यनात्मनि स्यान्निर्गुणे ब्रह्मणि चाञ्जसा रतिः ॥ २५ ॥ यदा रतिर्ब्रह्मणि नैष्ठिकी पुमानाचार्यवाञ्ज्ञानविरागरंहसा ॥ दहत्यवीर्यं हृदयं जीवकोश पञ्चात्मकं योनिमिवोत्थितोऽग्निः ॥ २६ ॥ दग्धाशयो मुक्तसमस्ततद्गुणो नैवात्मनो बहिरन्तर्विचष्टे ॥ परात्मनोर्यद्व्यवधानं

संग्रह नगर्नाले, भगवद्गुणरूपी अमृत पान गर्दै रहनाले, सदा आत्मामा नै प्रसन्न रहँदै एकान्त सेवनमा प्रेम राख्नाले कुनै पनि जीवलाई कष्ट नदिनाले, परमहंस वृत्तिको आचरण गर्नाले, भगवान्को स्मरण गर्दै रहनाले, भगवान्का उत्तम चरित्ररूपी अमृत-पानले, कुनै इच्छा नराखी यम-नियमको पालन गर्नाले कहिल्यै पनि कसैको निन्दा नगर्नाले कुनै प्रकारको दुश्चेष्टा नगर्नाले, शीतोष्णादि द्वन्द्वहरूलाई सहन गर्नाले र श्रीहरिका श्रवण-सुखदायक गुणहरू बारम्बार भन्नाले बढेको भक्तिद्वारा मनुष्य कार्य-कारणरूपी सबै प्रपंचबाट पृथक् हुँदै-जान्छ र निर्गुण ब्रह्ममा अनायास त्यसको प्रीति बढ्दै जान्छ ॥२२-२५॥ जब परब्रह्ममा यस्तो निश्चल प्रीति हुन्छ, तब त्यो गुरुभक्त पुरुष जीवको आश्रयरूपिणी पाँच प्रकारको अविद्याले ग्रस्त अन्तःकरणको ज्ञान र वैराग्यको वेगले यसरी निर्जीव पारेर दग्ध पारिदिन्छ, जस्तै काठबाट प्रकट अग्नि आफ्नो आश्रयरूप काठलाई नै पोलिदिन्छ ॥२६॥ यस प्रकार

कर्माशय दग्ध भइसकेपछि कर्म-बन्धन-मुक्त पुरुष शरीरको बाहिर-भित्र विद्यमान पदार्थलाई, जुन पहिले जीवात्मा र परमात्माको माझ रहेर तिनको भेद गर्दथे, उनलाई देख्न सक्तैन । जस्तै-स्वप्नमा देखेका पदार्थहरू स्वप्नको अन्त्य भएपछि कसैले देख्दैन ॥२७॥ किनकि अन्तःकरणरूपी उपाधि रहिरहे पनि पुरुष आत्मा, इन्द्रियका विषय तथा यी दुवैसित सम्बद्ध अहङ्कारमाई देख्दछ, अरु कसैलाई देख्दैन ॥२८॥ जस्तै—भेदको निमित्त स्वरूप जल छँदाछँदै पनि पुरुष बिम्बरूप आफ्नो र अर्काको प्रतिबिम्ब देख्न पाउँछ, अरु बेलामा देख्दैन ॥२९॥ जस्तै जलाशयको तटमा उम्रेका कुश आफ्नो जटाद्वारा बिस्तार-बिस्तार जल तान्दछन्, त्यस्तै नै विषय-चिन्तन गर्ने पुरुषको मन चञ्चल भएर विषयासक्त इन्द्रियहरू द्वारा बुद्धिको विचार-शक्तिलाई हरिलिन्छ ॥३०॥ विचार-शक्ति समाप्त भएपछि पूर्वापरको स्मृति लुप्त भएर जान्छ । स्मृति नष्ट भएपछि स्वरूपको ज्ञान रहिरहन्न । यस प्रकार स्वरुप ज्ञान नष्ट हुनु लाई नै विद्वानहरू 'आत्माको नाश' भन्दछन् ॥३१॥ जसको निम्ति अन्य सबै पदार्थहरुमा प्रीति हुन्छ , त्यो आफ्नो आत्म-स्वरूपलाई बिर्सिदिनाले

पुरस्तात् स्वप्ने तथा पुरुषस्तद्विनाशे ॥ २७ ॥ आत्मानमिन्द्रियार्थं च परं यदुभयोरपि ॥ सत्याशय उपाधौ वै पुमान्पश्यति नान्यदा ॥ २८ ॥ निमित्ते सति सर्वत्र जलादावपि पूरुषः ॥ आत्मनश्च परस्यापि भिदां पश्यति नान्यदा ॥ २९ ॥ इन्द्रियैर्विषयाकृष्टैराक्षिप्तं ध्यायतां मनः ॥ चेतनां हरते बुद्धेः स्तम्बस्तोयमिव ह्रदात् ॥ ३० ॥ भ्रश्यत्यनुस्मृतिश्चित्तं ज्ञानभ्रंशः स्मृतिक्षये ॥ तद्रोधं कवयः प्राहुरात्मापह्नवमात्मनः ॥ ३१ ॥ नातः परतरो लोके पुंसः स्वार्थव्यतिक्रमः ॥ यदध्यन्यस्य प्रेयस्त्वमात्मनः स्वव्यतिक्रमात् ॥ ३२ ॥ अर्थेन्द्रियार्थाभिध्यानं सर्वार्थापह्नवो नृणाम् ॥ भ्रंशितो ज्ञानविज्ञानाद्येनाविशति मुख्यताम् ॥ ३३ ॥ न कुर्यात्कर्हिचित्सङ्गं तमस्तीव्रं तितीरिषुः ॥ धर्मार्थकाममोक्षाणां यदत्यन्तविघातकम् ॥३४॥ तत्रापि मोक्ष एवार्थ आत्यन्तिकतयेष्यते ॥ त्रैवर्ग्योऽर्थो यतो नित्यं कृतान्तभयसंयुतः ॥ ३५ ॥ परेऽवरे च ये भावा गुणव्यतिकरादनु ॥ न तेषां विद्यते क्षेममीश विध्वंसिताशिषाम् ॥ ३६ ॥ तत्त्वं नरेन्द्र जगतामथ तस्थुषां च देहेन्द्रियासुधिषणात्मभिरावृतानाम् ॥ यः क्षेत्रवित्तपतया हृदि विष्वगाविः प्रत्यक् चकास्ति भगवांस्तमवेहि सोऽस्मि ॥ ३७ ॥ यस्मिन्निदं सदसदात्मतया विभाति मायाविवेकविधुति स्रजि वाऽहिबुद्धिः ॥

मनुष्यको अरु कुनै स्वार्थ हानि हुँदैन ॥३२॥ धन तथा इन्द्रियहरूको सतत चिन्तन गर्नाले मनुष्यका सबै पुरुषार्थ नष्ट भएर जान्छन्, किनकि यिनको चिन्ता गर्नाले जीव ज्ञान विज्ञानबाट हीन भएर वृक्षादि योनिहरूमा जन्म पाउँदछ ॥३३॥ अतएव अज्ञानरूपी घोर अन्धकारलाई पारी तर्न इच्छुक पुरुष कहिल्यै पनि विषयको सङ्ग नगरुन्, किनकि यो धर्म, अर्थ, काम र मोक्षको प्राप्तिमा अत्यन्त बाधक छ ॥३४॥ धर्मादि चारै पुरुषार्थहरूमा मोक्षनै श्रेष्ठपुरुषार्थ छ, अन्य तीन पुरुषार्थ त सदैव कालको डरले भयभीत रहन्छन् ॥३५॥ गुण-क्षोभ भएपछि जति पनि उत्तम अधम र भाव प्रकट हुन्छन्,तीबाट कुनै पनि भाव कुशलपूर्वक रहन्न्, किनकि तिनका सबै इच्छालाई सर्वसमर्थ कालले सदैव चिचिराख्दछ ॥३६॥ हे राजन् ! जुन सर्वव्यापी, स्वयं प्रकाश तथा बुद्धिको पनि अन्तर्वर्ती भगवान् देह, इन्द्रिय, प्राण, बुद्धि र अहङ्कारले आवृत्त स्थावर-जङ्गम प्राणिहरुको हृदयमा जीवका अन्तर्यामी स्वरूपले प्रकाशित रहन्छन्, उनलाई तिमी 'त्यो म नै हुँ' यो ठान ॥३७॥ जुन ईश्वरमा यो कार्य-कारणस्वरूप सारा प्रपञ्च, जुन कि विवेकको उदय भएपछि रहन्न र जुन

मालामा सर्प-बुद्धिको समान मिथ्या छ—ती नित्यमुक्त, अत्यन्त शुद्ध, ज्ञानस्वरूप एवं निज प्रभावले नै कर्म-मलहीन भगवान्को म शरणमा छु—यस्तो विचार गर ॥३८॥ ती भगवान्का चरण-कमलको शान्तिको प्रकाशले भक्तजन कर्माशयरूपी हृदय-ग्रन्थिलाई जति सजिलै काट्न सक्छन्, त्यति सजिलै आफ्ना इन्द्रियलाई अन्तर्मुख राख्ने ब्रह्मवादीन योगीजन पनि काट्न सक्तैनन्। अतः ती भक्तजनपालक भगवान् वासुदेवको तिमी सर्वथा भजन गर॥३९॥जो पुरुष षड्वर्ग (पंचज्ञानेन्द्रिय र मन) स्वरूप मकरहरूले पूर्ण संसार समुद्रलाई योगादि दुष्कर साधनद्वारा पारी जान खोज्दछौं, उनको निम्ति यसको पारी तर्न अत्यन्त दुष्कर काम छ, किनकि उनले कर्णधाररूपी परमेश्वरको आश्रय लिएको छैन,किन्तु भगवान् हरिका भजनीय चरणलाई डुङ्गा तुल्याएर तिमी सहजै यस दुस्तर संसार सागरबाट पारी जानेछौ ॥४०॥ मैत्रेयजी भन्दछन्—हे विदुरजी ! ब्रह्माजीका पुत्र आत्मज्ञानी श्रीसनत्कुमारले यस प्रकार आत्मतत्त्वको उपदेश दिएपछि राजा पृथु राम्ररी तिनको प्रशंसा गर्दै भन्न लागे ॥४१॥ राजा पृथु भन्दछन्—हे ब्रह्मन् ! ती दीनदयालु भगवान्ले यसाथि पहिले नै हामी कृपा गरेका

तं नित्यमुक्तपरिशुद्धविबुद्धतत्त्वं प्रत्यूढकर्मकलिलप्रकृतिं प्रपद्ये ॥ ३८ ॥ यत्पादपङ्कजपलाशविलासभक्त्या कर्माशयं ग्रथितमुद्ग्रथयन्ति सन्तः ॥
तद्वन्न रिक्तमतयो यतयोऽपि रुद्धस्रोतोगणास्तमरणं भज वासुदेवम् ॥ ३९ ॥ कृच्छ्रो महानिह भवार्णवमप्लवेशां षड्वर्गनक्रमसुखेन तितीरिषन्ति ॥
तत्त्वं हरेर्भगवतो भजनीयमङ्घ्रिं कृत्वोडुपं व्यसनमुत्तर दुस्तरार्णम् ॥ ४० ॥ मैत्रेय उवाच ॥ स एवं ब्रह्मपुत्रेण कुमारेणात्ममेधसा ॥ दर्शितात्मगतिः
सम्यक्प्रशस्योवाच तं नृपः ॥ ४१ ॥ राजोवाच ॥ कृतो मेऽनुग्रहः पूर्वं हरिणाऽऽर्तानुकम्पिना ॥ तमापादयितुं ब्रह्मन्भगवन्यूयमागताः ॥ ४२ ॥
निष्पादितश्च कार्त्स्न्येन भगवद्भिर्घृणालुभिः ॥ साधूच्छिष्टं हि मे सर्वमात्मना सह किं ददे ॥४३॥ प्राणा दाराः सुता ब्रह्मन् गृहाश्च सपरिच्छदाः ॥
राज्यं बलं मही कोश इति सर्वं निवेदितम् ॥ ४४ ॥ सैनापत्यं च राज्यं च दण्डनेतृत्वमेव च ॥ सर्वलोकाधिपत्यं च वेदशास्त्रविदर्हति ॥ ४५ ॥
स्वमेव ब्राह्मणो भुङ्क्ते स्वं वस्ते ददाति च ॥ तस्यैवानुग्रहेणान्नं भुञ्जते क्षत्रियादयः ॥ ४६ ॥ यैरीदृशी भगवतो गतिरात्मवाद एकान्ततो
निगमिभिः प्रतिपादिताः नः ॥ तुष्यन्त्वदभ्रकरुणाः स्वकृतेन नित्यं को नाम तत्प्रतिकरोति विनोदपात्रम् ॥४७॥ मैत्रेय उवाच ॥ त आत्मयोगपतय

थिए, त्यसैले त मेरो इच्छा पूर्ण गर्नका लागि आज हजुरहरू यहाँ पाल्नुभयो ॥४२॥ हजुर परम कृपालुहरूले आज मलाई पूर्ण सम्पन्न पारिदिनुभयो। त्यसको साटो म हजुरलाई के दिउँ ? किनकि यस शरीरसित मसित जे जति छ, त्यो सबै साधुहरूको प्रसाद हो ॥४३॥ अतः हे ब्रह्मन् ! प्राण, स्त्री, पुत्र, सबै सामग्रीहरूले पूर्ण गृह, राज्य, सेना, पृथ्वी र कोश यो सबै वस्तु म हजुरलाई अर्पण गर्दछु ॥४४॥ वस्तुतः वेद-शास्त्रको ज्ञाता ब्राह्मण नै सेनापतित्व, राज्य, दण्डविधान तथा सबै जनामाथि शासनको कार्य राम्ररी सम्पन्न गर्न सक्छ ॥४५॥ ब्राह्मण आफ्नै पदार्थहरू खान्छन्, आफ्नै लुगा लगाउँछन् र आफ्नै वस्तु दान दिन्छन्। तिनको कृपाले नै क्षत्रिय आदि अन्य मानिस अन्न पाउँछन् ॥४६॥ वेदका पारदर्शी हजुर महापुरुषहरुले आत्मतत्वको विचार गर्दै भगवान्का स्वरूपको राम्ररी निरुपण गर्नुभयो । परम कृपालु व्यक्ति आफूले गरेका कर्मले नै सदा सन्तुष्ट रहन्छन्, किनकि हजुरको यस महान् उपकारको साटो कसैले फेर्न सक्तैन । यदि कसैले त्यसको निम्ति प्रयत्न गर्दछ भने त्यो हाँसोको पात्र बन्नेछ ॥४७॥ मैत्रेयजी भन्दछन्—हे विदुरजी ! त्यसपछि

उसको मनोवृत्ति सर्वदा आत्मज्ञानमा लागिरहन्थ्यो, ती सनकादि मुनीश्वर आदिराज पृथुसित सत्कृत भई, उनका शीलको प्रशंसा गर्दै सबैले हेर्दाहेर्दै आकाशमार्गबाट जाँदा भए ॥४८॥ त्यसपछि महात्माहरूमा अग्रणी महाराज पृथु तिनको आत्मोपदेशले चित्त स्थिर पार्दै आफ्नो स्वरूपमा स्थित भई आफूलाई कृतकृत्य मान्नलागे ॥ ४९ ॥ सम्पूर्ण कर्म, देह, काल, शक्ति तथा धनको अनुसार यथोचित रीतिले ब्रह्मार्पण-मखपूर्वक ती सबै काम गर्नलागे ॥५०॥ तात्पर्यके भने समस्त कर्मफल परमात्मालाई अर्पण गरेर ती असंग र समाहित चित्तले सबै कर्मका साक्षी आत्मालाई प्रकृतिभन्दा भिन्न मान्दै सबै काम गर्दथे ॥५१॥ सार्वभौम साम्राज्य तथा लक्ष्मीले युक्त आफ्नो राज भवनमा बस्ता पनि ती अहङ्कार शून्य भएर

आदिराजेन पूजिताः ॥ शीलं तदीयं शंसन्तः खेऽभूवन्मिषतां नृणाम् ॥४८॥ वैन्यस्तु धुर्यो महतां संस्थित्याऽध्यात्मशिक्षया ॥ आप्तकाममिवात्मानं मेने चात्मन्यवस्थितः ॥४९॥ कर्माणि च यथाकालं यथादेशं यथाबलम् ॥ यथोचितं यथावित्तमकरोद्ब्रह्मसात्कृतम् ॥५०॥ फलं ब्रह्मणि विन्यस्य निर्विषङ्गः समाहितः ॥ कर्माध्यक्षं च मन्वान आत्मानं प्रकृतेः परम् ॥५१॥ गृहेषु वर्तमानोऽपि स साम्राज्यश्रियान्वितः ॥ नासज्जतेन्द्रियार्थेषु निरहंमतिरर्कवत् ॥ ५२ ॥ एवमध्यात्मयोगेन कर्माण्यनुसमाचरन् ॥ पुत्रानुत्पादयामास पञ्चार्चिष्यात्मसम्मतान् ॥ ५३ ॥ विजिताश्वं धूम्रकेशं हर्यक्षं द्रविणं वृकम् ॥ सर्वेषां लोकपालानां दधारैकः पृथुर्गुणान् ॥५४॥ गोपीथाय जगत्सृष्टेः काले स्वे स्वेऽच्युतात्मकः ॥ मनोवाग्वृत्तिभिः सौम्यैर्गुणैः संरञ्जयन्प्रजाः ॥५५॥ राजेत्यधान्नामधेयं सोमराज इवापरः ॥ सूर्यवद्विसृजन्गृह्णन्प्रतपंश्च भुवो वसु ॥ ५६ ॥ दुर्धर्षस्तेजसेवाग्निर्महेन्द्र इव दुर्जयः ॥ तितिक्षया धरित्रीव

इन्द्रियहरूको विषयमा सूर्य सदृश आसक्त भएनन् ॥ ५२ ॥ यस प्रकार ज्ञानयोगको विधिले सबै कार्य गर्दै राजा पृथुले आफ्नी भार्या अर्चिबाट विजिताश्वर, धूम्रकेश, हर्यक्ष, द्रविण र वृक नामका पाँच छोरा उत्पन्न गरे । ॥५३ ॥ राजा पृथुले बेलाबेलामा जगतको रक्षा गर्नका लागि एक्लै नै सबै लोकपालका गुण धारण गरेका थिए ॥५४॥ विष्णु स्वरूप महाराज पृथुले आफ्नो मन तथा *वाणीको मीठो आदि सौम्यगुणले प्रजाको मनोरञ्जन गरिरहनाको कारण अर्को चन्द्रमा झैं 'राजा' यो सार्थक नाम प्राप्त गरेका थिए । ५५॥ उनले करस्वरूप प्रजाको धन लिएर त्यो अनिकालको बेलामा दिई ग्रीष्मकालमा रस तानेर वर्षामा जल बर्साउने सूर्य समान आफ्नो प्रताप फैलाई दिएका थिए ॥५६॥

* कटुत्व—(कटुवाणीले शत्रुता हुन्छ)—धर्मराज युधिष्ठिरले राजसूय यज्ञको अवसरमा मयदानवद्वारा यौटा राम्रो सभाभवन बनाउन लगाएका थिए । त्यसलाई बनाउन मयदानवले यस्तो कौशल देखाएको थियो कि जलको स्थानमा स्थल र स्थलको स्थानमा जल देखिन्थ्यो । एक दिन दुर्योधन त्यस भवनमा गयो र भवनको त्यस्तो युक्तिपूर्ण रचनाले भ्रमित भएर चकित भयो । त्यसको चाला देखेर द्रौपदीले भनिन्—'अन्धाको छोरो अन्धै हुन्छ ।' यो कठोर वाणी दुर्योधनको हृदयमा गाडियो । त्यसको साटो युधिष्ठिरलाई जुआमा हराई तथा द्रौपदीलाई चिरेर त्यस्तो सभामा वस्त्र तानेर साटो फेर्‍यो । कठोर वाणी बोल्नाले द्रौपदीमाथि त्यस्तो भयङ्कर संकट आइलाग्यो । वस्त्र तान्ने बेलामा दुर्योधनले भीमतिर हेरेर भनेको थियो—'ए कौआ, तैले जे गर्न सक्छस् गर । तँमा शक्ति छ भने आएर यसको सहायता गर ।' फेरि भीमलाई सुनाउँदै उसले द्रौपदीलाई पनि धेरै कठोर वचन भन्यो । भीमले त्यो अपमान सहन सकेनन् र उनले दुर्योधनको रगतले द्रौपदीको कपाल धुने र उसलाई मार्ने प्रतिज्ञा गरे । महाभारतका युद्ध यही प्रतिज्ञाको परिणाम थियो । कठोर वचन बोल्नाले यस्तै अनिष्ट हुन्छन् ।

ती आफ्नो तेजले अग्निको समान अदम्य र इन्द्र झैं दुर्जय थिए । पृथ्वी झैं सहनशील थिए र स्वर्गको समान मनुष्यहरूको कामनाहरू पूर्ण पार्दथे ॥ ५७ ॥ ती समय-समयमा प्रजा-
जनलाई तृप्त पार्दै मेघको समान तिनको इच्छित पदार्थहरूको वर्षा गर्दथे । ती समुद्रको समान अगाध र बलमा पर्वतराजको समान अविचल थिए ॥ ५८ ॥ राजा पृथु दुष्टजनको
दमन गर्नमा यमराजको समान, आश्चर्यजनक वस्तुहरूमा हिमालयको समान, धनीहरूमा कुबेर समान र गुप्त धनवानमा वरुणको समान धनी थिए ॥ ५९॥ ती शारीरिक बल, इन्द्रिय-
को पटुता र ओजमा वायु समान तथा असह्यतामा भगवान् भूतनाथ समान थिए ॥ ६० ॥ ती सौन्दर्यमा कामदेव समान र धैर्यमा सिंह सदृश, वात्सल्यमा मनुको समान र प्रभुत्वमा
भगवान् ब्रह्माको समान थिए ॥ ६१ ॥ ती ब्रह्म विचार गर्नमा बृहस्पतिको समान, आत्मतत्त्वका ज्ञाताहरूमा साक्षात् विष्णु भगवान् र गाई, ब्राह्मण, गुरु तथा भगवद्भक्तहरूको भक्ति,
लज्जा, विनय, शील र परोपकारमा आफूजस्तै थिए ॥ ६२ ॥ तीनै लोकमा मनुष्यहरुद्वारा जता-तर्तै उच्च स्वरले गाइएको आफ्नो कीर्ति द्वारा ती स्त्रीहरूको कर्णरन्ध्रमा यस प्रकार

द्यौरिवाभीष्टदो नृणाम् ॥ ५७ ॥ वर्षति स्म यथाकामं पर्जन्य इव तर्पयन् ॥ समुद्र इव दुर्बोधः सत्त्वेनाचलराडिव ॥ ५८ ॥ धर्मराडिव शिक्षाया-
माश्चर्ये हिमवानिव ॥ कुबेर इव कोशाढ्यो गुप्तार्थो वरुणो यथा ॥५९॥ मातरिश्वेव सर्वात्मा बलेन महसौजसा ॥ अविषह्यतया देवो भगवान्भूतराडिव
॥६०॥ कन्दर्प इव सौन्दर्ये मनस्वी मृगराडिव ॥ वात्सल्ये मनुवन्नृणां प्रभुत्वे भगवानजः ॥ ६१ ॥ बृहस्पतिर्ब्रह्मवादे आत्मवत्त्वे स्वयं हरिः ॥
भक्त्या गोगुरुविप्रेषु विष्वक्सेनानुवर्तिषु ॥ ह्रिया प्रश्रयशीलाभ्यामात्मतुल्यः परोद्यमे ॥ ६२ ॥ कीर्त्योर्ध्वगीतया पुम्भिस्त्रैलोक्ये तत्र तत्र ह ॥
प्रविष्टः कर्णरन्ध्रेषु स्त्रीणां रामः सतामिव ॥ ६३ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे पृथुचरिते द्वाविंशतितमोऽध्यायः ॥ २२ ॥ मैत्रेय
उवाच ॥ दृष्ट्वाऽऽत्मानं प्रवयसमेकदा वैन्य आत्मवान् ॥ आत्मना वर्धिताशेषस्वानुसर्गः प्रजापतिः ॥ १ ॥ जगतस्तस्थुषश्चापि वृत्तिदो धर्मभृत्सताम् ॥
निष्पादितेश्वरादेशो यदर्थमिह जज्ञिवान् ॥ २ ॥ आत्मजेष्वात्मजां न्यस्य विरहाद्रुदतीमिव ॥ प्रजासु विमनःस्वेकः सदारोऽगात्तपोवनम् ॥ ३ ॥
तत्राप्यदम्यनियमो वैखानससुसम्मते ॥ आरब्ध उग्रतपसि यथा स्वविजये पुरा ॥ ४ ॥ कन्दमूलफलाहारः शुष्कपर्णाशनः क्वचित् ॥ अब्भक्षः कति·

प्रवेश गरिसकेका थिए' जस्तै भगवान् राम सत्पुरुषहरूको हृदयमा प्रवेश गर्दथे ॥६३॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां द्वाविंशतितमोऽध्यायः ॥२२॥
(राजा पृथुको तपस्या र उनको परलोक गमन )—मैत्रेयजी भन्दछन्—हे विदुर ! यस प्रकार अन्नादि तथा पुर-ग्रामादि सृष्टिको वृद्धि गरेर स्थावर-जंगम सबै प्राणीहरूको जीविका
चलाउने, सत्पुरुषहरू झैं धर्मको आचरण गर्न भएका, महामनस्वी प्रजापति पृथु, जसको निम्ति उनले जन्म लिएका थिए, त्यस ईश्वराज्ञाको पालन गरिसकेपछि एक दिन आफ्नो वृद्धा-
वस्था देखेर, आफ्नो विरहले मानो रोइरहेकी आफ्नी कल्याणमयी छोरी पृथ्वी–पुत्रहरूलाई सुम्पेर, प्रजालाई विलाप गर्दै छाडेर कुनै अर्को सहायक साथमा नलिई भार्यासहित वन-
मा गए–१-३॥ त्यहाँ पनि ती कुनै पनि विघ्नबाट नहट्ने नियमको पालन गर्दै जसरी पहिले विजयमा तत्पर रहन्थे उसैगरी वानप्रस्थाश्रमको अनुकूल तपस्यामा लागे ॥४॥ ती पहिले

कन्द, मूल, फल आदिको आहार गर्दथे । फेरि केही दिन सुकेका पात खाए । त्यसपछि केही पक्षपर्यन्त केवल पानी पिएर रहे । फेरि केवल वायु पिएर जीवन निर्वाह गर्नलागे ॥५॥ वीरवर पृथु मुनिवृत्तिले रहँदै ग्रीष्म ऋतुमा पञ्चाग्नि तापेर, वर्षा ऋतुमा खुला मैदानमा बसेर आफ्नो शरीरमा धारा वृष्टिको आघात सहन्थे तथा शीतकालमा घाँटीसम्म जलमा डुबि-रहन्थे र नित्य भूमिको वेदीमा शयन गर्दथे ॥६॥ यस प्रकार भगवान् कृष्णको आराधना गर्ने इच्छाले उनले शीतोष्णादि द्वन्द्व सहन गर्दै वाणी र इन्द्रियहरूमा संयम राख्दै प्राणलाई जितेर तथा ऊर्ध्वरेता भएर निकै कठोर तपस्या गरे ॥७॥ यस प्रकार क्रमशः परिपक्व त्यस तपको प्रभावले तिनका सबै कर्मरूपी मल भस्म भए तथा प्राणायामद्वारा पाँच ज्ञानेन्द्रिय र मन—यी षड्वर्गको निरुद्ध हुनाले तिनको वासनारूपी बन्धन काटियो ॥८॥ अनि भगवान् सनत्कुमारले उनलाई जुन अध्यात्म योगको उपदेश दिएका थिए, त्यसैद्वारा ती पुरुषश्रेष्ठ श्रीपुरुषोत्तम भगवान्‌को उपासना गर्नलागे ॥९॥ यस प्रकार श्रद्धापूर्वक भगवद्धर्मको पालन गर्दा-गर्दै साधु प्रकृति महाराज पृथुलाई ब्रह्मस्वरूप भगवान्‌को अनन्य भक्ति प्राप्त भयो

चित्पक्षान्वायुभक्षस्ततः परम् ॥ ५ ॥ ग्रीष्मे पञ्चतपा वीरो वर्षास्वासारषाण्मुनिः ॥ आकण्ठमग्नः शिशिरे उदके स्थण्डिलेशयः ॥ ६ ॥ तितिक्षुर्यत-
वाग्दान्त ऊर्ध्वरेता जितानिलः ॥ आरिराधयिषुः कृष्णमचरत्तप उत्तमम् ॥ ७ ॥ तेन क्रमानुसिद्धेन ध्वस्तकर्मामलाशयः ॥ प्राणायामैः संनिरु-
द्धषड्वर्गश्छिन्नबन्धनः ॥८॥ सनत्कुमारो भगवान्यदाहाध्यात्मिकं परम् ॥ योगं तेनैव पुरुषमभजत्पुरुषर्षभः ॥ ९ ॥ भगवद्धर्मिणः—साधोः श्रद्धया
यततः सदा ॥ भक्तिर्भगवति ब्रह्मण्यनन्तविषयाऽभवत् ॥ १० ॥ तस्यानया भगवतः परिकर्मशुद्धसत्त्वात्मनस्तदनु संस्मरणानुपूर्त्या ॥ ज्ञानं विर-
क्तिमदभून्निशितेन येन चिच्छेद संशयपदं निजजीवकोशम् ॥ ११ ॥ छिन्नान्यधीरधिगतात्मगतिर्निरीहस्तत्तत्यजेऽच्छिनदिदं वयुनेन येन ॥ तावन्न
योगगतिभिर्यतिरप्रमत्तो यावद्गदाग्रजकथासु रतिं न कुर्यात् ॥ १२ ॥ एवं स वीरप्रवरः संयोज्यात्मानमात्मनि ॥ ब्रह्मभूतो दृढं काले तत्याज
स्वं कलेवरम् ॥ १३ ॥ सम्पीड्य पायुं पार्ष्णिभ्यां वायुमुत्सारयञ्छनैः ॥ नाभ्यां कोष्ठेष्ववस्थाप्य हृदुरः कण्ठशीर्षणि ॥ १४ ॥ उत्सर्पयंस्तु तं
मूर्ध्नि क्रमेणावेश्य निःस्पृहः ॥ पायुं वायौ क्षितौ कायं तेजस्तेजस्ययूयुजत् ॥ १५ ॥ खान्याकाशे द्रवं तोये यथास्थानं विभागशः ॥ क्षितिमम्भसि

॥१०॥ यस प्रकार सधैं भगवान्‌को उपासनाले शुद्ध अन्तःकरण भएका ती महाराज पृथुलाई सतत भगवच्चिन्तनले वैराग्य युक्त ज्ञान प्राप्त भयो । त्यस तीक्ष्ण ज्ञानको प्रभावले उनले संशय-विपर्यय आदिको आश्रयस्वरूप जीवका उपाधिरूपी आफ्नो अहङ्कारलाई नष्टपारिदियो ॥११॥ त्यसपछि जसको देहात्मबुद्धि नष्ट भइसकेको थियो र जसले आत्मज्ञानको प्राप्ति भइसकनाले स्वयं प्राप्त भएका सिद्धिहरूलाई पनि त्यागिदिएका थिए, ती महात्मा पृथुले जसको द्वारा आफ्नो सबै संशयराशि हटाइदिएका थिए, त्यस आत्मज्ञानको प्रयत्नलाई पनि त्यागिदिए, किनकि जबसम्म योगमार्गद्वारा साधकलाई भगवत्कथामा प्रीति हुँदैन, तबसम्म केवल योग साधनाले पनि उसको विषयासक्तिरूपी प्रमाद नष्ट हुन सक्तैन ॥१२॥ यस प्रकार ती वीरवर महाराज पृथुले आफ्नो मन दृढतासाथ आत्मामा स्थिर गरेर ब्रह्मभावमा स्थित रहँदै अन्तकाल उपस्थित भएपछि आफ्नो शरीर त्यागिदिए । प्राणत्यागको अवसरमा उनले अपानवायु रोकिदिए र प्राणवायुलाई बिस्तार-बिस्तार माथितिर उठाउँदै त्यसलाई क्रमशः नाभि, उदर, हृदय, वक्षस्थल, कण्ठ र ब्रह्माण्डमा पुर्याइदिए ॥१३-१४॥ फेरि त्यसलाई

मास्तिर लैजाँदै विस्तार-विस्तार ब्रह्मरन्ध्रमा स्थित पारे र सांसारिक भोगबाट उपरत भएर प्राणवायुलाई वायुमा, पार्थिव शरीरलाई पृथ्वीमा र शरीरको तेजलाई तेजमा लीन गरिदिए ॥१५॥ यथास्थान विभाजनपूर्वक हृदयाकाशलाई महाकाशमा र रक्त आदि शरीरका द्रव अंशलाई जलमा लीन गरेर पृथ्वीलाई जलमा, जललाई अग्निमा, अग्निलाई वायुमा र वायुलाई आकाशमा लीन गरिदिए ॥१६॥ त्यसपछि मनलाई इन्द्रियहरूमा र कर्णादि इन्द्रियलाई तिनको कारणरूप शब्दादि तन्मात्राहरूमा लीन गरे । अनि ती तन्मात्राहरूलाई अहङ्कार द्वारा माथि तानेर अहङ्कारसित तिनलाई महत्तत्वमा स्थापित गरिदिए ॥१७॥ त्यसपछि गुणहरूको अभिव्यक्ति गर्ने महत्तत्त्वलाई मायोपाधिक जीवमा स्थित पारिदिए । फेरि ज्ञान र वैराग्यको अभावले आफ्नो स्वरूपमा स्थित भएर परम समर्थ महाराज पृथुले आफ्नो अन्तःकरणमा स्थित त्यस उपाधिलाई पनि त्यागिदिए, जसले गर्दा ती पहिले सोपाधिक जीवभावमा प्राप्त थिए ॥१८॥ राजा पृथुको पत्नी महारानी सुकुमारी हुनाले—जो भूमिमा खुट्टा राख्न योग्य पनि थिइनन्, ती अर्चि पतिसित वनमा गएकी थिइन् ॥ १९ ॥ ती पतिको

तत्तेजस्यदो वायौ नभस्यमुम् ॥ १६ ॥ इन्द्रियेषु मनस्तानि तन्मात्रेषु यथोद्भवम् ॥ भूतादिनाऽमून्युत्किष्य महत्यात्मनि संदधे ॥ १७ ॥ तं सर्वगुणविन्यासं जीवे मायामये न्यधात् ॥ तं चानुशयमात्मस्थमसावनुशयी पुमान् ॥ ज्ञानवैराग्यवीर्येण स्वरूपस्थोऽजहात्प्रभुः ॥ १८ ॥ अर्चिर्नाम महाराज्ञी तत्पत्न्यनुगता वनम् ॥ सुकुमार्यतदर्हा च यत्पद्भ्यां स्पर्शनं भुवः ॥ १९ ॥ अतीव भर्तुर्व्रतधर्मनिष्ठया शुश्रूषया चारषदेहयात्रया ॥ नाविन्दतार्तिं परिकर्शिताऽपि सा प्रेयस्करस्पर्शनमाननिर्वृतिः ॥ २० ॥ देहं विपन्नाखिलचेतनादिकं पत्युः पृथिव्या दयितस्य चात्मनः ॥ आलक्ष्य किञ्चिच्च विलप्य सा सती चितामथारोपयदद्रिसानुनि ॥ २१ ॥ विधाय कृत्यं ह्रदिनीजलाप्लुता दत्त्वोदकं भर्तुरुदारकर्मणः ॥ नत्वा दिविस्थांस्त्रिदशांस्त्रिः परीत्य विवेश वह्निं ध्यायती भर्तृपादौ ॥ २२ ॥ विलोक्यानुगतां साध्वीं पृथुं वीरवरं पतिम् ॥ तुष्टुवुर्वरदा देवैर्देवपत्न्यः सहस्रशः ॥ २३ ॥ कुर्वत्यः कुसुमासारं तस्मिन्मन्दरसानुनि ॥ नदत्स्वमरतूर्येषु गृणन्ति स्म परस्परम् ॥ २४ ॥ देव्य ऊचुः ॥ अहो इयं

कठोर व्रत-पालनमा उनको सेवा-चाकरी गर्दै ऋषि वृत्ति ( कन्द-मूलादि ) ले आफ्नो शरीर-यात्राको निर्वाहले दुर्बल भएकी थिइन् । तैपनि पतिको करस्पर्शले सम्मानित भएर त्यसैमा आनन्द मान्नाले उनले कुनै प्रकारको कष्ट अनुभव गरिनन् ॥२०॥ यस बेला पृथ्वीका स्वामी र आफ्ना प्रियतम महाराज पृथुका शरीरको चेतना आदि सम्पूर्ण अवयवहरूलाई नष्ट भएका देखेर ती सतीले केही बेर विलाप गरेर पर्वतमाथि यौटा चिता बनाइन् र त्यसमाथि त्यो मृत शरीर राखिन् ॥ २१ ॥ अनि नदीको जलमा स्नान गरेर परम पराक्रमी पतिलाई जलाञ्जली दिई सती हुने बेलाका सबै कृत्य पूर्ण पारेर आकाशमा स्थित देवताहरूको वन्दना गरिन् र तीनपल्ट चिताको परिक्रमा गरेर पतिका चरणको ध्यान गर्दै अग्निमा प्रविष्ट भइन् ॥२२॥ परम साध्वी अर्चिलाई आफ्ना पति वीरवर पृथुको यसप्रकार अनुगमन गरेकी देखेर वर दिनमा समर्थ हजारौं देवाङ्गनाहरू सहित आएर तिनको स्तुति गर्न लागिन् ॥२३॥ अर्चिको स्वर्गारोहणको बेलामा मन्दराचलको शिखरमा पुष्पवर्षा गर्ने देवाङ्गनाहरू देवगणको तूर्यघोषका साथै परस्पर यस प्रकार भन्नलागे—॥२४॥ देवीहरू भन्छन्—अहो ! यी

नारी धन्य हुन् ! जसरी लक्ष्मीजी विष्णुभगवान्‌को सेवा गर्दछिन्, उसै गरी यी* रानीले ठूलो परिश्रमले आफ्ना पति राजा पृथुको तन-मनले सेवा गरिन् ॥२५॥हेर, सती-साध्वी अर्चि आफ्ना अचिन्तनीय कर्मका प्रभावले हामीलाई उछिनेर आफ्ना पति पृथुसित अति उच्च लोकमा जाँदैछिन् ॥२६॥ जो प्राणी अल्पायु भएर पनि भगवान्‌लाई प्राप्त गराउने आत्मज्ञान प्राप्त गर्दछन्, ती मनुष्यहरूको निम्ति संसारमा कुनै पदार्थ दुर्लभ रहन्न ॥२७॥ अतएव जो मनुष्य पूर्वकृत्य कर्महरूका प्रभावले मोक्षका साधनस्वरूप नरदेह ठूलो कष्टले पाएर पनि विषयहरूमै आसक्त रहन्छ, त्यो आत्मघाती अवश्य ठगिएको प्राणि मानिन्छ ॥२८॥ मैत्रेयजी भन्दछन्–हे विदुरजी ! देवपत्नीहरू जब यसरी स्तुति गरिरहेका थिए, उसै बखत

वधूर्धन्या या चैवं भूभुजां पतिम् ॥ सर्वात्मना पतिं भेजे यज्ञेशं श्रीर्वधूरिव ॥ २५ ॥ सैषा नूनं व्रजत्यूर्ध्वमनु वैन्यं पतिं सती ॥ पश्यतास्मान-
तीत्यार्चिर्दुर्विभाव्येन कर्मणा ॥ २६ ॥ तेषां दुरापं किं त्वन्यन्मर्त्यानां भगवत्पदम् ॥ भुवि लोलायुषो ये वै नैष्कर्म्यं साधयन्त्युत ॥ २७ ॥
स वंचितो बतात्मध्रुक् कृच्छ्रेण महता भुवि ॥ लब्ध्वाऽपवर्ग्यं मानुष्यं विषयेषु विषज्जते ॥ २८ ॥ मैत्रेय उवाच ॥ स्तुवतीष्वमरस्त्रीषु पतिलोकं गता
वधूः ॥ यं वा आत्मविदां धुर्यो वैन्यः प्रापाच्युताशयः ॥ २९ ॥ इत्थंभूतानुभावोऽसौ पृथुः स भगवत्तमः ॥ कीर्तितं तस्य चरितमुद्दामचरितस्य
ते ॥ ३० ॥ य इदं सुमहत्पुण्यं श्रद्धयाऽवहितः पठेत् ॥ श्रावयेच्छृणुयाद्वापि स पृथोः पदवीमियात् ॥ ३१ ॥ ब्राह्मणो ब्रह्मवर्चस्वी राजन्यो
जगतीपतिः ॥ वैश्यः पठन्विट्पतिः स्याच्छूद्रः सत्तमतामियात् ॥ ३२ ॥ त्रिःकृत्व इदमाकर्ण्य नरो नार्यथवाऽऽदृता ॥ अप्रजः सुप्रजतमो
निर्धनो धनवत्तमः ॥ ३३ ॥ अस्पष्टकीर्तिः सुयशा मूर्खो भवति पण्डितः ॥ इदं स्वस्त्ययनं पुंसाममङ्गल्यनिवारणम् ॥ धन्यं यशस्यमायुष्यं
स्वर्ग्यं कलिमलापहम् ॥ ३४ ॥ धर्मार्थकाममोक्षाणां सम्यक्सिद्धिमभीप्सुभिः ॥ श्रद्धयैतदनुश्राव्यं चतुर्णां कारणं परम् ॥ ३५ ॥ विजयाभिमुखो

महारानी अर्चि पनि, जुन लोकमा आत्मज्ञानीहरूमा श्रेष्ठ पृथु गएका थिए, उही पतिलोकमा प्राप्त भइन् ॥२९॥ हे विदुरजी ! परम पराक्रमी राजा पृथु यस्ता प्रभावशाली पुरुष थिए । मैले तिमीलाई उनको उदार चरित्र भनेर सुनाएँ ॥३०॥ जो मनुष्य यो परम पवित्र-चरित्र श्रद्धापूर्वक एकाग्र चित्तले पढ्दछ-सुन्दछ र अरूलाई सुनाउँछ त्यो महाराज पृथुकै पदमा अर्थात् वैकुण्ठधाममा प्राप्त हुनेछ ॥३१॥ यसको निरन्तर पाठ गर्नाले ब्राह्मण ब्रह्मतेज पाउँछ, क्षत्रिय पृथ्वीपति बन्दछ, वैश्य व्यापारीमा प्रधान बन्दछ र शूद्र श्रेष्ठ त्यागी तथा साधुता प्राप्त गर्दछ ॥३२॥ कोही स्त्री होस् वा पुरुष, जो आदर पूर्वक यसलाई तीनपल्ट सुन्दछ, त्यो सन्तान हीन भए पुत्रवान् बन्दछ र धनहीन भए ठूलो धनवान् बन्दछ ॥३३॥ संसारमा

* उदाहरण ( रानी स्वयं परिश्रम गर्दथी )— महाराज सप्तम एडवर्डकी पत्नी एलेक्जेण्ड्रा जब कुमारी थिइं, उनी सलाईंको सिउँदैन गर्दथी । महारानीको पदमा पुगेपछि पनि ती प्रतिवर्ष तीन सय साठी लुगा आफ्ना हातले सिएर गरीबहरूलाई बाँड्दथिन् । एकपल्ट कसैले उनीसित सोधे—'हजुरलाई यतिको फुर्सत कसरी मिल्दछ ?' तिनले उत्तर दिइन्—'म आफ्नो कोठामा लुगा सिउने सबै सामान राख्दछु र जब अवकाश मिल्दछ तब गएर लुगा सिउन थाल्दछु । राती पनि जब मेरा पति केही पढ्न थाल्दछन्, तब म त्यो सुन्दै लुगा सिउँदै गर्दछु ।' हाम्रा देशका ठूला घरका नारीहरूले यो कुरामा ध्यान दिनु पर्दछ, किनकि ती फुर्सदको समय आलस्य र व्यर्थका गफ गरेर गुमाइ दिन्छन् । ५१२

जसको कीर्ति प्रख्यात भएको छैन, त्यो यशस्वी बन्दछ र मूर्ख भए पनि पण्डित बन्दछ । यो चरित्र पुरुषहरूको कल्याण गर्दै सबै प्रकारका अमङ्गललाई टाढा पुन्याइदिन्छ ॥३४॥ यो पृथु चरित्र धन र यश दिन्छ, आयुष्य बढाउँछ, स्वर्गको प्राप्ति गर्दछ र कलियुगमा सबै दोषहरू समूल नष्ट पारिदिन्छ । यो चरित्र धर्मादि चतुर्वर्गको प्राप्ति गराउँछ । अतएव जो व्यक्ति धर्म, अर्थ, काम तथा मोक्षलाई राम्ररी सिद्ध गर्न चाहन्छन्, ती यसलाई श्रद्धापूर्वक सुनुन् ॥३५॥ यदि कुनै राजा विजयको निम्ति जाने वेलामा यसलाई सुनेर जान्छ भने–जसरी शत्रु राजाहरू पृथुलाई दर्शन भेट राख्दथे, त्यस्तै उसका शत्रु पनि पहिलेदेखिनै भेट लिएर उभिएका देखिने छन् ॥३६॥ अतः मनुष्यको कर्तव्य हो कि त्यो म सबै सङ्गत त्यागेर भगवान्मा निर्मल भक्तिभाव राखेर राजा पृथुको यस पवित्र चरित्रलाई सुनोस्, रपढोस्-पढाओस् ?।३७॥ हे विचित्रवीर्यतनय ! भगवान्को महात्म्य प्रकट गर्न भएको राजा पृथुको चरित्र मैले तिमीलाई सुनाएँ । यससित प्रेम गर्न प्राणी सहजै महराज पृथुको पद प्राप्त गर्न सक्छ ॥३८॥सबै प्रकारका आसक्तिले रहित भएर ज प्राणी यो पृथु-चरित्रको निरन्तर आदरपूर्वक श्रवण वा पाठ गर्दछ, त्यो मनुष्य जसका चरण संसार-सागरबाट पारी तर्नको निम्ति डुङ्गा समान छन्, ती भगवान्को वलियो प्रेम प्राप्त गरिलिनेछ॥३९॥इति श्रीमद्भागवते महापुराणे

राजा श्रुत्वैतदभियाति यान् ॥ बलिं तस्मै हरन्त्यग्रे राजानः पृथवे यथा ॥ ३६ ॥ मुक्तान्यसङ्गो भगवत्यमलां भक्तिमुद्वहन् ॥ वैन्यस्य चरितं पुण्यं शृणुयाच्छ्रावयेत्पठेत् ॥ ३७ ॥ वैचित्रवीर्याभिहितं महन्माहात्म्यसूचकम् ॥ अस्मिन्कृतमतिर्मर्त्यः पार्थवीं गतिमाप्नुयात् ॥ ३८ ॥ अनुदिनमिदमादरेण शृण्वन्पृथुचरितं प्रथयन्विमुक्तसङ्गः ॥ भगवति भवसिन्धुपोतपादे स च निपुणं लभते रतिं मनुष्यः ॥ ३९ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे त्रयोविंशोऽध्यायः ॥ २३ ॥ मैत्रेय उवाच ॥ विजिताश्वोऽधिराजाऽऽसीत्पृथुपुत्रः पृथुश्रवाः ॥ यवीयोभ्योऽददात्काष्ठा भ्रातृभ्यो भ्रातृवत्सलः ॥ १ ॥ हर्यक्षायादिशत्प्राचीं धूम्रकेशाय दक्षिणाम् ॥ प्रतीचीं वृकसंज्ञाय तुर्यां द्रविणसे विभुः ॥ २ ॥ अन्तर्धानगतिं शक्राल्लब्ध्वाऽन्तर्धानसंज्ञितः ॥ अपत्यत्रयमाधत्त शिखण्डिन्यां सुसम्मतम् ॥ ३ ॥ पावकः पवमानश्च शुचिरित्यग्नयः पुरा ॥ वसिष्ठशापादुत्पन्नाः पुनर्योगगतिं नताः ॥ ४ ॥ अन्तर्धानो नभस्वत्यां हविर्धानमविन्दत ॥ य इन्द्रमश्वहर्तारं विद्वानपि न जघ्निवान् ॥ ५ ॥ राज्ञां वृत्तिं

चतुर्थस्कन्धे नेपाली भाषाटीकायां त्रयोविंशोऽध्यायः ॥२३॥ (रुद्र गीत)–श्रीमैत्रेयजी भन्दछन्–हे विदुरजी ! महाराज पृथुपछि तिनको परम यशस्वी छोरो विजिताश्व राजा भयो । त्यो विजिताश्व ठूलो भ्रातृवत्सल थियो । अतएव उसले आफ्ना कान्छा भाइहरूलाई भिन्न भिन्न दिशाहरूका अधिकार दिए ॥१॥ तदनुसार उनले हर्यक्षलाई पूर्वदिशा, धूम्रकेशलाई दक्षिण दिशा, वृकलाई पश्चिम र द्रविणलाई उत्तर दिशाको राज्य सुम्पिदिए । राजा विजिताश्वले इन्द्रबाट अन्तर्धान हुने विद्या प्राप्त गरेका थिए, त्यसैले अगाडि गएर उसको नाम 'अन्तर्धान' पनि हुनगयो । उसले आफ्नी पत्नी शिखण्डिनीबाट तीन लोकप्रिय छोरा उत्पन्न गरे ॥३॥ ती तीनै जनाको नाम थियो–पावक, पवमान र शुचि । ती तीनै जना आहवनादि अग्नि नै पूर्वजन्ममा वसिष्ठजीको श्राप पाएर यहाँ उत्पन्न भएका थिए । त्यसपछि योगमार्ग द्वारा ती फेरि अग्निस्वरूपमा प्राप्त भए ॥४॥ तदन्तर उसले इन्द्रलाई अश्व चोर जानेर पनि मारेका थिएनन्, ती राजा अन्तर्धानले आफ्नी नभस्वती नामकी भार्याबाट हविर्धान नामको यौटा पुत्र उत्पन्न गरे ॥५॥ कर लिनु, दण्ड दिनु तथा धन ग्रहण गर्नु आदि राजाहरूका वृत्ति-

लाई अप्रिय दारुण ठानेर दीर्घकालमा सम्पन्न हुने यज्ञको निहुँ गरी अन्तर्धानले आफ्नो राज-पाठ छाडिदिए ॥ ६ ॥ तदनन्तर हंसरूपधारी परमात्माको आराधना गर्दै ती आत्मदर्शी पुरुषले बलियो समाधिद्वारा भगवान्‌को बैकुण्ठलोक प्राप्त गरे ॥ ७ ॥ हे विदुरजी ! हविर्धानकी पत्नी हविर्धानीले बर्हिषद, गय, शुक्ल, कृष्ण, सत्य र जितव्रत नामका छ भाइ पुत्र जन्माए ॥८॥ हे विदुरजी ! ती मध्ये हविर्धानको जेठो छोरो महाराज बर्हिषद् प्रजापति यज्ञादि कर्मकाण्ड र योगाभ्यासमा प्रवीण थिए ॥ ९ ॥ ती राजाले निरन्तर यज्ञ गर्दै रहनाले सम्पूर्ण पृथ्वी पूर्वतिर अग्रभाग पारेर फैलाइएका कुशहरूले आच्छादित भएको थियो। यसै कारण यो प्राचीनबर्हि कहियो ॥ १० ॥ ती प्राचीन बर्हिले देवाधिदेव ब्रह्माजीको कथनानुसार-समुद्रकी कन्या शतद्रुतिसित विवाह गरेका थिए। ती सर्वाङ्ग-सुन्दरी मनोहर भूषण-भूषिता तथा किशोर अवस्था भएकी कुमारीको पाणिग्रहण वेलामा प्रदक्षिणा

करादानदण्डशुल्कादिदारुणाम् ॥ मन्यमानो दीर्घसत्रव्याजेन विससर्ज ह ॥ ६ ॥ तत्रापि हंसं पुरुषं परमात्मानमात्मदृक् ॥ यजंस्तल्लोकतामाप कुशलेन समाधिना ॥ ७ ॥ हविर्धानाद्धविर्धानी विदुरासूत षट् सुतात् ॥ बर्हिषदं गयं शुक्लं कृष्णं सत्यं जितव्रतम् ॥ ८ ॥ बर्हिषत्सु महाभागो हविर्धानिः प्रजापतिः ॥ क्रियाकाण्डेषु निष्णातो योगेषु च कुरूद्वह ॥ ९ ॥ यस्येदं देवयजनमनु यज्ञं वितन्वतः ॥ प्राचीनाग्रैः कुशैरासीदास्तृतं वसुधातलम् ॥ १० ॥ सामुद्रीं देवदेवोक्तामुपयेमे शतद्रुतिम् ॥ यां वीक्ष्य चारुसर्वाङ्गीं किशोरीं सुष्ठ्वलंकृताम् ॥ परिक्रमन्तीमुद्वाहे चकमेऽग्निः शुकीमिव ॥११॥ विबुधासुरगन्धर्वमुनिसिद्धनरोरगाः ॥ निर्जिताः सूर्यया दिक्षु क्वणयन्त्यैव नूपुरैः ॥१२॥ प्राचीनबर्हिषः पुत्राः शतद्रुत्यां दशाभवन् ॥ तुल्यनामव्रताः सर्वे धर्मस्नाताः प्रचेतसः ॥ १३ ॥ पित्रादिष्टाः प्रजासर्गे तपसेऽर्णवमाविशन् ॥ दशवर्षसहस्राणि तपसाऽर्चंस्तपस्पतिम् ॥१४॥यदुक्तं पथि दृष्टेन गिरिशेन प्रसीदता ॥ तद्ध्यायन्तो जपंतश्च पूजयंतश्च संयताः॥१५॥विदुर उवाच ॥ प्रचेतसां गिरित्रेण यथासीत्पथि

गरेकी देखेर—अग्निले जस्तै पूर्वकालमा सप्तर्षिहरूकी भार्या शुकीको कामना गरेको थियो, त्यस्तै नै उनले पनि इनैलाई मनपराए॥ ॥११॥ अविवाहिता शतद्रुतिले नै आफ्ना नूपुरको मीठो झङ्कारले सबै दिशाहरूका देवता, असुर, गन्धर्व, मुनि, सिद्ध, मनुष्य तथा नाग आदिलाई आफ्नो वशमा पारे ॥१२॥ती शतद्रुतिले प्राचीनबर्हिका प्रचेता नाम हुने दस पुत्र उत्पन्न भए। ती सबै समान नाम र गुण तथा धर्ममा पारङ्गत थिए ॥१३॥ तिनका पिता प्राचीनबर्हिले जब तिनलाई सन्तान उत्पन्न गर्न आज्ञा दिए तब ती तपस्या गर्न समुद्रभित्र प्रवेश गरे अनि दस हजार वर्षसम्म तपस्या गर्दै तपस्याका फलदाता श्रीविष्णु भगवान्‌को आराधना गरिरहे ॥१४॥ तपस्या गर्न जाने बेलामा तीमाथि प्रसन्न श्रीमहादेवजीले बाटोमा तिनलाई जुन साधनाको उपदेश दिएका थिए, त्यसैको अनुसार एकाग्रतापूर्वक जप, ध्यान तथा पूजा गर्दै ती भगवान्‌को आराधना गर्नलागे ॥ १५ ॥ यति कथा सुनिसकेर विदुरजीले सोधे—

॥ कथान्तर—परापूर्वमा सप्तर्षिहरूको यज्ञमा उनकी भार्या शुकीलाई देखेर अग्निदेव कामातुर भएका थिए। तिनको मनोभाव जानेर अग्निकी पत्नी स्वाहाले शुकीको रूप धारण गरेर अग्निसित रमण गरे। अनि अग्निको वीर्य कोसको आटीमा राखेर ती स्वाहारूपले पुनः अग्निकै नजीक फर्केर आइन्। यस प्रकार तिनले आफ्ना पतिलाई अनीतिको बाटोमा प्रवृत्त हुनबाट जोगाइन्।

हे ब्रह्मन् ! बाटोमा ती प्रचेताहरूको महादेवजीसित कसरी साक्षात्कार भयो ? उनीसित प्रसन्न भएर शङ्कर भगवान्‌ले तिनलाई कुन सारयुक्त साधनको उपदेश दिनु भयो ? त्यो आज्ञाहोस् ॥१६॥ हे ब्रह्मन् ! जसलाई प्राप्त गर्ने इच्छाले मुनिगण आसक्ति रहित भएर सर्वदा ध्यान गर्दछन् ती शिवजीसित साक्षात्कार हुनु त देहधारीहरूका लागि कठिन काम हो ! ॥१७॥ भगवान् शंकर आत्माराम भएर पनि त्यो लोकरचनाको रक्षाका निम्ति आफ्नो अत्यन्त भयङ्कर शक्ति सहित सर्वै स्थानमा डुल्दै रहन्छन् ॥१८॥ मैत्रेयजी भन्दछन्—हे विदुर ! ती साधु प्रकृतिका प्रचेतागण आफ्ना पिताको आज्ञा शिरोधार्य गरे तथा तपस्यामा मन लगाएर पश्चिम दिशातिर प्रस्थान गरे ॥१९॥ मार्गमा जाँदा,जाँदै उनीहरूले समुद्र नगीचै योटा विस्तृत सरोवर देखे । त्यसको जल महापुरुषको मन झैं स्वच्छ थियो र त्यसमा भएका मत्स्य आदि समस्त जलचर जीव सदैव प्रसन्न रहन्थे ॥२०॥ त्यस सरोवरमा नील कमल रक्त कमल तथा उत्पन्न ( रात्रिको बेलामा फक्रने कमल ) अम्भोज (दिउँसो फक्रने कमल) कल्हार (सायंकालमा फक्रने कमल) तथा इन्दीवर (नीलकमल) आदि र अरु पनि अनेक

सङ्गमः ॥ यदुताह हरः प्रीतस्तन्नो ब्रह्मन्वदार्थवत् ॥१६॥ सङ्गमः खलु विप्रर्षे शिवेनेह शरीरिणाम् ॥ दुर्लभो मुनयो दध्युरसंगाद्यमभीप्सितम् ॥१७॥ आत्मारामोऽपि यस्त्वस्य लोककल्पस्य राधसे ॥ शक्त्या युक्तो विचरति घोरया भगवान्भवः ॥१८॥ मैत्रेय उवाच ॥ प्रचेतसः पितुर्वाक्यं शिरसाऽऽदाय साधवः ॥ दिशं प्रतीचीं प्रययुस्तपस्यादृतचेतसः ॥१९॥ समुद्रमुपविस्तीर्णमपश्यन्सुमहत्सरः ॥ महन्मन इव स्वच्छं प्रसन्नसलिलाशयम् ॥ २० ॥ नीलरक्तोत्पलाम्भोजकह्लारेन्दीवराकरम् ॥ हंससारसचक्राह्वकारण्डवनिकूजितम् ॥ २१ ॥ मत्तभ्रमरसौस्वर्यहृष्टरोमलतांघ्रिपम् ॥ पद्मकोशरजो दिक्षु विक्षिपत्पवनोत्सवम् ॥ २२ ॥ तत्र गान्धर्वमाकर्ण्य दिव्यमार्गं मनोहरम् ॥ विसिस्म्यू राजपुत्रास्ते मृदङ्गपणवाद्यनु ॥ २३ ॥ तर्ह्येव सरसस्तस्मान्निष्कामन्तं सहानुगम् ॥ उपगीयमानममरप्रवरं विबुधानुगैः ॥ २४ ॥ तप्तहेमनिकायाभं शितिकण्ठं त्रिलोचनम् ॥ प्रसादसुमुखं वीक्ष्य प्रणेमुर्जातकौतुकाः ॥२५॥ स तान्प्रपन्नार्तिहरो भगवान्धर्मवत्सलः धर्मज्ञान् ॥ शीलसम्पन्नान्प्रीतः प्रीतानुवाच ह ॥ २६ ॥ श्रीरुद्र उवाच ॥ यूयं वर्हिषदः पुत्रा विदितं वश्चिकीर्षितम् ॥ अनुग्रहाय भद्रं व एवं मे दर्शनं कृतम् ॥ २७ ॥ यः परं रंहसः साक्षात्त्रिगुणाज्जीवसंज्ञितात् ॥ भगवन्तं वासुदेवं

प्रकारका कमल उत्पन्न हुन्थे र तिनमा हंस, सारस, चकोर तथा कारण्डव आदि पक्षी सदैव विद्यमान रहन्थे ॥ २१ ॥ लतारूपी रोममा भक्त मधुरकरहरूको मधुर गुंजारले हर्षित हुने वृक्षहरूले त्यो सरोवर घेरिएको थियो । कमलको मध्यभागमा स्थित परागलाई यता-उता पुऱ्याउने भएको वायुले जस्तै—त्यहाँ योटा अद्भुत उत्सव रचिराखेको थियो ॥२२॥ त्यहाँ मृदङ्ग र पणव आदि बाजाहरूसित अनेकानेक राग-रागिनीहरूले युक्त अतिशय मनोहर गायन सुनेर ती राजपुत्र निकै विस्मित भए ॥ २३ ॥ त्यसै बखत पोलेको सुवर्ण राशि सदृश कान्तिमान्—जुन प्रभु भक्तगणमा अनुग्रह गर्नका लागि उद्यत थिए र देवानुचर गन्धर्वगण जसको सुयश गाउँथे, ती नीलकण्ठ तथा त्रिनयन देवश्रेष्ठ शंकर भगवान्‌लाई-आफ्ना गणसहित त्यस सरोवरबाट बाहिर निस्कन लागेका देखेर ती राजपुत्रहरूले ठूलो कुतूहलका साथै प्रणाम गरे ॥ २४-२५ ॥ आफ्ना शरणागतको कष्ट निवारण गर्न तथा धर्मवत्सल शङ्कर भगवान्‌ले आफ्नो दर्शनले प्रसन्न ती धर्मज्ञ तथा शीलसम्पन्न प्रचेतासित भन्नुभयो ॥ २६ ॥ श्रीशङ्करजी भन्नुहुन्छ—म जान्दछु कि तिमी वर्हि-

ध्रुवका पुत्र हौ, तिम्रो कल्याण होस् । जे गर्ने तिम्रो इच्छा छ, त्यो पनि मलाई ज्ञात छ । यस बखत तिमीमाथि कृपा गर्नका निम्ति नै मैले यहाँ आएर तिमीलाई दर्शन दिएँ ॥२७॥ किनकि जो पुरुष सूक्ष्म, त्रिगुणात्मक, प्रधान तथा जीव नामक पुरुषसित अतीत साक्षात् वासुदेव भगवानुका शरणमा जान्छ । त्यो मलाई अतिशय प्रिय हुन्छ ॥२८॥ जो प्राणी आफ्नो धर्ममा तत्पर रहन्छ, त्यो सय जन्मपछि ब्रह्मा बन्दछ । त्यसपछि त्यो ममा प्राप्त हुन्छ । त्यसपछि ऊ भगवद्भक्त भगवान् विष्णुको अनिर्वचीन पदलाई यसरी प्राप्त गर्दछ, जस्तै अधिकार समाप्त भएपछि देवताहरू सहित म उनलाई प्राप्त हुन्छु ॥२९॥ तिमीहरू असाधारण भगवद्भक्त हौ, यसनिम्ति तिमी मलाई भगवान् झैं प्रिय छौ । यसै गरी भगवान्का भक्तहरूको पनि मभन्दा बढ्ता प्रिय अरू कोही हुँदैन ॥३०॥ सुन, म तिमीलाई त्यो परम पवित्र, अत्यन्त मङ्गलमय र कल्याणकारी स्तोत्र सुनाउँछु । तिमी यसको स्पष्ट उच्चारण गर्दै जप गरिरहनु ॥३१॥ मैत्रेयजी भन्दछन्–हे विदुरजी ! करुणापूर्ण अन्तःकरण भएका र नारायण परायण भगवान् शङ्करले आफ्नो सामुन्ने हात

प्रपन्नः स प्रियो हि मे ॥ २८ ॥ स्वधर्मनिष्ठः शतजन्मभिः पुमान् विरिञ्चतामेति ततः परं हि माम् ॥ अव्याकृतं भागवतोऽथ वैष्णवं पदं यथाऽहं विबुधाः कलात्यये ॥ २९ ॥ अथ भागवता यूयं प्रियाः स्थ भगवान्यथा ॥ न मद्भागवतानां च प्रेयानन्योऽस्ति कर्हिचित् ॥ ३० ॥ इदं विविक्तं जप्तव्यं पवित्रं मङ्गलं परम् ॥ निःश्रेयसकरं चापि श्रूयतां तद्वदामि वः ॥ ३१ ॥ मैत्रेय उवाच ॥ इत्यनुक्रोशहृदयो भगवानाह ताञ्छिवः ॥ बद्धाञ्जलीन्राजपुत्रान्नारायणपरो वचः ॥ ३२ ॥ श्रीरुद्र उवाच ॥ जितं त आत्मविद्धुर्य स्वस्तये स्वस्तिरस्तु मे ॥ भवता राधसा राद्धं सर्वस्मा आत्मने नमः ॥ ३३ ॥ नमः पङ्कजनाभाय भूतसूक्ष्मेन्द्रियात्मने ॥ वासुदेवाय शान्ताय कूटस्थाय स्वरोचिषे ॥ ३४ ॥ सङ्कर्षणाय सूक्ष्माय दुरन्तायान्तकाय च ॥ नमो विश्वप्रबोधाय प्रद्युम्नायान्तरात्मने ॥ ३५ ॥ नमो नमोऽनिरुद्धाय हृषीकेशेन्द्रियात्मने ॥ नमः परमहंसाय पूर्णाय निभृतात्मने ॥ ३६ ॥ स्वर्गापवर्गद्वाराय नित्यं शुचिपदे नमः ॥ नमो हिरण्यवीर्याय चातुर्होत्राय तन्तवे ॥ ३७ ॥ नम ऊर्ज इषे त्रय्याः पतये यज्ञरेतसे ॥ तृप्तिदाय

जोरेर उभिएका ती राजपुत्रहरूसित भने ॥३२॥ महादेव भन्नुहुन्छ (त्यो स्तोत्र हो)ः–हे प्रभो ! हजुरको अभ्युत्थान सबै आत्मज्ञानीहरूमा श्रेष्ठ भक्तजनको कल्याणका निम्ति नै हुन्छ । अतः मेरो पनि कल्याण होस् । हजुर नित्य आफूमा नै परमानन्द स्वरूपमा स्थित रहनुहुन्छ । हजुर सर्वरूपलाई मेरो प्रणाम छ॥३३॥भूत,सूक्ष्म,तथा इन्द्रियहरूका नियन्ता,चित्तका अधिष्ठाता, शान्त, कूटस्थ, स्वयं प्रकाश तथा कमलनाभ वासुदेव भगवान्लाई हाम्रो नमस्कार छ ॥ ३४ ॥ अत्यन्त, सूक्ष्म, अनन्त सर्वलोकसंहारक र अहङ्कारका अधिष्ठाता भगवान् सङ्कर्षणलाई नमस्कार छ । जसद्वारा जगत्लाई ज्ञान प्राप्त हुन्छ, ती बुद्धिका अधिष्ठातास्वरूप प्रद्युम्न भगवान्लाई नमस्कार छ॥३५॥ मन र इन्द्रियका अधिष्ठाता र इन्द्रिय स्वरूप हजुर अनिरुद्धलाई नमस्कार छ । आफ्नो तेजले समस्त जगत्लाई व्याप्त गर्ने तथा वृद्धि र क्षयहीन सूर्यस्वरूप हजुरलाई नमस्कार ॥३६॥ स्वर्ग र मोक्षका द्वार, सर्वदा पवित्र हृदयमा रहने भएका सुवर्णरूपी वीर्ययुक्त तथा चातुर्होत्र यज्ञको विस्तार गर्ने हजुर अग्निदेवलाई नमस्कार छ ॥३७॥ पितृ र देवताका अन्नस्वरूप सोमरूपी हजुरलाई नमस्कार छ । यस प्रकार

सूर्य, अग्नि तथा सोमरूपले तीनै वेदका अधिष्ठाता श्रीहरिलाई नमस्कार छ। सम्पूर्ण प्राणीहरूलाई तृप्त पार्ने सर्वरस (जलरूप) हजुरलाई नमस्कार छ ।।३८।। सबै प्राणीहरूको देह, पृथ्वीरूप र विराट्स्वरूप हजुरलाई नमस्कार छ। मन, इन्द्रिय र शरीरले सम्बन्ध राख्ने शक्तिहरूले युक्त एवं त्रिलोकका रक्षक वायुरूप हजुरलाई नमस्कार छ ।।३९।। आफ्ना शब्द-गुण द्वारा सबै पदार्थको ज्ञान प्राप्त गर्ने र सबै वस्तुका बाहिर-भित्र आकाशरूपले रहने हजुरलाई प्रणाम छ। पुण्यहरू द्वारा प्राप्त हुने, परम तेजोमय, स्वर्ग तथा वैकुण्ठादि लोकरूप हजुरलाई नमस्कार छ ।।४०।। पितृलोक प्राप्त गर्ने प्रवृत्ति कर्ममय देवलोक प्राप्तिका साधन स्वरूप, निवृत्ति-कर्मरूप, अधर्मका फलदाता, दुःखदायक मृत्युरूपी हजुरलाई नमस्कार छ ।।४१।। हे ईश ! अभिलषित फलहरू दिने, सर्वज्ञ, परम धर्ममूर्ति, अकुण्ठित बुद्धि, पुराण-पुरुष तथा सांख्य र योगका प्रभु भगवान् कृष्णलाई प्रणाम छ ।। ४२ ।। कर्ता, कारण र कर्म यी तीन शक्तिहरूले युक्त अहङ्कारका अधिपति भगवान् रुद्र तथा जसबाट परा, पश्यन्ति, मध्यमा र वैखरी वाणी अभिव्यक्त हुन्छन्, ती हजुर प्रभुलाई

च जीवानां नमः सर्वरसात्मने ॥ ३८ ॥ सर्वसत्त्वात्मदेहाय विशेषाय स्थवीयसे ॥ नमस्त्रैलोक्यपालाय सहओजोबलाय च ॥ ३९ ॥ अर्थलिङ्गाय नभसे नमोऽन्तर्बहिरात्मने ॥ नमः पुण्याय लोकाय अमुष्मै भूरिवर्चसे ॥ ४० ॥ प्रवृत्ताय निवृत्ताय पितृदेवाय कर्मणे ॥ नमो धर्मविपाकाय मृत्यवे दुःखदाय च ॥ ४१ ॥ नमस्ते आशिषामीश मनवे कारणात्मने ॥ नमो धर्माय बृहते कृष्णायाकुण्ठमेधसे ॥ पुरुषाय पुराणाय सांख्य-योगेश्वराय च ॥ ४२ ॥ शक्तित्रयसमेताय मीढुषेऽहंकृतात्मने ॥ चेतआकूतिरूपाय नमो वाचोविभूतये ॥ ४३ ॥ दर्शनं नो दिदृक्षूणां देहि भगवतार्चितम् ॥ रूपं प्रियतमं स्वानां सर्वेन्द्रियगुणाञ्जनम् ॥ ४४ ॥ स्निग्धप्रावृड्घनश्यामं सर्वसौन्दर्यसंग्रहम् ॥ चार्वायतचतुर्बाहुं सुजात-रुचिराननम् ॥ ४५ ॥ पद्मकोशपलाशाक्षं सुन्दरभ्रु सुनासिकम् ॥ सुद्विजं सुकपोलास्यं समकर्णविभूषणम् ॥ ४६ ॥ प्रीतिप्रहसितापाङ्गमलकैरु-पशोभितम् ॥ लसत्पंकजकिञ्जल्कदुकूलं मृष्टकुण्डलम् ॥ ४७ ॥ स्फुरत्किरीटवलयहारनूपुरमेखलम् ॥ शङ्खचक्रगदापद्ममालामण्युत्तमर्द्धितम् ॥ ४८ ॥ सिंहस्कन्धत्विषो बिभ्रत्सौभगग्रीवकौस्तुभम् ॥ श्रियाऽनपायिन्याऽऽक्षिप्तनिकषाश्मोरसोल्लसत् ॥ ४९ ॥ पूररेचकसंविग्नवलिवल्गुदलोदरम् ॥

प्रणाम छ। ज्ञान र क्रियारूप भगवानलाई हाम्रो नमस्कार छ ।।४३।। हे प्रभो ! हामी हजुरको दर्शन गर्न खोज्दछौं, अतः हजुर हामी भक्त द्वारा पूजित तथा तिनको अत्यन्त प्रिय-आफ्नो रूप देखाउनुहवस। त्यो रूप आफ्ना गुणले सबै इन्द्रियलाई तृप्त पार्नवाला छ। त्यो वर्षाकालीन मेघ समान श्याम, सबै सौन्दर्यको भण्डार, चार सुन्दर विशाल भुजाले युक्त र अतिशय मनोहर मुखारविन्दले युक्त रहन्छ ।।४४।।४५।। जुन मुखमा कमल कोशका पालुवा झैं विशाल नेत्र, सुन्दर भृकुटी, मनोहर नासिका, परमसुन्दर दन्तपंक्ति, सुन्दर कपोलहरूले युक्त मनोहर मुख र शोभा सम्पन्न समान कर्णपुट छन् ।।४६।। जो आफ्नो मन्द-हास्य तथा मनोहर कटाक्ष-भङ्गीले सुशोभित छन्। जो कमलकर्णिकाको केसर सदृश पीत वस्त्र एवं सुन्दर कुण्डलले अलंकृत छन् ।।४७।। जो झलझलाउँदो मुकुट, कङ्कण, हार, नूपुर तथा मेखला आदिले समलंकृत, शङ्ख, चक्र, गदा, पद्म, बनमाला, कौस्तुभ मणि उत्तम शोभा सम्पन्न छन् ।।४८।। जो सिंहको काँध सदृश स्थूल काँधमा रहेको कुण्डलादिको कमनीय कान्ति धारण गरेका छन्। जसका ग्रीवा कौस्तुभ मणिले गर्दा मनोहर देखिन्छ, जो हटिल्ये

पनि नछुट्टिने लक्ष्मीले सुशोभित र कसौटीको ढुङ्गा सदृश श्याम वक्षस्थलले गर्दा सान्है राम्रो देखिइरहेछ ॥ ४९ ॥ श्वास आउना-जानाले बराबर हल्लिने त्रिवली द्वारा शोभायमान उदर छ । जो स्वरूप भुमरी र नाभिले मानौं उसैद्वारा प्रकट गरिएको विश्वलाई फेरि उसैमा समेटिलिने चेष्टा गरिरहेको छ ॥ ५० ॥ जुन वपुका श्याम कटिप्रदेशमा स्वच्छ पीताम्बर र सुवर्णको मेखला शोभायमान छ, जो समान र सुन्दर चरण, पिंडुला, ऊरु एवं घुँडाले गर्दा अतिशय राम्रो देखिइरहेछ ॥ ५१ ॥ जो शरत्कालको कमलदलको शोभा सम्पन्न चरणका नङको दीप्तिले हाम्रो हृदयको पापरूपी अन्धकारलाई धपाइरहेको छ । भक्तहरूको भय हरण गर्ने त्यो आफ्नो रूपको हामीलाई दर्शन दिनुहवस्, किनकि हे परम गुरो ! हामी अज्ञानी प्राणीको बाटो प्रकाशमय पारिदिने हजुर हाम्रा सबभन्दा ठूला गुरु हुनुहुन्छ ॥ ५२ ॥ हे प्रभो ! चित्त शुद्धिका इच्छुक पुरुषलाई हजुरको यस रूपको ध्यान गर्नु

प्रतिसंक्रामयद्विश्वं नाभ्याऽऽवर्तगभीरया ॥ ५० ॥ श्यामश्रोण्यधिरोचिष्णुदुकूलस्वर्णमेखलम् ॥ समचार्वङ्घ्रिजंघोरुनिम्नजानुसुदर्शनम् ॥ ५१ ॥ तदा शरत्पद्मपलाशरोचिषा नखद्युभिर्नोऽन्तरघं विधुन्वता ॥ प्रदर्शय स्वीयमपास्तसाध्वसं पदं गुरो मार्गगुरुस्तमोजुषाम् ॥ ५२ ॥ एतद्रूपमनुध्येयमात्मशुद्धिमभीप्सताम् ॥ मद्भक्तियोगोऽभयदः स्वधर्ममनुतिष्ठताम् ॥ ५३ ॥ भवान्भक्तिमता लभ्यो दुर्लभः सर्वदेहिनाम् ॥ स्वाराज्यस्याभिमत एकान्तेनात्मविद्गतिः ॥५४ ॥ तं दुराराध्यमाराध्य सतामपि दुरापया ॥ एकान्तभक्त्या को वाञ्छेत्पादमूलं विना बहिः ॥ ५५ ॥ यत्र निर्विष्टमरणं कृतान्तो नाभिमन्यते ॥ विश्वं विध्वंसयन्वीर्यशौर्यविस्फूर्जितभ्रुवा ॥ ५६ ॥ क्षणार्धेनापि तुलये न स्वर्गं नापुनर्भवम् ॥ भगवत्सङ्गिसङ्गस्य मर्त्यानां

आवश्यक छ किनकि आफ्नो धर्मको अनुष्ठान गर्ने पुरुषलाई भक्तियोग नै अभयदायक छ ॥५३॥ हजुर स्वर्गको शासन गर्ने भएका इन्द्रका पनि पूज्य र एकमात्र आत्मवेत्ताहरूलाई नै प्राप्त हुन योग्य हुनुहुन्छ । यद्यपि सबै प्राणीहरूको निम्ति हजुर प्राप्त हुनु कठिन छ तापनि भक्त पुरुष हजुरलाई कुनै प्रकारले प्राप्त गरी छाड्छन् ॥५४॥ अतः दुराराध्य एवं सत्पुरुषलाई पनि कठिनताले भेटिने योग्य हजुरको अनन्य भक्तिले आराधना गरेर यस्तो कुन प्राणी छ, जो हजुरका चरण छाडेर बाह्य विषयहरू खोज्ला ? ॥५५॥ अतिशय उत्साह तथा वीरतापूर्वक आफ्नो फर्कने भृकुटीले विश्वलाई ध्वंस पारिदिने काल पनि जसको शरणमा प्राणीहरूलाई आफ्नो गाँस तुल्याउन पाउन्न त्यस्ता हजुरका चरण छाडेर बाह्य विषयहरूतिर आफ्नो मन को दगुराउला ? ॥ ५६ ॥ म त हजुरका भक्तहरूको सत्सङ्गको आधा क्षणसित स्वर्ग तथा मोक्षपदको पनि तुलना गर्न सक्तिन, फेरि मनुष्यका अन्य लालसाहरूको के

---

* दृष्टान्त ( यौटा ब्राह्मण र त्यसका तीन सन्तान ) एक नगरमा यौटा ब्राह्मण बस्तथे । तिनका तीन पुत्र थिए, जेठो पन्ध्र वर्षको माहिलो छ वर्षको र कान्छो दुइ वर्षको । नगर बाहिर यौटा शिवालय थियो त्यहाँ मेला लाग्यो । ब्राह्मण पनि आफ्ना पनि आफ्ना छोरा लिएर त्यहाँ गयो । जेठो छोरो पछि-पछि हिंड्दै थियो । माहिलो चाहिं बाबुको हात समातेर हिंड्दै थियो र कान्छो काखमा थियो । जेठो छोरो पछाडि छुट्यो र ब्राह्मण अगाडि गए । पछाडि छुटेको बालकले धेरै धक्का खायो त्यसले त्यो साह्रै दुःखी भयो र मेलाका हेर्दै घर आयो । जो औंला समातेर हिंड्दै थियो, त्यसले पनि निकै धक्का खायो, तापनि बाबुसँगै थियो । तर जो काखमा थियो, त्यसलाई कुनै कष्ट भएन र त्यसले आनन्दसाथ मेला हेर्‍यो । यस संसारमा पनि तीनै थरि संसाररूपी मेला हेर्दछन् । धर्मकाण्डी आफ्नो धर्मद्वारा जगत्को मेला हेर्दछन् । त्यसले ती स्वर्ग नरक आदिमा भौंतारिइरहन्छन् । उपासक परमात्माश्रित टाँसिइरहन्छन् । त्यसैले वैकुण्ठ आदि लोकहरूमा धक्का खाँदै रहन्छन् । तर ज्ञानी भक्त आवागमन रहित भएर नित्य र अक्षय सुख भोग्दछन्

भन्नु छ । ॥५७॥ हो पापहारी भगवन् ! जो व्यक्ति हजुरका सुयशरूपी तीर्थमा स्नान गरेर भित्र र बाहिरबाट पापहीन भइसकेका हुन्छन् र जो भूतदया, शुद्धचित्त र सुन्दर स्वभावले युक्त छन्, तिनको संग हामीलाई बराबर प्राप्त भइरहोस् । यही ममाथि हजुरको सबै भन्दा ठूलो कृपा मानिने छ ॥ ५८ ॥ जब साधकको मन बाहिरी विषयहरूको झ्याउलोमा अल्झन्न र तमस्वरूप प्रकृतिमा लीन हुँदैन तथा हजुरको भक्तियोगले अनुग्रहीत भएर निर्मल बन्दछ, तब त्यो साधक अनयास नै हजुरको स्वरूपलाई प्राप्त गरिलिन्छ ॥ ५९ ॥ जसमा यो सारा जगत् दृष्टिगोचर हुन्छ र जसद्वारा सारा जगत् प्रकाशमान रहन्छ त्यो आकाश सदृश विस्तृत र अतिशय प्रकाशपूर्ण ब्रह्मतत्त्व हजुर नै हुनुहुन्छ ॥ ६० ॥ हे स्वामिन् ! जसबाट अन्य प्राणीहरूका मनमा भेद-बुद्धि जागृत हुन्छ, किन्तु जो हजुरमाथि केही पनि प्रभाव पार्न सक्दैन, त्यस विविधरूपधारिणी माया द्वारा जो स्वयं विकार शून्य रहेर पनि यस जगत्को रचना, यसको पालन र अन्त्यमा यसको संहार गर्दछन् त्यस्ता हजुरलाई हामी परम स्वतन्त्र मान्दछौं ॥ ६१ ॥ हे देव ! जो कर्मयोगी आफ्ना कर्महरूका

किमुताशिषः ॥ ५७ ॥ अथानघाङ्घ्रेस्तव कीर्तितीर्थयोरन्तर्बहिः स्नानविधूतपाप्मनाम् ॥ भूतेष्वनुक्रोशसुसत्त्वशीलिनां स्यात्सङ्गमोऽनुग्रह एष नस्तव ॥ ५८ ॥ न यस्य चित्तं बहिरर्थविभ्रमं तमो गुहायां च विशुद्धमाविशत् ॥ यद्भक्तियोगानुगृहीतमञ्जसा मुनिर्विचष्टे ननु तत्र ते गतिम् ॥५९॥ यत्रेदं व्यज्यते विश्वं विश्वस्मिन्नवभाति यत् ॥ तत्त्वं ब्रह्म परं ज्योतिराकाशमिव विस्तृतम् ॥ ६० ॥ यो माययेदं पुरुरूपयासृजद्बिभर्ति भूयः क्षपयत्यविक्रियः ॥ यद्भेदबुद्धिः सदिवात्मदुःस्थया तमात्मतन्त्रं भगवन्प्रतीमहि ॥ ६१ ॥ क्रियाकलापैरिदमेव योगिनः श्रद्धान्विताः साधु यजन्ति सिद्धये ॥ भूतेन्द्रियान्तःकरणोपलक्षितं वेदे च तन्त्रे च त एव कोविदाः ॥ ६२ ॥ त्वमेव आद्यः पुरुषः सुप्तशक्तिस्तया रजःसत्त्वतमो विभिद्यते ॥ महानहं खं मरुदग्निवार्धराः सुरर्षयो भूतगणा इदं यतः ॥ ६३ ॥ सृष्टं स्वशक्त्येदमनुप्रविष्टश्चतुर्विधं पुरमात्मांशकेन ॥ अथो विदुस्तं पुरुषं सन्तमन्तर्भुङ्क्ते हृषीकैर्मधु सारघं यः ॥६४॥ स एष लोकानतिचण्डवेगो विकर्षसि त्वं खलु कालयानः ॥ भूतानि भूतैरनुमेयतत्त्वो घनावलिर्वायुरिवाविषह्यः ॥ ६५ ॥ प्रमत्तमुच्चैरितिकृत्यचिन्तया प्रवृद्धलोभं विषयेषु लालसम् ॥ त्वमप्रमत्तः सहसाऽभिपद्यसे क्षुल्लेलिहानोऽहिरिवाखु-

सिद्धिका निम्ति विविध कर्महरू द्वारा पञ्चभूत, इन्द्रिय तथा अन्तःकरणको प्रेरकरूपमा उपलक्षित हजुरको यस रूपको श्रद्धापूर्वक राम्ररी पूजन गर्दछन् तिनै व्यक्ति वेद तथा सबै शास्त्रहरूमा कुशल हुन्छन् ॥६२॥ हे प्रभो ! जसको मायाशक्ति सृष्टिभन्दा पहिले सुतिरहेको हुन्छ ( र पछि विकसित हुन्छ ) ती अद्वितीय आदिपुरुष हजुर नै हुनुहुन्छ । केही समयको पछि त्यस मायाशक्तिबाट नै हजुर सत्त्व, रज तथा तमको भेदले एकबाट अनेक हुन्छन् । जसबाट महत्तत्त्व, अहङ्कार, आकाश, वायु, अग्नि, जल, पृथ्वी, देवता, ऋषि तथा सबै प्राणीहरूले युक्त यो संसार उत्पन्न हुन्छ ॥ ६३ ॥ यस प्रकार आफ्नो माया-शक्तिले रचित जरायुज, स्वेदज, अण्डज आदि चार थरिका देहरूपी नगरमा अंशरूपले प्रविष्ट भएर मधुमक्खिकाहरू द्वारा बनेको महको समान तुच्छ विषयहरूलाई आफ्ना इन्द्रियद्वारा भोग्दछ हजुरको त्यही अंशलाई मनुष्य पुरुष अर्थात् जीव भन्दछन् ॥६४॥ जस्तै प्रचण्ड वायु मेघमालालाई यता-उता छरिदिन्छ, त्यस्तै नै जसका स्वरूपको ज्ञान केवल अनुमानले गरिन्छ यस्ता अतिशय प्रचण्ड वेग भएका कालरूपी हजुर सबै स्थावर जंगम प्राणीहरूबाट अलग पार्द

तिनको संहार गरिदिन्छन् ॥६५॥ हे प्रभो ! भोकले गर्दा जिब्रो हल्लाउने सर्प जस्तै मुसालाई निल्दछ, त्यस्तै नै–'यो कार्य यसरी गर्नुपर्दछ' यस चिन्ताले ग्रस्त हुनाको हेतुले अतिशय प्रमादयुक्त तथा विषय-लालसाले जसको लोभ बढेको रहन्छ, त्यस असावधान पुरुषलाई सदा सावधान रहिरने कालरूपी हजुर सहसा निलिदिनु हुन्छ ॥६६॥ अतः कालको भयले भयभीत भएर हाम्रा गुरु ब्रह्माजीले जसको पूजन गरे तथा स्वायम्भुव आदि चौध्र मनुहरूले उत्पत्तिको विना नै केवल ब्रह्माजीको कुरामा विश्वास गरेर नै जसको पूजा गरे, त्यस्ता हजुरका चरण-कमलको–हजुरको अवहेलना गर्नाले भयले जसको देह कामिरहेको होस्–यस्तो कुन विद्वान् पुरुष होला, जो त्याग्न सक्ला ? ॥६७॥ हे ब्रह्मन् ! हे परमात्मन् ! सारा जगत् रुद्र-स्वरूप कालको भयले व्याकुल भइरहेको छ । अतएव यस तत्त्वका ज्ञाता हामीहरूको यस बखत हजुर नै यहाँ निर्भय गति हुनुहुन्छ ॥६८॥ हे राजकुमार हो ! तिम्रो कल्याण होस् ! तिमी विशुद्ध मनले आफ्नो धर्मको पालन गर्दै भगवान्मा मन लगाएर मैले भनेको यस मन्त्रलाई जप्दै रह ॥६९॥ तिमी सदा भगवान्का स्तुतितिर ध्यान राख्दै

मन्तकः ॥ ६६ ॥ कस्त्वत्पदाब्जं विजहाति पण्डितो यस्तेऽवमानव्ययमानकेतनः ॥ विशङ्कयाऽस्मद्गुरुरर्चति स्म यद्विनोपपत्तिं मनवश्चतुर्दश ॥६७॥
अथ त्वमसि नो ब्रह्मन्परमात्मन्विपश्चिताम् ॥ विश्वं रुद्रभयध्वस्तमकुतश्चिद्भया गतिः ॥ ६८ ॥ इदं जपत भद्रं वो विशुद्धा नृपनन्दनाः ॥ स्वधर्म-
मनुतिष्ठन्तो भगवत्यर्पिताशयाः ॥ ६९ ॥ तमेवात्मानमात्मस्थं सर्वभूतेष्ववस्थितम् ॥ पूजयध्वं गृणन्तश्च ध्यायन्तश्चासकृद्धरिम् ॥ ७० ॥ योगा-
देशमुपासाद्य धारयन्तो मुनिव्रताः ॥ समाहितधियः सर्व एतदभ्यसतादृताः ॥ ७१ ॥ इदमाह पुराऽस्माकं भगवान्विश्वसृक्पतिः ॥ भृग्वादी-
नामात्मजानां सिसृक्षुः संसिसृक्षताम् ॥ ७२ ॥ ते वयं नोदिताः सर्वे प्रजासर्गे प्रजेश्वराः ॥ अनेन ध्वस्ततमसः सिसृक्ष्मो विविधाः प्रजाः ॥ ७३ ॥
अथेदं नित्यदा युक्तो जपन्नवहितः पुमान् ॥ अचिराच्छ्रेय आप्नोति वासुदेवपरायणः ॥ ७४ ॥ श्रेयसामिह सर्वेषां ज्ञानं निःश्रेयसंपरम् ॥ सुखं
तरति दुष्पारं ज्ञाननौर्व्यसनार्णवम् ॥ ७५ ॥ य इमं श्रद्धया युक्तो मद्गीतं भगवत्स्तवम् ॥ अधीयानो दुराराध्यं हरिमाराधयत्यसौ ॥ ७६ ॥ विन्दते
पुरुषोऽमुष्माद्यद्यदिच्छत्यसत्वरम् ॥ मद्गीतगीतात्सुप्रीताच्छ्रेयसामेकवल्लभात् ॥ ७७ ॥ इदं यः कल्य उत्थाय प्राञ्जलिः श्रद्धयान्वितः ॥

आफ्नो अन्तः करणमा विराजमान सर्वभूतान्तर्यामी परमात्माको आराधना गर ॥७०॥ हामी द्वारा यो 'योगादेशस्तोत्र' प्राप्त गरेर यसलाई आफ्नो मनमा धारण गरेर मुनिव्रतको आचरण गर्दै तिमीहरू एकाग्र चित्तले यसको आदरपूर्वक अभ्यास गर्दै रहो ॥७१॥ यस स्तोत्रलाई पूर्वकालमा प्रजापतिहरूका पति पनि र स्रष्टा इच्छुक भगवान् ब्रह्माजीले प्रजालाई उत्पन्न गर्ने अभिलाषा भएका हामी भृगु आदि आफ्ना छोराहरू प्रति भनेथे ॥७२॥ त्यस बखत प्रजा उत्पन्न गर्नकालागि ब्रह्माजीद्वारा प्रेरित हामी प्रजापतिहरूले यही स्तोत्रको प्रभावले आफ्नो अज्ञानरूपी अन्धकार नष्ट गरेर विविध प्रकारका प्रजा उत्पन्न गरेका थिए ॥७३॥ जो कोही वासुदेव-परायण पुरुष निरन्तर समाहित चित्तले यसको जप गर्दछन्, उनलाई तुरुन्त श्रेय प्राप्त हुन्छ ॥७४॥ सबै श्रेयहरूमा मोक्षदायक ज्ञान नै सर्वश्रेष्ठ श्रेय मानिन्छ । ज्ञानरूपिणी डुङ्गामा आरूढ पुरुष यस संसार सागरलाई सहजै तरेर पारी पुग्न सक्दछ ॥७५॥ जुन पुरुष मैले भनेको यस भगवत् स्तोत्रलाई श्रद्धापूर्वक पाठ गर्दै ठूलो कष्ट सहेर आराधना गर्न योग्य भगवान्को आराधना गर्दछन् भने जुन वस्तुको इच्छा गर्दछन्, त्यसैलाई मैले

भनेको यस स्तोत्रको गायनद्वारा अतिशय प्रसन्न र सबै श्रेयका एकमात्र आश्रयस्वरूप श्रीभगवान्‌बाट तत्काल प्राप्त गर्दछ ॥७६॥७७॥ जो पुरुष बिहानै उठेर अतिशय श्रद्धापूर्वक र हात जोरेर यसलाई सुन्दछ वा सुनाउँदछ, त्यो सबै कर्मबन्धनबाट मुक्त हुन्छ ॥७८॥ अतएव हे राजपुत्र हो ! मैले बताएका परमपुरुष परमात्माको यस स्तोत्रको एकाग्रमनले जप गर्दै तिमी घोर तपस्या गर ; यसैले तिमीलाई अभिलषित फल मिल्दछ ॥७९॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां चतुर्विंशोऽध्यायः ॥२४॥

(पुरञ्जनोपाख्यान) मैत्रेयजी भन्दछन्–हे विदुरजी ! ती प्रचेताहरूलाई यस प्रकार ज्ञानोपदेश दिएर र उनीद्वारा राम्ररी सत्कृत भएर शङ्कर भगवान् ती राजपुत्रहरूले हेर्दाहेर्दै अन्तर्धान भए ॥ १ ॥ त्यसपछि भगवान् रुद्रले भनेको रुद्रगीतात्मक भगवत् स्तोत्रको जप गर्दै ती सबै प्रचेता जलमा उभिएर दस हजार वर्षसम्म तपस्या गर्दैरहे ॥२॥ हे विदुरजी ! त्यसै वेला आत्मतत्त्वका ज्ञाता तथा परम कृपालु श्रीनारदजीले राजा प्राचीनबर्हिको आत्मतत्त्वको उपदेश दिए, किनकि त्यस वेला उनको चित्त कर्ममा आसक्त भइरहेको

शृणुयाच्छ्रावयेन्मर्त्यो मुच्यते कर्मबन्धनैः ॥ ७८ ॥ गीतं मयेदं नरदेवनन्दनाः परस्य पुंसः परमात्मनः स्तवम् ॥ जपन्त एकाग्रधियस्तपो महच्चरध्वमन्ते तत आप्स्यथेप्सितम् ॥ ७९ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे रुद्रगीतं नाम चतुर्विंशोऽध्यायः ॥ २४ ॥ मैत्रेय उवाच ॥ इति संदिश्य भगवान्बार्हिषदैरभिपूजितः ॥ पश्यतां राजपुत्राणां तत्रैवान्तर्दधे हरः ॥ १ ॥ रुद्रगीतं भगवतः स्तोत्रं सर्वे प्रचेतसः ॥ जपन्तस्ते तपस्तेपुर्वर्षाणामयुतं जले ॥ २ ॥ प्राचीनबर्हिषं क्षत्तः कर्मस्वासक्तमानसम् ॥ नारदोऽध्यात्मतत्त्वज्ञः कृपालुः प्रत्यबोधयत् ॥ ३ ॥ श्रेयस्त्वं कतमद्राजन्कर्मणाऽऽत्मन ईहसे ॥ दुःखहानिः सुखावाप्तिः श्रेयस्तन्नेह चेष्यते ॥ ४ ॥ राजोवाच ॥ न जानामि महाभाग परं कर्मापविद्धधीः ॥ ब्रूहि मे विमलं ज्ञानं येन मुच्येय कर्मभिः ॥ ५ ॥ गृहेषु कूटधर्मेषु पुत्रदारधनार्थधीः ॥ न परं विन्दते मूढो भ्राम्यन्संसारवर्त्मसु ॥ ६ ॥ नारद उवाच ॥ भो भोः प्रजापते राजन्पशून्पश्य त्वयाऽध्वरे ॥ संज्ञापिताञ्जीवसङ्घान्निर्घृणेन सहस्रशः ॥७॥ एते त्वां संप्रतीक्षन्ते स्मरन्तो वैशसं तव ॥ संपरेतमयःकूटैश्छिन्दन्त्युत्थितमन्यवः ॥ ८ ॥ अत्र ते कथयिष्येऽमुमितिहासं पुरातनम् ॥ पुरञ्जनस्य चरितं निबोध गदतो मम ॥९॥ आसीत्पुरञ्जनो नाम राजा

थियो ॥३॥ नारदजी भन्दछन्–हे राजन् ! यी कार्यहरू गरेर तिमी के श्रेय खोज्दछौ ? किनकि दुःखको नाश र सुखको प्राप्तिरूपी श्रेय त कर्ममार्गबाट प्राप्त हुन सक्तैन ॥४॥ राजा भन्दछन्–हे महाभाग नारदजी ! मेरो बुद्धि कर्ममा व्यस्त छ । यसै निम्ति म यो बाहेक अरु कुनै कल्याणको बाटो जान्दिन । अतः हजुर मलाई निर्मल ज्ञानको उपदेश दिनुहवस् जसले म कर्मबन्धनबाट मुक्त हुन सकूँ ॥५॥ किनकि पुत्र, स्त्री, धनलाई नै परम पुरुषार्थ मान्ने भएको म मूढ पुरुष कपटपूर्ण धर्मले गृहस्थाश्रममा रहेर आवागमनरूपी संसार मार्गमा नै भुलि रहन्छ, जसले त्यो परमात्मालाई पाउँदैन ॥६॥ नारदजी भन्दछन्–हे प्रजापति महाराज ! तिमीले यज्ञमा जुन हजारौं प्राणिहरूको निर्दयतापूर्वक बलि दिएका छौ, तिनलाई आकाशमा विद्यमान हेर ॥७॥ ती सबै तिमीद्वारा प्राप्त पीडालाई सम्झेर तिम्रो बाटो बथानिरहेका छन् । तिमी मरेपछि ती फलामले बनेका अझै आफ्ना सींगद्वारा चिर्नले तिमीलाई मार्दछन् ॥८॥ हे राजन ! यसै विषयमा म तिमीलाई पुरञ्जनोपाख्यान नामक यौटा इतिहास सुनाउछु, त्यो सावधान मनले सुन–हे राजन् ! पूर्वकालमा

पुरञ्जन नामक यौटा निकै ठूला र यशस्वी राजा भएका थिए । अविज्ञात नामको यौटा मित्र थियो, त्यसको कर्म कसैलाई पनि थाहा थिएन ॥ १० ॥ त्यो राजा आफ्नो योग्य स्थान खोज्दै सम्पूर्ण पृथ्वीमा डुल्दै रह्यो । जब त्यलाई कुनै पनि अनुकूल स्थान प्राप्त भएन तब त्यो केही खिन्न झैं भयो ॥११॥ भिन्न-भिन्न विषयहरूको इच्छा भएको त्यो राजा पुरञ्जनले ती विषयहरू भोग्नको निम्ति पृथ्वी-तलमा जुन-जुन नगर देख्यो, तीमध्ये उसलाई यौटा पनि मनपरेन ॥१२॥ एक दिन उसले हिमालयको दक्षिणको फेदीमा सबै शुभ लक्षणहरूले युक्त नौ द्वारको यौटा नगर देख्यो ॥१३॥ त्यो चारैतिरबाट परखाल, उपवन, खाईहरू, आँखीझ्याल, ध्वजा-पताका, सुन चाँदी र फलामका शिखरले युक्त भवनहरूले बाक्लो बसेको थियो ॥१४॥ त्यसको महलका पटांगिनी नीलमणि, स्फटिक, वैदूर्य, मुक्ता मरकत, र राता मणिहरूले बनेको थियो । आफ्नो कान्तिले बल्दो त्यो नगर नागहरूको राजधानी भोजवतीपुरी झैं देखिन्थ्यो ॥१५॥ त्यो नगर अनेक सभागार चोक, गल्लीहरू, क्रीडा भवन, बजारहरू, विश्रामस्थल ध्वज--पताका एवं मूगाका बेदीहरूले परिपूर्ण

राजन्बृहच्छ्रवाः॥ तस्याविज्ञातनामासीत्सखाऽविज्ञातचेष्टितः ॥१०॥ सोऽन्वेषमाणःशरणं बभ्राम पृथिवीं प्रभुः ॥ नानुरूपं यदाविन्ददभूत्स विमना इव
॥११॥ न साधु मेने ताः सर्वा भूतले यावतीः पुरः ॥ कामान्कामयमानोऽसौ तस्य तस्योपपत्तये ॥१२॥ त एकदा हिमवतो दक्षिणेष्वथ सानुषु ॥
ददर्श नवभिर्द्वार्भिः पुरं लक्षितलक्षणाम् ॥ १३ ॥ प्राकारोपवनाट्टालपरिखैरक्षतोरणैः स्वर्णरौप्यायसैः शृङ्गैः संकुलां सर्वतो गृहैः ॥ १४ ॥
नीलस्फटिकवैदूर्यमुक्तामरकतारुणैः ॥ क्लृप्तहर्म्यस्थलीं दीप्तां श्रिया भोगवतीमिव ॥ १५ ॥ सभाचत्वररथ्याभिराक्रीडायतनापणैः ॥ चैत्यध्वज-
पताकाभिर्युक्तां विद्रुमवेदिभिः ॥ १६ ॥ पुर्यास्तु बाह्योपवने दिव्यद्रुमलताकुले ॥ नदद्विहङ्गालिकुलकोलाहलजलाशये ॥ १७ ॥ हिमनिर्झरविप्रुष्म-
त्कुसुमाकरवायुना ॥ चलत्प्रवालविटपनलिनीतटसंपदि ॥ १८ ॥ नानारण्यमृगव्रातैरनाबाधे मुनिव्रतैः ॥ आहूतं मन्यते पान्थो यत्र कोकिल-
कूजितैः ॥ १९ ॥ यदृच्छयाऽऽगतां तत्र ददर्श प्रमदोत्तमाम् ॥ भृत्यैर्दशभिरायान्तीमेकैकशतनायकैः ॥ २० ॥ पञ्चशीर्षाहिना गुप्तां प्रतिहा-
रेण सर्वतः ॥ अन्वेषमाणामृषभमप्रौढां कामरूपिणीम् ॥ २१ ॥ सुनासां सुदतीं बालां सुकपोलां वराननाम् ॥ समविन्यस्तकर्णाभ्यां बिभ्रतीं

थियो ॥१६॥ त्यस नगरको बाहिर दिव्य वृक्ष तथा लताहरूले पूर्ण मोटा उपवन थिए जुन विविध प्रकारका बोली बोल्ने पक्षिहरू र भ्रमराहरूको कलरवले गुञ्जायमान सरोवरले सुसज्जित थियो । सरोवरका तटवर्ती वृक्ष शीतल छहराका जलकणले युक्त र वसन्तकालीन वायुले हल्लने नवपल्लवले सम्पन्न भएर त्यसको शोभा बढाइरहेका थिए । अहिंसादि मुनि व्रत धारण गर्ने त्यहाँका जंगली पशुहरूसित कुनै प्रकारको भय, कष्ट थिएन । त्यहाँको बाटोमा हिंड्ने पथिकलाई कोइलीको बोलीले आफूलाई नै डाकेको हो कि भन्ने भ्रम पार्दथ्यो त्यस विचित्र वनमा राजा पुरञ्जनले यौटी अति सुन्दरी रमणीलाई दस सेवकसित सहसा आउन लागेको देखे, तीमध्ये प्रत्येक सेवक सय नायिकाका स्वामी थिए ॥१९॥२०॥ रमणी आफ्नो द्वारपालरूपी पाँच फणा भएको सर्पद्वारा चारैतिरबाट सुरक्षित भई आफ्नो निम्ति यौटा उत्तम पतिको खोजीमा थिई । त्यस नारीको मनोहर युवावस्था थियो॥२१॥त्यसको नासिका

दन्तपंक्ति, कपोल तथा मुख सान्है राम्रो थियो । त्यो बर्ता सुकुमारी थिई र कानमा आफ्नो योग्य कुण्डलको शोभा धारण गरेकी थिई ॥ २२ ॥ त्यसको कटिभाग सुन्दर श्यामवर्णको थियो । त्यो अलि पहेंलो रंगको साडी र सुवर्णको मेखला धारण गरेकी थिई र हिंड्दा आफ्ना चरणका नूपुरको झंकारले कुनै देवी जस्ती देखिइन्थी ॥२३॥ त्यो गजराज सदृश मन्द मन्द चालले हिंड्ने युवती युवावस्थाको आगमनको सूचना दिने भएका आफ्ना वाटुला र परस्पर टाँसिएका स्तनलाई लाजले बारम्बार सप्कोले छोपेर हिंड्दथी ॥२४॥ राजा पुरंजनले प्रेमोद्वेगले चञ्चल त्यस युवतीका भृकुटी-धनुषबाट छुट्ने प्रयास-कटाक्षरूपी बाणले विद्ध भएर त्यस लज्जायुक्त हास्यले शोभित सुन्दरीप्रति मीठो र आकुल वाणीमा भने–॥२५॥ 'हे कमलदल सदृश नयन हुने सुन्दरि ! तिमी को हौ ? कसकी छोरी हौ ? हे सती ! यस वेला तिमी कताबाट आइरहेकी छौ ? यस पुरीमा तिमी के गर्न खोजिरहेकी छौ ? यो सबै भनिदेऊ मन ॥२६॥जुन एघार ठूला-ठूला शूरवीर छन्, यी तिम्रा को हुन् ? हे राम्रा आँखीभौं हुने सुन्दरी ! तिम्रा संगका यी सहेलीहरू र सधैं अगाडि लागिरहने यो सर्प को हो ॥२७॥

कुण्डलश्रियम् ॥२२॥ पिशाङ्गनीवीं सुश्रोणीं श्यामां कनकमेखलाम् ॥ पद्भ्यां क्वणद्भ्यां चलतीं नूपुरैर्देवतामिव ॥ २३ ॥ स्तनौ व्यञ्जितकैशोरौ समवृत्तौ निरन्तरौ ॥ वस्त्रान्तेन निगूहन्तीं व्रीडया गजगामिनीम् ॥ २४ ॥ तामाह ललितं वीरः सव्रीडस्मितशोभनाम् ॥ स्निग्धेनापाङ्गपुंखेन स्पृष्टः प्रेमोद्भ्रमद्भ्रुवा ॥ २५ ॥ का त्वं कञ्जपलाशाक्षि कस्यासीह कुतः सति ॥ इमामुपपुरीं भीरु किं चिकीर्षसि शंस मे ॥ २६ ॥ क एतेऽनुपथा ये त एकादश महाभटाः ॥ एता वा ललनाः सुभ्रु कोऽयं तेऽहिः पुरःसरः ॥ २७ ॥ त्वं ह्रीर्भवान्यस्यथ वाग्रमा पतिं विचिन्वती किं मुनिवद्रहो वने ॥ ॥ त्वदंघ्रिकामाप्तसमस्तकामः क्व पद्मकोशः पतितः कराग्रात् ॥ २८ ॥ नासां वरोर्वन्यतमा भुविस्पृक् पुरीमिमां वीरवरेण साकम् ॥ अर्हस्यलङ्कर्तुमदभ्रकर्मणा लोकं परं श्रीरिव यज्ञपुंसा ॥ २९ ॥ यदेष माऽपाङ्गविखण्डितेन्द्रियं सव्रीडभावस्मितविभ्रमद्भ्रुवा ॥ त्वयोपसृष्टो भगवान्मनोभवः प्रबाधतेऽथानुगृहाण शोभने ॥ ३० ॥ त्वदाननं सुभ्रु सुतारलोचनं व्यालम्बिनीलालकवृन्दसंवृतम् ॥ उन्नीय मे दर्शय वल्गुवाचकं यद्व्रीडया नाभिमुखं शुचिस्मिते ॥ ३१ ॥ नारद उवाच ॥ इत्थं पुरञ्जनं नारी याचमानमधीरवत् ॥ अभ्यनन्दत तं वीरं हसन्ती वीरमोहिता

जसका सबै कामनाहरू तिम्रा चरण-कमलको प्राप्तिले नै पूर्ण भइसकेका छन्, यस्तो वनमा मुनिहरू जस्तै एकान्त वास गरेर आफ्नो पतिलाई खोज्ने के तिमी साक्षात् लज्जा, पार्वती, सरस्वती अथवा लक्ष्मी त होइनौ ? यदि तिमी लक्ष्मी हौ भने तिम्रो हातको क्रीडा-कमल कता हरायो ? हे वरोरु ! तिमी आफ्ना पैतालाले पृथ्वीको स्पर्श गर्दछ्यौ, यस निम्ति थाहा पाइन्छ कि इनीहरूमध्ये तिमी कुनै पनि होइनौ । अतः जस्तै विष्णु भगवान्सित बसेर लक्ष्मीजी वैकुण्ठको शोभा बढाउँछिन्, त्यस्तै नै यी परम पराक्रमी वीरश्रेष्ठसित बसेर तिमी अवश्य यस नगरीको शोभा बढाउने छौ ॥२९॥ हे सुन्दरी ! तिम्रो कटाक्षले विकलेन्द्रिय मलाई तिम्रो लज्जापूर्ण मुसकान र भ्रूभङ्गिमाले प्रेरित भएर बढेको कामदेव दुःख दिँदैछ । अतः अब तिमी ममाथि दया कृपा गर ॥३०॥ हे शुचिस्मिते ! जो लाजले माथि उठिरहेको छैन, जुन सुन्दर भृकुटी तथा राम्रा परेलाले युक्त नयनहरू तथा लामा, नीला र

घुँघुरिएका अलकावलीले ढाकिएको छ, त्यो मृदुभाषी तथा मनोहर मुख अलि माथि गरेर मलाई देखाऊ ॥३१॥ श्रीनारदजी भन्दछन्–हे वीर ! यसप्रकार *जीवनको मूल्य नबुझ्ने अधीर पुरुष झैं पुरञ्जनले याचना गरेपछि ती स्त्रीले राजाको सौन्दर्यमा मुग्ध भएर हाँस्तै तिनको भनाईको समर्थन गरिन् ॥३२॥ तिनले भनिन्–'हे पुरुषश्रेष्ठ ! म आफ्ना पितालाई जान्दिन, न मलाई आफ्नो वा अरूको नाम तथा गोत्र नै थाहा छ । हामी सबै जना आज यस पुरीमा विद्यमान छौं–यसको निम्ति हामी अरु केही पनि जा दैनौं । हे वीर ! हाम्रो निवासस्थान स्वरूप यो पुजारी कसले बनाएको हो, त्यो पनि हामीलाई थाहा छैन ॥२४॥ हे मानद ! यी सबै पुरुष स्त्रीहरू मेरा मित्र रमेरीसहेली हरू हुन् । जब म निदाउँछु, तब यो सर्प यस पुरीको रक्षा गर्दै जागी रहन्छ ॥३५॥ हे शत्रुनाशन ! हजुरको कल्याण होस् ! यो ठूलो सौभाग्यको कुरा हो कि हजुर पाल्नुभयो । हजुरलाई विषय भोगको अभिलाषा छ भने

॥ ३२ ॥ न विदाम वयं सम्यक्कर्तारं पुरुषर्षभ ॥ आत्मनश्च परस्यापि गोत्रं नाम च यत्कृतम् ॥ ३३ ॥ इहाद्य सन्तमात्मानं विदाम न ततः परम् ॥ येनेयं निर्मिता वीर पुरी शरणमात्मनः ॥ ३४ ॥ एते सखायः सख्यो मे नरा नार्यश्च मानद ॥ सुप्तायां मयि जागर्ति नागोऽयं पालयन्पुरीम् ॥ ३५ ॥ दिष्ट्याऽऽगतोऽसि भद्रं ते ग्राम्यान्कामानभीप्ससे ॥ उद्वहिष्यामि तांस्तेऽहं स्वबन्धुभिररिन्दम ॥ ३६ ॥ इमां त्वमधितिष्ठस्व पुरीं नवमुखीं विभो ॥ मयोपनीतान्गृह्णानः कामभोगाञ्छतं समाः ॥ ३७ ॥ कं नु त्वदन्यं रमये ह्यरतिज्ञमकोविदम् ॥ असंपरायाभिमुखमश्वस्तनविदं पशुम् ॥ ३८ ॥ धर्मो ह्यत्रार्थकामौ च प्रजानन्दोऽमृतं यशः ॥ लोका विशोका विरजा यां न केवलिनो विदुः ॥ ३९ ॥ पितृदेवर्षिमर्त्यानां भूतानामात्मनश्च ह ॥ क्षेम्यं वदन्ति शरणं भवेऽस्मिन्यद्गृहाश्रमः ॥ ४० ॥ का नाम वीर विख्यातं वदान्यं प्रियदर्शनम् ॥ न वृणीत

आफ्ना संगिनीहरू द्वारा म हजुरको सबै इच्छित भोग प्रस्तुत गर्न सक्छु ॥३६॥ हे नाथ ! हजुर यो नौ द्वारको पुरीमा मद्वारा प्रस्तुत गरिएका विषयहरूको भोग गर्दै सय वर्षसम्म निवास गर्नुहवस् ॥३७॥ हे प्रिय ! हजुर बाहेक के म विषय-सुखबाट अनभिज्ञ, वैध भोगहरू पनि लत्याइदिने, परलोकको चिन्ता रहित र फल के होला, यसको विचार पनि नगर्ने कुनै अन्य कुन नर-पशुसित विहार गर्नेछु ? ॥३८॥ अहो ! गृहस्थाश्रममा रहेर नै धर्म, अर्थ, काम, पुत्र-पालनको सुख, अमरता तथा सुयश पाइन्छन् । यसमा ती स्वर्गादि दिव्यलोक पनि पाइन्छन् जसलाई विरज, विशोक र केवलानन्दी पुरुष पनि जान्न असमर्थ हुन्छन् ॥३९॥ यस लोकमा देवता, ऋषि, मनुष्य तथा सबै प्राणीहरूका र आफ्ना पनि मङ्गलमय आश्रय-

---

* दृष्टान्त ( जीवनको मूल्य )—राजकुमार सिद्धार्थ सानैदेखि साह्रै दयालु थिए । एक दिन ती बगैंचामा डुलिरहेका थिए । त्यसै बेला उडिरहेका पक्षिसमूह माथि उनको काकाको छोरो देवदत्तले बाण प्रहार गर्‍यो बाणले घायल भएर मोटा पक्षी सिद्धार्थको नजीकै खस्यो । सिद्धार्थले त्यसलाई उठाए र त्यसको घाउ सुसार्न लागे । देवदत्त आएर भने–'यसलाई मैले मारेको हो । त्याऊ मलाई देऊ ।' सिद्धार्थले भने–'पक्षी यदि मरिगएको भए तिमीलाई दिने थिएँ, तर यो जीवित छ । अतः म तिमीलाई दिन सक्दिन ।' दुवै राजकुमार झगडा गर्न लागे । अन्त्यमा ती दुवै न्याय गराउन सभामा पुगे । त्यहाँ पनि दुइ प्रश्न उपस्थित भयो । यस निम्ति यो विवादको निर्णय गर्न कठिन देखियो । त्यसै बीच मोटा वृद्ध व्यक्ति आइपुग्यो । सबै जनाले प्रार्थना गरेर वृद्धसित भने—'यी दुवै राजकुमार झगडा गर्दैछन् । यसको न्याय गरिदेऊ ।' उसले भन्यो–'यदि जीवनको कुन मूल्य हुन सक्दछ भने मार्ने प्रयत्न गर्ने व्यक्तिको अपेक्षा बचाउने व्यक्तिको जीवित प्राणीमा बढी अधिकार हुन्छ ।' वृद्धको न्यायसंगत कुरा सुनेर दुवैलाई सन्तोष भयो ।

स्थल गृहस्थाश्रम नै कहिन्छ ॥ ४० ॥ हे वीर ! यस लोकमा हजुर जस्ता विख्यात, उदार प्रियदर्शन पति पाएर म समान यस्ती कुन स्त्री छ, जो हजुरलाई पतिरूपमा वरण नगली ॥ ४१ ॥ हे महाबाहो ! जो आफ्नो मन्द-हास्ययुक्त मधुर हेराईले हामीजस्ता अनाथ जीवहरूको मानसिक सन्ताप हरण गरिदिनका निम्ति नै पृथ्वीमा हुनुहुन्छ, यस्ता स्वयं डौं हजुरका सुकोमल बाहुमा कुन नारीको मन अल्झन नपुग्ला ? ॥४२॥ नारदजी भन्दछन्—हे राजन् ! त्यसपछि ती स्त्री-पुरुषले परस्पर शपथ खाएर त्यहाँ नगरमा गएर सैकडौं वर्ष आनन्द गर्दै रहे ॥४३॥ राजा पुरञ्जन सर्वतिर गायकहरू द्वारा आफ्नो सुयश-गान, ग्रीष्ममा जल-क्रीडा गर्नेको लागि स्त्रीहरू सित नदीमा पुग्दथे ॥ ४४ ॥ त्यस पुरीको जो अधिपति थियो, त्यसले अनेक देशतिर जानको लागि त्यस पुरीमा सात द्वार माथितिर तथा दुइ द्वार तलतिर बनाएको थियो ॥४५॥ हे राजन् ! माथि कहिएका नौ द्वारहरूमा पाँच पूर्व, एक दक्षिण, एक उत्तर र दुइ पश्चिमतिर थिए । अब तिनको नाउँ म तिमीलाई भन्दछु सुन—॥ ४६ ॥ पूर्वतिर खद्योत र आविर्मुख नामका

प्रियं प्राप्तं मादृशी त्वादृशं पतिम् ॥ ४१ ॥ कस्या मनस्ते भुवि भोगिभोगयोः स्त्रिया न सज्जेद्भुजयोर्महाभुज॥ योऽनाथवर्गाधिमलं घृणोद्धतस्मिता-
वलोकेन चरत्यपोहितुम् ॥ ४२ ॥ नारद उवाच ॥ इति तौ दम्पती तत्र समुद्य समयं मिथः ॥ तां प्रविश्य पुरीं राजन्मुमुदाते शतं समाः ॥४३॥
उपगीयमानो ललितं तत्र तत्र च गायकैः ॥ क्रीडन्परिवृतः स्त्रीभिर्ह्रदिनीमाविशच्छुचौ ॥ ४४ ॥ सप्तोपरि कृता द्वारः पुरस्तस्यास्तु द्वे अधः ॥
पृथग्विषयगत्यर्थं तस्यां यः कश्चनेश्वरः ॥ ४५ ॥ पञ्च द्वारस्तु पौरस्त्या दक्षिणैका तथोत्तरा ॥ पश्चिमे द्वे अमूषां ते नामानि नृप वर्णये ॥ ४६ ॥
खद्योताविर्मुखौ च प्राग्द्वारावेकत्र निर्मिते ॥ विभ्राजितं जनपदं याति ताभ्यां द्युमत्सखः ॥ ४७ ॥ नलिनी नालिनी च प्राग्द्वारावेकत्र निर्मिते ॥
अवधूतसखस्ताभ्यां विषयं याति सौरभम् ॥४८॥ मुख्यानाम पुरस्ताद्द्वास्तयापणबहूदनौ ॥ विषयौ याति पुरराड्रसज्ञविपणान्वितः ॥४९॥ पितृहूर्नृप-
पुर्या द्वार्दक्षिणेन पुरञ्जनः ॥ राष्ट्रं दक्षिणपञ्चालं याति श्रुतधरान्वितः॥५०॥ देवहूर्नाम पुर्या द्वा उत्तरेण पुरञ्जनः ॥ राष्ट्रमुत्तरपञ्चालं यातिश्रुतिधरान्वितः
॥५१॥ आसुरी नाम पश्चाद्द्वास्तया याति पुरञ्जनः ॥ ग्रामकं नाम विषयं दुर्मदेन समन्वितः ॥५२॥ निर्ऋतिर्नाम पश्चाद्द्वास्तया याति पुरंजनः ।

दुइ द्वार बनेका थिए । तिनै द्वारबाट राजा पुरञ्जन आफ्नो मित्र द्युमानसित विभ्राजित नामको देशमा जाने गर्दथे ॥ ४७ ॥ यसै गरी पूर्व दिशामा यौटै स्थानमा त्यस नगरमा नलिनी र नालिनी नामका दुइ द्वार अरु पनि थिए । त्यसबाट राजा आफ्नो मित्र अवधूतसित सौरभ नामको नगरमा जाने गर्दथे ॥४८॥ पूर्वतिर मुख्या नामको यौटा द्वार थियो । त्यताबाट राजा पुरञ्जन आफ्नो मित्र रसज्ञ तथा विपणसित क्रमशः बहूदन र आपण नामका दुइ देशमा जाने गर्दथे ॥ ४९ ॥ हे राजन् ! त्यस पुरीको दक्षिणतिर पितृहू नामको यौटा द्वार थियो, त्यस द्वारबाट पुरञ्जन श्रुतिधर नामक मित्रसित दक्षिण पाञ्चाल देशमा जाने गर्दथे ॥५०॥ उत्तर तिर देवहू नामको यौटा द्वार थियो, त्यताबाट राजा आफ्नो श्रुतधर नामको मित्रसित उत्तर पाञ्चाल देशमा जाने गर्दथे ॥५१॥ पुरीको पश्चिमतिर आसुरी नामको यौटा द्वार थियो । त्यसबाट राजा पुरञ्जन )

आफ्नो मित्र दुर्मदसित ग्रामक देशमा जाने गर्दथे ॥५२॥ निऋति नामको योंटा पश्चिमी द्वार थियो त्यसबाट राजा आफ्नो मित्र लुब्धकसित वैशस नाम देशमा जान्थे ॥ ५३ ॥ त्यस नगरका निवासीहरूमा निर्वाक् तथा पेशस्कृत यी दुइ नागरिक अन्धा लिए । तिनैको भरमा राजा पुरञ्जन सेन्द्रिय नागरिकहरूको अधिपति बनेर आफ्नो इच्छित स्थानमा जान्थ्यो र सबै काम गर्दथ्यो ॥ ५४ ॥ अब राजा पुरञ्जन आफ्नो मुख्य सेवक विषूचीनसित अन्तःपुरमा जान्थे, तब स्त्रीगण र पुत्रहरूले गर्दा हुने मोह, प्रसन्नता आदि विकारहरूको अनुभव गर्दथ्यो ॥ ५५ ॥ यसरी विविध काममा अल्झेको, विषयमा आसक्त र स्त्रीद्वारा ठगिएको त्यो अज्ञानी राजा पुरञ्जन जुन-जुन काम उसकी मनपरेकी रानी गर्दथी, उही काम ऊ स्वयं गर्न थाल्दथ्यो ॥५६॥ जब त्यो रक्सी खान्थी तब स्वयं पनि मुग्ध भएर रक्सी खान लाग्दथ्यो, जब त्यो खान्थी तब ऊ पनि खान लाग्थ्यो र जब ऊ चमेना चबाउँथी तब स्वयं पनि चबाउन थाल्दथ्यो ॥५७॥ जब त्यो गाउँन्थी तब ऊ पनि गाउन लाग्दथ्यो, त्यो रोए ऊ पनि रुन थाल्दथ्यो, त्यसले हाँस्ता ऊ प्रनि हाँस्न लाग्दथ्यो,

वैशसं नाम विषयं लुब्धकेन समन्वितः ॥ ५३ ॥ अन्धावमीषां पौराणां निर्वाक्पेशस्कृतावुभौ ॥ अक्षण्वतामधिपतिस्ताभ्यां याति करोति च ॥ ५४ ॥ स यर्ह्यन्तःपुरगतो विषूचीनसमन्वित ॥ मोहं प्रसादं हर्षं वा याति जायात्मजोद्भवम् ॥ ५५ ॥ एवं कर्मसु संसक्तः कामात्मा वञ्चितोऽबुधः ॥ महिषी यद्यदीहेत तत्तदेवान्ववर्तत ॥५६॥ कचित्पिबन्त्यां पिबति मदिरां मदविह्वलः ॥ अश्नन्त्यां कचिदश्नाति जक्षत्यां सह जक्षति ॥५७॥ कचिद्गायति गायन्त्यां रुदत्यां रुदति कचित् ॥ कचिद्धसन्त्यां हसति जल्पन्त्यामनुजल्पति ॥५८॥ कचिद्धावति धावन्त्यां तिष्ठन्त्यामनुतिष्ठति ॥ अनुशेते शयानायामन्वास्ते कचिदासतीम् ॥५९॥ कचिच्छृणोति शृण्वन्त्यां पश्यन्त्यामनुपश्यति ॥ कचिज्जिघ्रति जिघ्रन्त्यां स्पृशन्त्यां स्पृशति कचित् ॥६०॥ कचिच्च शोचतीं जायामनुशोचति दीनवत् ॥ अनुहृष्यति हृष्यन्त्यां मुदितामनुमोदते ॥ ६१ ॥ विप्रलब्धो महिष्यैवं सर्वप्रकृतिवञ्चितः ॥ नेच्छन्ननुकरोत्यज्ञः क्लैब्यात्क्रीडामृगो यथा ॥६२॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कंधे पुरंजनोपाख्याने पञ्चविंशोऽध्यायः ॥२५॥ नारद उवाच ॥ स एकदा महेष्वासो रथं पञ्चाश्वमाशुगम् ॥ द्वीषं द्विचक्रमेकाक्षं त्रिवेणुं पञ्चबन्धुरम् ॥ १ ॥ एकरश्म्येकदमनमेकनीडं द्विकूबरम् ॥ पञ्चप्रहरणं सप्तवरूथं पंचविक्रमम् ॥२॥

उसले बोल्दा बोल्न लाग्दथ्यो ॥५८॥ जब त्यो दगुर्दथी तब ऊ पनि दगुर्थ्यो, ऊ अडिए आफू पनि अडिन्थ्यो, ऊ सुती भने स्वयं पनि उसैसित सुतथ्यो र बसी भने बसतथ्यो ॥ ५९ ॥ कुनै वेला ऊ केही सुन्दथी तब राजा पनि सुन्न लाग्दथ्यो, ऊ कतै हेर्दथी तब स्वयं राजा पनि उतै हेर्न थाल्थ्यो । ऊ सुँघथी तब स्वयं सुँघ्न लाग्दथ्यो र कहिले स्पर्श गर्दथी तब स्वयं पनि स्पर्श गर्न लाग्दथ्यो ॥६०॥ त्यो आफ्नी प्रिया मइन भने स्वयं पनि दीन-हीन झैं व्याकुल हुन्थ्यो । ऊ प्रसन्न छ भने राजा स्वयं पनि प्रसन्न हुन्थ्यो । त्यो सुखी हुँदा स्वयं पनि आनन्दित हुन्थ्यो ॥६१॥ यस प्रकार त्यो स्त्रीको प्रेममा अल्झेको राजा पुरञ्जन आफ्ना मंत्रीहरू द्वारा ठगिने र अतिशय कामवश हुनाले गर्दा इच्छा नभए पनि नपुंसक समान त्यो स्त्रीको उसै प्रकार अनुसरण गर्दथ्यो, जसरी खेल देखाउनको निम्ति पालिएको (बानरादि) पशु जुन वेला पनि आफ्नो स्वामीको आज्ञामा रहन्छ ॥ ६२ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां पञ्चविंशोऽध्यायः ॥ २५ ॥ ( राजा पुरञ्जन शिकार खेल्न जानु र उसकी रानी रिसाउनु )—श्रीनारदजी

मन्दछन्–हे राजन् ! एक दिन राजा पुरञ्जन जसमा पाँच घोडा जोतिएका थिए, जुन दुइ दण्डिकाहरू, दुइ चक्का, यौटा धुरी, तीन बाँस, पाँच बन्धन, यौटा डोरी (लगाम), एक सारथी, यौटा बस्ने स्थान, दुइ जोती, पाँच शस्त्र, सात पर्दा, पाँच प्रकारका गतिहरू र सुवर्णमय आभूषणहरूले विभूषित थियो—त्यस्तो शीघ्रगामी रथमा, एक धनुष, सुवर्णमय कवच र अक्षय ठोक्रोमा वाण लिएर आफ्नो एघारौं सेनापतिसित चढेर त्यो पञ्चप्रस्थ नामक वनमा गयो ॥ १-३ ॥ शिकार खेल्नको निम्ति अत उत्सुक भएर, जसलाई त्याग्नु कुनै प्रकार पनि उचित थिएन, त्यो प्रियतमालाई त्यागेर त्यो अति दर्पपूर्वक हातमा धनुष-वाण लिई शिकार खेल्न लाग्यो॥४॥ यस प्रकार आसुरीवृत्ति स्वीकार गरेर भयंकर र निर्दयचित्त राजा पुरञ्जनले त्यस वनमा आफ्ना तीखा वाणद्वारा अनेक वन्यपशुहरूको वध गरे ॥५॥ शास्त्रमा पशु हिंसाको निम्ति कुनै विधान छैन, बरू मानिसको स्वाभाविक प्रवृत्तिलाई रोक्नको निम्ति यो नियम बनाइदिएको छ कि मांसमा आसक्त राजा शास्त्रविहित श्राद्धादिको अवसरमा वनमा गएर केवल अत्याज्य पशुहरूलाई नै मारुन् ॥ ६ ॥ हे राजेन्द्र ! कुनै पनि

हैमोपस्करमारुह्य स्वर्णवर्माक्षयेषुधिः ॥ एकादशचमूनाथः पञ्चप्रस्थमगाद्वनम् ॥३॥ चकार मृगयां तत्र दृप्त आत्तेषुकार्मुकः ॥ विहाय जायामतदर्हां मृगव्यसनलालसः ॥ ४ ॥ आसुरीं वृत्तिमाश्रित्य घोरात्मा निरनुग्रहः ॥ न्यहनन्निशितैर्बाणैर्वनेषु वनगोचरान् ॥५॥ तीर्थेषु प्रतिदृष्टेषु राजा मेध्यान्पशून्वने ॥ यावदर्थमलं लुब्धो हन्यादिति नियम्यते ॥ ६ ॥ य एवं कर्म नियतं विद्वान्कुर्वीत मानवः ॥ कर्मणा तेन राजेन्द्र ज्ञानेन न स लिप्यते ॥ ७ ॥ अन्यथा कर्म कुर्वाणो मानारूढो निबध्यते ॥ गुणप्रवाहपतितो नष्टप्रज्ञो व्रजत्यधः ॥ ८ ॥ तत्र निर्भिन्नगात्राणां चित्रवाजैः शिलीमुखैः ॥ विप्लवोऽभूद्दुःखितानां दुःसहः करुणात्मनाम् ॥ ९ ॥ शशान्वराहान्महिषान्गवयान्रुरुशल्यकान् ॥ मेध्यानन्यांश्च विविधान्विनिघ्नञ्श्रममभ्यगात् ॥ १० ॥ ततः क्षुत्तृट्परिश्रान्तो निवृत्तो गृहमेयिवान् ॥ कृतस्नानोचिताहारः संविवेश गतक्लमः ॥ ११ ॥ आत्मानमर्हयाञ्चक्रे धूपालेपस्रगादिभिः ॥ साध्वलङ्कृतसर्वाङ्गो पत्न्यामादधे मनः ॥ १२ ॥ तृप्तो हृष्टः सुदृप्तश्च कन्दर्पाकृष्टमानसः ॥ न व्यचष्ट वरारोहां गृहिणीं गृहमेधिनीम् ॥ १३ ॥ अन्तःपुरस्त्रियोऽपृच्छद्विमना इव वेदिषत् ॥ अपि वः कुशलं रामाः सेश्वरीणां यथा पुरा ॥ १४ ॥ न तथैतर्हि रोचन्ते गृहेषु गृहसंपदः ॥ यदि न

विद्वान् पुरुष यसरी कर्मतत्त्वलाई जानेर नियत कर्म गर्दछ भने, त्यो कहिल्यै ती कर्ममा लिप्त हुँदैन ॥७॥ जो मनुष्य मनपर्दी कर्म गर्नाले अभिमानी भएर कर्महरूमा बाँधिन जान्छ, अनि त्यो संसार चक्रमा डुबेर विवेक बुद्धि नष्ट हुनाले गर्दा अधम योनिहरूमा जन्मन जान्छ ॥८॥ त्यस वनमा पुरञ्जनका अनेक थरिका प्वाँख हुने वाणहरूले घायल र दुःखित जीवहरूको भयंकर संहार भयो, जो दया लु पुरुषहरूका निम्ति अत्यन्त दुःसह थियो ॥९॥ यसरी त्यहाँ खरायो, सूकर, राँगा, नीलगाई, कृष्णमृग, दुम्सी र अरु पनि अनेक मध्य पशुहरू मार्दा मार्दै राजा पुरञ्जन धेर थाके ॥१०॥ अनि भोक-प्यासले व्याकुल भएर ती घर आए। त्यहाँ स्नान र भोजन गरेर उनले एकछिन पल्टिई आफ्नो थकाई मारे ॥११॥ त्यसपछि अत्तर, चन्दन, फूल-माला आदिले अलंकृत भई, सबै अंगमा उत्तम आभूषण धारण गरी उनले आफ्नी प्रियतमाको सम्झना गरे ॥१२॥ तर भोजन आदिले तृप्त हृदयमा आनन्दित, मदोन्मत्त तथा कामपरवश राजा पुरञ्जनलाई आफ्नी पातलो कटि हुने पत्नी देखिइन् ॥ १३ ॥ हे राजा प्राचीनबर्हि ! त्यसपछि उसले केही खिन्न भएर आफ्नो अन्तःपुरकी नारीहरू-

लाई सोधे—'हे रमणी हो ! तिमी आफ्नी स्वामिनीसित पहिले झैं कुशलपूर्वक त छौ ? किन हो कुन्नि यस बखत घरको सम्पत्ति पहिले जस्तो राम्रो देखिइरहेको छैन ॥१४॥ जुन घरमा माता तथा पतिपरायणा पत्नी छैनन्, त्यो अंगहीन रथ झैं त्यस दुःखमय घरमा कुन बुद्धिमान् पुरुष दीन-हीन झैं बस्तछ ? ॥१५॥ अँ, बताओ—जो दुःखका समुद्रमा म डुब्दा छिन-छिनमा मेरो विवेक-बुद्धि जागृत पारेर मलाई त्यस संकटबाट उतार्ने मेरी प्रियतमा यस बखत कहाँ छन् ?' ॥१६॥ स्त्रीहरूले भने—हे नरपते ! हामीलाई थाहा छैन—आज हजुरकी प्रियतमाले के विचार गरेकी छन् ! हे शत्रुदमन ! हेर्नुहवस्, ती बिना बिछौनाकै रित्तो पलंगमा ढलेकी छन् ॥१७॥ नारदले भने—हे राजन् ! त्यस स्त्रीको संगले विवेकभ्रष्ट राजा आफ्नी रानी भूमिमा अस्त-व्यस्त स्थितिमा ढलेकी देखेर चिन्तित भए ॥१८॥ दुःखी मनले मीठा बचन द्वारा धेरै बुझाउँदा पनि उनले जान्न सकेनन् कि आफूप्रति आफ्नी प्रियतमाको प्रणय-कोपको कारण के हो ? ॥१९॥ अनि प्रणय-कोप निवारण गर्नमा कुशल वीर राजाले बिस्तरा-बिस्तार उनलाई फकाउन आरम्भ गरे । पहिले तिनका पाउ छोए, फेरि उसलाई काखमा लिएर

स्याद्गृहे माता पत्नी वा पतिदेवता ॥ व्यङ्गे रथ इव प्राज्ञः को नामासीत दीनवत् ॥ १५ ॥ क्व वर्तते सा ललना मज्जन्तं व्यसनार्णवे ॥ या मामुद्धरते प्रज्ञां दीपयन्ती पदे पदे ॥ १६ ॥ रामा ऊचुः ॥ नरनाथा न जानीमस्त्वत्प्रिया यद्व्यवस्यति ॥ भूतले निरवस्तारे शयानां पश्य शत्रु–हन् ॥ १७ ॥ नारद उवाच ॥ पुरञ्जनः स्वमहिषीं निरीक्ष्यावधुतां भुवि ॥ तत्संगोन्मथितज्ञानो वैक्लव्यं परमं ययौ ॥ १८ ॥ सान्त्वयन् श्लक्ष्णया वाचा हृदयेन विदूयता ॥प्रेयस्याः स्नेहसंरम्भलिङ्गमात्मनि नाभ्यगात् ॥ १९ ॥ अनुनिन्येऽथ शनकैर्वीरोऽनुनयकोविदः ॥ पस्पर्श पादयुगलमा चोत्सङ्गलालिताम् ॥ २० ॥ पुरञ्जन उवाच ॥ नूनं त्वकृतपुण्यास्ते भृत्या येष्वीश्वराः शुभे ॥ कृतागः स्वात्मसात्कृत्वा शिक्षादण्डं न युञ्जते ॥ २१ ॥ परमोऽनुग्रहो दण्डो भृत्येषु प्रभुणार्पितः ॥ बालो न वेद तत्तन्वि बन्धुकृत्यममर्षणः ॥२२॥ सा त्वं मुखं सुदति सुभ्र्वनुरागभारव्रीडाविलम्बविलसद्धसितावलोकम् ॥ नीलालकालिभिरुपस्कृतमुन्नसं नः स्वानां प्रदर्शय मनस्विनि वल्गुवाक्यम् ॥ २३ ॥ तस्मिन्दधे दममहं तव वीरपत्नि योऽन्यत्र भूसुरकुलात्कृतकिल्बिषस्तम् ॥ पश्ये न वीतभयमुन्मुदितं त्रिलोक्यामन्यत्र वै मुररिपोरितरत्र दासात् ॥ २४ ॥ वक्त्रं न ते

ठूलो स्नेहपूर्वक भने—॥२०॥ पुरञ्जनले भने—हे सुन्दरी ! यदि स्वामी आफ्ना अपराधी सेवकलाई आफ्नै मानेर शिक्षाको निम्ति पनि उचित दण्ड दिँदैन भने त्यो ठूलो मन्दभाग्य स्वामी कहिन्छ ॥२१॥ हे तन्वी ! सेवकलाई दिएको स्वामीको दण्ड त्यसमाथि एक प्रकारको अनुग्रह नै हुन्छ । जुन सेवक त्यो दण्ड सहँदैन त्यस मूर्खलाई हित् स्वामीले गरेका उपकारको थाहा नै हुन सक्तैन ॥२२॥ हे सुन्दर दाँत हुने सुन्दरी ! हे सुभ्रु ! हे स्वामिनी ! तिमी हाम्री गृहस्वामिनी हौ । अतः म अनुचरलाई तिमी प्रणय रत र लज्जाले भरिएको एवं मधुर मुसकानले भरिएको तेर्सो हेराइले युक्त आफ्नो त्यो मनोहर मुखारबिन्द देखाऊ जुन कालो अलकावली तथा उन्नत नासिकाले युक्त छन् ॥२३॥ हे वीरपत्नी ! ब्राह्मण-कुल बाहेक यदि अरु कुनैले तिम्रो अपराध गरेको भए म त्यसलाई अहिल्यै कठोर दण्ड दिनेछु, किनकि भगवानका भक्तहरूलाई छाडेर मलाई तीनै लोकको बाहिर र भित्र यस्तो कुनै प्राणी देखिइरहेको छैन, जो मेरो अपराध गरेर पनि निर्भयभावले आनन्दपूर्वक बाँच्न सकोस् ॥२४॥ हे प्रिये ! मैले कहिल्यै पनि तिम्रो मुख यसरी तिलक-हीन, मलीन, हर्षरहित, रिसले गर्दा भयानक,

कान्तिहीन तथा स्नेहहीन देखेको थिइन र न कहिल्यै तिम्रो सुन्दर स्तनलाई शोकका आँसुले भिजेको देखेथें ! न कहिल्यै तिम्रा बिम्बफल झैं ओंठलाई कुंकुमरागको समान पानको लालिमाले रहित नै देखेथें ॥२५॥ आफ्नो तुच्छ व्यसनवश म तिम्रो आज्ञा नलिई स्वयं वनमा शिकार खेल्न गएँ । अत: म आफ्नो अपराधी सुहृद्माथि अब तिमी प्रसन्न होऊ । किनकि कामका विषम वाणले व्याकुल भएर आफ्नो अधीन तथा आफूलाई रतिसुख दिने प्रियतम पतिलाई यस्ती कुन कामिनी छ, जो समुचित कर्मको निम्ति न अपनाओस् ॥२६॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां षड्विंशो ध्याय: ॥२६॥ (पुरञ्जनको पुरीमा चण्डवेगको आक्रमण र कालकन्याको चरित्र)—नारद भन्दछन्—हे महाराज ! यस प्रकार अनेक हाउ-भाउले आफ्नो अधीन पारेर आफ्ना पति पुरञ्जनलाई प्रसन्न पार्दै पुरञ्जनी उनीसित विहार गर्नलागी ॥ १ ॥ हे राजन् ! त्यसपछि राम्ररी स्नान गरेर अनेक थरिका मङ्गलमय र राम्रा-राम्रा अलङ्करणले सुसज्जित भई र भोजन आदिले परितृप्त भएर आफ्नो नगीचै आएकी त्यो मनोहर मुख भएकी राजमहिषीलाई राजा पुरञ्जनले

वितिलकं मलिनं विहर्षं संरम्भभीममविमृष्टमपेतरागम् ॥ पश्ये स्तनावपि शुचोपहतौ सुजातौ बिम्बाधरं विगतकुंकुमपङ्करागम् ॥ २५ ॥ तन्मे प्रसीद सुहृद: कृतकिल्बिषस्य स्वैरं गतस्य मृगयां व्यसनातुरस्य ॥ का देवरं वशगतं कुसुमास्त्रवेगविस्रस्तपौंस्नमुशती न भजेत कृत्ये ॥ २६ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे पुरञ्जनोपाख्याने षड्विंशोऽध्याय: ॥ २६ ॥ नारद उवाच ॥ इत्थं पुरञ्जनं सध्र्यग्वशमानीय विभ्रमै: ॥ पुरञ्जनी महाराज रेमे रमयती पतिम् ॥ १ ॥ स राजा महिषीं राजन्सुस्नातां रुचिराननाम् ॥ कृतस्वस्त्ययनां तृप्तामभ्यनन्ददुपागताम् ॥ २ ॥ तयोपगूढ: परिरब्धकन्धरो रहो न मन्त्रैरपकृष्टचेतन: ॥ न कालरंहो बुबुधे दुरत्ययं दिवा निशेति प्रमदापरिग्रह: ॥ ३ ॥ शयान उन्नद्धमदो महा- मना महार्हतल्पे महिषीभुजोपधि: ॥ तामेव वीरो मनुते परं यतस्तमोऽभिभूतो न निजं परं च यत् ॥ ४ ॥ तयैवं रममाणस्य कामकश्मलचेतस: ॥ क्षणार्धमिव राजेन्द्र व्यतिक्रांतं नवं वय: ॥ ५ ॥ तस्यामजनयत्पुत्रान्पुरञ्जन्यां पुरञ्जन: ॥ शतान्येकादश विराडायुषोऽर्धमथात्यगात् ॥ ६ ॥ दुहितॄर्दशोत्तरशतं पितृमातृयशस्करी: शीलौदार्यगुणोपेता: पौरञ्जन्य: प्रजापते ॥ ७ ॥ स पाञ्चालपति: पुत्रान्पितृवंशविवर्धनान् ॥ दारै:

ठूलो सन्हनी गरे ॥२॥ अनि परस्पर दृढ आलिंगन गरेर राजा पुरञ्जनले प्रियतमाका काँधमा बेरिएर भेट गरे—उनलाई ठूलो आसक्त चित्तले एकान्तमा प्रणय वाक्य द्वारा बुझाउँदै उसको वशीभूत भइसकेका हुनाले रात्रि-दिवसरूपी कालको दुस्तर गतिलाई पनि जान्न सकेनन् ॥ ३ ॥ महामनस्वी राजा पुरञ्जन आफ्नी प्रियाका हातको तकिया लगाएर मूल्यवान् शय्यामा पल्टिई सुतिरहे । आफ्नो बढेको मदले गर्दा त्यो वीर त्यसैलाई परम पुरुषार्थ मानिरहेका थिए, किनकि अज्ञानान्धकारले ढाकिइसकेको हुनाले उसलाई आफ्नो र परब्रह्मको स्वरूपको फेरी पनि ज्ञान रहेको थिएन ॥ ४ ॥ हे राजेन्द्र ! यस प्रकार कामातुर हृदयले तीसित विहार गर्दा-गर्दा राजा पुरञ्जनको सम्पूर्ण युवावस्था आधा क्षण झैं बितेर गयो ॥ ५ ॥ हे प्रजापते ! यसै बीच राजा पुरञ्जनले पुरञ्जनीबाट एघार सय छोरा तथा आफ्ना माता-पिताको सुयश बढाउने एवं शील, उदारता आदि गुणले युक्त एक सय दस छोरी उत्पन्न गरे। ती कन्याहरू पौरंजनी कहिए ॥६।७॥ अनि पाञ्चाल देशका नरेश महाराज पुरंजनले आफ्नो वंशलाई बढाउने ती छोराहरूको योग्य स्त्री र कन्याहरूको तिनको अनुरूप वरहरू

फिन विवाह गरिदिए ॥८। ती पुरञ्जनका छोरा मध्ये प्रत्येकका सय-सय छोरा उत्पन्न भए, त्यसले त्यो पुरञ्जनवंश सारा पाञ्चालदेशमा फैलियो ॥९॥ यसरी आफ्ना छोरा-नाती,घर, ढुकुटी, सेवक तथा देश आदिमा क्रमशः बढ्दै जाने ममताले राजा पुरञ्जन विषयमा गाडिए ॥ १० ॥ त्यसपछि तिमीले जस्तै विविध भोगको इच्छाले यज्ञको दीक्षा ग्रहण गरे र अनेक पशुहिंसामय भयंकर यज्ञहरू द्वारा देवता, पितृ तथा भूपतिहरूलाई प्रसन्न तुल्याए ॥११॥ यस चालले परमार्थ साधनमा असावधान रहेर आफ्ना कुटुम्बमा नै आसक्त चित्त राजा पुरञ्जनको वृद्धावस्थाको समय आयो, जुन कामी पुरुषलाई मनपर्दैन ॥१२॥ हे राजन् ! चण्डवेग नामक गन्धर्वहरूको यौटा राजा थियो। त्योसित तीन सय साठी बलवान् गन्धर्वहरू रहन्थे ॥१३॥ ती तीन सय साठी गन्धर्वहरूसित शुक्ल तथा कृष्णवर्णका त्यति नै संख्यामा गन्धर्वीहरू थिए, जो सबै भोगका सामग्रीहरूले युक्त महाराज पुरञ्जनको पुरीमा सर्वदा लूट-मार गरिरहन्थे ॥१४॥ जब गन्धर्वराज चण्डवेगका सेवक राजा पुरञ्जनको नगरलाई लुट्न लागे तब प्रजागर नामको त्यो पाँच फणा हुने सर्पले तिनलाई रोक्यो ॥ १५ ॥ हे

संयोजयामास दुहितॄः सदृशैर्वरैः ॥८॥ पुत्राणां चाभवन्पुत्रा एकैकस्य शतं शतम् ॥ यैर्वै पौरंजनो वंशः पाञ्चालेषु समेधितः ॥ ९ ॥ तेषु तद्रिक्थहारेषु गृहकोशानुजीविषु ॥ निरूढेन ममत्वेन विषयेष्वन्वबध्यत ॥१०॥ ईजे च क्रतुभिर्घोरैर्दीक्षितः पशुमारकैः ॥ देवान्पितॄन्भूतपतीन्नानाकामो यथा भवान् ॥ ११ ॥ युक्तेष्वेवं प्रमत्तस्य कुटुम्बासक्तचेतसः ॥ आससाद स वै कालो योऽप्रियः प्रिययोषिताम् ॥ १२ ॥ चण्डवेग इति ख्यातो गन्धर्वाधिपतिर्नृपः ॥ गन्धर्वास्तस्य बलिनः षष्ट्युत्तरशतत्रयम् ॥१३॥ गन्धर्व्यस्तादृशीरस्य मैथुन्यश्च सितासिताः ॥ परिवृत्त्या विलुम्पन्ति सर्वकामविनिर्मिताम् ॥ १४ ॥ ते चण्डवेगानुचराः पुरञ्जनपुरं यदा ॥ हर्तुमारेभिरे तत्र प्रत्यषेधत्प्रजागरः ॥ १५ ॥ स सप्तभिः शतैरेको विंशत्या च शतं समाः ॥ पुरंजनपुराध्यक्षो गन्धर्वैर्युयुधे बली ॥ १६ ॥ क्षीयमाणे स्वसम्बन्धे एकस्मिन्बहुभिर्युधि ॥ चिन्तां परां जगामार्तः सराष्ट्रपुरबान्धवः ॥ १७ ॥ स एव तुर्यां मधुभुक्पाञ्चालेषु स्वपार्षदैः ॥ उपनीतं बलिं गृह्णन्स्त्रीजितो नाविदद्भयम् ॥१८॥ कालस्य दुहिता काचित्त्रिलोकीं वरमिच्छती ॥ पर्यटन्ती न बर्हिष्मन्प्रत्यनन्दत कश्चन ॥ १९ ॥ दौर्भाग्येनात्मनो लोके विश्रुता दुर्भगेति सा ॥ या तुष्टा राजर्षये तु वृताऽदात्पूरवे वरम् ॥ २० ॥ कदाचिदटमाना सा ब्रह्मलोकान्महीं गतम् ॥ वव्रे बृहद्व्रतं मां तु जानती काममोहिता ॥ २१ ॥ मयि संरभ्य विपुलमदाच्छापं सुदुःसहम् ॥ स्थातुमर्हसि

राजन् ! पुरञ्जनको पुरीको रक्षक त्यो महाबलवान् सर्प सय वर्षसम्म एक्लै ती सात सय बीस गन्धर्वसित लड्दै रह्यो ॥१६॥ यसरी धेरै योद्धाहरूसित एक्लै युद्धमा लिप्त आफ्नो एकमात्र सम्बन्धी त्यस सर्पलाई बलहीन भएको देखेर आफ्नो राष्ट्र र नगरको हित गर्न भएका राजा पुरञ्जन आत्तिएर चिन्तामा परे ॥ १७ ॥ यतिका दिनसम्म ऊ आफ्ना दूतद्वारा ल्याइएको कर ( तिरो ) स्वीकार गरेर पाञ्चाल देशभित्र आफ्नो पुरीमा नै बसेर नाना प्रकारका क्षुद्र विषयहरू भोग गर्दै रह्यो। स्त्रीको वशीभूत हुनाले उसलाई यस विपत्तिको कुरा केही पनि थाहै हुन सकेन। हे बर्हिष्मन् ! उसै बखत कालकी कुनै पुत्री आफ्नो योग्य वर खोज्दै तीनै लोकमा डुली, तर त्यसलाई कसैले पनि अंगीकार गरेन। ऊ अभागिनी हुनाले त्यो 'दुर्भगा' जहाँ कहीं जाँदै रहन्थी। एकपल्ट राजर्षि पुरुले अंगीकार गर्नाले प्रसन्न भएर उसले राजालाई राज्य-प्राप्तिको वरदान दिई ॥१८-२०॥ एकपल्ट म ( नारद ) ब्रह्मलोकबाट पृथ्वीमा आएँ।

४१३०

तब नैष्ठिक ब्रह्मचारी भनेर पनि त्यस दुखी कालकन्याले कामातुर भावले मलाई आफ्नू पति तुल्याउन खोजी ॥२१॥ किन्तु त्यसले जब मेरो अनिच्छा देखी तब रिसाएर मलाई यो दुःसह श्राप दिई—'हे मुने ! तिमीले मेरो कुरा मानेका छैनौ, यस निम्ति तिमी एक ठाउँमा धेरै बेरसम्म टिक्न सक्ने छैनौ' ॥२२॥ यस प्रकार मतिरबाट निराश भएर ती कालकन्या मेरो कथनानुसार भय नामक यवनराजकहाँ गई र उहाँलाई वरण गर्न निश्चय गरेर भनी—॥२३॥ 'हे वीर ! तिमी यवन श्रेष्ठलाई म आफ्नो पति बनाउने इच्छा गर्दछु । किनकि तिम्रो प्रति गरिएको प्राणीहरूको सङ्कल्प कहिल्यै विफल हुँदैन ॥ २४ ॥ जो मनुष्य लोक तथा शास्त्रविहित दान दिँदैन वा जो लोक तथा शास्त्र विधिले अधिकारी भएर पनि त्यस्तो दान स्वीकार गर्दैन, ती दुवै दुराग्रही मूढ पुरुष अन्तमा पछितोमा पर्छन् ॥२५॥ हे भद्र ! म सेवा गर्नका लागि तिम्रो सामुन्ने उपस्थित भएकी छु । तिमी नै मलाई स्वीकार गरेर

नैकत्र मय्याशाविमुखो मुने ॥२२॥ ततो विहतसंकल्पा कन्यका यवनेश्वरम् ॥ मयोपदिष्टमासाद्य वव्रे नाम्ना भयं पतिम् ॥ २३ ॥ ऋषभं यवनानां त्वां वृणे वीरेप्सितं पतिम् ॥ संकल्पस्त्वयि भूतानां कृतः किल न रिष्यति ॥ २४ ॥ द्वाविमावनुशोचेते बालावसदवग्रहौ ॥ यल्लोकशास्त्रोपनतं न राति न तदिच्छति ॥ २५ ॥ अथो भजस्व मां भद्र भजन्तीं मे दयां कुरु ॥ एतावान्पौरुषो धर्मो यदार्ताननुकम्पते ॥ २६ ॥ कालकन्योदितवचो निशम्य यवनेश्वरः ॥ चिकीर्षुर्देवगुह्यं स सस्मितं तामभाषत ॥ २७ ॥ मया निरूपितस्तुभ्यं पतिरात्मसमाधिना ॥ नाभिनन्दति लोकोऽयं त्वामभद्रामसम्मताम् ॥ २८ ॥ त्वमव्यक्तगतिर्भुङ्क्ष्व लोकं कर्मविनिर्मितम् ॥ याहि मे पृतनायुक्ता प्रजानाशं प्रणेष्यसि ॥ २९ ॥ प्रज्वारोऽयं मम भ्राता त्वं च मे भगिनी भव ॥ चराम्युभाभ्यां लोकेऽस्मिन्नव्यक्तो भीमसैनिकः ॥ ३० ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे पुरञ्जनोपाख्याने

अनुगृहीत गर । दीन जनमा दया गर्नु नै मनुष्यको सबैभन्दा ठूलो धर्म हो ॥२६॥ त्यो कालकन्याको यस्ता वचन सुनेर यवनराजले विधाताको गोप्य गुप्त कार्य गराउने अभिप्रायले मुसु-मुसु हाँस्तै भन्यो—॥२७॥ हे कालकन्यके ! मैले योगदृष्टि द्वारा देखेर तेरो निम्ति गोप्य पति निर्धारित गरेको छु । तँ सबैको अनिष्ट गर्दछेस्, यसै निम्ति कसैलाई पनि प्रिय हुन सक्तिनस् र यसै कारण म तँलाई स्वीकार गर्न सक्तिन ॥२८॥ अतः तँ कर्म-विनिर्मित लोकलाई हठपूर्वक गुप्त रूपले भोग । तँ मेरा सेनाको संगै जा । तँ द्वारा सारा प्रजाको नाश हुनेछ ॥ २९ ॥ यो प्रज्वार मेरो भाई हो र तँ मेरी बहिनी होस् । तिमी दुवै र आफ्नो विशाल सेनासित म पनि अव्यक्त रूपले सबै लोकमा डुल्नेछु' ॥ ३० ॥ इति श्रीमद्भागवत

© उदाहरण ( ब्रह्मचर्यको प्रभाव )—जयपुरमा गोविन्दजीको मोटा मन्दिर छ । पूर्वकालमा त्यसका पुजारी विवाह गर्दैनथे । अतः ती अखण्ड ब्रह्मचारी हुन्थे । त्यसताका ती निकै तेजस्वी देखिन्थे र कसैको पनि केही ध्यान राख्दैनथे । एक समय राजाले ती सबैलाई डाके । तिनीहरूले भने—'राजालाई काम परे उनी स्वयं यहाँ आउँछन्, हामीले जाने केही आवश्यकता छैन ।' यो कुरा राजाले सुनेपछि द बानसित छलछाम गरी विस्तार-विस्तार ती सबैको विवाह गराइदिए ! विवाहपछि फेरि कहिल्यै राजाले तिनीहरूलाई डाक्ने वा भेट्ने मौका आएन, किनकि पैसा बिना तिनको गृहस्थी चल्न सक्तैनथ्यो । राजा बाहेक अरु कोही पनि पैसाले तिनको सहायता गर्न सक्तैनथे भनेर ती राजाकहाँ गएर भन्दथे—'म आशीर्वाद दिन आएको छु । आज भगवान्को प्रसाद ल्याएको छु । मेरो लायक कुनै सेवा भए आज्ञा होला ।' यो सबै गर्नुपर्ने कारण—तिनको ब्रह्मचर्य त्यागेर गृहस्थ हुनु नै थियो । समय बितेपछि ती पुजारीहरूका छोरा-छोरी भए । अब तिनको विवाहका लागि पैसा चाहियो । अब ती सबै राजाको खुशामद गर्नलागे । यसको धेरै दिनपछि तिनलाई ब्रह्मचर्यको प्रभाव ज्ञात भयो ।

महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां सप्तविंशोऽध्यायः ॥२७॥ ( राजा पुरञ्जनलाई स्त्री योनि प्राप्त हुनु र अज्ञातको उपदेशले मोक्ष प्राप्त हुनु )–नारद भन्दछन्–हे प्राचीनबर्हि ! त्यसपछि भय नामको यवनराजका आज्ञाकारी सेना प्रज्वार कालकन्यासित पृथ्वीतलमा डुल्न लागे ॥ १ ॥ हे राजन् ! एक दिनको कुरा हो, तिनले ठूलो वेगले बूढो सर्पद्वार सुरक्षित तथा पृथ्वीका सबै भोगहरूले सम्पन्न त्यस पुरञ्जनको नगरलाई घेरिलिए ॥ २ ॥ त्यसपछि असको पंजामा परेर मनुष्य तत्काल निःसार भएर जान्छ, त्यो कालकन्या बलपूर्वक तीं पुरञ्जनको पुरीलाई भोग्न लागी ॥३॥ त्यसै बखत ती यवन पनि उसद्वारा भोग्यमान पुरीमा चारैतिरबाट विभिन्न ढोकाहरूद्वारा पसेर त्यसको नाश गर्नलागे ॥४॥ त्यस पुरीलाई त्यसरी पीडित भएको देखेर त्यसको स्वामित्वको अभिमान राख्ने भएका कुटुम्बी राजा पुरञ्जनलाई ममतावश विविध प्रकारका सन्ताप हुन लागे ॥ ५ ॥ अनि कालकन्याको आलिंगन र गन्धर्व, यवनहरूको ठूलो सैनिक आक्रमणले श्रीहीन, कृपण, विषयग्रस्त, बुद्धिहीन तथा ऐश्वर्यहीन राजा पुरञ्जन आफ्नो पुरीलाई नष्ट-भ्रष्ट, पुत्र-पौत्र, भृत्य र मंत्रीहरूलाई आफ्नो प्रतिकूल तथा

सप्तविंशोऽध्यायः ॥ २७ ॥ नारद उवाच ॥ सैनिका भयनाम्नो ये बर्हिष्मन् दिष्टकारिणः ॥ प्रज्वारकालकन्याभ्यां विचेरुरवनीमिमाम् ॥ १ ॥
त एकदा तु रभसा पुरञ्जनपुरीं नृप ॥ रुरुधुर्भौमभोगाढ्यां जरत्पन्नगपालिताम् ॥ २ ॥ कालकन्याऽपि बुभुजे पुरञ्जनपुरं बलात् ॥ ययाऽभिभूतः
पुरुषः सद्यो निःसारतामियात् ॥ ३ ॥ तयोपभुज्यमानां वै यवनाः सर्वतो दिशम् ॥ द्वार्भिः प्रविश्य सुभृशं प्रार्दयन् सकलां पुरीम् ॥ ४ ॥
तस्यां प्रपीड्यमानायामभिमानी पुरञ्जनः ॥ अवापोरुविधांस्तापान्कुटुम्बी ममताकुलः ॥ ५ ॥ कन्योपगूढो नष्टश्रीः कृपणो विषयात्मकः ॥
नष्टप्रज्ञो हृतैश्वर्यो गन्धर्वैर्यवनैर्बलात् ॥ ६ ॥ विशीर्णां स्वपुरीं वीक्ष्य प्रतिकूलाननादृतान् ॥ पुत्रान्पौत्रानुगामात्याञ्जायां च गतसौहृदाम्
॥ ७ ॥ आत्मानं कन्यया ग्रस्तं पञ्चालानरिदूषितान् ॥ दुरन्तचिन्तामापन्नो न लेभे तत्प्रतिक्रियाम् ॥ ८ ॥ कामानभिलषन्दीनो यातयामांश्च
कन्यया ॥ विगतात्मगतिस्नेहः पुत्रान्दारांश्च लालयन् ॥ ९ ॥ गन्धर्वयवनाक्रान्तां कालकन्योपमर्दिताम् ॥ हातुं प्रचक्रमे राजा तां पुरीमनि-
कामतः ॥ १० ॥ भयनाम्नोऽग्रजो भ्राता प्रज्वारः प्रत्युपस्थितः ॥ ददाह तां पुरीं कृत्स्नां भ्रातुः प्रियचिकीर्षया ॥ ११ ॥ तस्यां सन्दह्यमानायां
सपौरः सपरिच्छदः ॥ कौटुम्बिकः कुटुम्बिन्या उपातप्यत सान्वयः ॥ १२ ॥ यवनोपरुद्धायतनो ग्रस्तायां कालकन्यया ॥ पुर्यां प्रज्वार-

अनादर गर्ने, स्त्रीलाई स्नेहशून्य, आफूलाई कालकन्याद्वारा ग्रसित र पाञ्चाल-निवासीहरूको शत्रुहरूको हातबाट नष्ट-भ्रष्ट भएको देखेर अपार चिन्तामा गाडिए र त्यसबाट मुक्ति पाउने कुनै उपाय झिक्न सकेनन् ॥६-८॥ अनि आफ्नो पारलौकिक गतिको प्रति स्नेहशून्य भई स्त्री-पुत्रको लालन-पालन गर्ने पुरञ्जनले कालकन्याको सेवनले सारहीन विषयहरूको इच्छाले दीन भएर गन्धर्वगण र यवनहरूले घेरिएको र कालकन्याले पीडित त्यस पुरीलाई अनिच्छाले त्याग्ने विचार गरे ॥९॥१०॥ त्यसैबेला भयनामक यवनको दाजु प्रज्वार त्यहाँ पुगेर आफ्नो भाईको भलो गर्ने विचारले सारा पुरीमा आगो लगाइदियो ॥११॥ जब पुरी बल्न लाग्यो तब पुरवासी, सेवकगण, कुटुम्ब, कुटुम्बका, स्वामिनी भार्या तथा आफ्ना सन्तान सहित उसलाई ठूलो कष्ट भयो ॥१२॥ त्यस पुरीलाई कालकन्याले ग्रस्त तथा आफ्नू निवासस्थान यवनहरूको हातमा गएको देखेर प्रज्वारको उपद्रवले पीडित त्यो पुरीको रक्षक

सर्प सान्है दुःखी भयो ॥१३॥ जब त्यो नगरको रक्षा गर्नमा असमर्थ भयो तब महाकष्टले गर्दा थर-थर काम्दै उसले त्यहाँबाट निस्केर जाने इच्छा गर्‍यो । जस्तै-बलिरहेको वृक्ष-कोटरका निवासी सर्प त्यसबाट निस्केर भाग्दछ ॥१४॥ हे राजन् ! जसको पुरुषार्थ गन्धर्व नष्ट पारिदिएका थिए । जसका सबै अङ्ग प्रत्यङ्ग खुला भइसकेका थिए, त्यस सर्पले जसै त्यहाँबाट जाने तयारी गर्‍यो, तसै यवनहरूले उसलाई छेके, त्यसले दुःखी भएर त्यो रुन लाग्यो ॥१५॥ त्यस बेला आफ्ना कुटुम्बसित वियुक्त हुने अवसर उपस्थित देखेर स्त्रीको वशीभूत हुनाले गर्दा अत्यन्त दीन र घर आदिमा मोहभाव राख्नाले अत्यन्त बुद्धिहीन भएर गृहस्थाश्रमी राजा पुरञ्जन, छोरा, छोरी, बुहारी, ज्वाई, सेवक तथा आफ्ना भनेर मानिएका जे जति घर, कोश एवं अन्यान्य पदार्थ थिए, तिनको विषयमा ऊ यस प्रकार विचार गर्न लागे-॥१६॥१७॥ 'अहो ! म परलोक गएपछि यो ठूलो कुटुम्ब भएकी मेरी पत्नी अनाथ भएर आफ्ना छोरा-छोरीको चिन्ताले ग्रस्त भएर कसरी आफ्नो जीवन निर्वाह गर्ली ? ॥१८॥ यो सदैव मेरो चाकरीमा लागिरहन्छे । मैले नखाई यो कहिल्यै पनि खान्न र

संघृष्टः पुरपालोऽन्वतप्यत ॥ १३ ॥ न शेके सोऽवितुं तत्र पुरुकृच्छ्रोरुवेपथुः ॥ गन्तुमैच्छत्ततो वृक्षकोटरादिव सोऽनलात् ॥ १४ ॥ शिथिला-वयवो यर्हि गन्धर्वैर्हृतपौरुषः ॥ यवनैररिभी राजन्नुपरुद्धो रुरोद ह ॥ १५ ॥ दुहितॄः पुत्रपौत्रांश्च जामिजामातृपार्षदान् ॥ स्वत्वावशिष्टं यत्किञ्चिद्गृहकोशपरिच्छदम् ॥ १६ ॥ अहं ममेति स्वीकृत्य गृहेषु कुमतिर्गृही ॥ दध्यौ प्रमदया दीनो विप्रयोग उपस्थिते ॥ १७ ॥ लोकान्तरं गतवति मय्यनाथा कुटुम्बिनी ॥ वर्तिष्यते कथं त्वेषा बालकाननुशोचती ॥ १८ ॥ न मय्यनशिते भुङ्क्ते नास्नते स्नाति मत्परा ॥ मयि रुष्टे सुसंत्रस्ता भर्त्सिते यतवाग्भयात् ॥ १९ ॥ प्रबोधयति माऽविज्ञ व्युषिते शोककर्शिता ॥ वर्त्मैतद्गृहमेधीयं वीरसूरपि नेष्यति ॥ २० ॥ कथं नु दारका दीना दारकीर्वा परायणाः ॥ वर्तिष्यन्ते मयि गते भिन्ननाव इवोदधौ ॥ २१ ॥ एवं कृपणया बुद्ध्या शोचन्तमतदर्हणम् ॥ ग्रहीतुं कृतधीरेनं भयनामाऽभ्यपद्यत ॥ २२ ॥ पशुवद्यवनैरेष नीयमानः स्वकं क्षयम् ॥ अन्वद्रवन्ननुपथाः शोचन्तो भृशमातुराः ॥ २३ ॥ पुरीं विहायोपगत उपरुद्धो भुजङ्गमः ॥ यदा तमेवानु पुरीं विशीर्णा प्रकृतिं गताम् ॥ २४ ॥ विकृष्यमाणः प्रसभं यवनेन बलीयसा ॥ नाविन्दत्त-

मैले स्नान नगरी यो स्नान गर्दिन । कहिल्यै म रिसाएको हुन्छु तब यो सान्है भयभीत हुन्छे र यदि म कहिल्यै हप्काउन थाल्छु तब यो डरले गर्दा यता-उता छटपटाउन थाल्दछे ॥१९॥ कहिले काहीं जब मसित कुनै अपराध हुन्छ तब यो सचेत गरिदिन्छे र जब म कहिले परदेश हिडिदिन्छु तब यो मेरो विरहव्यथाले सान्है दुर्बल हुन्छे । यद्यपि यो वीर-माता हो, तापनि म मरेपछि के यसले गृहस्थीको व्यवहार चलाउन सक्ली ? ॥२०॥ समुद्रमा अकस्मात् डुङ्गा भाँचियो भने त्यसका यात्री जसरी व्यग्र हुन्छन्, त्यस्तै नै म परलोक गएपछि जसलाई अरु कसैको आशा छैन, यस्ता मेरा छोरा र छोरीहरू अतिशय दीन-हीन भएर कसरी बाँच्लान् ?' ॥२१॥ यस प्रकार दीन बुद्धिले आफ्ना स्त्री-पुत्रादिको निम्ति शोकाकुल, किन्तु स्वयं शोकको अयोग्य राजा पुरञ्जनलाई पक्रनको निम्ति त्यहाँ भय नामक यवनराज आइपुग्यो ॥ २२ ॥ जब निर्दयी यवन उसलाई बाँधेर पशु झैं आफ्नो स्थानमा लिएर जान लाग्यो तब त्यसका सबै अनुचर अतिशय आतुरतापूर्वक शोकाकुल भएर उसकै पछि-पछि हिंडे ॥२३॥ अनि यवनहरूद्वारा रोकिएको त्यो सर्प पनि नगर बाहिर आएर उसकासाथै

433

हिंडिदियो। त्यो हिंडेपछि नै त्यो नगर छिन्न-भिन्न भएर प्रकृतिमा विलीन भयो ॥२४॥ यस प्रकार महाबली यवनराजले बलपूर्वक बाँधेपछि पनि राजा पुरञ्जनले अज्ञानको कारण आफ्नू परमहितकारी र पुरानो मित्र अज्ञातको सम्झना गरेन ॥२५॥ अनि ती निर्दयी राजाले अघि-अघि जुन पशुहरूको बलिदिएका थिए, ती उसबाट प्राप्त पीडा सम्झेर उसलाई क्रोधपूर्वक खुँडाले काट्न लागे ॥२६॥ यस प्रकार स्त्रीको संगतिले भ्रष्टबुद्धि राजा पुरञ्जन अनन्त र अपार अन्धकारमा डुबेर अनेक वर्षसम्म ज्ञानहीन रहेर अन्तमा उही स्त्रीको स्मरण गरिरहनाले विदर्भ देशाधिप राजाकहाँ स्त्री-रत्नको रूपमा जन्मिए ॥ २७ ॥ २८ ॥ अनि पुरुषार्थले नै प्राप्त हुने योग्य ती विदर्भ कुमारीलाई पाएर शत्रुका पुरहरू जित्ने पाण्ड्य नरेश महाराज मलयध्वजले युद्धमा सबै राजालाई जितेर त्योंगित विवाह गरे ॥ २९ ॥ मलयध्वजले ती विदर्भ कुमारीको गर्भबाट यौटी श्यामलोचना कन्या र त्यो भन्दा साना सात पुत्र उत्पन्न गरे, ती द्रविड देशका सात राजा भए ॥३०॥ हे राजन् ! तिनका एक-एक पुत्रबाट एकेक अरब पुत्र जायमान भए। तिनैको वंशधरहरूले यो पृथ्वी मन्वन्तरको अन्तसम्म र

मत्ताविष्टः सखायं सुहृदं पुरः ॥ २५ ॥ तं यज्ञपशवोऽनेन संज्ञप्ता येऽदयालुना ॥ कुठारैश्चिच्छिदुः क्रुद्धाः स्मरन्तोऽमीवमस्य तत् ॥ २६ ॥ अनन्त-
पारे तमसि मग्नो नष्टस्मृतिः समाः ॥ शाश्वतीरनुभूयार्तिं प्रमादासङ्गदूषितः ॥ २७ ॥ तामेव मनसा गृह्णन्बभूव प्रमदोत्तमा ॥ अनन्तरं विदर्भस्य
राजासिंहस्य वेश्मनि ॥ २८ ॥ उपयेमे वीर्यपणां वैदर्भीं मलयध्वजः ॥ युधि निर्जित्य राजन्यान्पाण्ड्यः पुरपुरञ्जयः ॥ २९ ॥ तस्यां स जनयांचक्र
आत्मजामसितेक्षणाम् ॥ यवीयसः सप्त सुतान्सप्त द्रविडभूभृतः ॥ ३० ॥ एकैकस्यां भवत्तेषां राजन्नर्बुदमर्बुदम् ॥ भोक्ष्यते यद्वंशधरैर्मही मन्वन्तरं
परम् ॥ ३१ ॥ अगस्त्यः प्राग्दुहितरमुपयेमे धृतव्रताम् ॥ यस्यां दृढच्युतो जात इध्मवाहात्मजो मुनिः ॥ ३२ ॥ विभज्य तनयेभ्यः क्ष्मां राज-
र्षिर्मलयध्वजः ॥ आरिराधयिषुः कृष्णं स जगाम कुलाचलम् ॥ ३३ ॥ हित्वा गृहान्सुतान्भोगान्वैदर्भी मदिरेक्षणा ॥ अन्वधावत पाण्ड्येशं
ज्योत्स्नेव रजनीकरम् ॥ ३४ ॥ तत्र चन्द्रवसा नाम ताम्रपर्णी वटोदका ॥ तत्पुण्यसलिलैर्नित्यमुभयत्रात्मनो मृजन् ॥ ३५ ॥ कन्दाष्टिभिर्मूल-
फलैः पुष्पपर्णैस्तृणोदकैः ॥ वर्तमानः शनैर्गात्रकर्षणं तप आस्थितः ॥ ३६ ॥ शीतोष्णवातवर्षाणि क्षुत्पिपासे प्रियाप्रिये ॥ सुखदुःखे इति द्वन्द्वा-
न्यजयत्समदर्शनः ॥ ३७ ॥ तपसा विद्यया पक्वकषायो नियमैर्यमैः ॥ युयुजे ब्रह्मण्यात्मानं विजिताक्षानिलाशयः ॥ ३८ ॥ आस्ते स्थाणुरिवै-

त्यसपछि पनि भोग गरिने छ ॥३१॥ राजा मलयध्वजकी व्रतपरायणा पहिली छोरीसित अगस्त्य ऋषिको विवाह भएको थियो। त्यसपछि उसबाट दृढच्युत नामको छोरो भयो र त्यसको पुत्र इध्मवाहु भयो ॥३२॥ अन्तमा राजर्षि मलयध्वज आफ्नो राज्य आफ्ना छोराहरूमा बाँडेर भगवान् कृष्णको आराधना गर्न कुलाचल पर्वतमा गए ॥३३॥ चन्द्रिकाले चन्द्रको साथ नछाडे झैं मत्त-लोचना वैदर्भी पनि आफ्नो घर, पुत्र तथा सबै भोगहरू त्यागेर पाण्ड्य-नरेश मलयध्वजसित वनमा गइन् ॥३४॥ त्यहाँ चन्द्रवसा, ताम्रपर्णी तथा वटोदका नामकी तीन नदीहरू थिए तिनको पवित्र जलमा आफ्नो शारीरिक र मानसिक मल पखाल्दै ती कन्द, बीज, मूल, फल, पात, तृण तथा जलादिमा जीवन निर्वाह गर्दै शरीरलाई सुखाउने कठोर तपस्या गर्न लागे ॥३५॥३६॥ समदर्शी महाराज मलयध्वजले चीसो, तातो, वर्षा-वायु, भोक-प्यास, प्रिय-अप्रिय र सुख-दुःख आदि सबै द्वन्द्वहरू आफ्नो

वक्षमा पारिलिए ॥३७॥ त्यसपछि तप, ज्ञान र यम-नियमादि द्वारा वासनाहरूलाई क्षीण पार्दै इन्द्रिय, प्राण तथा मनलाई जितेर आफ्नो चित्त उनले ब्रह्ममा लीन गराइदिए ॥३८॥ यस प्रकार पूरा सय वर्षसम्म ती स्थाणु (खाँबो) जस्तै यौटै स्थानमा निश्चल भावले उभिइरहे । श्रीकृष्ण भगवान्‌मा अतिशय प्रीति हुनाले उनलाई यति समय बितेको पनि केही ज्ञान हुन सकेन ॥३९॥ हे राजन् ! आफ्नो अन्तःकरणमा सर्वतिर स्फुरित हुने विशुद्ध ज्ञानरूपी बत्तीले साक्षात् भगवत्-स्वरूप गुरुको उपदेशले आफूलाई स्वप्न-प्रपञ्चको साक्षी झैं ती सबै उपाधिहरूमा व्याप्त एवं तींबाट पृथक् जानेर राजा मलयध्वज वैराग्य-सम्पन्न भए ॥४०॥४१॥ त्यसपछि आफ्नो आत्मालाई परब्रह्ममा तथा परब्रह्मलाई आफ्नो आत्मामा अभिन्न रूपले देख्दै यस अभेद चिन्तनलाई पनि त्यागेर उनले शान्ति प्राप्त गरे ॥४२॥ हे राजन् ! त्यस बेला पनि तिनकी पतिपरायणा पत्नी वैदर्भी भोगहरू त्यागेर आफ्ना परम धर्मात्मा पति मलयध्वजको ठूलो प्रेमले सेवा गर्दै रहिन् ॥४३॥ त्यस बेला तिनले आफ्नो शरीरमा चीर-वस्त्र धारण गरेकी थिइन्, व्रत-उपवासादिले तिनको शरीर क्षीण

कत्र दिव्यं वर्षशतं स्थिरः ॥ वासुदेवे भगवति नान्यद्वेदोद्वहन्रतिम् ॥ ३९ ॥ स व्यापकतयाऽऽत्मानं व्यतिरिक्ततयाऽऽत्मनि ॥ विद्वान्स्वप्न इवामर्श-साक्षिणं विरराम ह ॥ ४० ॥ साक्षाद्भगवतोक्तेन गुरुणा हरिणा नृप ॥ विशुद्धज्ञानदीपेन स्फुरता विश्वतोमुखम् ॥ ४१ ॥ परे ब्रह्मणि चात्मानं परं ब्रह्म तथात्मनि ॥ वीक्षमाणो विहायेक्षामस्मादुपरराम ह ॥ ४२ ॥ पतिं परमधर्मज्ञं वैदर्भी मलयध्वजम् ॥ प्रेम्णा पर्यचरद्धित्वा भोगान्सा पति-देवता ॥ ४३ ॥ चीरवासा व्रतक्षामा वेणीभूतशिरोरुहा ॥ बभावुपपतिं शान्ता शिखा शान्तमिवानलम् ॥ ४४ ॥ अजानती प्रियतमं यदोपर-तमङ्गना ॥ सुस्थिरासनमासाद्य यथापूर्वमुपाचरत् ॥ ४५ ॥ यदा नोपालभेताङ्घ्रावूष्माणं पत्युरर्चती ॥ आसीत्संविग्नहृदया यूथभ्रष्टा मृगी यथा ॥ ४६ ॥ आत्मनं शोचती दीनमबन्धुं विक्लवाऽश्रुभिः ॥ स्तनावासिच्य विपिने सुस्वरं प्ररुरोद सा ॥ ४७ ॥ उत्तिष्ठोत्तिष्ठ राजर्षे इमामुदधिमेख-लाम् ॥ दस्युभ्यः क्षत्रबन्धुभ्यो बिभ्यतीं पातुमर्हसि ॥ ४८ ॥ एवं विलपती बाला विपनेऽनुगता पतिम् ॥ पतिता पादयोर्भर्तुं रुदत्य-श्रूण्यवर्तयत् ॥ ४९ ॥ चितां दारुमयीं चित्वा तस्यां पत्युः कलेवरम् ॥ आदित्य चानुमरणे विलपन्ती मनो दधे ॥ ५० ॥ यत्र पूर्वतरः

भइसकेको थियो र तिनका केश आपसमा मिलेर जटाका रूपमा परिणत भएका थिए । अनि शान्तभावले ती आफ्नो पतिको नजीकै धूमरहित अग्नि-शिखा झैं शोभित भइन्॥४४॥ त्यस बेला उनका प्रियतम परलोकवासी भइसकेका थिए, तैपनि ती पहिले जस्तै स्थिर आसनमा बसिरहेका थिए । यो रहस्य नजानाले तीपतिको नजीकै गइन् र उनको पूर्ववत् सेवा गर्नलागिन् ॥४५॥ ती पतिका चरणको सेवा गर्दै थिइन्, सहसा ती अबलालाई ती पाउमा चीसो प्रतीत भयो । अनि समूहबाट छुट्टिएकी मृगी झैं ती निकै आत्तिइन् ॥४६॥ त्यस डरलाग्दो वनमा आफूलाई बन्धुहीन तथा दीन अवस्थामा देखेर अतिशय शोकाकुल भई आँसुले आफ्ना स्तन भिजाउँदै चर्को स्वरले विलाप गर्न लागिन् ॥४७॥४८॥ ती भन्न लागिन्—हे राजन् ! हजुर उठन् हवस, यो समुद्रले घेरिएकी भूमि दस्युहरू तथा अधम राजाहरुद्वारा पीडित भइरहेकी छन् । हजुर यसको रक्षा गर्नुस ।' पतिसित वनमा गएकी ती सुन्दरी अनेक विलाप गर्दै पतिका पाउमा लडिन् र रोएर आँसु बगाउन थालिन् ॥४९॥ अनि तिनले काठको चिता बनाएर त्यसमा पतिको देह राखेर आगो लगाई पतिसित सती भएर जाने निश्चय गरिन्

॥५०॥ हे प्रभो। उसै वखत त्यसको यौटा पुरातन अर्थात् पुरानो मित्र तथा आत्मज्ञानी ब्राह्मण त्यहाँ आइपुगे र ती रोइरहेकी अबलालाई मधुर वाणीमा बुझाउँदै भने ॥५१॥ ब्राह्मण भन्दछन्—अरे! तिमी को? कासकी छोरी हौ? कसको निम्ति रोइरहेकी छौ? यो सुतेको को हो? के तिमी, म आफ्नो पुरानो मित्रलाई चिन्दैछौ–जोसित तिमी परापूर्वकालमा डुल्ने गर्दथ्यौ ॥५२॥ फेरि मित्रप्रति भने—हे सखे! जसको अविज्ञात मित्र थियो, त्यो आफूलाई तिमी चिन्दछौ? तिमी चिन्दछौ? कि चिन्दैनौ? तिमी पृथ्वीका समस्त भोगहरूको इच्छाले मलाई त्यागेर आएका थियौ, त्यो तिमीलाई सम्झना छ? ॥५३॥ हे आर्य! पहिले म र तिमी दुवै जना मानसरोवर स्वरूप आफ्नो अन्तःकरणमा विराजमान हंस जस्तै शुद्ध स्वभावका थियौं। हामी दुवै एक हजार वर्षसम्म विना कुनै घर-वारकै रहिरहेका थियौं ॥५४॥ हे मित्र! उही तिमी विषय-भोगका कामनाले मलाई त्यागेर आयौ र पृथ्वीमा डुल्दै तिमीले स्त्रीद्वारा रचित यौटा नगर देख्यौ ॥५५॥ जुन पाँच बगैंचा, नौ द्वार, एक द्वाररक्षक, तीन बुर्जा, छ इच्छित वस्तुहरू दिने वैश्य, पाँचथरि बजार र पाँच नै उपादान कारणहरूले

कश्चित्सखा ब्राह्मण आत्मवान् ॥ सान्त्वयन्वल्गुना साम्ना तामाह रुदतीं प्रभो ॥ ५१ ॥ ब्राह्मण उवाच ॥ का त्वं कस्यासि को वाऽयं शयानो यस्य शोचसि ॥ जानासि किं सखायं मां येनाग्रे विचचर्थ ह ॥ ५२ ॥ अपि स्मरसि चात्मानमविज्ञातसखं सखे ॥ हित्वा मां पदमन्विच्छन्भौम-भोगरतो गतः ॥ ५३ ॥ हंसावहं च त्वं चार्य सखायौ मानसायनौ ॥ अभूतामन्तरावौकः सहस्रपरिवत्सरान् ॥ ५४ ॥ स त्वं विहाय मां बन्धो गतो ग्राम्यमतिर्महीम् ॥ विचरन्पदमद्राक्षीः कयाचिन्निर्मितं स्त्रिया ॥ ५५ ॥ पञ्चारामं नवद्वारमेकपालं त्रिकोष्ठकम् ॥ षट्कुलं पञ्चविपणं पञ्चप्रकृति स्त्रीधवम् ॥ ५६ ॥ पंचेन्द्रियार्था आरामा द्वारः प्राणा नव प्रभो ॥ तेजोऽबन्नानि कोष्ठानि कुलमिन्द्रियसंग्रहः ॥ ५७ ॥ विपणस्तु क्रियाशक्तिर्भू–तप्रकृतिरव्यया ॥ शक्त्यधीशः पुमांस्त्वत्र प्रविष्टो नावबुध्यते ॥ ५८ ॥ तस्मिंस्त्वं रामया स्पृष्टो रममाणोऽश्रुतस्मृतिः ॥ तत्संगादीदृशीं प्राप्तो दशां पापीयसीं प्रभो ॥ ५९ ॥ न त्वं विदर्भदुहिता नायं वीरः सुहृत्तव ॥ न पतिस्त्वं पुरञ्जन्या रुद्धो नवमुखे यथा ॥ ६० ॥ माया ह्येषा मया सृष्टा यत्पु–मांसं स्त्रियं सतीम् ॥ मन्यसे नोभयं यद्वै हंसौ पश्यावयोर्गतिम् ॥ ६१ ॥ अहं भवान्न चान्यस्त्वं त्वमेवाहं विचक्ष्व भोः ॥ न नौ पश्यन्ति कवयश्छिद्रं

युक्त थियो त्यसकी स्वामिनी यौटा स्त्री थिई ॥५६॥ हे राजन्! इन्द्रियका पाँच विषय नै त्यसका बगैंचा थिए। नौ इन्द्रिय त्यसका छिद्र द्वार थिए। अग्नि, जल र अन्न यी तीन बुर्जा थिए। मन र पाँच ज्ञानेन्द्रिय यी छ वैश्य थिए। क्रियाशक्ति-सम्पन्न कर्मेन्द्रियहरू नै बजार थिए र पञ्चभूत नै कहिल्यै क्षीण नहुने उपादान कारण थिए। हे मित्र! बुद्धि-शक्ति नै जसकी स्वामिनी थिई, यस्तो संगति भएको नगरमा प्रवेश गरेपछि पुरुष आफ्नो स्वरूपलाई देख्न पाउन्न ॥५७-५८॥ हे समर्थ! त्यही नगरमा यौटी सुन्दरीमा मोहित भएर तिमी त्योसित विवाह गर्दा-गर्दै आफ्नो स्वरूपलाई समेत बिर्सिदियौ र त्यसपछि तिमी यस अधम अवस्थामा आइपुग्यौ। तिमी विदर्भ नरेशकी छोरी होइनौ? यो वीर पनि तिम्रो सुहृद् होइन र जसले तिमीलाई नौ द्वारको नगरमा लगेर थुनिदिएको थियो, त्यो पुरञ्जनीका पति पनि तिमी हुन सक्तैनौ ॥५९-६०॥ तिमी जुन आफूलाई पुरुष र स्त्रीलाई सती नारी ठानिरही छौ, यो मेरै रचित माया हो। वस्तुतः यी दुवैमा तिमी कोही पनि होइनौ, हामी दुवै हंस हौं। हाम्रो जो सत्य स्थिति हो, त्यो सुन र जान ॥६१॥ हे मित्र! जुन म हुँ, उही

तिमी भन्दा भिन्न हुन सक्तैनौ । जो तिमी हौ, त्यही म हुँ–यस्तो निश्चित जान । बुद्धिमान व्यक्ति हामी दुवैमा अलिकति पनि भेद देख्दैनन् ॥६२॥ जस्तै पुरुष आफ्नो शरीर रूपलाई ऐना र अर्को पुरुषका आँखामा दुइ प्रकारको देख्दछ, त्यस्तै नै हामी दुवै हौं ॥६३॥ यही हंसरूपी ईश्वर द्वारा सावधान गरेपछि त्यो मानस सरोवरको हंस अर्थात् जीव आफ्नो स्वरूप मा स्थित भयो र उसलाई आफ्नो मित्रको वियोगले बिर्सेको आत्मज्ञान पुनः प्राप्त भयो ॥६४॥ हे राजा प्राचीनबर्हि ! मैले तिमीलाई यो आत्मज्ञानको भेद परोक्षरूपले भनेको हुँ, किनकि ती जगत्का रचयिता र सर्वव्यापी ईश्वरलाई परोक्ष वर्णन नै मनपर्छ ॥६५॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे अष्टाविंशतितमोऽध्यायः ॥२८॥ ( पुरञ्जनोपाख्यान )–

जातु मनागपि ॥ ६२ ॥ यथा पुरुष आत्मानमेकमादर्शचक्षुषोः ॥ द्विधाभूतमवेक्षेत तथैवान्तरयावयोः ॥ ६३ ॥ एवं स मानसो हंसो हंसेन प्रति· बोधितः स्वस्थस्तद्व्यभिचारेण नष्टामाप पुनः स्मृतिम् ॥ ६४ ॥ बर्हिष्मन्नेतदध्यात्मं पारोक्ष्येण प्रदर्शितम् ॥ यत्परोक्षप्रियो देवो भगवान्विश्व· भावनः ॥ ६५ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे पुरंजनोपाख्यानेऽष्टाविंशोऽध्यायः ॥ २८ ॥ प्राचीनबर्हिरुवाच ॥ भगवंस्ते वचोऽस्माभिर्न सम्यगवगम्यते ॥ कवयस्तद्विजानन्ति न वयं कर्ममोहिताः ॥ १ ॥ नारद उवाच ॥ पुरुषं पुरंजनं विद्याद्यद्व्यनक्त्यात्मनः पुरम् ॥ एकद्वित्रिचतुष्पादं बहुपादमपादकम् ॥ २ ॥ योऽविज्ञाताहृतस्तस्य पुरुषस्य सखेश्वरः ॥ यन्न विज्ञायते पुम्भिर्नामभिर्वा क्रियागुणैः ॥ ३ ॥ यदा जिघृक्षन्पुरुषः कार्त्स्न्येन प्रकृतेर्गुणान् ॥ नवद्वारं द्विहस्तांघ्रि तत्रामनुत साध्विति ॥ ४ ॥ बुद्धिं तु प्रमदां विद्यान्ममाहमिति यत्कृतम् ॥ यामधिष्ठाय देहेऽस्मिन्पुमान्भुङ्क्ते–

राजा प्राचीनबर्हि भन्दछन्–हे भगवन् ! हजुरका वचनको वास्तविक अर्थ मैले बुझ्न सकिन, किनकि त्यसको अभिप्राय विवेकशील पुरुष नै जान्न सक्दछन् ( हामी जस्ता पुरुष जान्न सक्तैनन् अतः कृपा गरेर स्पष्टरूपमा मलाई बुझाउनोस ॥१॥ नारदजी भन्दछन्— हे राजन् ! पूर्वोक्त पुरञ्जनलाई तिमी जीव जान–जो आफ्नो निम्ति एक, दुइ, तीन, चार वा अनेक अथवा विना खुट्टाको शरीररूपी नगर बसाल्दछ ॥२॥ त्यस जीवको पूर्वोक्त अज्ञात नामक मित्र ईश्वर हो—जसका जीवलाई नाम, गुण तथा कर्मसित सच्चा ज्ञान कुनै प्रकारले पनि हुनै पाउँदैन ॥३॥ जब जीव प्राकृत गुणहरूलाई ग्रहण गर्न इच्छा गर्दछ, तब त्यो नौ इन्द्रिय-छिद्ररूप द्वारले युक्त तथा दुइ हात र खुट्टा भएको मानव शरीरलाई नै उपयुक्त ठान्दछ ॥४॥

...सर्वव्यापी छ )—बोटी बूढी नित्य कथा सुन्ने गर्दथी । कथामा बारम्बार यो कुरा आउँथ्यो—ईश्वर सबैमा छ र उसको इच्छा बिना पात पनि हल्लन सक्तैन । बूढीको मनमा यो मान्यता दृढ भइसकेको थियो–जे जस्तो स्थिति आउँछ त्यो ईश्वर प्रेरित हुन्छ । अतः ईश्वरको इच्छामा आफ्नो इच्छा मिसाएर त्यो सदा प्रसन्न रहन्थी । यसले दिनदिनै बूढीको आचरण शुद्ध हुँदै गयो । एकपल्ट ब्रह्मा, विष्णु र शिवलाई त्यसको परीक्षा लिन मन लाग्यो । तदनुसार शिव सर्प, विष्णु सिपाही र ब्रह्मा साक्षी बनेर त्यसकहाँ गए । बुढीको बोटा छोरो थियो, त्यसलाई सर्पले डसेर मार्यो । अनि सिपाही रूपधारी विष्णुले बुढियासित भने—'आमै ! तिम्रा शत्रु सर्प यो दाउराको थुप्रोमा लुकेर बसेको छ । तिम्रो आज्ञा भए म त्यसलाई मारिदिन्छु ।' बुढियाले भनी–'जे हुनु थियो, त्यो भयो । अब त्यसलाई किन मार्ने ?' त्यही बखत साक्षी बनेर आएका ब्रह्माजीले भने— 'आमै ! शठे शाठ्यम् समाचरेत् । हान्नेलाई हान्‌, दोष नगन ।' बूढीले उत्तर दिई-'तिमी त विद्वान छौ, म त मूर्ख हुँ । यसनिम्ति तिमी भन्दा बढी म बुझ्न सक्तिन, तर मेरो यस्तो विश्वास छ कि ईश्वर सबैमा छ र ईश्वरको बाहेक उसै गरी बस्नु हाम्रो धर्म हो । सूर्य चन्द्र पनि उसैको अधीन छन् । मेरो छोरोको सम्बन्ध पूरा भएको होला, त्यसैले टोक्यो । अब म यस सर्पलाई नयाँ शत्रु किन बुल्याऊँ ? अतः त्यसलाई मार्ने कुरा नगर । त्यसपछि बुढिले छोरोको मुखमा गङ्गाजल हाल्नासाथ छोरो उठेर ठिङ्ग उभियो । त्यसपछि देवताहरूले प्रसन्न भएर ती दुवै आमा–छोरालाई दर्शन दिए र ती कृतार्थ भए ।

यसैले देह–इन्द्रिय आदिमा ममताको भाव उत्पन्न हुन्छ । तिमी बुद्धिलाई नै स्त्री मान । त्यसको भरमा नै पुरुष देहमा आफ्ना इन्द्रियहरू द्वारा तिनका विषयहरू भोग्दछ ॥५॥ असको द्वारा ज्ञान र कर्म हुन्छ, ती दस इन्द्रिय नै त्यस स्त्रीका सुहृद हुन् । इन्द्रियका वृत्तिहरू नै उसका सखी हुन् । पाँच वृत्ति भएको प्राण त्यस नगरको रक्षक पाँच फणा भएको सर्प समान हो ॥ ६ ॥ दुवै प्रकारका इन्द्रियहरूको अधिपति मनलाई बृहद्बल नामको मुख्य योद्धा मान्नुपर्दछ । इन्द्रियका शब्द स्पर्शादि पाँच विषय नै पाञ्चाल देश हो, जसमा यो नौ द्वार हुने नगर बसेको छ ॥ ७ ॥ त्यस नगरमा जुन एक स्थानमा दुइ द्वार कहिएका छन्, ती दुइ कान हुन् । यी बाहेक मुख, शिश्न र गुदा–यी तीनैलाई मिलाएर जम्मा नौ द्वार छन् यिनैबाट निस्केर जीव आफ्ना इन्द्रियरूपी मित्रसित बाहिरी विषयहरूतिर गर्छदछ ॥८॥ तिनमा दुइ नेत्र, दुइ नासिका र एक मुख यी पाँच पूर्वतिरका द्वार हुन् । दाहिने कानलाई दक्षिण र बायाँ कानलाई उत्तरको द्वार जान ॥९॥ तलतिर गुदा तथा शिश्न ( लिङ्ग ), यी दुवै पश्चिम द्वार कहिन्छन् । खद्योत आविर्मुखी यी एक स्थानमा दुइ द्वार

ऽक्षभिर्गुणान् ॥ ५ ॥ सखाय इन्द्रियगणा ज्ञानं कर्म च यत्कृतम् ॥ सख्यस्तद्वृत्तयः प्राणः पञ्चवृत्तिर्यथोरगः ॥ ६ ॥ बृहद्बलं मनो विद्यादुभयेन्द्रियनायकम् ॥ पाञ्चालाः पञ्च विषया यन्मध्ये नवखं पुरम् ॥ ७ ॥ अक्षिणी नासिके कर्णौ मुखं शिश्नगुदाविति ॥ द्वे द्वे द्वारौ बहिर्याति यस्तदिन्द्रियसंयुतः ॥ ८ ॥ अक्षिणी नासिके आस्यमिति पंच पुरः कृताः ॥ दक्षिणं दक्षिणः कर्णउत्तरश्चोत्तरः स्मृतः ॥ ९ ॥ पश्चिमे इत्यधोद्वारौ गुदं शिश्नमिहोच्यते ॥ खद्योताविर्मुखी चात्र नेत्रे एकत्र निर्मिते ॥ रूपं विभ्राजितं ताभ्यां विचष्टे चक्षुषेश्वरः ॥ १० ॥ नलिनी नालिनी नासे गन्धः सौरभ उच्यते ॥ घ्राणोऽवधूतो मुखास्यं विपणो वाग्रसविद्रसः ॥ ११ ॥ आपणो व्यवहारोऽत्र चित्रमन्धो बहूदनम् ॥ पितृहूर्दक्षिणः कर्ण उत्तरो देवहूः स्मृतः ॥ १२ ॥ प्रवृत्तं च निवृत्तं च शास्त्रं पंचालसंज्ञितम् ॥ पितृयानं देवयानं श्रोत्राच्छ्रुतधराद्व्रजेत् ॥ १३ ॥ आसुरी मेढ्रमर्वाग्द्वार्व्यवायो ग्रामिणां रतिः ॥ उपस्थो दुर्मदः प्रोक्तो निर्ऋतिर्गुद उच्यते ॥ १४ ॥ वैशसं नरकं पायुर्लुब्धकोऽन्धौ तु मे शृणु ॥ हस्तपादौ पुमांस्ताभ्यां युक्तो याति करोति च ॥ १५ ॥ अन्तःपुरं च हृदयं विषूचिर्मन उच्यते ॥ तत्र मोहं प्रसादं वा हर्षं प्राप्नोति तद्गुणैः ॥ १६ ॥ यथा यथा

दुवै नेत्र छन् । रूप विभ्राजित नामको देश हो, जहाँ जीव आफ्नो मित्र चक्षु-इन्द्रिय ( द्युमान् ) सित जान्छ ॥१०॥ दुवै नासिकालाई नलिनी तथा नालिनी नामको द्वारम मानिएको छ र नासिकाका विषय अर्थात् गन्ध सौरभ देश कहिन्छ । घ्राणेन्द्रिय अवधूत नामको मित्र हो । मुख्य-मुख्य नामका द्वार हुन् र उसमा बस्ने भएका वाक्-इन्द्रिय विपण तथा रसनेन्द्रिय रसविद नामको मित्र हो ॥११॥ वाणीको व्यवहार आपण एवं विविध प्रकारका अन्न बहूदन हो । दाहिने कान पितृहू र बायाँ कान देवहू कहिन्छ ॥ १२ ॥ कर्मकण्ड रूपी प्रवृत्ति-शास्त्र तथा ज्ञानकाण्डरूपी निवृत्ति-शास्त्र दक्षिण पाञ्चाल र उत्तर पाञ्चाल नामका देश हुन्, उसलाई श्रवणेन्द्रियरूपी आफ्ना मित्र श्रुतधर द्वारा सुनेर जीव बिस्तार-बिस्तार पितृयान तथा देवयान मार्गमा जान्छ ॥ १३ ॥ आसुरी नामक पश्चिमी द्वार शिश्नेन्द्रिय हो । त्यसै द्वारा स्त्री-प्रसंग गर्नु ग्रामक नामको देश हो र उपस्थेन्द्रिय त्यसमा बस्ने दुर्मद नामक मित्र हो गुदा निर्ऋति नामक पश्चिमी द्वार हो ॥१४॥ नरक वैशस देश हो । पायु-इन्द्रिय लुब्धक नामको मित्र हो । अब दुइ अन्धाको तात्पर्य भन्दछु त्यो सुन । हात तथा खुट्टा

यिनै दुवै दुइ अन्धा पुरुष हुन्, जसको सहायताले जीव आफनो सबै काम गर्दछ र त्यो जहाँ-तहाँ आउने-जाने गर्दछ ॥ १५ ॥ हृदय अन्तःपुर कहिन्छ । त्यसका बस्ने मन नै विषुची नामको मन्त्री हो । जीव त्यसका सत्वादि गुणहरूको अनुसार हर्ष, शोक तथा मोह आदिमा प्राप्त हुन्छ ॥ १६ ॥ बुद्धिरूपिणी रानी जति-जति विचारमा प्राप्त हुन्छे र जति-जति इन्द्रियादिहरूलाई विकृत पार्दछे, त्यसै प्रकार गुणहरूमा लिप्त जीव त्यसका वृत्तिहरूको साक्षी बनेर तिनको अनुसरण गर्दछ ॥१७॥ हे राजन् ! स्वप्न शरीर रथ हो ! त्यसका इन्द्रिय-रूपी पाँच घोड़ा मानिन्छन् । वर्षहरू आउनु र बितेर जानु त्यसको गति कहिन्छ । पुण्य र पाप-यी दुइ प्रकारका कर्म नै उसका दुइ चक्का हुन् । तीन गुण त्यसका ध्वजा हुन् र पाँच प्राण बन्धन हुन्छन् ॥१८॥ मन उसको बागडोर, बुद्धि सारथी, हृदय बस्ने स्थान, सुख-दुःख आदि द्वन्द्व उसको जूआ, इन्द्रियका पाँच विषय त्यसमा राखिएका शस्त्र र त्वचा आदि सात धातु उसका पर्दा मानिन्छन् ॥१९॥ यसै प्रकार कर्मेन्द्रियहरू त्यसका बाह्य गति कहिन्छन् । त्यो स्वप्न-शरीररूपी रथमा बसेर जीव मृगतृष्णाको समान मिथ्या विषयतिर दगुर्न थाल्दछ । एघार इन्द्रियहरू उसका सेना हुन्छन्, जसद्वारा त्यो जीव इन्द्रियहरूका पाँच विषयलाई पशु-वध गर्ने झैं अनीतिपूर्वक स्वीकार्दछ ॥ २० ॥ संवत्सर चण्डवेग

विक्रियते गुणाक्तो विकरोति वा ॥ तथा तथोपद्रष्टात्मा तद्वृत्तीरनुकार्यते ॥ १७ ॥ देहो रथस्त्विन्द्रियाश्वः संवत्सररयो गतिः ॥
द्विकर्मचक्रस्त्रिगुणध्वजः पंचासुबन्धुरः ॥ १८ ॥ मनोरश्मिर्बुद्धिसूतो हृन्नीडो द्वन्द्वकूबरः ॥ पंचेन्द्रियार्थप्रक्षेपः सप्तधातुवरूथकः ॥ १९ ॥ आकूति-
विक्रमो बाह्यो मृगतृष्णां प्रधावति ॥ एकादशेन्द्रियचमूः पंचसूनाविनोदकृत् ॥ २० ॥ संवत्सरश्चण्डवेगः कालो येनोपलक्षितः ॥ तस्याहानीह
गन्धर्वा गन्धर्व्यो रात्रयः स्मृताः ॥ हरन्त्यायुः परिक्रान्त्या षष्ट्युत्तरशतत्रयम् ॥ २१ ॥ कालकन्या जरा साक्षाल्लोकस्तां नाभिनन्दति ॥ स्वसारं
जगृहे मृत्युः क्षयाय यवनेश्वरः ॥ २२ ॥ आधयो व्याधयस्तस्य सैनिका यवनाश्चराः ॥ भूतोपसर्गाशुरयः प्रज्वारो द्विविधो ज्वरः ॥ २३ ॥
एवं बहुविधैर्दुःखैर्दैवभूतात्मसंभवैः ॥ क्लिश्यमानः शतं वर्षं देहे देही तमोवृत ॥ २४ ॥ प्राणेन्द्रियमनोधर्मानात्मन्यध्यस्य निर्गुणः ॥ शेते कामल

नामको गन्धर्वराज हो, जस द्वारा कालको ज्ञान हुन्छ । त्यसका अधीनस्थ गन्धर्व, दिन गन्धर्वीहरू रात्रि हुन् । यी तीन सय साठी दिन र रात बराबर घुमेर मनुष्यको आयुष्यलाई हरण गर्दै रहन्छन् ॥२१॥ जरावस्था ( बुढ्याइँ ) नै कालकन्या हो । त्यसलाई कुनै पनि पुरुष मनपराउन्नन् । मृत्युस्वरूप यमराजले लोकको संहार गर्नका निम्ति बैनी बनाएर स्वीकार गरेको छ ॥२२॥ मानसिक तथा शारीरिक क्लेश नै त्यस यवनराजका आज्ञाकारी यवन-सैनिक हुन् र प्राणीहरूलाई शीघ्र मृत्युको मुखमा पार्ने तातो र चीसो दुइ थरिका ज्वार-प्रज्वार हुन्, ॥२३॥ हे राजन् ! यस प्रकार देहाभिमान सम्पन्न जीव वास्तवमा निर्गुण भएर पनि अज्ञानले आच्छादित भएर प्राण, इन्द्रिय तथा मन आदिका धर्मलाई आफूमा आरोपित गरेर माया-ममताको अभिमानले बन्धनमा अल्झिई क्षुद्र विषय-भोगको इच्छावश विविध प्रकारका कर्म गर्दछ र यस शरीरमा कैयौं अधिदैविक, अधिभौतिक र आध्यात्मिक दुःखहरूले क्लेश पाउँदै सय वर्षसम्म त्यसै रहन्छ ॥ २४ ॥ यस प्रकार जीव निर्गुण भएर पनि प्राण, इन्द्रिय र मनको कार्यलाई आत्माको कर्तव्य ठानेर

क्षणिक कर्मसुखलाई न सर्वस्व ठान्न थाल्दछ, किनकि उपलाइ यसैमा ममता हुन्छ ॥२५॥ आफ्नो आत्मारूपी परम गुरु श्रीभगवान्‌लाई नजानेर नै जीव स्वयं प्रकाशशील भएर पनि प्राकृतिक गुणहरूमा लिप्त होइजान्छ ॥२६॥ ती गुणहरू अभिमानी हुनाले गर्दा त्यो विवश भएर सात्विक, राजस तथा तामस कर्म गर्दै र आफ्ना कर्महरूको अनुसार विभिन्न योनिहरूमा जन्मन जान्छ ॥२७॥ अतः त्यो जीव कहिले प्रकाश सम्पन्न स्वर्गादि सात्विक लोकमा जान्छ र कहिले दुःखमय मनुष्यादि लोकहरूमा जन्म लिन्छ, जहाँ त्यसलाई अगणित कर्म, हरूको क्लेश बोक्नु पर्दछ र कहिले शोकले भरिएको तमोमयी तिर्यक् आदि योनिहरूमा जान पुग्दछ ॥२८॥ यसरी विवेक-बुद्धिले हीन प्राणी कहिले पुरुष, कहिले स्त्री कहिले नपुंसक हुन्छ । त्यो कहिले देवयोनि, कहिले मनुष्य योनि र कहिले तिर्यक् योनिमा गएर जन्मन्छ । यस प्रकार त्यसलाई कर्म तथा गुणहरूको अनुसार विभिन्न जन्म मिल्दै रहन्छन् ॥ २९ ॥ जस्तै भोकले व्याकुल दीन-हीन कुकुर घर-घरै डुल्दै-फिर्दै र आफ्नो प्रारब्धवश कहीं लट्ठी र कहीं भात खान्छ, त्यस्तै नै विविध वासनाहरूमा बाँधिएको जीव उच्च-नीच मार्गबाट उत्तम,

वान्ध्यायन्ममाहमिति कर्मकृत् ॥ २५ ॥ यदात्मानमविज्ञाय भगवन्तं परं गुरुम् ॥ पुरुषस्तु विषज्जेतु गुणेषु प्रकृतेः स्वदृक् ॥ २६ ॥ गुणाभिमानी स तदा कर्माणि कुरुतेऽवशः ॥ शुक्लं कृष्णं लोहितं वा यथा कर्माभिजायते ॥ २७ ॥ शुक्लात्प्रकाशभूयिष्ठाँल्लोकानाप्नोति कर्हिचित् ॥ दुःखोदर्कान् क्रियायासांस्तमः शोकोत्कटान्क्वचित् ॥ २८ ॥ क्वचित्पुमान्क्वचिच्च स्त्री क्वचिन्नोभयमन्दधीः ॥ देवो मनुष्यतिर्यग्वा यथाकर्मगुणं-भवः ॥२९॥ क्षुत्परीतो यथा दीनः सारमेयो गृहं गृहम् ॥ चरन्विन्दति यद्दिष्टं दण्डमोदनमेव वा ॥ ३० ॥ तथा कामाशयो जीव उच्चावचपथा भ्रमन् ॥ उपर्यधो वा मध्ये वा याति दिष्टं प्रियाप्रियम् ॥ ३१ ॥ दुःखेष्वेकतरेणापि दैवभूतात्महेतुषु ॥ जीवस्य न व्यवच्छेदः स्याच्चेत्तत्तत्प्रतिक्रिया ॥ ३२ ॥ यथा हि पुरुषो भारं शिरसा गुरुमुद्वहन् ॥ तं स्कन्धेन स आधत्ते तथा सर्वाः प्रतिक्रियाः ॥ ३३ ॥ नैकान्ततः प्रतीकारः कर्मणां कर्म केवलम् ॥ द्वयं ह्यविद्योपसृतं स्वप्ने स्वप्न इवानघ ॥ ३४ ॥ अर्थे ह्यविद्यमानेऽपि संसृतिर्न निवर्तते ॥ मनसा लिङ्गरूपेण स्वप्ने विचरतो यथा ॥ ३५ ॥ अथात्मनोऽर्थभूतस्य यतोऽनर्थपरम्परा ॥ संसृतिस्तद्व्यवच्छेदो भक्त्या परमया गुरौ ॥ ३६ ॥ वासुदेवे भगवति भक्तियोगः समाहितः ॥

मध्यम तथा अधम योनिहरूमा घुम्दै इष्ट-अनिष्ट प्रारब्धको फल भोग्दछ ॥३०॥३१॥ यदि यसो भनौं–ती कष्ट निवारण गर्ने उपाय गर्न सकेदेखि त्यसबाट मुक्ति पाउन सकिन्छ । यो कुरा पनि उचित छैन, किनकि आधिदैविक, आधिभौतिक तथा आध्यात्मिक यी तीन थरिका दुःखहरूमा कुनै पनि दुःखबाट जीवलाई सर्वथा मुक्ति मिल्न सक्तैन । जस्तै—भारी बोकेर लैजाने पुरुष आफ्नो टाउकोलाई पीडाबाट निवृत्त गर्नको निमित्त भारीलाई टाउकोबाट काँधमा राख्दछ, त्यस्तै दुःखबाट मुक्ति पाउने उपाय हुन्छन् ॥३२॥३३॥ हे निष्पाप ! जस्तै–स्वप्नमा हुने स्वप्नान्तर त्यस स्वप्नबाट छुटने उपाय हुन सक्तैन, त्यस्तै कर्मफलको भोगबाट मुक्त हुने साधन केवल कर्म नै हुन सक्तैन, किनकि सकाम वा निष्काम दुबै कर्म अविद्या जनित हुन् ॥३४॥ जस्तै–मनोमय लिङ्ग शरीरबाट स्वप्नमा विचरणशील प्राणीलाई स्वप्नका पदार्थ सत्य नभए पनि सत्य भासमान हुन्छन्, त्यस्तै नै देहका अन्तःकरण आदि अनात्म पदार्थ सत्य नभए पनि तिनमा अभिमान गर्न भएको जीवको जन्म-मरणरूपी संसार निवृत्त हुन पाउन ॥ ३५ ॥ अतः जसको कारण परमार्थमय आत्मालाई धार-थरिका

अनर्थहरूलाई प्राप्त गर्ने जन्म-मरणरूपी संसार-चक्र प्राप्त हुँदै रहन्छ । त्यस अज्ञानको नाश त्यस बेला हुन्छ, जब आफ्ना गुरुमा भक्तिहोस् ॥३३॥ भगवान वासुदेवमा एकाग्रतापूर्वक राम्रो प्रकारले गरिएको भक्ति वैराग्य तथा ज्ञान उत्पन्न गर्दछ ॥३७॥ हे राजर्षे ! भगवान् अच्युतका कथाको आश्रित रहने भक्तियोग सधैं श्रद्धापूर्वक भगवानका कथाहरू सुन्नाले तथा स्वयं भन्नाले पुरुषलाई शीघ्र प्राप्त हुन्छ । ३८॥ हे राजन् ! जहाँ भगवानका गुणहरू भन्न र सुन्नमा व्यग्रचित्त, उदार एवं साधु स्वभाव भक्तजन रहन्छन्, त्यस भक्त मण्डलीमा महापुरुषका मुखबाट निस्कने श्रीमधुसूदन भगवानका चरित्ररूपी अमृतले सम्पूर्ण भरिएका अनेक नदीहरू लगिरहेका ... राजन् ! जो व्यक्ति अतृप्त भएर आफ्ना कानले त्यो अमृत अघाउँजी पिउँछन्, तिनलाई भोक-प्यास, भय-शोक र केही पनि बाधा पुऱ्याउन सक्तैनन ॥३९॥४०॥ हे राजन् ! जन्म-जन्मान्तरका संस्कारवश स्वभावतः प्राप्त भोक-पिपासादि विघ्नका वशीभूत यो जीवसमुदाय भगवान्को कथामृतसिन्धुबाट प्रेम नगरेर यता-उता भौंतारी रहन्छ ॥४१॥ धेरै भनेर के गर्ने ? प्रजापतिहरूका अधिपति साक्षात् ब्रह्माजी, भगवान्

सध्रीचीनेन वैराग्यं ज्ञानं च जनयिष्यति ॥ ३७ ॥ सोऽचिरादेव राजर्षे स्यादच्युतकथाश्रयः ॥ शृण्वतः श्रद्दधानस्य नित्यदा स्यादधीयतः ॥ ३८ ॥
यत्र भागवता राजन्साधवो विशदाशयाः ॥ भगवद्गुणानुकथनश्रवणव्यग्रचेतसः ॥ ३९ ॥ तस्मिन्महन्मुखरिता मधुभिच्चरित्रपीयूषशेषसरितः
परितः स्रवन्ति ॥ ता ये पिबन्त्यवितृषो नृप गाढकर्णैस्तान्न स्पृशन्त्यशनतृड्भयशोकमोहाः ॥ ४० ॥ एतैरुपद्रुतो नित्यं जीवलोकः स्वभावजैः ॥ न
करोति हरेर्नूनं कथामृतनिधौ रतिम् ॥ ४१ ॥ प्रजापतिः पतिः साक्षाद्भगवान्गिरिशो मनुः ॥ दक्षादयः प्रजाध्यक्षा नैष्ठिकाः सनकादयः ॥ ४२ ॥
मरीचिरत्र्यङ्गिरसौ पुलस्त्यः पुलहः क्रतुः ॥ भृगुर्वसिष्ठ इत्येते मदन्ता ब्रह्मवादिनः ॥ ४३ ॥ अद्यापि वाचस्पतयस्तपोविद्यासमाधिभिः ॥ पश्य-
न्तोऽपि न पश्यन्ति पश्यन्तं परमेश्वरम् ॥ ४४ ॥ शब्दब्रह्माणि दुष्पारे चरन्त उरुविस्तरे ॥ मन्त्रलिङ्गैर्व्यवच्छिन्नं भजन्तो न विदुः परम् ॥ ४५ ॥
यदाऽयमनुगृह्णाति भगवानात्मभावितः ॥ स जहाति मतिं लोके वेदे च परिनिष्ठिताम् ॥४६॥ तस्मात्कर्मसु बर्हिष्मन्नज्ञानादर्थकाशिषु ॥ माऽर्थदृष्टिं कृथाः
श्रोत्रस्पर्शिष्वस्पृष्टवस्तुषु ॥४७॥ स्वं लोकं न विदुस्ते वै यत्र देवो जनार्दनः ॥ आहुर्धूम्रधियो वेदं सकर्मकमतद्विदः ॥ ४८ ॥ आस्तीर्य दर्भैः प्रागग्रैः

शङ्कर, स्वायम्भुव मनु, दक्षादि प्रजापति, सनकादि नैष्ठिक ब्रह्मचारी, अत्रि, आङ्गिरा, पुलस्त्य, क्रतु, पुलह, भृगु तथा वसिष्ठादि देखि लिएर म नारदसम्म सबै वेदवादी मुनि विविध प्रकारका व्याख्याहरू गर्नमा कुशल भएर पनि तप, ज्ञान र समाधिद्वारा ती सर्वद्रष्टा परमात्मालाई देखेर पनि देख्नपाउँदैनन् ॥४२-४४॥ ती दुष्पार र अत्यन्त विस्तृत शब्दब्रह्म अर्थात् वेदका विचारशील अनेक महानुभाव पनि मन्त्रहरूमा वर्णन गरिएका इन्द्रादि देवताहरूको स्वरूपदेखि भिन्न-भिन्न देखिने परमात्माको यज्ञादिद्वारा पूजा गर्दागर्दै पनि उनको सत्य स्वरूप जान्न सक्तैनन् ॥४५॥ अन्तःकरणमा ध्यान गर्नाले जब भगवान यस जीवमा दया गर्दछन् अनि मात्र लौकिक र वैदिक कर्ममा आसक्त बुद्धि त्याग्न सक्दछ ॥४६॥ हे बर्हिष्मन् ! सुन्न केवल सुन्नमा नै प्रिय लाग्दछन्, तर वस्तुतः परमात्मालाई स्पर्शसम्म गर्न सक्तैनन् र अज्ञानवश परमार्थ रूपमा देखिन्छन्, ती कर्ममा तिमी कदापि वस्तु दृष्टि नराख, अर्थात् तिनलाई सत्य नठान ॥४७॥ मलीन बुद्धि भएका व्यक्ति वेदलाई कर्मपरक भन्दछन् तर ती त्यसको मर्म जान्दैनन्, ती वेदको तात्पर्यबाट अनुभवगम्य आफ्नो स्वरूपभूत आत्मालाई

…। न पाउन्नन्, जहाँ साक्षात् भगवान् विराजमान रहन्छन् ॥४८॥ जसको अग्रभाग पूर्वतिर रहन्छ, त्यस्तो कुशहरूले भूमण्डललाई ढाक्ने तथा धेरै पशुहरूको वध गर्नाले तँ ठूलो अभिमानी र उद्धत भएको छ । वास्तवमा तँलाई कर्म र ज्ञानको रहस्य थाहा छैन । राम्रो कर्म त त्यही हो—जसले भगवान् सन्तुष्ट होउन् र साँचो विद्या त्यही हो—जसले भगवान्मा मन रमाओस् ॥ ४९ ॥ ती नारायण समस्त देहधारीहरूका आत्मा, नियामक तथा स्वतन्त्र कारण हुन् । अतएव जसद्वारा सबैको कल्याण हुन्छ, तिनका ती चरण-कमल नै सबै मनुष्यका एकमात्र आश्रय हुन् ॥५०॥ 'जोसित कसैलाई पनि भय हुँदैन, सबैका प्रिय आत्मा उनै हुन्' यो जुन व्यक्तिले जान्दछ, उही ज्ञानी हो, उही गुरु हो र उही साक्षात् ईश्वर हो ॥५१॥ नारदजी भन्दछन्—हे पुरुषर्षभ ! यसरी मैले तिम्रो प्रश्नको उत्तर दिएँ । अब महापुरुषहरूले निश्चित् गरेको यौटा गुप्त साधन भन्दछु, त्यो

कार्त्स्न्येन क्षितिमण्डलम् ॥ स्तब्धो बृहद्वधान्मानी कर्म नावैति यत्परम् ॥ तत्कर्म हरितोषं यत्सा विद्या तन्मतिर्यया ॥४९॥ हरिर्देहभृतामात्मा स्वयं प्रकृतिरीश्वरः ॥ तत्पादमूलं शरणं यतः क्षेमो नृणामिह ॥५०॥ स वै प्रियतमश्चात्मा यतो न भयमण्वपि ॥ इति वेद स वै विद्वान्यो विद्वान्स गुरुर्हरिः ॥५१॥ नारद उवाच ॥ प्रश्न एवं हि सञ्छिन्नो भवतः पुरुषर्षभ ॥ अत्र मे वदतो गुह्यं निशामय सुनिश्चितम्॥५२॥ क्षुद्रचरं सुमनसां शरणे मिथित्वा रक्तं षडंघ्रिगणसामसु लुब्धकर्णम् ॥ अग्रे वृकानसुतृपोऽविगणय्य यान्तं पृष्ठे मृगं मृगय लुब्धकबाणभिन्नम् ॥५३॥ सुमनःसमधर्मणां स्त्रीणां शरण आश्रमे पुष्पमधुगन्धवत्क्षुद्रतमं काम्यकर्मविपाकजं कामसुखलवं जैह्वयौपस्थ्यादि विचिन्वन्तं मिथुनीभूय तदभिनिवेशितमनसं षडंघ्रिगणसामगीतवदतिमनोहरवनितादिजनालापेष्वतितरामतिप्रलोभितकर्णमग्रे वृकयूथवदात्मन आयुर्हरतोऽहोरात्रान्तान्कालववविशेषानविगणय्य गृहेषु विहरन्तं पृष्ठत एव

तिमी ध्यानपूर्वक सुन ॥ ५२ ॥ हे राजन् ! जो थोरै भोजन गर्दछ, वाटिकामा आफ्नी स्त्रीसित समागम गर्दछ, जसका कान भ्रमराको सुमधुर गुञ्जारमा आसक्त रहन्छन्, जो आफ्नो अगाडि उपस्थित भोको बाघलाई केही नगनेर हिंडिरहेछ र आफ्नो पिठिउँमा व्याधाको बाणको घाउ छ, तिमी त्यस मृगलाई खोज ॥ ५३ ॥ यस गूढ उपदेशको तात्पर्य बुझाउँदै भन्दछन्—पुष्प झैं धर्म भएकी स्त्रीहरूका आश्रय अर्थात् गृहस्थाश्रममा रहेर जो फूलको मधु तथा गन्धलाई खोजे झैं सकाम कर्महरूको *अभ्यास जनित परिणामबाट प्राप्त जिह्वा तथा उपस्थेन्द्रियसित सम्बन्ध राख्ने तुच्छ विषय-सुख खोज्दै रहन्छ, स्त्रीहरूको सम्पर्कमा रहँदा बस्ता उनमा आसक्त चित्त भएर भ्रमरको गान जस्तै स्त्री-पुत्रादिको मधुर भाषणमा जसका कान आसक्त रहन्छन्, जो आफ्नो अगाडि गइरहेको हिंसक जन्तुको समूह झैं आयु हर्ने दिन-रात आदि कालका अवयवलाई केही नठानेर गृहस्थीको सुखमा नै मग्न

* उदाहरण ( अभ्यास )—गोरी विधवा स्त्री भैंसी पालेर जीविका चलाउँथी । केही दिनपछि भैंसीले पाडी पाई । त्यस स्त्रीलाई पाडीमा धेरै अनुराग भयो । अतः त्यो उसलाई काखमा लिएर खेलाउने गर्दथी । बिस्तार बिस्तार पाडी ठूली भई, तैपनि त्यसको दृष्टिमा त्यो सानै देखिन्थी, किनकि जन्मँदेखि त्यसलाई बोक्ने बानी परिसकेको थियो । जति-जति समय व्यतीत हुँदै गयो, उती-उती पाडीको भार बढ्दै गयो र त्यस स्त्रीको उसलाई बोक्ने अभ्यास पनि बढ्दै गयो । अतः उसलाई त्यसको भार थाहै हुँदैनथ्यो । मानिसहरू यो देखेर चकित थिए कि 'यस स्त्रीको शरीरमा कति धेरै बल छ—यो डेढ वर्षको पाडीलाई उचाल्न सक्छे !' एक दिन छिमेकीहरूले त्यो पाडीभन्दा धेरै कम बोटा पोको उचाल्न भने, तब स्त्रीले भनी—'यति ठूलो भारी म उचाल्न सक्तिन !' उनीहरूले भने—'त्यसो भए तिमी यस पाडीलाई कसरी उचाल्दछ्यौ ?' उसले भनी—'पाडी त आजै जन्मेकी हो जस्तो लाग्दछ ।' सत्य हो, अभ्यासले कठिन काम पनि सरल हुन्छ ।

रहन्छ–जसको पछि लागेका कालरूपी व्याधाले उसलाई आफ्नो बाणले घाइते पारिदिएको छ। हे राजन् ! यस्तो भिन्न-हृदय तिमी मृगरूपी आफूविर हेर ॥५४॥ तिमी आफूलाई मृगको जस्तै स्थितिमा देखेर आफ्नो हृदय भित्र चित्तलाई रोक र कर्णादि इन्द्रियहरूका वृत्तिलाई मनमा स्थापित गर। जहाँ विषयी पुरुषको चर्चा गरिन्छ, त्यस्तो स्थान त्यागेर परमहंसका आश्रयस्वरूप भगवान्लाई प्रसन्न पार र बिस्तार-बिस्तार संसारका सबै दुःखबाट उपरत होऊ ॥५५॥ राजा बर्हिष्मान् भन्दछन्–हे ब्रह्मन् ! हजुरले मलाई आत्मविचार। जुन उपदेश दिनुभयो, त्यो मैले सुनें। मेरा कर्मकाण्डी गुरुजन अवश्य नै यस तत्त्वलाई जान्दैनन्। यदि ती यसलाई जान्ने भए, मलाई यही उपदेश किन दिँदैनथे ? ॥५६॥ हे विप्रवर ! पुरोहितहरूले मेरो हृदयमा जुन वेदको कर्मपरक तथा ज्ञानपरक हुने विषयमा धेरै ठूलो सन्देह उत्पन्न गरिदिएका थिए, त्यो आज हजुरले नष्ट गरिदिनुभयो। यस विषयसम्म इन्द्रिय पुग्न सक्तैनन्। अतएव ठूला-ठूला ऋषि पनि मोहमा पर्दछन् ॥५७॥ 'पुरुष जस द्वारा कर्म गर्दछ, त्यो स्थूल देह यहीं छाडेर परलोकमा

परोक्षमनुप्रवृत्तो लुब्धकः कृतान्तोऽन्तःशरेण यमिह पराविध्यति तमिममात्मानमहो राजन्भिन्नहृदयं द्रष्टुमर्हसीति॥५४॥ स त्वं विचक्ष्व मृगचेष्टितमात्म-
नोऽन्तश्चित्तं नियच्छ हृदि कर्णधुनीं च चित्ते ॥ जह्यङ्गनाश्रममसत्तमयूथगाथं प्रीणीहि हंसशरणं विरम क्रमेण ॥ ५५ ॥ राजोवाच ॥ श्रुतमन्वीक्षितं
ब्रह्मन्भगवान्यदभाषत ॥ नैतज्जानन्त्युपाध्यायाः किं न ब्रूयुर्विदुर्यदि ॥५६॥ संशयोऽत्र तु मे विप्र संछिन्नस्तत्कृतो महान् ॥ ऋषयोऽपि हि मुह्यन्ति यत्र
नेन्द्रियवृत्तयः ॥५७॥ कर्माण्यारभते येन पुमानिह विहाय तम् ॥ अमुत्रान्येन देहेन जुष्टानि स यदश्नुते ॥ ५८ ॥ इति वेदविदां वादः श्रूयते तत्र तत्र
ह ॥ कर्म यत्क्रियते प्रोक्तं परोक्षं न प्रकाशते ॥५९॥ नारद उवाच ॥ येनैवारभते कर्म तेनैवामुत्र तत्पुमान् ॥ भुंक्ते ह्यव्यवधानेन लिङ्गेन मनसा स्वयम्
॥६०॥ शयानमिममुत्सृज्य श्वसन्तं पुरुषो यथा ॥ कर्मात्मन्याहितं भुंक्ते तादृशेनेतरेण वा ॥ ६१ ॥ ममैतं मनसा यद्यदसावहमिति ब्रुवन् ॥ गृह्णीया-
त्तत्पुमान्राद्धं कर्म येन पुनर्भवः ॥ ६२ ॥ यथाऽनुमीयते चित्तमुभयैरिन्द्रियेहितैः ॥ एवं प्राग्देहजं कर्म लक्ष्यते चित्तवृत्तिभिः ॥ ६३ ॥ नानुभूतं क्व
चानेन देहेनादृष्टमश्रुतम् ॥ कदाचिदुपलभ्येत यद्रूपं यादृगात्मनि ॥ ६४ ॥ तेनास्य तादृशं राजँल्लिङ्गिनो देहसंभवम् ॥ श्रद्धत्स्वाननुभूतोऽर्थो न मनः

कर्मवश प्राप्त अन्य शरीरले यस लोकमा गरेका पाप-पुण्यादिका फल भोग्दछ'–यो जुन वेदवादिहरूको वाद जता-ततै सुनिन्छ–त्यसको संगति कसरी बसाल्ने ? किनकि जुन कर्म गरिन्छ, त्यो एक क्षणमै नष्ट भएर जान्छ। त्यो फेरि लोकान्तरमा प्रकट हुन पाउन्न ॥५८॥५९॥ नारदजी भन्दछन्–हे राजन् ! जुन मनरूपी लिंगदेहले मनुष्य यस लोकमा कर्म गर्दछ, उही शरीर द्वारा परलोकमा स्वयं अव्यवहित अर्थात् परोक्ष रूपबाट फल भोग्दछ ॥६०॥ जस्तै निदाएको पुरुष स्वप्नावस्थामा आफ्नो जीवित शरीरको अभिमान त्यागिदिन्छ र यही शरीरले अथवा पशु आदि अन्य शरीरहरूले मनमा संस्काररूपले स्थित कर्महरू भोग्दछ, त्यसै गरी ऊ परलोकमा पनि आफ्नो कर्म फल भोग्दछ ॥६१॥ जब मन द्वारा जीवलाई 'म मेरो' तथा देहादिलाई 'यो म हुँ' यस्तो मान्दछ, त्यसको निमित्त पाप-पुण्यरूपी कर्मलाई पनि ऊ स्वीकार गरेर तिनै कर्मले फेरि जन्म लिन्छ ॥ ६२ ॥ जस्तै ज्ञानेन्द्रियहरूका चेष्टाले चित्तको अनुमान हुन्छ, त्यसै गरी चित्तको भिन्न-भिन्न वृत्तिहरू द्वारा पूर्वजन्मका कर्महरूको अनुमान गरिन्छ ॥६३॥ कहिलेकाहीं यस्तो पनि हुन्छ

कि जुन वस्तुको यस शरीरले अनुभव गरेन र जसलाई कहिल्यै देखेन वा सुनेकै थिएन, त्यसको पनि स्वप्नमा वास्तविक अनुभव हुन्छ ॥६४॥ अतएव हे राजन् ! तिमी यो निश्चित जान कि यस लिङ्गदेहको अभिमानी जीवलाई उसको अनुभव पूर्वशरीरमै अवश्य भएको रहन्छ । यही कारण हो–पहिले जुन वस्तुको अनुभव कहिल्यै भएको रहन्न, त्यसको वासना कहिल्यै मनमा जागृत हुन पाउन्न ॥६५॥ हे राजन् ! मनुष्यका पूर्वजन्मका रूप तथा भविष्यमा हुने तथा नहुने रूपहरूको उसको मन नै उसलाई बताइ दिन्छ ॥६६॥ स्वप्नमा व हिले-कहिले यस्ता कुरा पनि भएका देखिन्छन्–जो पहिले कहिल्यै देखे-सुनेको हुँदैन । देश, काल तथा कर्मका आश्रित रहने ती कुराहरूको पनि निद्रादोष र मनको पूर्ववासनाहरूका कारण नै अनुभव हुने गर्दछन् ॥ ६७ ॥ इन्द्रियहरुद्वारा अनुभव हुने सबै पदार्थ विस्तार-विस्तार अन्तःकरणको समक्ष आउँदै-जाँदै रहन्छ, किनकि सबै मनुष्यहरूसित विविध जन्ममा विविध संस्कारहरूको अनुभवी मन अवश्य रहन्छ ॥६८॥ जस्तै कहिल्यै पनि नदेखिने राहु ग्रहणका अवसरमा चन्द्रमामा देखिन्छ, त्यस्तै नै भगवान्‌का समीप बस्ने भक्तजन हरूको सत्त्वगुणमय अन्तःकरणमा पनि यस जगत्‌को अस्तित्व देखिन्छ ॥६९॥ हे राजन् ! अनादि कालदेखि बनेको मन, बुद्धि, इन्द्रिय र शब्दादि विषय-

स्प्रष्टुमर्हति ॥ ६५ ॥ मन एव मनुष्यस्य पूर्वरूपाणि शंसति ॥ भविष्यतश्च भद्रं ते तथैव न भविष्यतः ॥ ६६ ॥ अदृष्टमश्रुतं चात्र क्वचिन्मनसि दृश्यते ॥ यथा तथाऽनुमन्तव्यं देशकालक्रियाश्रयम् ॥ ६७ ॥ सर्वे क्रमानुरोधेन मनसीन्द्रियगोचराः ॥ आयान्ति वर्गशो यान्ति सर्वे समनसो जनाः ॥ ६८ ॥ सत्त्वैकनिष्ठे मनसि भगवत्पार्श्ववर्तिनि ॥ तमश्चन्द्रमसीवेद परज्यावभासते ॥ ६९ ॥ नाहंममेति भावोऽयं पुरुषे व्यवधीयते ॥ यावद्बुद्धिमनोऽक्षार्थगुणव्यूहो ह्यनादिमान् ॥ ७० ॥ सुप्तिमूर्च्छोपतापेषु प्राणायनविघाततः ॥ नेहतेऽहमिति ज्ञानं मृत्युप्रज्वारयोरपि ॥ ७१ ॥ गर्भे बाल्येऽप्यपौष्कल्यादेकादशविधं तदा ॥ लिङ्गं न दृश्यते यूनः कुह्वां चन्द्रमसो यथा ॥ ७२ ॥ अर्थे ह्यविद्यमानेऽपि संसृतिर्न निवर्तते ॥ ध्यायतो विषयानस्य स्वप्नेऽनर्थागमो यथा ॥ ७३ ॥ एवं पञ्चविधं लिङ्गं त्रिवृत्षोडशविस्तृतम् ॥ एष चेतनया युक्तो जीव इत्यभिधीयते ॥ ७४ ॥ अनेन पुरुषो देहानुपादत्ते विमुञ्चति ॥ हर्षं शोकं भयं दुःखं सुखं चानेन विन्दति ॥ ७५ ॥ यथा तृणजलूकेयं नोपयात्युपयाति च ॥ न त्यजेन्म्रि–

रूपी गुणका समूह स्वरूप लिङ्गदेह अवसम्म रहन्छ, तबसम्म मनुष्यमा 'म र मेरो' को भाव नाश हुँदैन ॥७०॥ सुषुप्ति, मूर्च्छा, शोक, भयंकर कष्ट, मृत्यु तथा ज्वर आदिको अवसरमा अहङ्कारको अभिव्यक्ति हुँदैन, किन्तु त्यो सबदा सूक्ष्म रूपले विद्यमान त रहिरहन्छ ॥७१॥ जस्तै औंसीमा चन्द्रमा भएर पनि देखिँदैनन्, त्यस्तै नै युवावस्थामा स्पष्ट प्रतीयमान एघार इन्द्रियहरूले युक्त यो लिङ्गदेह देखिन्दैन र गर्भावस्था तथा बाल्यकालमा इन्द्रियहरूको असामर्थ्यवश देखिँदैन ॥७२॥ जस्तै स्वप्नमा कुनै वस्तुको वास्तविक अस्तित्व नभएर पनि नाबउँझे सम्म अनर्थको निवृत्ति हुन पाउन्न त्यस्तै नै विषयको चिन्तन गर्ने पुरुषको जन्म-मरणरूपी संसार-चक्र आत्मज्ञान बिना निवृत्त हुँदैन ॥ ७३ ॥ यस प्रकार सोह तत्त्वको रूपमा विस्तार गरिएको यो पाञ्चभौतिक तथा त्रिगुणमय लिङ्ग-शरीर नै चेतना-शक्तिले युक्त भएर 'जीव' कहिन्छ ॥ ७४ ॥ यसै साथ पुरुष भिन्न-भिन्न शरीरहरू धारण गर्दै तथा त्याग्दै गर्दछ । यसैले त्यो हर्ष, शोक, भय, दुःख र सुख आदिको अनुभव गर्ने गर्दछ ॥७५॥ जस्तै हिँहिँडेको जुका जबसम्म अर्को घाँसमा खुट्टा

पुग्याउन्न, तवसम्म आफ्नो आश्रयभूत पछिल्लो तृण त्याग्दैन । अर्को तृणमा खुट्टा राम्ररी अड्याएपछि मात्र पछिल्लो तृण त्यागेर अघिबढ्दछ । त्यस्तै मरणकाल आएपछि पनि जब-सम्म मनुष्यलाई प्रारब्ध कर्मको नाश भएर अर्को शरीर प्राप्त हुन्न, तवसम्म त्यो आफ्नो पूर्वदेहको अभिमान छाड्न सक्तैन । हे राजन् ! सत्य कुरा के हो भने मन नै मनुष्यलाई जन्म-मरणादि प्राप्त गराउँछ ॥ ७६ ॥ ७७ ॥ जीव इन्द्रियका भोज्य भोगको चिन्तन गर्दै फेरि-फेरि कर्म गर्दछ र ती कर्महरू भइरहनाले गर्दा अनात्म वस्तुमा लीन त्यस आत्मा-भिमानशील पुरुषलाई अविद्यारूपी कर्मका बन्धनमा बाँधिनै पर्दछ ॥७८॥ अतः कर्म बन्धनबाट मुक्त हुनका लागि समस्त विश्वलाई भगवद्-रूप ठान्दै तिमी तन-मनले ती भगवान्को भजन गर, जसद्वारा यस जगत्को उत्पत्ति, स्थिति तथा लय हुन्छ ॥ ७९ ॥ मैत्रेयजी भन्दछन्—हे विदुरजी ! यसरी भक्तप्रवर नारदजीले राजा प्राचीनबर्हिलाई जीव तथा ईश्वरको स्वरूपको दिग्दर्शन गराए र उनीसित अनुमति मागेर सिद्ध लोकमा गए ॥ ८० ॥ राजर्षि प्राचीनबर्हि पनि आफ्ना छोराहरूलाई राज्य सुम्पेर तपस्या गर्न कपिलाश्रममा जान

यमाणोऽपि प्राग्देहाभिमतिं जनः ॥७६॥ यावदन्यं न विन्देत व्यवधानेन कर्मणाम् ॥ मन एव मनुष्येन्द्र भूतानां भवभावनम् ॥ ७७ ॥ यदाऽक्षैश्चरितान्ध्यायन्कर्माण्याचिनुतेऽसकृत् ॥ सति कर्मण्यविद्यायां बन्धः कर्मण्यनात्मनः ॥ ७८ ॥ अतस्तदपवादार्थं भज सर्वात्मना हरिम् ॥ पश्यंस्तदात्मकं विश्वं स्थित्युत्पत्त्यप्यया यतः ॥ ७९ ॥ मैत्रेय उवाच ॥ भागवतमुख्यो भगवान्नारदो हंसयोर्गतिम् ॥ प्रदर्श्य ह्यमुमामन्त्र्य सिद्धलोकं ततोऽगमत् ॥ ८० ॥ प्राचीनबर्ही राजर्षिः प्रजासर्गाभिरक्षणे ॥ आदिश्य पुत्रानगमत्तपसे कपिलाश्रमम् ॥ ८१ ॥ तत्रैकाग्रमना वीरो गोविन्दचरणाम्बुजम् ॥ विमुक्तसङ्गोऽनुभजन्भक्त्या तत्साम्यतामगात् ॥ ८२ ॥ एतदध्यात्मपारोक्ष्यं गीतं देवर्षिणाऽनघ ॥ यः श्रावयेद्यः शृणुयात्स लिङ्गेन विमुच्यते ॥ ८३ ॥ एतन्मुकुन्दयशसा भुवनं पुनानं देवर्षिवर्यमुखनिःसृतमात्मशौचम् ॥ यः कीर्त्यमानमधिगच्छति पारमेष्ठ्यं नास्मिन्भवे भ्रमति मुक्तसमस्तबन्धः ॥ ८४ ॥ अध्यात्मपारोक्ष्यमिदं मयाऽधिगतमद्भुतम् ॥ एवं स्त्रियाऽऽश्रमः पुंसश्छिन्नोऽमुत्र च संशयः ॥८५॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे विदुरमैत्रेयसम्वादे प्राचीनबर्हिर्नारदसम्वादो नाम एकोनत्रिंशोऽध्यायः ॥ २९ ॥ विदुर उवाच ॥ ये त्वयाऽभिहिता

हिँडे ॥८१॥ त्यहाँ ती वीरश्रेष्ठले सर्व विषयको आसक्ति त्यागिदिए र एकाग्र मनले भगवान्का चरण-कमलको भक्तिपूर्वक चिन्तन गर्दै तदाकार भए ॥८२॥ हे अनघ विदुरजी ! देवर्षि नारद द्वारा परोक्षरूपले कहिएको यस आत्मज्ञानलाई जो सुन्छन् या सुनाउँछ, त्यो आफ्नो जन्म-मरणको कारणरूपी लिङ्गशरीरबाट शीघ्र मुक्ति पाउँछ ॥८३॥ भगवान् मुकुन्दको यशले तीनै लोक पवित्र पार्ने भएका देवर्षि नारदको मुखबाट निस्केको यस परम पवित्र आत्मज्ञानको जो कीर्तन गर्दछ, त्यो पुरुष परमपद प्राप्त गरेर समस्त बन्धनबाट मुक्त हुन्छ । त्यसले फेरि कहिल्यै यस संसार चक्रमा भौंतारिनु पर्दैन ॥८४॥ हे विदुरजी ! गृहस्थाश्रमी पुरञ्जनको रूपकले परोक्षरूपमा भनिएको यस आत्मज्ञानलाई मैले गुरुजनबाट पाएको थिएँ, त्यो तिमीलाई सुनाइदिएँ । यसलाई बुझेपछि मनुष्य देहाभिमानबाट छुट्दछ र उसको 'मनुष्य परलोकमा कर्मको फल कसरी भोग्दछ' भो सन्देह निवृत्त हुन्छ ॥८५॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां एकोनत्रिंशोऽध्यायः ॥२९॥ ( प्रचेतालाई विष्णु भगवान्को वरदान )

विदुर भन्दछन्—हे ब्रह्मन् ! हजुरले राजा प्राचीनबर्हिका जुन छोराहरूको वृत्तान्त भन्नुभयो, तिनले श्रीहरिको रुद्रगीत द्वारास्तुतिगरेर कुन सिद्धि प्राप्त गरेका थिए ? ।।१।।हे बृहस्पतिका शिष्य मैत्रेयजी ! सहसा शंकर भगवान्लाई पाएर उनको कृपाले मोक्षाधिपति परमप्रिय विष्णु भगवान्को ध्यान गर्न भएका प्रचेताहरूले मुक्ति त अवश्य पाए हुनन् किन्तु त्यो भन्दा पहिले उनले इहलोक र परलोकमा के पाए ? त्यो भन्नुहवस् ।।२।। मैत्रेयजी भन्छन्–हे विदुर ! ती प्रचेता पिताको आज्ञा पालन गर्दै समुद्रमा बसेर जप-यज्ञ तथा तपस्याद्वारा भगवान्को आराधना गर्नलागे ।।३।। दश हजार वर्ष वितेपछि सनातन पुराण-पुरुष आफ्नो दिव्य कान्तिले तिनको सन्ताप हरण गर्दै उनका सामु प्रकट भए ।। ४ ।। गरुडजीको काँधमा बसेका भगवान् विष्णु सुमेरु पर्वतको टाकुरामा श्याम मेघ उलं झैं देखिनु हुन्थ्यो। उनको शरीरको पीताम्बर र घाँटीको कौस्तुभमणि भिन्नै आफ्नो शोभा छरिरहेथ्यो थियो र उनी आफ्नो दिव्य कान्तिले दशै दिशालाई अन्धकार विहीन तुल्याइरहेका थिए। उनका कपोल अतिशय देदीप्यमान थिए र घाँटी सुवर्णमय भूषणले विभूषित थियो

ब्रह्मन्सुताः प्राचीनबर्हिषः ॥ ते रुद्रगीतेन हरिं सिद्धिमापुः प्रतोष्य काम् ॥ १ ॥ किं बार्हस्पत्येह परत्रवाऽथ कैवल्यनाथप्रियपार्श्ववर्तिनः ॥ आसाद्य देवं गिरिशं यदृच्छया प्रापुः परं नूनमथ प्रचेतसः ॥ २ ॥ मैत्रेय उवाच ॥ प्रचेतसोऽन्तरुदधौ पितुरादेशकारिणः ॥ जपयज्ञेन तपसा पुरञ्जनमतोषयन् ॥ ३ ॥ दशवर्षसहस्रान्ते पुरुषस्तु सनातनः ॥ तेषामाविरभूत्कृच्छ्रं शान्तेन शमयन् रुचा ॥४॥ सुपर्णस्कन्धमारूढो मेरुशृङ्गमिवाम्बुदः ॥ पीतवासा मणिग्रीवः कुर्वन्वितिमिरा दिशः ॥५॥ काशिष्णुना कनकवर्णविभूषणेन भ्राजत्कपोलवदनो विलसत्किरीटः ॥ अष्टायुधैरनुचरैर्मुनिभिः सुरेन्द्रैरासेवितो गरुडकिन्नरगीतकीर्तिः ॥ ६ ॥ पीनायताष्टभुजमण्डलमध्यलक्ष्म्या स्पर्धच्छ्रिया परिवृतो वनमालयाद्यः ॥ बर्हिष्मतः पुरुष आह सुतान्प्रपन्नान्पर्जन्यनादरुतया सघृणावलोकः ॥ ७ ॥ श्रीभगवानुवाच ॥ वरं वृणीध्वं भद्रं वो यूयं मे नृपनन्दनाः ॥ सौहार्देनापृथग्धर्मास्तुष्टोऽहं सौहृदेन वः ॥८॥ योऽनुस्मरति सन्ध्यायां युष्माननुदिनं नरः ॥ तस्य भ्रातृष्वात्मसाम्यं तथा भूतेषु सौहृदम् ॥९॥ ये तु मां रुद्रगीतेन सायं प्रातः समाहिताः ॥ स्तुवन्त्यहं कामवरान्दास्ये प्रज्ञां च शोभनाम् ॥१०॥ यद्यूयं पितुरादेशमग्रहीष्ट मुदान्विताः ॥ अथो व उशती कीर्तिर्लोकाननुभविष्यति ॥११॥ भविता विश्रुतः

शिरमा झलमलाउँदो मुकुट शोभायमान थियो। ती आफ्ना आठैं भुजामा आठ थरिका आयुध धारण गरेका थिए। सबै पार्षद, मुनिजन र मुख्य-मुख्य देवता सेवामा उपस्थित सबै किन्नर श्रेष्ठ उनको सुयश गान गर्दै थिए र गरुडजी सेवामा संलग्न थिए ।।६।। हे विदुरजी ! अनि आफ्ना स्थूल र विशाल भुजाका माझमा लक्ष्मीको कान्तिसित स्पर्धा गर्ने भएको वनमालाले विभूषित आदिपुरुष भगवान् विष्णु बर्हिष्मान्का पुत्र ती शरणागत प्रचेताहरूतिर दयापूर्ण दृष्टिले हेर्दै मेघ झैं गम्भीर वाणीले बोले—।।७।। श्रीभगवान्ले भन्नुभयो— हे राजपुत्र हो ! तिम्रो कल्याण होस्। तिमीहरूमा परस्पर ठूलो प्रेम छ र तिमी सबै मेरो उपासनारूपी यौटै कर्ममा लागिरहन्छौ। म तिम्रो सहृदयताले तिमी माथि साह्रै प्रसन्न छु। तिमी मसित इच्छित वर माग ।।८।। जो पुरुष नित्य सायंकालमा तिम्रो स्मरण गर्ला, त्यसको आफ्ना भाइहरूमा स्नेह र सबै प्राणिमात्रमा प्रेमभाव प्राप्त होला ।।९।। जो व्यक्ति प्रातःकाल र सायंकालमा एकाग्र मनले रुद्रगीत द्वारा मेरो स्तुति गर्नेछन्, तिनलाई म इच्छित तथा परम पवित्र वरदान दिनेछु ।। १० ।। तिमीले प्रसन्नतासाथ आफ्ना पिताको

आज्ञा मानेर आयौं । अब यस लोकमा तिम्रो उत्तम कीर्ति फैलिने छ ॥११॥ पछि तिम्रो यौटा यस्तो यशस्वी पुत्र हुनेछ, जो गुणमा ब्रह्माजी भन्दा कुनै प्रकार पनि घटी नहोला र त्यो आफ्ना सन्ततिले तीनै लोक भरिदिनेछ ॥१२॥ हे राजकुमार हो ! महर्षि कुण्डुकी पत्नी प्रम्लोचा अप्सराबाट उत्पन्न यौटी कमलनयनी कन्या थिई । जब ती अप्सरा कन्यालाई छाडेर स्वर्ग गएपछि उसलाई वृक्षहरूले स्वीकार गरे ॥१३॥ जब ती कन्या अतिशय भोकले रुन लागिन्, तब औषधिहरूका राजा चन्द्रमाले दया गरी त्यसको मुखमा आफ्नो अमृतवर्षिणी तर्जनी औंला राखिदिए ॥१४॥ मेरो अनुसरण गर्न तिम्रा पिताले तिमीलाई सन्तान उत्पन्न गर्न आज्ञा दिए । अतः छिटो ओहा ती परम सुन्दरी कन्यासित विवाह गर ॥१५ ॥ तिमी सबैजना यौटै धर्ममा लागेका छौ र तिमीहरूको स्वभाव पनि एकैनासे छ । यस निमित्त तिमीहरू जस्तै धर्म तथा स्वभाव भएकी ती सुन्दरी कन्या तिमीहरूकी पत्नी हुनेछन्, किनकि उनको चित्त तिमीहरूमै संलग्न छ ॥१६॥ तिमीहरू मेरो कृपाले हजारौं दिव्य वर्षसम्म पृथ्वीका दिव्य भोग भोग्ने छौ र तिम्रो तेज कहिल्यै क्षीण हुनेछैन ॥१७॥ अन्त्यमा मेरी अवि-

पुत्रोऽनवमो ब्रह्मणो गुणैः ॥ य एतामात्मवीर्येण त्रिलोकीं पूरयिष्यति ॥ १२ ॥ कण्डोः प्रम्लोचया लब्धा कन्या कमललोचना ॥ तां चापविद्धां जगृहुर्भूरुहा नृपनन्दनाः ॥ १३ ॥ क्षुत्क्षामाया मुखे राजा सोमः पीयूषवर्षिणीम् ॥ देशिनीं रोदमानाया निदधे स दयान्वितः ॥ १४ ॥ प्रजा-विसर्ग आदिष्टः पित्रा मामनुवर्तता ॥ तत्र कन्यां वरारोहां तामुद्वहत मा चिरम् ॥ १५ ॥ अपृथग्धर्मशीलानां सर्वेषां वः सुमध्यमा ॥ अपृथग्ध-र्मशीलेयं भूयात्पत्न्यर्पिताशया ॥ १६ ॥ दिव्यवर्षसहस्राणां सहस्रमहतौजसः ॥ भौमान्भोक्ष्यथ भोगान्वै दिव्यांश्चानुग्रहान्मम ॥ १७ ॥ अथ मय्यनपायिन्या भक्त्या पक्वगुणाशयाः ॥ उपयास्थ मद्धाम निर्विद्य निरयादतः ॥ १८ ॥ गृहेष्वाविशतां चापि पुंसां कुशलकर्मणाम् ॥ मद्वार्तायातयामानां न बन्धाय गृहा मताः ॥ १९ ॥ नव्यवद्धृदये यज्ज्ञो ब्रह्मैतद्ब्रह्मवादिभिः ॥ न मुह्यन्ति न शोचन्ति न हृष्यन्ति यतो गताः ॥ २० ॥ मैत्रेय उवाच ॥ एवं ब्रुवाणं पुरुषार्थभाजनं जनार्दनं प्राञ्जलयः प्रचेतसः ॥ तद्दर्शनध्वस्ततमोरजोमला गिरा गृणन्गद्गदया सुहृ-त्तमम् ॥२१॥ प्रचेतस ऊचुः ॥ नमो नमः क्लेशविनाशनाय निरूपितोदारगुणाह्वयाय ॥ मनोवचोवेगपुरोजवाय सर्वाक्षमार्गैरगताध्वने नमः ॥२२॥

नाशिनी भक्तिले अन्तःकरणका सबै वासनाहरू नष्ट भइसकेपछि तिमी इहलोक तथा परलोकका नरक समान भोगबाट उपरत भएर मेरै परमधाममा आनेछौ ॥ १८ ॥ किनकि जो पुरुष मलाई अर्पण गर्दै कर्म गर्दछन् र जसको समय मेरो नै कथा वार्तामा बित्तछ, ती यदि गृहस्थाश्रममै रहे पनि घर तिनको बन्धनको कारण बन्न सक्तैन ॥ १९ ॥ म ज्ञानस्वरूप परमात्मा तिनको हृदयमा नित्य नयाँ-नयाँ देखिन्छु । मलाई नै ब्रह्मवादी जन 'ब्रह्मज्ञानी जन 'ब्रह्म' भन्दछन् । मलाई पाएर प्राणी शोक, र हर्षमा प्राप्त हुँदैनन् ॥ २० ॥ मैत्रेयजी भन्दछन्—हे विदुर ! समस्त पुरुषार्थका आश्रय, अविनाशक तथा परम सुहृद् श्रीहरिले यति भनेपछि प्रभुको दर्शनले जसका रज र तमरूपी मानसिक विकार नष्ट भइसकेका थिए, ती प्रचेताहरूले हात जोरेर गद्गद् वाणीमा भने ॥२१॥ प्रचेता भन्दछन्—हे प्रभो ! हजुर आफ्ना भक्तका क्लेश हरण गर्नुहुन्छ । हामी हजुरलाई नमस्कार गर्दछौं । हजुरका उदार गुण नामलाई वेदले मोक्ष प्राप्तिको साधन भनेका छन् । हजुरको वेग र पाणी भन्दा पनि बढी छ र हजुरको गति सबै इन्द्रियहरूको गतिभन्दा बढी हुन्छ । यस्ता हजुर परमप्रभुलाई प्रणाम छ

॥२२॥ आफ्नो स्वरूपमा स्थित हुनाले गर्दा हजुर नित्य शुद्ध तथा शान्त रहनु हुन्छ, तर हाम्रो मनरूपी निमित्तको कारण यो सारा द्वैतभाव हजुरमा व्यर्थ झैं भासमान भइरहेछ । वस्तुतः यस जगत्को उत्पत्ति र लयको निम्ति हजुर आफ्नी मायाका गुणहरू स्वीकार गरेर ब्रह्मा, विष्णु र शिवको रूप धारण गर्नुहुन्छ, यस्ता हजुरलाई प्रणाम छ ॥ २३ ॥ हजुर विशुद्ध सत्त्वस्वरूप हुनुहुन्छ र हजुरको ज्ञान संसार-बन्धनलाई साटिदिन्छ । सम्पूर्ण पार्षदका अधिपति तथा वसुदेवनन्दन हजुर भगवान् कृष्णलाई हाम्रो प्रणाम छ ॥ २४ ॥ हे कमल-लोचन ! जसको नाभिबाट यो विश्व प्रकट भएको छ, जो आफ्नो घाँटीमा कमल-कुसुमका माला धारण गरिराख्छन् र जसका चरण कमल समान छन्, त्यस्ता हजुरलाई नमस्कार छ ॥२५॥ जो कमल-पुष्पको पराग झैं निर्मल पीताम्बर धारण गरी राख्छन् र सबै प्राणीका आश्रयस्थल छन्, ती सर्वसाक्षी परमेश्वरलाई हामी प्रणाम गर्दछौं ॥ २६ ॥ अहो ! हामी जस्ता त्रितापले ग्रस्त प्राणीहरूको कष्ट निवारण गर्नका लागि नै हजुरले यो सर्वक्लेशनाशक स्वरूप धारण गर्नु भएको हो । यो भन्दा ठूलो हामीमाथि हजुरको अरु के कृपा होला ? ॥२७॥ हे अमङ्गनाशक ! दीनवत्सल ! समर्थ पुरुषको त केवल यति नै कर्तव्य रहन्छ—ती वेला वेलामा दीनजनलाई 'यी आफ्ना हुन्' यस्तो विचारेर स्मरणसम्म गरिदिने गरुन् ॥२८॥

शुद्धाय शान्ताय नमः स्वनिष्ठया मनस्यपार्थं विलसद्द्वयाय ॥ नमो जगत्स्थानलयोदयेषु गृहीतमायागुणविग्रहाय ॥ २३ ॥ नमो विशुद्धसत्त्वाय हरये हरिमेधसे ॥ वासुदेवाय कृष्णाय प्रभवे सर्वसात्वताम् ॥ २४ ॥ नमः कमलनाभाय नमः कमलमालिने ॥ नमः कमलपादाय नमस्ते कमलेक्षण ॥ २५ ॥ नमः कमलकिञ्जल्कपिशङ्गामलवाससे ॥ सर्वभूतनिवासाय नमोऽयुङ्क्ष्महि साक्षिणे ॥ २६ ॥ रूपं भगवतां त्वेतदशेषक्लेशसंक्षयम् ॥ आविष्कृतं नः क्लिष्टानां किमन्यदनुकम्पितम् ॥ २७ ॥ एतावत्त्वं हि विभुभिर्भाव्यं दीनेषु वत्सलैः ॥ यदनुस्मर्यते काले स्वबुद्ध्याऽभद्ररन्धन ॥ २८ ॥ येनोपशान्तिर्भूतानां क्षुल्लकानामपीहताम् ॥ अन्तर्हितोऽन्तर्हृदये कस्मान्नो वेद नाशिषः ॥ २९ ॥ असावेव वरोऽस्माकमीप्सितो जगतः पते ॥ प्रसन्नो भगवान्येषामपवर्गगुरुर्गतिः ॥ ३० ॥ वरं वृणीमहेऽथापि नाथ त्वत्परतः परात् ॥ न ह्यन्तस्त्वद्विभूतीनां सोऽनन्त इति गीयसे ॥ ३१ ॥ पारिजातेऽञ्जसा लब्धे सारङ्गोऽन्यन्न सेवते ॥ त्वदङ्घ्रिमूलमासाद्य साक्षात्किं किं वृणीमहि ॥ ३२ ॥ यावत्ते मायया स्पृष्टा भ्रमाम इह कर्मभिः ॥ तावद्भवत्प्रसङ्गानां सङ्गः स्यान्नो भवे भवे ॥ ३३ ॥ तुलयाम लवेनापि न स्वर्गं नापुनर्भवम् ॥ भगवत्सङ्गिसङ्गस्य मर्त्यानां

किनकि महापुरुषको स्मरणमात्रले सकाम तथा क्षुद्र जीवका सबै क्लेश नष्ट भएर जान्छन् । हजुर सबैका अन्तःकरणमा स्थित रहनाले सबैका इच्छाहरू जान्नुहुन्छ । अनि हामी जस्ता आफ्ना उपासकहरूका कामना किन जान्नु हुन्नथ्यो ? ॥२९॥ हे जगत्पते ! मोक्षको बाटो देखाउने तथा स्वयं मोक्षस्वरूप हजुर आज हामीप्रति प्रसन्न हुनुहुन्छ, हजुर यसरी प्रसन्न हुनु नै हामी सबैको लागि अभिमत वरदान हो ॥३०॥ तैपनि हे नाथ ! प्रकृति आदि भन्दा पनि पर हजुरसित त्यति वरदान खोज्दछौं । हजुरका विभूतिहरूको कुनै अन्त्य छैन । यही कारण हो कि हजुर 'अनन्त' कहिनु हुन्छ ॥३१॥ हे प्रभो ! यदि भ्रमरलाई सहसा कल्पवृक्ष प्राप्त भयो भने त्यो अरु वृक्षमा जाँदैन । त्यस्तै नै हजुरका चरण-कमल पाएर पनि हजुरसित अरु के वरदान मागौं ? ॥३२॥ हे नाथ ! हामी हजुरकी मायाले मोहमा गाडिएर जबसम्म आफ्नो कर्मानुसार संसारमा भौंतारिई रहौं, तबसम्ममा हामी हजुरकै भक्तको संगति पाऔं

॥३३॥ भगवद्भक्तको एकै क्षणको सङ्गतिका तुलनामा हामी स्वर्ग र मोक्षलाई पनि तुच्छ मान्दछौं, अनि मनुष्यका भोगादिको विषयमा के भन्नु ? ॥३४॥ हे प्रभो ! जो सुखाले नै भोगका सम्पूर्ण इच्छा शान्त भएर जान्छन्। जहाँ रतै पनि भगवत् कथाको चर्चा भइरहन्छ, जहाँ प्राणीमात्रमा परस्पर शत्रुता रहन्न, जहाँ डर-भय रहन्न, जहाँ भगवत्–कथाहरू द्वारा संन्यासीहरूका एक मात्र आश्रयस्वरूप साक्षात् भगवान्को असङ्ग महात्माहरू द्वारा पुनः-पुनः स्तुति गरिन्छ, जो तीर्थहरूलाई पवित्र पान इच्छावश ☼साधारण रूपमा पैदल नै डुलिरहन्छन्, ती हजुरका भक्तगण सत्सङ्ग संसारबाट भयभीत पुरुषलाई किन मनपर्दैनथ्यो ? ॥ ३५-३७ ॥ हे भगवन् ! हजुरका परमप्रिय सखा साक्षात् शंकरजीको एकै क्षणको नै समागमले आज हामी जन्म-मरणरूपी अतिशत दुःसाध्य रोगका श्रेष्ठ वैद्य हजुर परमेश्वरको शरणमा आइपुगेका छौं॥३८॥ हे प्रभो ! हामीले अत्यन्त सावधान चित्तले नै पढेका छौं

किमुताशिषः ॥ ३४ ॥ यत्रेड्यन्ते कथा मृष्टास्तृष्णायाः प्रशमो यतः ॥ निर्वैरं यत्र भूतेषु नोद्वेगो यत्र कश्चन ॥ ३५ ॥ यत्र नारायणः साक्षाद्भगवान्न्यासिनां गतिः ॥ संस्तूयते सत्कथासु मुक्तसङ्गैः पुनः पुनः ॥ ३६ ॥ तेषां विचरतां पद्भ्यां तीर्थानां पावनेच्छया ॥ भीतस्य किं न रोचेत तावकानां समागमः ॥ ३७ ॥ वयं तु साक्षाद्भगवन्भवस्य प्रियस्य सख्युः क्षणसङ्गमेन ॥ सुदुश्चिकित्स्यस्य भवस्य मृत्योर्भिषक्तमं त्वाऽद्य गतिं गताः स्मः ॥ ३८ ॥ यन्नः स्वधीतं गुरवः प्रसादिता विप्राश्च वृद्धाश्च सदाऽनुवृत्त्या ॥ आर्या नताः सुहृदो भ्रातरश्च सर्वाणि भूतान्यनसूययैव ॥ ३९ ॥ यन्नः सुतप्तं तप एतदीश निरन्धसां कालमदभ्रमप्सु ॥ सर्वं तदेतत्पुरुषस्य भूम्नो वृणीमहे ते परितोषणाय ॥ ४० ॥ मनुः स्वयम्भूर्भगवान्भवश्च येऽन्ये तपोज्ञानविशुद्धसत्त्वाः ॥ अदृष्टपारा अपि यन्महिम्नः स्तुवन्त्यथो त्वात्मसमं गृणीमः ॥ ४१ ॥ नमः समाय शुद्धाय पुरुषाय पराय च ॥ वासुदेवाय सत्त्वाय तुभ्यं भगवते नमः ॥ ४२ ॥ मैत्रेय उवाच ॥ इति प्रचेतोभिरभिष्टुतो हरिः प्रीतस्तथेत्याह शरण्यवत्सलः ॥ अनि-

र निरन्तर सेवा आदि द्वारा गुरु, ब्राह्मण तथा वृद्धजनलाई प्रसन्न पारेका छौं। भद्रजन, सुहृद्गण भाई तथा सबै प्राणिहरूमा दोषबुद्धि त्यागेर जो स्तुति गरेका छौं, हे ईश ! अन्नादि त्यागेर हामीले धेरै दिनसम्म जलमा उभिएर जो घोर तपस्या गरेका छौं, त्यो सबै हजुर सर्वव्यापक पुरुषोत्तमको सन्तोषको कारण बनोस्–यही वर हजुरसित मागिरहेका छौं ॥३९-४०॥ जसको महिमाको पार नपाएर स्वायम्भुव मनु, ब्रह्माजी, भगवान् शङ्करजी तथा तप एवं ज्ञानले शुद्धचित्त अन्य पुरुष सर्वदा स्तुति गर्दछन्, उनै हजुरको हामी पनि आफ्नो बुद्धिअनुसार वर्णन पनि गर्दछौं ॥४१॥हजुर सर्वत्र समान, शुद्धरूप तथा परम पुरुष हुनुहुन्छ। हजुर सत्वमूर्तिस्वरूप भगवान् वासुदेवलाई हामी प्रणाम गर्दछौं ॥४२॥ मैत्रेयजी भन्छन्–हे विदुरजी !

---

☼ उदाहरण ( परमहंस देवको सादगी )—एक दिन श्रीरामकृष्ण परमहंस बगैंचामा डुलिरहेका थिए, त्यसै बेला कलकत्ताका प्रसिद्ध डाक्टर महेन्द्रनाथ सरकार त्यहाँ आइपुगे। उनले परमहंसदेवलाई बगैंचाको माली भनेर त्यहाँको अलिकति फूल टोकिदिन भने। परमहंसले तिनको आज्ञा शिरोधार्य गरे र तुरुन्त अलिकति फूल टिपेर दिए। त्यसको केही दिनपछि जब परमहंसदेव बिरामी परे तब डाक्टर साहेबलाई उनको दर्शन गर्ने अवसर मिल्यो। त्यस बेला परमहंसदेवलाई देखेर उनलाई ठूलो आश्चर्य भयो र भन्नलागे—"हरे ! मैले के गजब गरिदिएँ ! मेरो बुद्धि कता गएको थियो ! इनलाई त मैले माली ठानेर फूल टिप्न भनेको थिएँ।"

447

प्रचेताहरूले स्तुति गरेपछि शरणागतवत्सल भगवान्‌ले अतिशय प्रसन्न भएर उनलाई 'तथास्तु' भन्नुभयो र आफ्नो मधुर मूर्तिको दर्शनले नेत्र तृप्त नहुनाले गर्दा प्रचेताहरूको इच्छा नभए पनि ती असाधारण प्रभावशाली प्रभु आफ्नो परमधाम पाल्नुभयो ॥४३॥ तब प्रचेताहरूले समुद्रको जलबाट बाहिर निस्केर देखे–सारा पृथ्वी अग्ला-अग्ला वृक्षले ढाकिएको छ, ती वृक्षहरूले आफ्नो अग्लाईले मानौं स्वर्गको बाटो छेकिदिएका छन् । त्यस्तो देखेर ती वृक्षप्रति क्रोधित भए ॥४४॥ तिनले पृथ्वीलाई वृक्षहीन पार्नको निम्ति आफ्नो मुखबाट प्रलयकालको अग्नि झैं प्रचण्ड वायु र अग्नि छाडे ॥४५॥ यस प्रकार वृक्षहरू भस्म हुन लागेका देखेर पितामह ब्रह्माजी आएर अनेक युक्तिसंगत वाक्यद्वारा राजा प्राचीनबर्हिका छोरालाई शान्त पारे ॥४६॥ अनि अति थुप्रै बाँचेका थिए, तिनले डराएर ब्रह्माजीको कथनानुसार यौटी कन्या ल्याएर ती प्रचेताहरूलाई दिए ॥४७॥ प्रचेताहरूले पनि ब्रह्माको आज्ञाले ती 'मारिषा' नामकी कन्यासित विवाह गरे । त्यसैले शिवजीको अवज्ञाले गर्दा ब्रह्माजीका पुत्र दक्षप्रजापतिले आफ्नो पूर्वशरीर त्यागेर अर्को जन्म लिए ॥४८॥ ती उनै दक्ष थिए, जसले चाक्षुष मन्वन्तरमा

च्छतां मानमतृप्तचक्षुषां ययौ स्वधामानपवर्गवीर्यः ॥ ४३ ॥ अथ निर्याय सलिलात्प्रचेतस उदन्वतः ॥ वीक्ष्याकुप्यन्द्रुमैश्छन्नां गां गां रोद्धुमिवोच्छ्रितैः
॥ ४४ ॥ ततोऽग्निमारुतौ राजन्नमुञ्चन्मुखतो रुषा ॥ महीं निर्वीरुधं कर्तुं संवर्तक इवात्यये ॥ ४५ ॥ भस्मसात्क्रियमाणांस्तान्द्रुमान्वीक्ष्य
पितामहः ॥ आगतः शमयामास पुत्रान्बर्हिष्मतो नयैः ॥ ४६ ॥ तत्रावशिष्टा ये वृक्षा भीता दुहितरं तदा ॥ उज्जह्रुस्ते प्रचेतोभ्य उपदिष्टाः
स्वयम्भुवा ॥ ४७ ॥ ते च ब्रह्मण आदेशान्मारिषामुपयेमिरे ॥ यस्यां महदवज्ञानादजन्यजनयोनिजः ॥ ४८ ॥ चाक्षुषे त्वन्तरे प्राप्ते प्राक्सर्गे
कालविद्रुते ॥ यः ससर्ज प्रजा इष्टाः स दक्षो दैवचोदितः ॥ ४९ ॥ यो जायमानः सर्वेषां तेजस्तेजस्विनां रुचा ॥ स्वयोपादत्त दाक्ष्याच्च कर्मणां
दक्षमब्रुवन् ॥ ५० ॥ तं प्रजासर्गरक्षायामनादिरभिषिच्य च ॥ युयोज युयुजेऽन्यांश्च स वै सर्वप्रजापतीन् ॥ ५१ ॥ इति श्रीमद्भागवते महापुराणे
चतुर्थस्कन्धे त्रिंशोऽध्यायः ॥ ३० ॥ मैत्रेय उवाच ॥ तत उत्पन्नविज्ञाना आश्वधोक्षजभाषितम् ॥ स्मरन्त आत्मजे भार्यां विसृज्य प्राव्रज-
न्गृहात् ॥ १ ॥ दीक्षिता ब्रह्मसत्रेण सर्वभूतात्ममेधसा ॥ प्रतीच्यां दिशि वेलायां सिद्धोऽभूद्यत्र जाजलिः ॥ २ ॥ तान्निर्जितप्राणमनोवचोदृशो

सृष्टि नष्ट भएपछि भगवान्‌को प्रेरणा अनुसार फेरि नवीन प्रजाको सृष्टि गरेका थिए ॥४९॥ जन्म लिनासाथ दक्षले आफ्नो कान्तिले सबै तेजस्वीहरूको तेज मन्द पारिदिएका थिए । ती कर्ममा ठूला दक्ष ( बाठो ) थिए । त्यसैले 'दक्ष' नामले प्रख्यात भए ॥५०॥ तिनलाई ब्रह्माजीले प्रजापतिको पदमा अभिषिक्त गरेर प्रजावर्गको रक्षाका लागि नियुक्त गरेर दक्षले अन्य मरीचि आदि प्रजापतिहरूलाई आफ्नो-आफ्नो कार्यमा खटाइदिए ॥५१॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां त्रिंशोऽध्यायः ॥३०॥ ( प्रचेताहरूलाई नारदजको ज्ञानोपदेश र उनलाई परमपदको प्राप्ति )—मैत्रेयजी भन्दछन्–हे विदुर ! त्यसपछि जब प्रचेताहरूलाई ज्ञान भयो, तबती भगवान्‌का वाक्य स्मरण गरेर तत्काल आफ्नीपत्नी मारिषालाई आफ्ना पुत्र दक्षलाई सुम्पेर स्वयं घरबाट हिँडिदिए । त्यहाँबाट गएर पश्चिम दिशामा समुद्र किनारमा जहाँ जाजली मुनिले सिद्धि प्राप्त गरेका थिए, उहीं पुगे र तिनले 'सबै प्राणीहरूमा यौटै आत्माको अस्तित्व छ, जसले यस्तो ज्ञान हुन्छ' ब्रह्मसत्र यज्ञको दीक्षा लिए ॥ १ ॥ २ ॥ तदनुसार प्राण, मन, वाणी तथा दृष्टि स्थिर गरेर आफ्नो शरीरलाई

शान्त तथा समान राख्दै उनले आसनलाई जितेर आफ्नो अतःकरण विशुद्ध परब्रह्ममा लीन गरिदिए । ती प्रचेताहरूलाई देवता तथा असुर दुवैथरिका आराध्य नारदमुनिले देखे ॥३॥ नारदजीलाई आएका देखेर ती प्रचेता उठेर टिक्क उभिए र प्रणाम गरेर तिनको अभिनन्दन गर्दै स्तुति गरे । जब नारदजी सुखपूर्वक आसनमा बसे र उनले आज्ञा दिए, तब ती यस प्रकार भन्न लागे ॥४॥ प्रचेता भन्दछन्–हे देवर्षे ! हामीहरू हजुरको स्वागत गर्दछौं । आज ठूलो भाग्यले हजुरको दर्शन पाइयो ! आफ्नो दिव्य ज्ञानालोकले सबै प्राणीहरूलाई अभय दान दिनको निम्ति नै हजुर सूर्य जस्तै सबै लोकहरूमा डुलिरदनु हुन्छ ॥५॥ हे प्रभो ! शङ्कर भगवान् तथा विष्णुभगवान्ले हामीलाई जुन उपदेश दिनुभएको थियो, गृहस्थीमा आसक्त रहनाले त्यो हामी प्रायः बिर्सिसकेका छौं ॥६॥ अतः परमार्थ तत्त्वका ज्ञाता हजुर त्यो आत्मज्ञान हाम्रो हृदयमा पुनः जागृत गरिदिनोस्, जसले हामी सहजै यो दुस्तर संसारसागर तर्नसकौं ॥७॥ मैत्रेयजी भन्दछन्–प्रचेताहरूले त्यसरी भनेपछि नारदजीले पुण्यकीर्ति भगवान्मा आफ्नो चित्त स्थिर पारेर ती राजाहरूसित भने ॥ ८ ॥

जितासनाञ्छांतसमानविग्रहान् ॥ परेऽमले ब्रह्मणि योजितात्मनः सुरासुरेड्यो ददृशे स्म नारदः ॥ ३ ॥ तमागतं त उत्थाय प्रणिपत्याभिनन्द्य च ॥ पूजयित्वा यथादेशं सुखासीनमथाब्रुवन् ॥ ४ ॥ प्रचेतस ऊचुः ॥ स्वागतं ते सुरर्षेऽद्य दिष्ट्या नो दर्शनं गतः ॥ तव चङ्क्रमणं ब्रह्मन्नभयाय यथा रवेः ॥ ५ ॥ यदादिष्टं भगवता शिवेनाधोक्षजेन च ॥ तद्गृहेषु प्रसक्तानां प्रायशः क्षपितं प्रभो ॥ ६ ॥ तन्नः प्रद्योतयाध्यात्मज्ञानं तत्त्वार्थदर्शनम् ॥ येनाञ्जसा तरिष्यामो दुस्तरं भवसागरम् ॥ ७ ॥ मैत्रेय उवाच ॥ इति प्रचेतसा पृष्टो भगवन्नारदो मुनिः ॥ भगवत्युत्तमश्लोक आविष्टात्माऽब्रवीन्नृपान् ॥ ८ ॥ नारद उवाच ॥ तज्जन्म तानि कर्माणि तदायुस्तन्मनो वचः ॥ नृणां येनेह विश्वात्मा सेव्यते हरिरीश्वरः ॥ ९ ॥ किं जन्मभिस्त्रिभिर्वेह शौक्रसावित्रयाज्ञिकैः ॥ कर्मभिर्वा त्रयीप्रोक्तैः पुंसोऽपि विबुधायुषा ॥ १० ॥ श्रुतेन तपसा वा किं वचोभिश्चित्तवृत्तिभिः ॥ बुद्ध्या वा किं निपुणया बलेनेन्द्रियराधसा ॥ ११ ॥ किं वा योगेन सांख्येन न्यासस्वाध्याययोरपि ॥ किं श्रेयोभिरन्यैश्च न यत्रात्मप्रदो हरिः ॥ १२ ॥ श्रेयसामपि सर्वेषामात्मा ह्यवधिरर्थतः ॥ सर्वेषामपि भूतानां हरिरात्मात्मदः प्रियः ॥ १३ ॥ यथा तरोर्मूलनिषेचनेन तृप्यंति तत्स्कंध-

नारदजी भन्नलागे—हे राजा हो ! संसारमा जसको द्वारा विश्वात्मा तथा जगदीश्वर भगवान्को सेवा गरियोस्—मनुष्यहरूको तिनै जन्म, आयु, मन तथा वचन मानिन्छन् ॥९॥ जुन जीवहरुद्वारा स्वयं आफूलाई पनि अर्पण गर्न श्रीहरिलाई प्राप्त गर्न नसकियोस्, ती शौक्ल अर्थात् आमाको गर्भबाट हुने भएको, सावित्र अर्थात् यज्ञोपवीतले हुने भएको एवं याज्ञिक अर्थात् यज्ञको दीक्षाले हुने तीन जन्म, वेदोक्त कर्म, देवताहरूको समान लामो आयु, वेदाध्ययन, वक्तृत्व शक्ति, विविध प्रकारका कुराको स्मरण राख्ने शक्ति, तीव्रबुद्धि, बल, इन्द्रियहरूको तेज, योग, सांख्य, न्याय, स्वाध्याय र अरु अनेक प्रकारका श्रेयः साधनले पुरुषको के लाभ हुन सक्तछ ? ॥१०-१२॥ साँच्चै सोद्धछौं भने सबै श्रेयहरूको अवधि एक मात्र आत्मा नै छ र आत्मप्रद भगवान् नै सबै प्राणीहरूका प्रियआत्मा हुन् ॥ १३ ॥ जस्तै वृक्षको जरोलाई पानी दिए, त्यसका हाँगा, शाखा, उपशाखा सबै अंग तृप्त हुन्छन् र

४८१

तिनका सबै इन्द्रिय जाग्रत हुन्छन्, त्यस्तै भगवान्को पूजन गर्नाले सबैको पूजन होइजान्छ ॥१४॥ जस्तै वर्षामा जल सूर्यबाट नै उत्पन्न हुन्छ र गर्मीको दिनमा सुकेर जान्छ र जस्तै सबै चराचर प्राणी पृथ्वीबाट उत्पन्न हुन्छन् र अन्त्यमा पृथ्वीमानै मिलेर जान्छन्, त्यस्तै नै सबै गुणप्रवाह भगवान्बाट उत्पन्न हुन्छन् र उनैमा लीन भएर जान्छन् ॥१५॥ यो जगत् तो जगदात्माको परमपद हो। जस्तै सूर्यको तेज सूर्यदेखि भिन्न हुँदैन, त्यस्तै नै यो जगत् भगवान्देखि पृथक् छैन। जस्तै जाग्रत अवस्थामा इन्द्रियहरू कर्मण्य रहन्छन् र सुषुप्तिमा तिनको सम्पूर्ण शक्तिहरू निदाउँछन्, त्यसै गरी यो जगत् कहिले अर्थात् सृष्टिकालमा भगवान्बाट उत्पन्न हुन्छ र प्रलयकालमा उनैमा लीन भएर जान्छ। ती भगवानमा द्रव्य, क्रिया तथा ज्ञानात्मक भेद भ्रमको सर्वथा अभाव रहन्छ। हे नृपतिगण! जस्तै–बादल अन्धकार तथा प्रकाश बिस्तार-बिस्तार आकाशबाट प्रकट हुन्छन् र त्यसैमा विलीन भएर जान्छन्, त्यस्तै सत्व, रज तथा तम—यी तीनै शक्तिहरू भगवान्बाट उत्पन्न भएर उनैमा विलीन हुन्छन्। यसै प्रकारले जगत्को प्रवाह चलिरहन्छ ॥ १७ ॥ अतएव काल अर्थात् जगत्का निमित्त

भुजोपशाखाः ॥ प्राणोपहाराच्च यथेन्द्रियाणां तथैव सर्वार्हणमच्युतेज्या ॥ १४ ॥ यथैव सूर्यात्प्रभवंति वारः पुनश्च तस्मिन्प्रविशन्ति काले ॥
भूतानि भूमौ स्थिरजङ्गमानि तथा हरावेव गुणप्रवाहः ॥ १५ ॥ एतत्पदं तज्जगदात्मनः परं सकृद्विभातं सवितुर्यथा प्रभा ॥ यथाऽसवो जाग्रति सुप्त-
शक्तयो द्रव्यक्रियाज्ञानभिदा भ्रमात्ययः ॥१६॥ यथा नभस्यभ्रतमःप्रकाशा भवन्ति भूता न भवन्त्यनुक्रमात् ॥ एवं परे ब्रह्मणि शक्तयस्त्वमू रज-
स्तमः सत्त्वमिति प्रवाहः ॥ १७ ॥ तेनैकमात्मानमशेषदेहिनां कालं प्रधानं पुरुषं पुरेशम् ॥ स्वतेजसा ध्वस्तगुणप्रवाहमात्मैकभावेन भजध्वमद्धा
॥ १८ ॥ दयया सर्वभूतेषु संतुष्ट्या येन केन वा ॥ सर्वेन्द्रियोपशांत्या च तुष्यत्याशु जनार्दनः ॥ १९ ॥ अपहतसकलैषणामलात्मन्यविरतमेधित-
भावनोपहूतः ॥ निजजनवशगत्वमात्मनोऽयं न सरति छिद्रवदक्षरः सतां हि ॥ २० ॥ न भजति कुमनीषिणां स इज्यां हरिरधनात्मधनप्रियो
रसज्ञः ॥ श्रुतधनकुलकर्मणां मदैर्ये विदधति पापमकिञ्चनेषु सत्सु ॥ २१ ॥ श्रियमनुचरतीं तदर्थिनश्च द्विपदपतीन्विबुधांश्च यत्स्वपूर्णः ॥ न भजति
निजभृत्यवर्गतंत्रः कथममुमुद्विसृजेत्पुमान्कृतज्ञः ॥२२॥ मैत्रेय उवाच ॥ इति प्रचेतसो राजन्नन्याश्च भगवत्कथाः ॥ श्रावयित्वा ब्रह्मलोकं ययौ स्वायं-

कारण प्रधान अर्थात जगतका नियन्ता, सबै देहधारीहरूको एकमात्र आत्मा तथा ब्रह्मादि लोकपालका पनि प्रभु र आफ्नो चित्शक्तिले सबै गुणका प्रवाहरूपी प्रपञ्चलाई तिमी आत्माबाट पृथक् नमान्दै निरन्तर अभिन्न भावले भज्दै रहू ॥ १८ ॥ ती भगवान् समस्त प्राणीहरूमा दया गर्नाले जे जति पाइन्छ, त्यसैमा रहन्छन् र सबै इन्द्रिय शान्त भएपछि चाँडै नै प्रसन्न हुन्छन् ॥ १९ ॥ सबै थरिका वासनाहरू हराएपछि सन्तहरूको शुद्ध हृदयमा सतत वृद्धिगत भावनाले तानिएर स्थापित गरिएका भगवान् स्वयं आफ्ना भक्तको वशीभूत भएर त्यहाँबाट हृदयाकाश झैं कहिल्यै हट्दैनन् ॥ २० ॥ जुन भक्तहरूको धन आत्मा नै छ, ती निर्धन पुरुष नै जसलाई अतिशय प्रिय छन् र जो इनको भक्तिरसले परिचित छन्, ती भगवान् ती कुबुद्धिहरूको पूजा स्वीकार गर्दैनन् जो आफ्नो बहुज्ञता, धन, कुल तथा कर्महरूको मदले अन्धो भएर अकिंचन जनमा अ याचार गर्दछन् ॥ २१ ॥ जो आत्माको आनन्दमा परिपूर्ण रहनाले आफ्नो सेवा गन भएकी लक्ष्मी, तिनलाई मनपराउने राजहरू तथा देवताहरूलाई पनि केही मान्दैनन्, किन्तु ती सदा आफ्ना भक्तको अधीन रहन्छन्। यस्ता नारायण

लाई कोही पनि कृतज्ञ पुरुष कसरी छाड्न सक्छ ? ॥२२॥ मैत्रेयजी भन्दछन्—हे विदुरजी ! यसै गरी नारद प्रचेताहरूलाई भगवान्‌का अरु पनि कथा सुनाएर ब्रह्मलोक गए । यता प्रचेताहरूले पनि संसारको मल नाश गर्ने गएको भगवच्चरित्र नारदको मुखबाट सुनेर भगवान्‌को नै चरण-कमलको निरन्तर चिन्तन गर्दै प्रभुको परमपद प्राप्त गरे ॥२३-२४॥ हे विदुरजी ! तिमीले जुन मसित नारदजी र प्रचेताहरूको संवादरूपी हरिकीर्तन सोध्यौ, त्यो मैले तिमीलाई सुनाएँ ॥ २५ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! मैले स्वायम्भुव मनुका पुत्र महाराज उत्तानपादको वंश वर्णन गरिदिएँ । अब प्रियव्रतको वंश वर्णन गर्दछु सुन ॥ २६ ॥ उनले नारदजीको उपदेशले आत्मज्ञान प्राप्त गरेर पनि फेरि राज्य-सुख भोगेर अन्तमा सम्पूर्ण पृथ्वी आफ्ना छोराहरूलाई दिएर भगवान्‌को परमधाम गए ॥ २७ ॥ हे राजन् ! मैत्रेयजी द्वारा वर्णित भगवानका गुणानुवादले युक्त यो पवित्र कथा सुनेर भक्ति मात्राले उद्रेकले जसका नेत्रमा आँसु आएथे, ती विदुरजी आफ्नो हृदयमा भगवान्‌का चरणको ध्यान गर्दै आफ्नो शिर मैत्रेय मुनिका चरणमा राखिदिए ॥२८॥ विदुरजी भन्दछन्—

भुवो मुनिः ॥ २३ ॥ तेऽपि तन्मुखनिर्यातं यशो लोकमलापहम् ॥ हरेर्निशम्य तत्पादं ध्यायन्तस्तद्गतिं ययुः ॥ २४ ॥ एतत्तेऽभिहितं क्षत्तर्यन्मां त्वं परिपृष्टवान् ॥ प्रचेतसां नारदस्य सम्वादं हरिकीर्तनम् ॥ २५ ॥ श्रीशुक उवाच ॥ य एष उत्तानपदो मानवस्यानुवर्णितः ॥ वंशः प्रियव्रत-स्यापि निबोध नृपसत्तम ॥ २६ ॥ यो नारदादात्मविद्यामधिगम्य पुनर्महीम् ॥ भुक्त्वा विभज्य पुत्रेभ्य ऐश्वरं समगात्पदम् ॥ २७ ॥ इमां तु कौषारविणोपवर्णितां क्षत्ता निशम्याजितवादसत्कथाम् ॥ प्रवृद्धभावोऽश्रुकलाकुलो मुनेर्दधार मूर्ध्ना चरणं हृदा हरेः ॥ २८ ॥ विदुर उवाच ॥ सोऽयमद्य महायोगिन्भवता करुणात्मना ॥ दर्शितस्तमसः पारो यत्राकिञ्चनगो हरिः ॥ २९ ॥ श्रीशुक उवाच ॥ इत्यानम्य तमामन्त्र्य विदुरो गजसाह्वयम् ॥ स्वानां दिदृक्षुः प्रययौ ज्ञातिनां निर्वृताशयः ॥ ३० ॥ एतद्यः शृणुयाद्राजन् राज्ञां पर्यर्पितात्मनाम् ॥ आयुर्धनं यशः स्वस्ति गतिमै-श्वर्यमाप्नुयात् ॥ ३१ ॥ इति श्रीमद्भागवते महापुराणेऽष्टादशसाहस्रयां संहितायां चतुर्थस्कन्धे प्रचेतउपाख्यानं नाम एकत्रिंशोऽध्यायः ॥ ३१ ॥

हे महायोगिन् ! हजुर परम कारुणिक प्रभुले आज मलाई अज्ञानान्धकारको पारिपट्टि पुर्‍याइदिनु भयो, जहाँ अकिञ्चन भगवद्‌भक्तहरू बस्तछन् ॥२९॥ श्रीशुकदेवजीले भन्नुभयो—यस प्रकार शान्त चित्त विदुरजीलाई प्रणाम गरेर र उनको अनुमति लिई आफ्ना जाति बन्धुहरूलाई भेट्नको निम्ति हस्तिनापुरी जान हिंडे ॥३०॥ हे राजन् ! जसले भगवानमा चित्त लगाइ दिएका थिए, ती, प्रचेताहरूको यो पवित्र कथा जो पुरुष सुन्ला उसलाई दीर्घायु, धन, सुयश, क्षेम, सद्‌गति र ऐश्वर्य सहजै प्राप्त हुनेछन् ॥ ३१ ॥ इति श्रीमद्‌भागवते महापुराणे चतुर्थस्कन्धे पं० गौरीशंकर 'घमिष्ठ' कृत नेपाली भाषाटीकायामेकत्रिंशोऽध्यायः ॥ ३१ ॥

४८३

॥ इति श्रीमद्भागवते चतुर्थस्कन्धः समाप्तः ॥

अथ 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते पञ्चमः स्कन्धः प्रारभ्यते।

श्रीहरिः । ( राजा प्रियव्रतको चरित्र )—त्यति कथा सुनेर राजा परीक्षितले सोधे—हे मुने ! यो कुरा त निकै छक पर्ने छ—जब भगवद्भक्त प्रियव्रतलाई ज्ञान प्राप्त भयो र ती केवल आत्मविचार मै सन्तुष्ट रहन लागे, अनि फेरि गृहस्थीमा किन आसक्त भए ? यो मलाई बुझाउनोस्, किनकि गृहस्थी त कर्मको बन्धन र आत्मस्वरूपलाई बिर्सने जरो मानिन्छ ॥१॥ हे द्विजश्रेष्ठ ! प्रियव्रत जस्ताको लालसा त गृहस्थीमा नहुनु पर्ने, किनकि ती जस्ता विषयबाट उन्मुख पुरुषका लागि त्यस्तो हुनु आश्चर्य लाग्ने कुरा हो ॥२॥ हे विप्रर्षे ! मनोहर कीर्ति सम्पन्न कृष्ण भगवान्का चरणको छाया पाएर जसको मन सुखी भइसकेको रहन्छ, त्यस्ता महात्माको बुद्धि कुटुम्बमा आसक्त हुँदैन ॥३॥ हे ब्रह्मन् ! यो

ॐ नमो भगवते वासुदेवाय ॥ राजोवाच ॥ प्रियव्रतो भागवत आत्मारामः कथं मुने ॥ गृहेऽरमत यन्मूलः कर्मबन्धः पराभवः ॥ १ ॥ न नूनं मुक्तसङ्गानां तादृशानां द्विजर्षभ ॥ गृहेष्वभिनिवेशोऽयं पुंसां भवितुमर्हति ॥२॥ महतां खलु विप्रर्षे उत्तमश्लोकपादयोः ॥ छायानिर्वृतचित्तानां न कुटुम्बे स्पृहामतिः ॥ ३ ॥ संशयोऽयं महान्ब्रह्मन्दारागारसुतादिषु ॥ सक्तस्य यत्सिद्धिरभूत्कृष्णे च मतिरच्युता ॥ ४ ॥ श्रीशुक उवाच ॥ बाढमुक्तं भगवत उत्तमश्लोकस्य श्रीमच्चरणारविन्दमकरन्दरस आवेशितचेतसो भागवतपरमहंसदयितकथां किंचिदन्तरायविहतां स्वां शिवतमां पदवीं न प्रायेण हिन्वति ॥५॥ यर्हि वाव ह राजन्स राजपुत्रः प्रियव्रतः परमभागवतो नारदस्य चरणोपसेवयाऽञ्जसावगतपरमार्थसतत्त्वो ब्रह्मसत्रेण दीक्षिष्यमाणोऽवनितलपरिपालनायाम्नातप्रवरगुणगणैकान्तभाजनतया स्वपित्रोपामन्त्रितो भगवति वासुदेव एवाव्यवधानसमाधियोगेन समावेशितसक-

ठूलो संशयको कुरा हो—स्त्री, गृह र पुत्र आदिमा आसक्त भएर पनि श्रीकृष्णमा उनको भक्ति निश्चल रहिरह्यो र मुक्ति पाए ॥४॥ श्रीशुकदेव भन्नुहुन्छ—हे परीक्षित ! तिम्रो कथा पनि उचित छ । मनोहर कीर्ति हुने भगवान् कृष्णका चरण-कमलको मकरन्दमा जसको मन लागिसक्छ, ती कहिलेकाहीं विघ्नले बाध्य भएर पनि भगवान्का कथारूपी कल्याणमय बाटोलाई छाड्दैनन् ॥५॥ हे राजन् ! जब महान भगवद्भक्त प्रियव्रत बालकै थिए, त्यसैबेला नारदजीका चरणको सेवाले उनलाई सहजै आत्माको यथार्थ रूपको ज्ञान भइसकेको थियो । ती समाधिस्थ भएर ब्रह्मध्यानमा स्थित हुन खोज्दै थिए, त्यसै बेला उनका *पिता मनुले विचार गरे-मेरो छोरो प्रियव्रत राजा हुनयोग्य छ । शास्त्रमा राजाको योग्य जति गुण कहिएका छन्

---

दृष्टान्त ( पितालाई चक्कुले हान्यो )—धोटा सेठका चार छोरा थिए । तीमध्ये तीन जना आज्ञाकारी थिए र धोटा उद्धत स्वभावको थियो । उद्धत छोरो कहो बाबन्न बोल्दथ्यो, गाली गर्थ्यो र कहिले काहीं हात पनि छाडिदिन्थ्यो । सेठ त्यो छोरोसित सधैं रुष्ट रहन्थ्यो । छोरोको त्यस्तो व्यवहारले अप्रसन्न सेठको विचार थियो—त्यसलाई आफ्नो सम्पत्तिबाट केही पनि नदिइयोस् । सेठले यदि त्यस छोरोको सामुन्ने त्यो कुरा भनेदेखि उसले पिताई मारिदिने थियो । यसै निमित्त मर्ने बेलामा उसले आफ्नो वसीयतनामा लेख्यो कि 'तीन पुत्र मेरो सम्पत्तिका हकवाला छन्—धोटा छैन ।' छोराहरूले कागज हाजिर गर्दापनि सबै कुरा थाहा पाए । त्यो नालायक पुत्र लान्हे दुःखी भयो । आपुसमा निर्णय हुन नसकेर यो कुरा राजा भोजकहाँ पुग्यो । राजा पनि आश्चर्यमा परे । त्यस बेला कालिदास रिसाएर कहीं अन्तै गएका थिए । यो झगडा मिलाउन राजा भोजले आदरपूर्वक कवि कालिदास लाई बोलाउन पठाएर र फैसला गर्न भने । कालिदासले धोटा कोठामा त्यस सेठको तस्वीर राखे र पालैसित सेठका छोराहरूलाई डाकेर भने—'जो यस चित्र-लिखित पिताको पेटमा चक्कुले हिर्काउँछ, त्यसैलाई धन प्राप्त हुन्छ ।' सेठका तीन जना बाठा छोराले भने—'म आफ्ना पिताको चित्रमा हतियारले हान्दिन । मेरो भाग पाइन्न भने पनि कष्ट छैन ।' तर चौथो पुत्र, जुन वर्णसङ्कर थियो, उसले तुरुन्त हतियार उठायो र हिर्काउन तयार भयो । त्यसै आधारमा कालिदासले फैसला गरिदिए—'यो छोरा वर्णसङ्कर हो, यसलाई अंश मिल्दैन ।' त्यो दरबार सबै जना कालिदासको युक्तिको प्रशंसा गर्नलागे र राजाको हुकुमको सामुन्ने सेठका दुष्ट पुत्रको केही लाग्न पाएन ।

ती सबैमा यो अद्वितीय छ । अतः यसैलाई राजा बनाउनु पर्दछ । तदनुसार मनुले आफ्नो पुत्र प्रियव्रतसित राजा बन्न भने, किन्तु प्रियव्रत आफ्नो मन एकाग्र पारेर भगवान् वासुदेवमा लगाइसकेका थिए । त्यसले उनका सबै इन्द्रियहरूका कर्म छुटिसकेका थिए । कुनै पनि इन्द्रियको विषयमा केही पनि अभिलाषा थिएन । यसै निम्ति उनले राजा बन्न मानेनन् । यद्यपि आफ्ना पिताको आज्ञा नमान्नु अनुचित थियो, तैपनि उनले विचार गरे—पिताको आज्ञा मान्नाले म मिथ्या संसारमा अल्झन्छु र मेरो आत्मज्ञान सधैंको लागि नष्ट भएर जान्छ र यस्तो हुनु क्लेश र अनर्थ हो ॥६॥ आदिदेव भगवान् ब्रह्मालाई पुनरचित संसार बढाउनको निम्ति सधैं चिन्ता लागिरहन्छ । त्यसैले ती सबै व्यक्तिको अभिप्राय जान्दै रहन्छन् । जब उनलाई प्रियव्रतको अभिप्राय ज्ञात भयो, तब ती सबै वेदहरू र गणहरूका साथ आफ्नो लोक (सत्यलोक) बाट हिंडे ॥ ७ ॥ तिनको बाटोमा विमानमा बसेका अनेक ठूला-ठूला देवताको साम्हने आएर उनको पूजन गर्दथे ! अनेक स्थानमा घेरै थरि सिद्धगण, गन्धर्व, साध्य, चारण र मुनिजन उनको यश गाउँथे र ती ब्रह्माजी आकाशमा चन्द्रमा सम न उज्ज्वल देखिंदै थिए ।

लकारकक्रियाकलापो नैवाभ्यनन्दद्यद्यपि तदप्रत्याम्नातव्यं तदधिकरण आत्मनोऽन्यस्मादसतोऽपि पराभवमन्वीक्षमाणः ॥ ६ ॥ अथ ह भगवाना-
दिदेव एतस्य गुणसर्गस्य परिबृंहणानुध्यानव्यवसितसकलजगदभिप्राय आत्मयोनिरखिलनिगमनिजगणपरिवेष्टितः स्वभवनादवततार ॥ ७ ॥ स
तत्र तत्र गगनतल उडुपतिरिव विमानावलिभिरनुपथममरपरिवृढैरभिपूज्यमानः पथि पथि च वरूथशः सिद्धगन्धर्वसाध्यचारणमुनिगणैरुपगीयमानो
गन्धमादनद्रोणीमवभासयन्नुपससर्प ॥ ८ ॥ तत्र ह वाव एवं देवर्षिर्हंसयानेन पितरं भगवन्तं हिरण्यगर्भमुपलभमानः सहसैवोत्थायार्हणेन सह
पितापुत्राभ्यामवहिताञ्जलिरुपतस्थे ॥ ९ ॥ भगवानपि भारत तदुपनीतार्हणः सूक्तवाकेनातितरामुदितगुणगणावतारसुजयः प्रियव्रतमादिपुरुषस्तं
सदयहासावलोक इति होवाच ॥ १० ॥ श्रीभगवानुवाच ॥ निबोध तातेदमृतं ब्रवीमि मासूयितुं देवमर्हस्यप्रमेयम् ॥ वयं भवस्ते तत एष महर्षि-
र्वहाम सर्वे विवशा यस्य दिष्टम् ॥ ११ ॥ न तस्य कश्चित्तपसा विद्यया वा न योगवीर्येण मनीषया वा ॥ नैवार्थधर्मैः परतः स्वतो वा कृतं विहन्तुं
तनुभृद्विभूयात् ॥ १२ ॥ भवाय नाशाय च कर्म कर्तुं शोकाय मोहाय सदाऽभयाय ॥ सुखाय दुःखाय च देहयोगमव्यक्तदिष्टं जनताऽङ्ग धत्ते ॥१३॥

यस प्रकार जब ती गन्धमादनको त्यो कन्दरामा पुगेथे, जहाँ गुरु नारद, तिनका शिष्य प्रियव्रत तथा आफ्नो पुत्र प्रियव्रतलाई राज्य दिनको निम्ति आएका मनु विद्यमान थिए । उनी आउनासाथ प्रकाशले त्यो सम्पूर्ण कन्दरा प्रकाशित भयो ॥८॥ हंसको सवारीले नै नारदजीले उनलाई 'मेरो पिता ब्रह्माजी हुन्' भन्ने जाने ! जुन पिता-पुत्र मनु र प्रियव्रत थिए, दुवै तुरुन्त ठिक्क उभिए र पूजन गरेर हात जोरी उनको स्तुति गर्न लागे ॥९॥ यस प्रकार जब नारदले पूजा गरी योग्य वचनद्वारा उनका गुण, अवतारहरू तथा श्रेष्ठताको राम्ररो वर्णन गरेर स्तुति गरे, तब ती आदिपुरुष ब्रह्माजी दयापूर्वक मुसु-मुसु हाँस्तै प्रियव्रतसित भन्दछन् ॥ १० ॥ प्रियव्रत सित ब्रह्माले भने—हे तात ! जुन प्रमाण भन्दा पर छ र म, शिव, तिम्रा पिता मनु र तिम्रा गुरू नारद विवश भावले असको आज्ञा पालन गर्दछन्, तिमी उनलाई तुच्छ नठान । म तिमीसित सत्य भन्दछु—राम्ररी तिनका कुरामा विचार गर ॥११॥ कुनै पनि शरीर धारण गर्ने प्राणी तप, विद्या, योगबल, बुद्धि, आत्मबल र अर्काको सहायतबाट भए पनि उनको निश्चयलाई पल्टाउन सक्तैन ॥ १२ ॥ हे प्रियव्रत ! सबै जना

उनैले दिएको शरीर धारण गर्दछन् । उनको इच्छा-शक्तिका अगिनै सामर्थ्य कसैमा पनि छैन । प्रत्येक शरीरधारीले जन्म, मरण, शोक, मोह, भय, सुख र दुःख भोग्नै पर्दछन् ॥१३॥ उनकी वेदरूपिणी वाणी यौटा लामो डोरी छ, त्यसमा उनैले दिएका गुण-कर्म त्यो ठूलो डोरीमा लागेका निकै बलिया र सम्माना ग्रन्थीहरू हुन्, जसमा हामी सबै अना राम्ररी बाँधिएर ब्राह्मण, क्षत्रिय, वैश्य आदि कहिन्छौं यी सबै आफ्‌आफ्ना योग्य कर्महरू त्यस्तै प्रकारले गर्छन्, जसरी डोरीले नाथिएका पशु मनुष्यका इच्छानुसार सबै कर्महरू गर्दै रहन्छन् हे प्रियव्रत ! त्यो ईश्वर गुण र कर्मका सम्बन्धमा जो स्थिति प्रदान गर्छ, त्यसैमा राजी रहेर ती प्रभुले दिएका दुःख वा सुखलाई हामी उसै गरी विवशताले भोग्दछौं, जसरी कि अन्धोलाई कुनै आँखा देख्ने डोऱ्याई लगिरहेको होस् र उसलाई आँखा हुनेको इच्छाको अनुसार नै समस्त दुःख-सुख भोग्नपर्दछ, ॥ १५ ॥ भनाइको तात्पर्य—ईश्वरको आज्ञा साह्रै बलियो हुन्छ, त्यो सबैले मान्नैपर्दछ । म जे जति भन्नेछु, त्यो उनैको प्रेरणाले भन्नेछु । अतः मेरो वचनलाई उनैको आज्ञा ठान र स्वीकार । उनको आज्ञा छ—जीवन्मुक्त पुरुष पनि प्रारब्धमा पूर्वकर्महरू भोगेर उसलाई समाप्त पार्नका लागि शरीरलाई धारण गर्दछ र उस भोगमा 'म सुखी छु, म दुःखी छु', इत्यादि अभिमानलाई छाडिराख्दछ ।

यद्वाचि तन्त्यां गुणकर्मदामभिः सुदुस्तरैर्वत्स वयं सुयोजिताः ॥ सर्वे वहामो बलिमीश्वराय प्रोता नसीव द्विपदे चतुष्पदः ॥ १४ ॥ ईशाभिसृष्टं
ह्यवरुन्ध्महेऽङ्ग दुःखं सुखं वा गुणकर्मसङ्गात् ॥ आस्थाय तत्तद्यदयुङ्क्त नाथश्चक्षुष्मताऽन्धा इव नीयमानाः ॥ १५ ॥ मुक्तोऽपि तावद्बिभृयात्स्व-
देहमारब्धमश्नन्नभिमानशून्यः ॥ यथानुभूतं प्रतियातनिद्रः किं त्वन्यदेहाय गुणान्न वृङ्क्ते ॥ १६ ॥ भयं प्रमत्तस्य वनेष्वपि स्याद्यतः स आस्ते
सहषट्सपत्नः ॥ जितेन्द्रियस्यात्मरतेर्बुधस्य गृहाश्रमः किं नु करोत्यवद्यम् ॥ १७ ॥ यः षट्सपत्नान्विजिगीषमाणो गृहेषु निर्विश्य यतेत
पूर्वम् ॥ अत्येति दुर्गाश्रित ऊर्जितारीन् क्षीणेषु कामं विचरेद्विपश्चित् ॥ १८ ॥ त्वं त्वब्जनाभाङ्घ्रिसरोजकोशदुर्गाश्रितो निर्जितषट्सपत्नः ॥
भुङ्क्ष्वेह भोगान्पुरुषातिदिष्टान्विमुक्तसङ्गः प्रकृतिं भजस्व ॥ १९ ॥ श्रीशुक उवाच ॥ इति समभिहितो महाभागवतो भगवतस्त्रिभुवनगुरोरनुशा-

जसै कोही प्राणी स्वप्नका भोगलाई जागेपछि मिथ्या मान्दछ । त्यो यो कुरा मान्दैन कि ती भोगलाई मैले भोगेको हो । भोगमा अभिमान शून्य हुनु बाहेक जीवन्मुक्त प्राणी कर्मको वासना पनि राख्दैन, किनकि वासनाहरू रहनाले फेरि शरीर धारण गर्न पर्दछ ॥ १६ ॥ यी सबै बाधा त घरमै पनि हुन सक्छन् र वनमा पनि । किनकि वनमा जो असावधान रहन्छ, त्यहाँ पनि उसित पाँच ज्ञानेन्द्रिय र यौटा मन यी छ शत्रु विद्यमान रहन्छन् । यसको विपरीत जो जितेन्द्रिय छ, जसलाई आत्मा बाहेक अन्य विषयमा प्रेम रहन्न, त्यस विद्वानलाई गृहस्थाश्रमले के अहित गर्न सक्दछ ? ॥ १७ ॥ गृहस्थाश्रम त इन्द्रियहरूलाई वशमा पार्न अभ्यास गर्नको निम्ति सुरक्षित दुर्ग हो । अतः जो उपर्युक्त छ शत्रुलाई जित्न चाहन्छ, त्यो पहिले गृहस्थाश्रममा रहेर नै उद्योग गरोस्, किनकि दुर्गमा बस्ने वीर ठूला-ठूला शत्रुलाई पनि पराजित गर्नसक्छ । अतः दुर्गरूपी गृहस्थाश्रममा रहेर प्राणी ती शत्रुलाई क्षीण पारोस् । त्यसपछि जहाँ मन लाग्दछ उहीं बसोस् ॥१८॥ तिमी त विष्णु भगवान्‌का चरण-कमललाई सम्पुट स्वरूप दुर्गको आश्रय लिएर छ शत्रुलाई जित्नसकेका छौ । अतः घरमै बसेर दैवले दिएको भोग र अन्तमा विषयका आसक्ति छाडेर प्रभुलाई भज ॥१९॥ शुकदेवजी भन्दछन्—हे परीक्षित ! जब तीनैलोकका पूज्य ब्रह्माले यति भने, तब अगाधारण

भगवद्भक्त प्रियव्रतले विचार गरे—म सानो हुँ र यी धेरै ठूला हुन् । अतएव यिनको आज्ञा मस्तक निहुराएर आदरपूर्वक उनले स्वीकार गरे र भने—अब म यस्तै गर्नेछु ॥ २० ॥ अनि महाराज मनुले ब्रह्माजीको विधिवत् पूजा गरे । प्रियव्रत तथा नारदजी पनि उनलाई विशुद्ध दृष्टिले हेर्दै रहे र भगवान ब्रह्मा आफ्नो ब्रह्मस्वरूपको स्थिति—जुन कि वाणी तथा मनको अगोचर छ र व्यवहारबाट पनि पर छ, ती प्रियव्रतलाई घरमा ल्याउने उद्योगबाट मुक्त थिई—अतः त्यसैमा पुनः स्थित भएर ती आफ्नो लोकमा फर्किए ॥२१॥ मनुले देखे—भगवान् ब्रह्माले हाम्रो मनोरथ पूर्ण गरिदिए, तब उनले नारदको सल्लाहले सारा भूमण्डलको भार आफ्ना प्रियपुत्रलाई बोकाए र स्वयं त्यस भोगको इच्छाबाट सदाको लागि निवृत्त भए ॥ २२ ॥ यस प्रकार महाराज प्रियव्रतलाई ईश्वरेच्छाले कर्मको भार सम्हाल्नु पऱ्यो र केवल ठूलाको प्रतिष्ठाको रक्षाका लागि ब्रह्माको आज्ञा मानेर उनले भूतलको शासन गर्नुपऱ्यो । त्यो त उनी वासनारहित महामहेका थिए । तिनले भगवान आदिपुरुषका दुबै चरणको सर्वदा ध्यान गरेका थिए, जसले उनका अन्तःकरणका मलरूपी राग-द्वेष आदि

सनमात्मनो लघुतयाऽवनतशिरोधरो बाढमिति सबहुमानमुवाह ॥ २० ॥ भगवानपि मनुना यथावदुपकल्पितोपचितिः प्रियव्रतनारदयोरविषममभि-
समीक्षमाणयोरात्मसमवस्थानमवाङ्मनसं क्षयमव्यवहृतं प्रवर्तयन्नगमत् ॥ २१ ॥ मनुरपि परेणैवं प्रतिसंधितमनोरथः सुरर्षिवरानुमतेनात्मजमखिल-
धरामण्डलस्थितिगुप्तय आस्थाप्य स्वयमतिविषमविषयविषजलाशाया उपरराम ॥ २२ ॥ इति ह वाव स जगतीपतिरीश्वरेच्छयाऽधिनिवेशितकर्मा-
धिकारोऽखिलजगद्बन्धध्वंसपरानुभावस्य भगवत आदिपुरुषस्याङ्घ्रियुगलानवरतध्यानानुभावेन परिरन्धितकषायाशयोऽवदातोऽपि मानवर्धनो
महतां महीतलमनुशशास ॥२३॥ अथ च दुहितरं प्रजापतेर्विश्वकर्मण उपयेमे बर्हिष्मतीं नाम तस्यामु ह वाव आत्मजानात्मसमानशीलगुणकर्मरूप-
वीर्योदारान्दश भावयांबभूव कन्यां च यवीयसीमूर्जस्वतीं नाम ॥ २४ ॥ आग्नीध्रेध्मजिह्वयज्ञबाहुमहावीरहिरण्यरेतोघृतपृष्ठसवनमेधातिथिवीतिहोत्र-
कवय इति सर्व एवाग्निनामानः ॥ २५ ॥ एतेषां कविर्महावीरः सवन इति त्रय आसन्नूर्ध्वरेतसस्त आत्मविद्यायामर्भभावादारभ्य कृतपरिचयाः
पारमहंस्यमेवाश्रममभजन् ॥ २६ ॥ तस्मिन्न ह वा उपशमशीलाः परमर्षयः सकलजीवनिकायावासस्य भगवतो वासुदेवस्य भीतानां शरणभूतस्य

नष्ट भइसकेका थिए । भगवान् यस्ता छन् कि तिनको तेजले संसारका सबै बन्धन खुलिजान्छन् ॥ २३ ॥ त्यसपछि महाराज प्रियव्रतले विश्वकर्मा प्रजापतिकी बर्हिष्मती नामकी कन्या सित विवाह गरे । तीबाट उनका दस पुत्र भए । ती सबै उनैका समान शील, गुण, कर्म, रूप बलमा निपुण थिए । छोराहरूभन्दा कान्छी ऊर्जस्वती नामकी योटी कन्या जन्मिइन् ॥२४॥ छोराहरूको नाम—आग्नीध्र, इध्मजिह्व, यज्ञबाहु, महावीर, हिरण्यरेता, घृतपृष्ठ, सवन, मेधातिथि, वीतिहोत्र, कवि थियो । यी सबै अग्निका नाम गनाइएका हुन्, त्यसैले अग्निकै समान नाम भएका थिए । यिनमा कवि, महावीर र सवन यी तीन ऊर्ध्वरेता थिए॥२५॥ती तीनलाई सानैमा आत्मविद्यामित परिचयप्राप्त भइसकेको थियो, अतः तिनले परमहंस आश्रम ग्रहण गरे ॥२६॥ त्यस आश्रममा ती शान्तचित्त महर्षिहरूको समान आचरण गर्दथे । जुन भगवान् वासुदेव सबै जीवसमूहका निवासस्थान र डराएका व्यक्तिहरूको रक्षक तिनका सुन्दर र कोमल चरणलाई ती सर्वदा स्मरण गरिरहन्थे । त्यसैले तिनलाई अखण्ड भक्तियोग प्राप्त भयो कि जसको प्रतापले तिनको अन्तःकरण निर्मल भयो । त्यस पवित्र अन्तःकरण

सबै प्राणीहरूका अन्तर्यामी तथा सर्वव्यापक परमात्मा प्रकट भए र सबैले अन्तर-रहित भएर उनको एकरूपता प्राप्त गरिलिए, राजा प्रियव्रतको अर्की पत्नीबाट पनि उत्तम, तामस र रैवत नामका तीन छोरा भए। ती तीनैजना मन्वन्तरका स्वामी मानिए ॥२७।२८॥ यस प्रकार उनका पूर्वोक्त तीन पुत्र मोक्षमार्गका अनुगामी भए, तर महाराज प्रियव्रतले एघार अर्बुद वर्षसम्म पृथ्वीको भोग गरे। तिनमा निरन्तर उत्कट पौरुष पूर्णरूपले भरिएको थियो। ती आफ्ना दुवै भुजाले तानिएका प्रत्यञ्चाको शब्दले नै धर्मविरोधीहरूको संहार गरिदिन्थे। उनकी प्रियतमा रानी बर्हिष्मती नित्य बढ्दै जाने स्नेहवश हर्षपूर्वक उनीसित भेट्तथिन्। ती अरु बेला पनि हंस झैं ढल्किन्दै नारीजनको योग्य हाउ-भाउ देखाउँथिन्। ती लज्जापूर्ण आधा खुलेका ओंठले हास्यपूर्वक हेर्दथिन् र कुनै-कुनै बेला मनोहर हास्यका कुरा बोल्दथिन्। तिनका सबै काम मनोरम थिए। यी सबैले गर्दा प्रियव्रतको विवेक दबिए झैं ज्ञात हुन्थ्यो। ती अज्ञानी जस्ता देखिन्थे, तर यथार्थमा ठूला, धीर र गम्भीर थिए ॥२९॥ निरन्तर भगवान्‌को उपासना गर्दै रहनाले तिनको प्रभाव यति बर्ता

श्रीमच्चरणारविन्दाविरतस्मरणाविगलितपरमभक्तियोगानुभावेन परिभावितान्तर्हृदयाधिगते भगवति सर्वेषां भूतानामात्मभूते प्रत्यगात्मन्येवात्मन- स्तादात्म्यविशेषेण समीयुः ॥ २७ ॥ अन्यस्यामपि जायायां त्रयः पुत्रा आसन्नुत्तमस्तामसो रैवत इति मन्वन्तराधिपतयः ॥ २८ ॥ एवमुपशमा- यनेषु स्वतनयेष्वथ जगतीपतिर्जगतीमर्बुदान्येकादश परिवत्सराणामव्याहताखिलपुरुषकारसारसंभृतदोर्दण्डयुगलापीडितमौर्वीगुणस्तनितविरमित- धर्मप्रतिपक्षो बर्हिष्मत्याश्चानुदिनमेधमानप्रमोदप्रसरणयौषिण्यव्रीडाप्रमुदितहासावलोकरुचिरक्ष्वेल्यादिभिः पराभूयमानविवेक इवानवबुध्यमान इव महामना बुभुजे ॥२९॥ यावदवभासयति सुरगिरिमनुपरिक्रामन्भगवानादित्यो वसुधातलमर्धेनैव प्रतपत्यर्धेनावच्छादयति ॥ तदा हि भगवदुपा- सनोपचितातिपुरुषप्रभावस्तदनभिनन्दन्समजवेन रथेन ज्योतिर्मयेन रजनीमपि दिनं करिष्यामीति सप्तकृत्वस्तरणिमनुपर्यक्रामद्द्वितीय इव पतङ्गः ॥३०॥ ये वा उ ह तद्रथचरणनेमिकृतपरिखातास्ते सप्त सिन्धव आसन्यत एव कृताः सप्त भुवो द्वीपाः ॥ ३१ ॥ जम्बूप्लक्षशाल्मलिकुशक्रौञ्चशाक- पुष्करसंज्ञास्तेषां परिमाणं पूर्वस्मात्पूर्वस्मादुत्तर उत्तरो यथासंख्यं द्विगुणतामनेन बहिः समंतत उपक्लृप्ताः ॥ ३२ ॥ क्षारोदेक्षुरसोदघृतोदक्षी-

बढ्दै गएको थियो कि त्यस्तो महत्त्व अन्य कुनै पुरुषलाई प्राप्त हुन सकेको थिएन। एक दिन उनले विचार गरे—सुमेरु पर्वतको परिक्रमा गर्दै जब भगवान् सूर्य उज्यालो पार्दछन्, तब आधा नै भूतललाई प्रकाशित गर्दछन् र आधालाई अन्धकारले ढाकिराख्दछ। यस स्थितिलाई उनले राम्रो मानेनन् र सङ्कल्प गरे—सूर्य-रथ जस्तै वेग हुने आफ्नो तेजोमय रथले म रात्रिलाई पनि दिन नै पारिदिन्छु। यति विचारेर उनले अर्को सूर्यको समान दिनकरको पछि-पछि सातपल्ट चक्कर लगाए ॥३०॥ जब राजा प्रियव्रत यस्तो गर्नलागे तब ब्रह्माजीले उनलाई रोके र भने—यो तिम्रो काम होइन, तर तिनको रथको पांग्राले जुन खाल्डो बनिसकेका थिए, तिनै सात समुद्र भएर पृथिवीको सात भाग (खण्ड) हुन गयो। तिनै सात द्वीप कहिन्छन् ॥३१॥ ती सातै द्वीपको नाम हो—जम्बु, प्लक्ष, शाल्मलि, कुश, क्रौञ्च, शाक र पुष्कर। तिनको परिमाण क्रमशः पहिलो भन्दा दोस्रोको दोब्बर छ र आफूभन्दा पहिलो द्वीपको अन्तर हुने समुद्रका चारैतिर अन्तर बनेका छन् ॥३२॥ क्षारोद, इक्षुरसोद, सुरोद, घृतोद, क्षीरोद, दधिमण्डोद र शुद्धरसोद यो सात समुद्र छन्। यी सातै द्वीपहरूको

परिखा (खाल्डा) हरूको समान छन् । परिमाणमा ती भित्री द्वीपको बराबरी छन् र तिनीबाट प्रत्येक परिखामा एक-एक द्वीप चारैतिर भिन्न-भिन्न स्थित छन् । ती जम्बु, प्लक्षादि सातै द्वीपबाट बर्हिष्मतीका पति महाराज प्रियव्रतले आफ्ना आज्ञाकारी छोराहरूलाई दिए । यस प्रकार ती द्वीपहरूका क्रमशः आग्नीध्र, इध्मजिह्व, हिरण्यरेता, घृतपृष्ठ, मेधातिथि र वीतिहोत्र राजा भए ॥३३॥ प्रियव्रतले ऊर्जस्वती नामकी कन्या शुक्रलाई दिए, जसबाट देवयानी नामकी कन्या भइन् ॥३४॥ जुन विष्णुभक्त विष्णुभगवान्का चरणकमलको धूलोले पाँच ज्ञानेन्द्रिय र मनलाई जितिसकेका थिए, तिनमा यस्ता पुरुषार्थ हुनु आश्चर्यको कुरा होइन । ती भगवान् यस्ता छन् कि एकपल्ट उनको शरणपरेपछि चाण्डाललाई पनि तुरुन्त संसार बन्धनबाट मुक्ति मिल्दछ ॥३५॥ अतुलित बल-पराक्रम युक्त राजा प्रियव्रत शान्ति प्राप्त गर्नका लागि एक दिन नारदजीको शरणमा गए, ती प्रपंचमा अल्झनाले शान्ति पाउन सकेनन् । अनि मनमनै विरक्त जस्तै भएर भन्न लागे—॥३६॥ 'अहो ! यो मैले राम्रो गरिन ! मेरा विषय-लोलुप इन्द्रियहरूले मलाई अविद्याजनित विषम विषयरूपी

रोदधिमण्डोदशुद्धोदाः सप्त जलधयः सप्त द्वीपपरिखा इवाभ्यन्तरद्वीपसमाना एकैकश्येन यथानुपूर्वं सप्तस्वपि बहिर्द्वीपेषु पृथक् परित उपकल्पितास्तेषु जम्ब्वादिषु बर्हिष्मतीपतिरनुव्रतानात्मजानग्नीध्रेध्मजिह्वयज्ञबाहुहिरण्यरेतोघृतपृष्ठमेधातिथिवीतिहोत्रसंज्ञान्यथासंख्येनैकैकस्मिन्नेकमेवाधिपतिं विदधे ॥ ३३ ॥ दुहितरं चोर्जस्वतीं नामोशनसे प्रायच्छद्यस्यामासीद्देवयानीनाम काव्यसुता ॥ ३४ ॥ नैवंविधः पुरुषकार उरुक्रमस्य पुंसां तदङ्घ्रिरजसा जितषड्गुणानाम् ॥ चित्रं विदूरविगतः सकृदाददीत यन्नामधेयमधुना स जहाति बन्धम् ॥ ३५ ॥ स एवमपरिमितबलपराक्रम एकदा तु देवर्षिचरणानुशयनानुपतितगुणविसर्गसंसर्गेणानिर्वृतमिवात्मानं मन्यमान आत्मनिर्वेद इदमाह ॥ ३६ ॥ अहो असाध्वनुष्ठितं यदभिनिवेशितोऽहमिन्द्रियैरविद्यारचितविषमविषयान्धकूपे तदलमलममुष्या वनिताया विनोदमृगं मां धिग्धिगिति गर्हयाञ्चकार ॥ ३७ ॥ परदेवताप्रसादाधिगतात्मप्रत्यवमर्शेनानुप्रवृत्तेभ्यः पुत्रेभ्यः इमां यथादायं विभज्य भुक्तभोगां च महिषीं मृतकमिव सहमहाविभूतिमपहाय स्वयं निहितनिर्वेदो हृदि गृहीतहरिविहारानुभावो भगवतो नारदस्य पदवीं पुनरेवानुससार ॥ ३८ ॥ तस्य ह वा एते श्लोकाः—प्रियव्रतकृतं कर्म को नु कुर्याद्विनेश्वरम् ॥ यो नेमिनिम्नैरकरोच्छायां घ्नन्सप्त वारिधीन् ॥३९॥ भूसंस्थानं कृतं येन सरिद्गिरिवनादिभिः ॥ सीमा च भूतनिर्वृत्यै द्वीपे द्वीपे विभागशः ॥ ४० ॥

अन्ध-कूपमा घुचेदिदियो । विषयभोग त धेरै भोगियो । स्त्रीका क्रीडा-मृगस्वरूप मलाई धिक्कार छ । यस प्रकार उनले आफ्नो स्वयं भर्त्सना गरे ॥३७॥ त्यसपछि परमदेवता श्रीहरिका कृपाले आत्मचिन्तनमा लागेर आफ्ना छोराहरूलाई सबै पृथ्वी यथायोग्य रीतिले बाँडेर जोसित विविध प्रकारका भोग भोगेका थिए, ती राजमहिषीलाई पनि छोराहरूकै हातमासुम्पेर आफ्नो महान् ऐश्वर्य सहित सबै राज्य मृतक शरीर झैं त्यागे र हृदयमा वैराग्य धारण गरेर भगवान्का लीलाहरूको परिशीलन गर्दै महामुनि नारदजीले अति दिएकै बाटाका अनुसरण गर्नलागे ॥३८॥ ती महाराज प्रियव्रतको सम्बन्धमा यो श्लोक प्रसिद्ध छ—राजा प्रियव्रतले गरेका कर्मलाई ईश्वर बाहेक अरु कुन प्राणी गर्न सक्नेछ ? उनले आफ्नो रथको पांग्राले बनेका लीकहरू द्वारा सात समुद्र बनाएका थिए ॥३९॥ उनले मनुष्यहरूलाई सुखी पार्नका निम्ति द्वीप नामले पृथिवीका अनेक भाग पारे र प्रत्येक भागमा

4161

भिन्न-भिन्न नदी, पर्वत तथा वन आदिद्वारा त्यसको सीमानिर्धारित गरिदिए ॥४०॥ भगवद्भक्तहरूका निमित्त प्रिय राजराजेश्वर प्रियव्रतले आफ्ना कर्मयोगद्वारा प्राप्त हुने पृथ्वी, स्वर्ग र मनुष्यका भोगहरूलाई नरक तुल्य ठाने ॥ ४१ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे नेपाली भाषाटीकायां प्रथमोऽध्यायः ॥१॥ ( राजा आग्नीध्र र पूर्वचित्तिको परस्पर भेट ) शुकदेवजी भन्नुहुन्छ—यस प्रकार आफ्ना पिता महाराज प्रियव्रत तपस्यामा लागेपछि राजा आग्नीध्र पिताको आज्ञा पालन गर्दै धर्ममा दृष्टि राखेर जम्बूद्वीपमा निवास गर्ने सम्पूर्ण प्रजालाई पुत्र समान ठानेर रक्षा गर्न लागे ॥१॥कुनै समय ती पितृलोक प्राप्तिको कामनाले अर्थात् सत्पुत्र पाउनको निम्ति सुर-सुन्दरीहरूको क्रीडास्थली मन्दराचल पर्वतको कन्दरामा

भौमं दिव्यं मानुषं च महित्वं कर्मयोगजम् ॥ यश्चक्रे निरयौपम्यं पुरुषानुजनप्रियः ॥ ४१ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे प्रियव्रतविजये प्रथमोऽध्यायः ॥ १ ॥ श्रीशुक उवाच ॥ एवं पितरि संप्रवृत्ते तदनुशासने वर्तमान आग्नीध्रो जम्बूद्वीपौकसः प्रजा औरसवद्धर्मावेक्षमाणः पर्यगोपायत ॥ १ ॥ स च कदाचित्पितृलोककामः सुरवरवनिताक्रीडाचलद्रोण्यां भगवन्तं विश्वसृजां पतिमाभृतपरिचर्योपकरण आत्मैकाग्र्येण तपस्व्याराधयाम्बभूव ॥ २ ॥ तदुपलभ्य भगवानादिपुरुषः सदसि गायन्तीं पूर्वचित्तिं नामाप्सरसमभियापयामास ॥ ३ ॥ सा च तदाश्रमोपवनमतिरमणीयं विविधनिबिडविटपिविटपनिकरसंश्लिष्टपुरटलतारूढस्थलविहङ्गममिथुनैः प्रोच्यमानश्रुतिभिः प्रतिबोध्यमानसलिलकुक्कुटकारण्डवकलहंसादिभिर्विचित्रमुपकूजितामलजलाशयकमलाकरमुपबभ्राम ॥ ४ ॥ यस्याः सुललितगमनपदविन्यासगतिविलासायाश्चानुपदं खणखणायमान-

गए र सबै पूजन सामग्री जोरेर एकाग्र-चित्तले तपोनिष्ठभावपूर्वक प्रजापतिहरूका पति श्रीब्रह्माजीको आराधना गर्नलागे ॥ २ ॥ आदिदेव भगवान् ब्रह्माजीले आग्नीध्रको इच्छा जानेर आफ्नो सभामा गान गर्ने पूर्वचित्ति नामकी अप्सरालाई उनको नगीच पठाइदिए ॥ ३ ॥ त्यो अप्सरा आग्नीध्रको आश्रमको नगीच भएको उपवनमा सानन्द डुल्न लागी । त्यहाँ अनेक थरिका बाक्लो वृक्षका शाखाहरूको समूहमा टाँसिएका सुवर्णमयी लतामाथि बसेका स्थलचारी मयूरादि पक्षिहरूका जोडी कलरव गरिरहेका थिए । त्यो सुनेर प्रसन्न जलकुक्कुट तथा कलहंस आदि जलपक्षीहरूले विविध बोली बोल्नाले त्यहाँको कमल वनले सुशोभित सरोवर गुन्जायमान भइरहेको थियो ॥ ४ ॥ तिनको मनोहारिणी गतिविधि तथा पाद-क्षेपले

*दृष्टान्त (बाबुको प्रेम बाँच्ने छोरो)—दौरा केटोको कुचालले घरका बहान दिक्क थिए । केटो बिग्रँदा बिग्रँदै राम्रै बिग्रियो । अब त्यो गाउँलेहरूलाई पनि कष्ट दिन लाग्यो । त्यसले सबै दिक्क भए र सबैजना एकत्र भएर निश्चय गरे—'यसलाई गाउँबाट धपाइदिनु पर्छ ।' यस विषयमा त्यसका पिताजिउ पनि सल्लाह लिइयो । पिता पनि त्यसको चाला देखेर दुःखी थियो । अतः उसले पनि स्वीकार गऱ्यो । अब सबैको हस्ताक्षर गराउन लागे र अधिकांश व्यक्तिले हस्ताक्षर पनि गरिदिए । अन्त्यमा सबैजना त्यसका पिताको हस्ताक्षर लिन गए । त्यो सम्झेर दुःखी भयो । सही गर्दा त्यसका हातको कलम काम्न लाग्यो । गाउँलेहरूले बुझाए—यो आश्चर्यको मोह किन ? यस्तो दुष्ट केटोलाई घरमा राखेर तिमी पूरा गाउँको इज्जत बिगारिरहेका छौ ।' बाबुले केही भन्यो—'यो जस्तो भए पनि छोरो हो । पुत्र कुपुत्र हुन सक्छ, तर पिता कुपिता हुन सक्दैन । अतः म तपाईंहरूसित दुई महीनाको अवधि माग्दछु । यदि यस दुई महीनामा पनि यो सुध्रेन भने म हस्ताक्षर गरिदिने छु ।' यो सबै कुरा त्यो केटोले सामुन्ने नै सुनिरहेको थियो । अतएव त्यसको मनमा पूर्ण सद्विचारको उदय भयो । त्यो सबैका समक्ष पिताका पाउमा घोप्टियो र भन्न लाग्यो—'पिताजी ! म जस्तो दुष्ट पुत्रको लागि हजुरलाई यति धेरै प्रेम छ ! म जस्ता पापी जन नै दुनियाँलाई कष्ट दिन्छन् । कहाँ राजा शान्तनुको पुत्र भीष्म र दशरथका पुत्र राम । उनले सबैलाई सुख दिए तर दुर्योधन तथा म जस्ता कुपुत्रहरूले सबैलाई सताएको छ । धिक्कार छ हामी जस्तालाई र धन्यवाद छ—राम-भीष्म जस्ता सुपुत्रलाई । त्यसै बेला देखि त्यसको हृदय पग्लियो र त्यो र सबैका लागि सधियो ।

विलासले पद-पदमा छम-छम गर्ने नूपुर आदि पाउका गहनाहरूको मनोहर ध्वनि सुनेर राजकुमार आग्नीध्रले समाधियोग द्वारा चिम्लिएका आफ्ना दुवै नेत्र अलिकति खोलेर हेर्दा त नजीकै उनलाई पूर्वचित्ति उभिएकी देखिई ॥ ५ ॥ त्यो भ्रमरी झैं बोटा फूलनेर गएर त्यसलाई सुँघ्थी र देवता तथा मनुष्यहरूको मन र नेत्रलाई आनन्दित पान भएकी आफ्नो गति, क्रीडा, लज्जा, विनय, चितवन, मधुर स्वरलहरी, मृदुवाणी तथा अंगका बनावटले सबैको हृदयमा कामदेव प्रविष्ट पार्नको निम्ति बाटो झैं बनाइरहेकी थिई-जब हास्यपूर्ण वार्ताका मौकामा त्यसको मुखबाट निस्कने अमृतमय सुगन्धले अन्धा भएर भ्रमरा त्यसको मुखकमल घेरि लम्के र त्यो भ्रमरबाट जोगिन छिटो-छिटो पाइला चालेर हिंड्दा त्यसका दुवै कुच,वेणी तथा हल्लने कन्धनी साह्रै नै राम्रो लाग्दथ्यो । त्यसलाई देख्नाले भगवान् कामदेवलाई आग्नीध्रको चित्तमा प्रवेश गर्ने अवसर प्राप्त भयो, त्यसले महामुनि आग्नीध्र जड जस्तै भएर भन्नलागे ॥६॥ हे मुनिवर ! तिमी को हौ ? र यस पर्वतमा के गर्न आएका हौ ? तिमी परम पुरुष भगवान्‌का कुनै माया त होइनौ ? तिमीले विनाप्रत्यञ्चाका यी दुइ धनुष केकोनिम्ति

रुचिरचरणाभरणाभरणस्वनमुपाकर्ण्य नरदेवकुमारः समाधियोगेनामीलितनयननलिनमुकुलयुगलमीषद्विकचय्य व्यचष्ट ॥ ५ ॥ तामेवाविदूरे मधुकरीमिव सुमनस उपजिघ्रतीं दिविजमनुजमनोनयनाह्लाददुघैर्गतिविहारव्रीडाविनयावलोकसुस्वराक्षरावयवैर्मनसि नृणां कुसुमायुधस्य दिवधतीं विवरं निजमुखविगलितामृतासवसहासभाषणामोदमदान्धमधुकरनिकरोपरोधेन द्रुतपदविन्यासेन वल्गुस्पन्दनकलशाबरभाररशनां देवीं तदवलोकनेन विवृतावासरस्य भगवतो मकरध्वजस्य वशमुपनीतो जडवदिति होवाच ॥ ६ ॥ का त्वं चिकीर्षसि च किं मुनिवर्य शैले मायाऽसि काऽपि भगवत्परदेवतायाः ॥ विज्ये बिभर्षि धनुषी सुहृदात्मनोऽर्थे किं वा मृगान्मृगयसे विपिने प्रमत्तान् ॥ ७ ॥ बाणाविमौ भगवतः शतपत्रपत्रौ शान्तावपुंखरुचिरावतितिग्मदन्तौ ॥ कस्मै युयुङ्क्षसि वने विचरन्न विद्मः क्षेमाय नो जडधियां तव विक्रमोऽस्तु ॥ ८ ॥ शिष्या इमे भगवतः परितः पठन्ति गायन्ति साम सरहस्यमजस्रमीशम् ॥ युष्मच्छिखाविलुलिताः सुमनोऽभिवृष्टीः सर्वे भजन्त्यृषिगणा इव वेदशाखाः ॥ ९ ॥ वाचंपरं चरणपञ्जरतित्तिरीणां ब्रह्मन्नरूपमुखरां शृणवाम तुभ्यम् ॥ लब्धा कदम्बरुचिरङ्कविटङ्कबिम्बे यस्यामलातपरिधिः क्व च वल्कलं ते ॥ १० ॥ किं संभृतं रुचिरयोर्द्विज शृङ्गयोस्ते मध्ये कृशो वहसि यत्र दृशः श्रिता मे ॥ पङ्कोऽरुणः सुरभिरात्मविषाण ईदृग् येनाश्रमं सुभग मे सुरभी-

धारण गरिराखेका छौ ? के तिमी यस वनमा मत्त भएका मृगहरूको शिकार गरिरहेका छौ ? ॥७॥ तिम्रा जुन यी कमलदलरूपी पाँख हुने दुइ शान्त एवं पुंखहीन, अति राम्रा एवं तीक्ष्ण बाण छन् तिनलाई यस वनमा डुल्दै तिमी कसमाथि प्रहार गर्न खोज्दैछौ ? हामी यहाँ तिम्रा कुनै प्रतिपक्षी पनि त देख्दैनौं । तिम्रो यो पराक्रम हामी झैं जड-बुद्धि भएका व्यक्तिहरूको कल्याण गरोस॥८॥ हे भगवन् ! हजुरका यी अगणित शिष्यगण जो विद्याध्ययन गरिहेछन्, यो रहस्ययुक्त सामगान र ईश्वरको आराधना गर्दैछन् । यी ऋषिजस्तै वेदका शाखाहरूको सेवन गर्दछन्, त्यस्तै नै हजुरको टाकुराबाट झरेका पुष्पहरू पनि सेवन गरिरहेका छन् ॥९॥ हे ब्रह्मन् ! हजुरका चरणरूपी पिंजरामा बन्द तित्राहरूको शब्द स्पष्ट सुनिन्छ परन्तु तिनको रूप देखिन्न । जसमा बल्दो अङ्गारको मण्डप झैं बनेको छ, अतः यो कदम्ब-कुसुमको आभा हजुरका नितम्बमा कहाँबाट आएर उपस्थित भए तथा वल्कल वस्त्र कहाँ

गयो ? ॥१०॥ हे द्विज ! हजुरका यी दुवै सुन्दर सींग (कुच) मा के भरिएका छ ? आहा ! इनका मध्य भाग निकै कृश छ त्यसमा पनि मेरा दृष्टि त्यहाँबाट हट्न नसकेर लिइरहेका छैन । यी सींग माथि हजुरले यो रातो-रातो हीलो जस्तो के लगाउनु भएको छ, जसले हजुर मेरो आश्रमलाई सुरभित पार्दै हुनुहुन्छ ॥ ११ ॥ हे सुहृत्तम ! जहाँका निवासी आफ्नो वक्षस्थलमा हामी जस्ता पुरुषहरूको चित्तलाई लोभ्याउने अवयव, मुखमा अतिशय अद्भुत हाव भाव, सरस भाषण एवं अधर-सुधा आदि धारण गरिराख्दछन्, त्यो आफ्नो लोक हामी-लाई पनि देखाउनु हवस् ॥१२॥ हे प्रिय ! हजुरको जीविकावो के साधन छ ! हजुर के खानु हुन्छ, जसले हजुरको मुखबाट हवन-सामग्रीको सुगन्ध आइरहेको छ । मलाई त यस्तो ज्ञात भइरहेको छ कि हजुर साक्षात् विष्णुभगवानको कला हुनुहुन्छ । त्यसैले त हजुरका कानमा निमेष-विहीन दुइ मकराकृति कुण्डल झुलिरहेका छन् । हजुरको मुख सुन्दर सरोवर जस्तै छ । त्यसमा भयवश चंचल नेत्ररूपी दुइ माछा खेल्दैछन् । हजुरका दन्तपंक्ति हाँसझैं शोभित भइरहेका छन् र हजुरका घुँघुरिएका अलकावली भ्रमरका समूह झैं शोभित छन् ॥१३॥हजुरले

करोषि ॥ ११ ॥ लोकं प्रदर्शय सुहृत्तम तावकं मे यत्रत्य इत्थमुरसावयवावपूर्वौ ॥ अस्मद्विधस्य मन उन्नयनौ बिभर्ति बह्वद्भुतं सरसराससुधादि-वक्त्रे ॥ १२ ॥ का वाऽऽत्मवृत्तिरदनाद्धविरङ्ग वाति विष्णोः कलास्यनिमिषोन्मकरौ च कर्णौ ॥ उद्विग्नमीनयुगलं द्विजपङ्क्तिशोचिरासन्नभृङ्ग-निकरं सर उन्मुखं ते ॥ १३ ॥ योऽसौ त्वया करसरोजहतः पतङ्गो दिक्षु भ्रमन्भ्रमत एजयतेऽक्षिणी मे ॥ मुक्तं न ते स्मरसि वक्रजटावरूथं कष्टोऽनिलो हरति लम्पट एष नीवीम् ॥ १४ ॥ रूपं तपोधन तपश्चरतां तपोघ्नं ह्येतत्तु केन तपसा भवतोपलब्धम् ॥ चर्तुं तपोऽर्हसि मया सह मित्र मह्यं किं वा प्रसीदति स वै भवभावनो मे ॥ १५ ॥ न त्वां त्यजामि दयितं द्विजदेवदत्तं यस्मिन्मनो दृगपि नो न वियाति लग्नम् ॥ मां चारुशृङ्ग्यर्हसि नेतुमनुव्रतं ते चित्तं यतः प्रतिसरन्तु शिवाः सचिव्यः ॥१६॥ श्रीशुक उवाच ॥ इति ललनानुनयातिविशारदो ग्राम्यवैदग्ध्यया परिभाषया तां विबुधवधूं विबुधमसभाजयामास ॥ १७ ॥ सा च ततस्तस्य वीरयूथपतेर्बुद्धिशीलरूपवयःश्रियौदार्येण परिक्षिप्तमनास्तेन सहायुतायुतपरिवत्सरोपलक्षणं कालं जम्बूद्वीपपतिना भौमस्वर्गभोगान्बुभुजे ॥ १८ ॥ तस्यामु ह वा आत्मजान्स राजवर आग्नीध्रो नाभिकिंपुरु-

करकमलद्वारा थाप दिएर यहाँ जो कन्दुक उफार्नु हुँदैछ, त्यो सबै दिशा-विदिशाहरूमा जाँदै मेरा आँखामा चञ्चलता उत्पन्न गरिरहेको छ । हजुरको घुँघुरिको जटा फुस्केको छ, के यस्को हजुरलाई केही पनि ख्याल छैन ? ओहो ! ठूलो खेदको कुरा छ—यो लम्पट वायु बारम्बार हजुरको नीवी (कटिवस्त्र) लाई हटाइदिने गर्दछ ॥१४॥ हे तपोधन ! तपस्वीहरूको तप नष्ट पारिदिने भएको यो सुन्दर स्वरूप हजुरले कुन तपस्याको बलले प्राप्त गर्नुभएको हो ? हे मित्र ! अब हजुर मसित बसेर तपस्या गर्नुहवस् । के भवभावन ब्रह्माले प्रसन्न भएर तिमीलाई यहाँ पठाउनु भएका पो ? ॥१५॥ हे प्रिय ! अब म हजुरलाई छाड्न सक्तिन, किनकि तिमीमा मेरो नेत्र रमाइसकेको छ र मेरो चित्त हजुरलाई छाडेर अन्त जाँदैन । हे राम्रा सींग हुने ऋषि ! अब तिमी मनलागेको ठाउँमा म अनुचरलाई लिएर हिंड र तिम्रा यी मङ्गलमयी सखीहरू पनि मसित हिंडुन् ॥१६॥ शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! यस प्रकार स्त्रीहरूलाई फकाउन निकै बाठा र देवताहरूका समान बुद्धिमान् राजा आग्नीध्रले विषयी पुरुष झैं भाँति कुरा गर्दै त्यस अप्सरालाई प्रसन्न तुल्याए ॥१७॥ त्यसपछि वीरशिरोमणि आग्नीध्रका बुद्धि, शील,

रूप, अवस्था, तेज, श्री तथा उदारता आदि गुणहरूमा विमुग्ध भएर अप्सरा जम्बूद्वीपपतिसित हजारौं वर्षसम्म पृथिवी तथा स्वर्गका विभिन्न भोगहरू भोग्दैरही ॥१८॥ राजा आग्नीध्रले त्यस अप्सरासित नाभि, किम्पुरुष, हरिवर्ष, इलावृत, रम्यक, हिरण्मय, भद्राश्व तथा केतुमाल नामका नौ पुत्र उत्पन्न गरे ॥१९॥ यस प्रकार वर्षनि एकेकको क्रमले नौ पुत्र उत्पन्न गरेर पूर्वचित्ति अप्सरा महाराज आग्नीध्रलाई राजभवनमै छाडेर फेरि ब्रह्माजीकहाँ फर्किए ॥२०॥ आग्नीध्रका नौ पुत्र आफ्नो आमाको कृपाले स्वभावैले सुदृढ शरीर बलवान् थिए। तीं आफ्ना पिताले बाँडिदिएको आफ्नै नाम भएका जम्बूद्वीपको भूखण्डको राज्य गर्नलागे ॥२१॥ महाराज आग्नीध्रले दिनहुँको भोगले अतृप्त रहेर त्यस अप्सरालाई नै परम पुरुषार्थ मान्दै वैदिक कर्महरू द्वारा अन्त्यमा उही लोक पाए, जहाँ पितृहरू आफाफ्ना सुकृतिको तारतम्यले विविध भोगमा व्यस्त रहन्छन् ॥ २२ ॥ पिता परलोक गएपछि नाभि आदि नवै भाइहरूले सुमेरुकी पुत्री मेरुदेवी, प्रतिरूपा, उग्रदंष्ट्री, लता, रम्या, नारी, भद्रा र देववीति नामका नौ कन्याको पाणिग्रहण गरे ॥ २३ ॥ इति श्रीमद्भागवते महापुराणे पंचम स्कन्धे

षहरिवर्षेलावृतरम्यकहिरण्मयकुरुभद्राश्वकेतुमालसंज्ञान्नव पुत्रानजनयत् ॥ १९ ॥ सा सूत्वाऽथ सुतान्नवानुवत्सरं गृह एवापहाय पूर्वचित्तिर्भूय एवाजं देवमुपतस्थे ॥ २० ॥ आग्नीध्रसुतास्ते मातुरनुग्रहादौत्पत्तिकेनैव संहननबलोपेताः पित्रा विभक्ता आत्मतुल्यनामानि यथाभागं जम्बूद्वीपवर्षाणि बुभुजुः ॥ २१ ॥ आग्नीध्रो राजाऽतृप्तः कामानामप्सरसमेवानुदिनमधिमन्यमानस्तस्याः सलोकतां श्रुतिभिरवारुन्ध यत्र पितरो मादयन्ते ॥ २२ ॥ सम्परेते पितरि नव भ्रातरो मेरुदुहितॄर्मेरुदेवीं प्रतिरूपामुग्रदंष्ट्रीं लतां रम्यां श्यामां नारीं भद्रां देववीतिमिति संज्ञा नवोदवहन् ॥ २३ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे आग्नीध्रवर्णनं नाम द्वितीयोऽध्यायः ॥ २ ॥ श्रीशुक उवाच ॥ नाभिरपत्यकामोऽप्रजया मेरुदेव्या भगवन्तं यज्ञपुरुषमवहितात्माऽयजत ॥ १ ॥ तस्य ह वाव श्रद्धया विशुद्धभावेन यजतः प्रवर्ग्येषु प्रचरत्सु द्रव्यदेशकालमन्त्रर्त्विग्दक्षिणाविधानयोगोपपत्त्या दुरधिगमोऽपि भगवान् भागवतवात्सल्यतया सुप्रतीक आत्मानमपराजितं निजजनाभिप्रेतार्थविधित्सया गृहीतहृदयो हृदयङ्गमं मनोनयनानन्दनावयवाभिराममाविश्चकार ॥ २ ॥ अथ ह तमाविष्कृतभुजयुगलद्वयं हिरण्मयं पुरुषविशेषं कपिशकौशेयाम्बरधरमुरसि विलसच्छ्रीवत्सललामं दरवरवनरुहवनमालाच्छूर्यमृतमणिगदादिभिरुपलक्षितं स्फुटकिरणप्रवरमुकुटकुंडलकटककटिसूत्रहारकेयूरनूपुराद्यङ्गभूषणविभूषितमृत्विक्सदस्यगृहपतयोऽ-

द्वितीयोऽध्यायः ॥ २ ॥ ( राजा आग्नीध्रका छोरा नाभिको चरित्र)–श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! राजा आग्नीध्रका छोरा नाभिले आफ्नी रानीसित पुत्रको कामनाले एकाग्रतापूर्वक भगवान् यज्ञ पुरुषको आराधना गरे ॥ १ ॥ श्रद्धापूर्वक र शुद्धभावले इनको आराधना गरेपछि जुन भगवान् द्रव्य, देश, काल, मन्त्र, ऋत्विक्, दक्षिणा र विधान आदि सामग्रीहरूले दुष्प्राप्य थिए, तिनै आफ्नो भक्तवत्सलताले गर्दा आफ्ना भक्त नाभिको इच्छित कार्य सम्पन्न गर्नका निम्ति अनुष्ठान भइरहेको बेला आफ्नो स्वरूपलाई मन र नेत्रानन्ददायक अंगले युक्त अतिशय सुन्दररूपमा प्रकट गरिदिए ॥ २ ॥ जब नाभिका चार भुजाले युक्त परम तेजस्वी पुरुषविशेषलाई उपस्थित देखे–जो आफ्नो शरीरमा रेशमी पीताम्बर धारण गरेका थिए, जसको वक्षस्थलमा मनोहर श्रीवत्सचिन्ह सुशोभित थियो, जसका भुजाहरूमा उत्तम शङ्ख चक्र, गदा, पद्म र घाँटीमा वनमाला र कौस्तुभमणिको अनुपम शोभा थियो सारा शरीर

सबै अङ्गका शोभा बढाउने, अतिशय कान्ति सम्पन्न, किरणमण्डित मनोहर मुकुट, कुण्डल, कटक, कटिछत्र, हार, केयूर, तथा नूपुर आदि आभूषणहरूले आभूषित थिये। त्यस रूपलाई देख्नासाथ सबै ऋत्विक्, सदस्य र यजमान आदि यस्ता आह्लादित भए कि जस्तै कुनै निर्धन पुरुष उत्तम धनराशि पाएर पुलकित भएको होस्। तब आदरपूर्वक मस्तक न्युराएर ती विविध प्रकारका सामग्रीहरूले तिनको पूजा गर्नलागे ॥३॥ ऋत्विग्हरू भन्दछन्—हे प्रभो! हामी हजुरका अनुगामी भक्त हौं र हजुर हाम्रा पूजनीय देवता। अतएव हामी पुनः पुनः हजुरलाई नमस्कार गर्दछौं। महापुरुषले हामीलाई केवल यही उपदेश दिएका छन्, किनकि प्राकृतिक गुणका कार्यरूपी प्रपञ्चमा बुद्धि अल्झनाले हजुरको गुणगानमा असमर्थ यस्तो कुन पुरुष छ, जो प्रकृति र पुरुष भन्दा भिन्न प्राकृतिक रूपरहित परमेश्वरको विशुद्ध स्वरूपको प्राकृत नाम रूपद्वारा निरूपण गर्न सकोस्? ॥४॥ यदि कोही समस्त

धना इवोत्तमधनमुपलभ्य सबहुमानमर्हणेनावनतशीर्ष्णा उपतस्थुः ॥३॥ ऋत्विज ऊचुः ॥ अर्हसि मुहुरर्हत्तमार्हणमस्माकमनुपथानां नमो नम इत्येतावत्सदुपशिक्षितं कोऽर्हति पुमान्प्रकृतिगुणव्यतिकरमतिरनीश ईश्वरस्य परस्य प्रकृतिपुरुषयोरर्वाक्तनाभिर्नामरूपाकृतिभी रूपनिरूपणम् ॥ ४ ॥ सकलजननिकायवृजिननिरसनशिवतमप्रवरगुणगणैकदेशकथनादृते ॥ ५ ॥ परिजनानुरागविरचितशबलसंशब्दसलिलसितकिसलयतुलसिकादूर्वांकुरैरपि संभृतया सपर्यया किल परम परितुष्यति॥६॥ अथानयापि न भवत इज्ययोरुभारभरया समुचितमर्थमिहोपलभामहे॥७॥ आत्मन एवानुसवनमञ्जसाऽव्यतिरेकेण बोभूयमानाशेषपुरुषार्थस्वरूपस्य किन्तु नाथाशिष आशानानामेतदभिसंराधनमात्रं भवितुमर्हति ॥ ८ ॥ तद्यथा बालिशानां स्वयमात्मनः श्रेयः परमविदुषां परमपुरुषप्रकर्षकरुणया स्वमहिमानं चापवर्गाख्यमुपकल्पयिष्यन्स्वयं नापचित एवेतरवदिहोपलक्षितः ॥ ९ ॥ अथायमेव वरो

जन समूहका दुःखहरू नाश गर्ने हजुरको श्रेष्ठतम गुणको वर्णन गर्ने साहस गर्ला, फेरि त्यो पनि केवल यौटा देशको नै वर्णन गर्न सक्ला ॥ ५ ॥ हे प्रभो! हजुर त आफ्ना भक्तद्वारा गद्‌गद् वाणीमा गरिएको स्तुति, जल, शुद्ध तुलसी पत्र र दूर्वांकुरादि सामग्रीहरू द्वारा गरिएको पूजाले नै सन्तुष्ट हुनुहुन्छ ॥६॥ हामी त अनेक थरिका सामग्रीले युक्त यस यज्ञले पनि हजुरको कुनै प्रयोजन देखिरहेका छैनौं ॥७॥ किनकि हजुर परमानन्द स्वरूपलाई त सबै पुरुषार्थ अभिन्नभावले स्वभावतः प्राप्त रहन्छन्। हे नाथ! हामी विविध वस्तुहरू खोज्नेहरूलाई त यस प्रकार हजुरको आराधना गर्नै पर्दछ ॥८॥ हे पुरुषोत्तम! यद्यपि हामी जस्ता मन्दमति हुने यो जान्न सक्तैनन् कि हाम्रो कल्याण कसरी हुन सक्छ। तथापि अतिशय

८ उदारण ( अन्धो छोरोको उपदेश )—देवशर्मा नामका यौटा ब्राह्मण थिए। तिनकी स्त्रीको नाम थियो सुधर्मा। छोरो नहुनाले पति पत्नी दुवैले तपस्या गर्ने निश्चय गरे। तदनुसार ती धेरैकाल कठोर तपस्या गर्ने लागे र शिवजीलाई प्रसन्न पारेर तिनले यौटा छोरो मागे। तदनुसार छोरो त भयो, तर त्यो अन्धो थियो। जब माता-पिताको उमेर साठी वर्षको भयो, तब बालक पाँच वर्षको भयो। अनि छोरोको यज्ञोपवीत गरेर तिनले पढ्नको निमित्त आश्रममा पठाए। बढेर बालक चार वर्षपछि घर आयो। एक दिन त्यो नेत्रहीन छोरो पिताको नजीकै बसेको थियो। त्यसै बेला पुत्रले पितासित सोध्यो—'पिताजी! कुन पापले मानिस अन्धो हुन्छ?' पिताले उत्तर दिये—'जो मनुष्य पूर्वजन्ममा रत्नको चोरी गरेको हुन्छ, त्यो अर्को जन्ममा अन्धो हुन्छ।' पुत्रले सोध्यो—'हजुरको कुरा सत्य हुन सक्छ, तर मेरो त यस्तो विश्वास छ कि पिताको गुण पुत्रमा आउँछ। अतः मलाई थाहा भइरहेको छ कि हजुर अन्धो हुनाले नै म पनि अन्धो भएको हुँ।' पिताले भन्यो—'म त अन्धो छैन।' छोरोले भन्यो—'हजुरले मुश्किलले शिवजीको आराधना गरेर पनि मोक्ष माग्नु भएन र आफ्नो सारा तपस्या व्यर्थ पार्नुभयो। यस्तो गरेर के हजुर आँखा देख्ने अन्धो बन्नु भएन? पिताजी! हजुरले ब्रह्मास्त्र जस्तो महान् अस्त्र प्राप्त गरेर हरिण मार्नु भयो। यस निमित्त हजुर अन्धोकै समान हुनुहुन्छ।' अन्धो पुत्रको यस्ता वचन सुनेर माता पिता व्यर्थको माया मोह छोडेर भगवान्का भक्त हुन पुगे।

…मोक्ष नामको आफ्नो परमपद दिनको लागि वस्तुतः मद्वारा पूजित नभएर पनि हजुरले अन्य उपास्य देवता झैं दर्शन दिनु भएको छ ॥९॥ हे पूज्यतम प्रभो ! हो राजर्षि नाभिलाई वरदायकहरूमा सर्वश्रेष्ठ हजुरले यस यज्ञशालामा स्वयं आएर जुन हामी भक्तहरूको अगाडि प्रत्यक्ष दर्शन दिनुभयो, यही हाम्रो निम्ति सर्वश्रेष्ठ वरदान हो ॥१०॥ हे प्रभो ! हजुरका गुणगणको गान परम मङ्गलमय छ, अतः जसले असंगभावले प्रज्वलित ज्ञानाग्निद्वारा अन्तःकरणलाई राग-द्वेष आदि समस्त मललाई भस्म पारिसकेको छ तो हजुरका नै सदृश स्वभाव आत्माराम मुनि पनि सर्वदा हजुरकै गुण-गान गर्दछन ॥११॥ अतः हामी हजुरसित यही माग्दछौं कि लड्ने-पछारिने, भोक-प्यास, हाई तथा संकट आदिको अवसरमा एवं ज्वर र मरण आदिका कारण परवश भएर पनि हामी समस्त मल नष्ट पार्ने भक्तवत्सल, दीनबन्धुत्व आदि गुणहरूले सम्पन्न हजुरका नामहरूको उच्चारण गर्दै रहौं ॥ १२ ॥ यसको अतिरिक्त जस्तै निर्धन पुरुष कुनै धनी महापुरुषसँग गएर त्यागित भूस माग्दछ, त्यस्तै नै स्वर्ग-अपवर्ग आदि सबै कामनाहरू पूर्ण गर्नमा समर्थ यी राजर्षि नाभि हजुरकै

बर्हत्तम यर्हि बर्हिषि राजर्षेर्वरदर्षभो भवान्निजपुरुषेक्षणविषय आसीत् ॥ १० ॥ असङ्गनिशितज्ञानानलविधूताशेषमलानां भवत्स्वभावानामात्मारामाणां मुनीनामनवरतपरिगुणितगुणगणपरममङ्गलायनगुणकथनोऽसि ॥ ११ ॥ अथ कथञ्चित्स्खलनक्षुत्पतनजृम्भणदुरवस्थादिषु विवशानां नः स्मरणाय ज्वरमरणदशायामपि सकलकश्मलनिरसनानि तव गुणकृतनामधेयानि वचनगोचराणि भवन्तु ॥१२॥ किंचायं राजर्षिरपत्यकामः प्रजां भवादृशीमाशासान ईश्वरमाशिषां स्वर्गापवर्गयोरपि भवन्तमुपधावति प्रजायामर्थप्रत्ययो धनदमिवाधनः फलीकरणम्॥१३॥को वा इहतेऽपराजितोऽपराजितया माययाऽनवसितपदव्याऽनावृतमतिर्विषयरयानावृतप्रकृतिरनुपासितमहच्चरणः॥१४॥यदु ह वाव तव पुनरदभ्रकर्तरि इह समाहूतस्तत्रार्थधियां मन्दानां नस्तद्देवहेलनं देवदेवार्हसि साम्येन सर्वान्प्रतिवोढुमविदुषाम् ॥ १५ ॥ श्रीशुक उवाच ॥ इति निगदेनाभिष्टूयमानो भगवाननिमिषर्षभो वर्षधराभिवादिताभिवन्दितचरणः सदयमिदमाह ॥ १६ ॥ श्रीभगवानुवाच ॥ अहो बताहमृषयो भवद्भिरवितथगीर्भिर्वरमसुलभमभियाचितो यदमुष्यात्मजो मयासदृशो भूयादिति ममाहमेवाभिरूपः कैवल्यादथापि ब्रह्मवादो न मृषा भवितुमर्हति ममैव हि मुखं यद्द्विजदेवकुलम् ॥ १७ ॥ तत आग्नीध्रीयेंऽशकला-

सदृश पुत्र पाउनको निम्ति आराधना गरिरहेका छ ॥ १३ ॥ किन्तु यो कुनै आश्चर्यको कुरा होइन । महापुरुषका चरणका सेवक भक्तगण बाहेक यस्तो कुन पुरुष छ जो हजुरको अपराजेय तथा अतिशय दुस्तर मायाद्वारा पराजित नभएको होस, उसित उसको बुद्धि अविच्छिन्न भएको छैन र विषयरूपी विषको प्रभावले उसको स्वभाव दूषित भएको छैन ॥१४॥ हे अनेक महान् कार्य गर्ने देवता ! हामी सकाम र मन्दबुद्धि भएकाले यस तुच्छ कार्यको निम्ति हजुरको आवाहन गरेर जुन अनादर गरियो, त्यो अज्ञानीहरूको धृष्टता हजुर क्षमा गरिदिनुस, किनकि हजुर सबैलाई समान भावले हेर्नुहुन्छ! ॥१५॥भगवान्‌ले आज्ञा भयो–हे ऋषीश्वर हो ! यो ठूलो आश्चर्यको कुरा हो–तपाईं सत्यवादी महात्माहरूले मसित दुर्लभ वर माग्नुभयो–राजर्षि नाभिको घर मेरै समान पुत्र होस् । हे मुने ! अद्वितीय हुनाको नाताले अद्वितीय त मनै छु तथापि ब्राह्मणको वचन मिथ्या हुन सक्तैन किनकि ब्राह्मणवंश

मेरो नै सुख हो ।। १७ ।। अतः म स्वयं आफ्नो अंश-कलाले आग्नीध्र-नाभिको घर जन्म लिनेछु, किनकि म अरु कसैलाई पनि आफू समान देख्दिन ।।१८।। श्रीशुकदेवजी भन्नुहुन्छ– हे राजन् ! राजरानी मेरुदेवीको सामुन्ने उनका पति नाभिसित यति भनेर भगवान् अन्तर्धान हुनुभयो ।। १९ ।। हे राजन् ! यस प्रकार त्यस यज्ञमा महर्षिहरु द्वारा प्रसन्न तुल्याइएका भगवान्‌ले महाराज नाभिको प्रिय कार्य गर्न तिनको रनिवासमा महारानी मेरुदेवीको गर्भबाट दिगम्बर संन्यासी तथा ऊर्ध्वरेता मुनिहरुको धर्म प्रचारित गर्नका निम्ति विशुद्ध सत्वमय शरीरले ऋषभदेवको रूपमा जन्म लिए ।।२०।। इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे नाभिचरिते तृतीयोऽध्यायः ।। ३ ।। ( महाराज ऋषभदेवको शासनकाल वर्णन ) शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! जन्मदेखि नै ऋषभदेवलाई भगवान् विष्णुको वज्र, अंकुश आदि चिह्नलाई प्रकट गर्ने अङ्गहरुले युक्त र समता, उपशम, वैराग्य तथा ऐश्वर्य आदि महाविभूतिहरूले गर्दा बढ्दो प्रभावले युक्त देखेर सबै मन्त्रीगण, प्रजाजन, विप्रगण तथा देवताहरूमा दिन-दिनै यो उत्कट अभिलाषा जागृत हुनलाग्यो—यी पनि राज-काज सम्हाल्न

याऽवतरिष्याम्यात्मतुल्यमनुपलभमानः ।। १८ ।। श्रीशुक उवाच ।। इति निशामयन्त्या मेरुदेव्याः पतिमभिधायान्तर्दधे भगवान् ।। १९ ।। बर्हिषि तस्मिन्नेव विष्णुदत्तो भगवान्परमर्षिभिः प्रसादितो नाभेः प्रियचिकीर्षया तदवरोधायने मेरुदेव्यां धर्मान्दर्शयितुकामो वातरशनानां श्रमणानामृषीणामूर्ध्वमन्थिनां शुक्लया तनुवाऽवततार ।। २० ।। इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे नाभिचरिते ऋषभावतारो नाम तृतीयोऽध्यायः ।।३।।
श्रीशुक उवाच ।। अथ ह तमुत्पत्त्यैवाभिव्यज्यमानभगवल्लक्षणं साम्योपशमवैराग्यैश्वर्यमहाविभूतिभिरनुदिनमेधमानानुभावं प्रकृतयः प्रजा ब्राह्मणा देवताश्चावनितलसवनायातितरां जगृधुः ।। १ ।। तस्य ह वाव इत्थं वर्ष्मणा वरीयसा बृहच्छ्लोकेन चौजसा बलेन श्रिया यशसा वीर्यशौर्याभ्यां च पिता ऋषभ इतीदं नाम चकार ।।२।। तस्य हीन्द्रः स्पर्धमानो भगवान्वर्षे न ववर्ष । तदवधार्य भगवानृषभदेवो योगेश्वरः प्रहस्यात्मयोगमायया स्ववर्षमजनाभं नामाभ्यवर्षत् ।।३।। नाभिस्तु यथाभिलषितं सुप्रजस्त्वमवरुध्यातिप्रमोदभरविह्वलो गद्गदाक्षरया गिरा स्वैरं गृहीतनरलोकसधर्मं भगवन्तं पुराणपुरुषं मायाविलसितमतिर्वत्सताततेति सानुरागमुपलालयन्परां निर्वृतिमुपगतः ।। ४ ।। विदितानुरागमापौरप्रकृतिजनपदो राजा नाभिरात्मजं समयसेतुरक्षायामभिषिच्य ब्राह्मणेषूपनिधाय सह मेरुदेव्या विशालायां प्रसन्ननिपुणेन तपसा समाधियोगेन नरनारायणाख्यं भगवन्तं वासुदेवमुपासीन

सक्दछन् ।। १ ।। तिनको सुन्दर शरीर, महती कीर्ति, तेज, बल, ऐश्वर्य, यश, वीर्य तथा शूरवीरता आदि गुणहरूले प्रसन्न पिता नाभिले उनको नाम ऋषभ राखे ।।२।। एक समयको कुरा हो–भगवान् इन्द्रले ईर्ष्यावश ऋषभदेवको राज्यमा वर्षा गरेनन् । यस्तो स्थितिमा योगेश्वर ऋषभदेवले इन्द्रको मूर्खतामा हाँस्तै आफ्नो योगबलले अजनाभखण्डमा खुब पानी पारे । महाराजनाभि त आफ्नो इच्छानुसार छोरो पायर र अत्यन्त आनन्दमग्न भएर आफ्नो इच्छाले नै मानव-शरीरधारी पुराणपुरुष भगवान्‌को माया-विलासले मोहित भएर तिनको प्रेमपूर्वक लालन-पालन गर्दथे तथा 'हे वत्स ! हे तात !' गद्गद् वाणीले यस्तो भन्दै ठूलो प्रसन्नतामा प्राप्त हुन्थे ।। ३ ।। ४ ।। त्यसपछि पुरवासी तथा मन्त्रीगण आदि सबै देशवासी जनताको आफ्नो पुत्रमा दृढ अनुराग देखेर राजा नाभिले समयको मर्यादाको रक्षार्थ ऋषभदेवको राज्याभिषेक गरिदिए । उनको हेर-चाहमा निपुण ब्राह्मणहरू नियुक्त गरी स्वयं मेरु

देवी सहित बदरिकारण्य गए । उहाँ घोर तपस्या तथा समाधियोगले नर-नारायण नामक भगवान् वासुदेवको आराधना गरेर कालक्रमले उनैको स्वरूपमा लीन भए ॥५॥ हे पाण्डवेय ! विद्वान् जनहरू राजा नाभिको विषयमा यी दुइ श्लोक भन्दछन्–राजर्षि नाभिले गरेका उदार कर्महरूको आचरण अरू कुन पुरुषले गर्न सक्तछ ? जसका शुद्ध कार्यहरूले सन्तुष्ट भएर स्वयं भगवान् उनीकहाँ पुत्ररूपमा अवतरित थिए ॥ ६ ॥ महाराज नाभिकै सदृश ब्राह्मण-भक्त पनि अरु को हुन सक्ला ? जसको द्वारा दक्षिणा आदिले पूजित विप्रगणले आफ्नो मन्त्र बलले उनलाई यज्ञशालामै साक्षात् विष्णु भगवान्को दर्शन गराइदिएका थिए ॥ ७ ॥ भगवान् ऋषभदेव आफ्नो देश अर्थात् अजनाभ खण्डलाई नै कर्मभूमि मानेर लोकसंग्रहार्थ केही दिन गुरुकुलमा बसे । पछि गुरु-दक्षिणा दिई उनको आज्ञा पाएर गृहस्थहरूलाई धर्माचरणको शिक्षा दिनका लागि इन्द्रद्वारा दिइएकी कन्या जयन्तीसित विवाह गरेर वैदिक र स्मार्त दुवै प्रकारका कर्मको आचरण गर्दै ऋषभदेवले जयन्ती द्वारा आफू जस्तै गुणवान् सय छोरा जन्माए ॥ ८ ॥ उनमा महायोगी भरत सबै भन्दा जेठा र ठूला गुणी थिए । उनैको

कालेन तन्महिमानमवाप ॥५॥ यस्य ह पाण्डवेय श्लोकावुदाहरन्ति–को नु तत्कर्म राजर्षेर्नाभेरन्वाचरेत्पुमान् ॥ अपत्यतामगाद्यस्य हरिः शुद्धेन कर्मणा ॥६॥ ब्रह्मण्योऽन्यः कुतो नाभेर्विप्रा मङ्गलपूजिताः ॥ यस्य बर्हिषि यज्ञेशं दर्शयामासुरोजसा ॥ ७ ॥ अथ ह भगवानृषभदेवः स्ववर्षं कर्मक्षेत्रमनुमन्यमानः प्रदर्शितगुरुकुलवासो लब्धवरैर्गुरुभिरनुज्ञातो गृहमेधिनां धर्माननुशिक्षमाणो जयन्त्यामिन्द्रदत्तायामुभयलक्षणं कर्मसमाम्नातमभियुञ्जन्नात्मजानामात्मसमानानां शतं जनयामास ॥ ८ ॥ येषां खलु महायोगी भरतो ज्येष्ठः श्रेष्ठगुण आसीद्येनेदं वर्षं भारतमिति व्यपदिशन्ति ॥ ९ ॥ तमनु कुशावर्त इलावर्तो ब्रह्मावर्तो मलयः केतुर्भद्रसेन इन्द्रस्पृग्विदर्भः कीकट इति नव नवतिप्रधानाः ॥ १० ॥ कविर्हरिरन्तरिक्षः प्रबुद्धः पिप्पलायनः ॥ आविर्होत्रोऽथ द्रुमिलश्चमसः करभाजनः ॥ ११ ॥ इति भागवतधर्मदर्शना नव महाभागवतास्तेषां सुचरितं भगवन्महिमोपबृंहितं वसुदेवनारदसंवादमुपशमायनमुपरिष्टाद्वर्णयिष्यामः ॥ १२ ॥ यवीयांस एकाशीतिर्जायन्तेयाः पितुरादेशकरा महाशालीना महाश्रोत्रिया यज्ञशीलाः कर्मविशुद्धा ब्राह्मणा बभूवुः ॥ १३ ॥ भगवानृषभसंज्ञ आत्मतन्त्रः स्वयं नित्यनिवृत्तानर्थपरम्परः केवलानन्दानुभव ईश्वर एव विपरीतवत्कर्माण्यारभमाणः कालेनानुगतं धर्ममाचरणेनोपशिक्षयन्नतद्विदां सम उपशान्तो मैत्रः कारुणिको धर्मार्थयशःप्रजानन्दामृतावरोधेन गृहेषु लोकमनियमयत्

नामले यो देश 'भारतवर्ष' कहिन्छ ॥ ९ ॥ तिनका कांछा भाई कुशावर्त, इलावर्त, ब्रह्मावर्त, मलय, केतु, भद्रसेन, इन्द्रस्पृक् विदर्भ तथा कीकट नामका नौ राजकुमार भरतका अनुगामी तथा शेष नब्बे भाइहरूभन्दा श्रेष्ठ थिए ॥१०॥ यिनको अतिरिक्त कवि, हरि, अन्तरिक्ष, प्रबुद्ध, पिप्पलायन, अविर्होत्र, द्रुमिल, चमस एवं करभाजन ॥११॥ यी नौ कुमार भागवत-धर्मका प्रवर्तक तथा परम भगवद्भक्त थिए । भगवन्-महिमाले महिमान्वित तथा शान्तिमय यिनको चरित्र हामी नारद तथा वसुदेवजीको संवादको प्रसंगमा अगाडि बताउने छौं ॥१२॥ यी भन्दा पनि कान्छा जो एकासी पुत्र थिए, ती पिताका आज्ञा पालक, अतिविनीत, महान् वेदज्ञ तथा निरन्तर यज्ञशील थिए । ती पुण्यका अनुष्ठान सधैं गरिरहनाले नै कर्म-विशुद्ध ब्राह्मण भए ॥ १३ ॥ भगवान् ऋषभदेवजी यद्यपि परम स्वतन्त्र अनर्थ-परम्पराले रहित एकमात्र आनन्दानुभव स्वरूप र साक्षात् ईश्वर थिए, तैपनि अज्ञानीहरू जस्तै

कर्म गर्दथे तथा कालक्रमले सामयिक धर्मको आचरण गर्दै उसको तत्त्वबाट अनभिज्ञ सर्वसाधारण धर्मको शिक्षा दिँदै रहे। उनले सम शान्त, सुहृद् तथा कारुणिक भावले रहँदै धर्म, अर्थ, यश तथा सन्तानबाट पनि आनन्दको प्राप्तिका निमित्त सबैलाई गृहस्थोचित धर्ममार्गमा प्रवृत्त गराए ॥ १४ ॥ किनकि ठूलाहरूले जस्तो आचरण गर्छन्, अन्य साधारण पुरुष पनि त्यसैको अनुसरण थाल्दछन् ॥ १५ ॥ भगवान् ऋषभदेव यद्यपि वेदका गूढ रहस्यस्वरूप सबै धर्मलाई जान्दथे तापनि ब्राह्मणले बताएका विधिले साम-दानादि नीतिहरूको अवलम्बन गरेर आफ्ना प्रजाको पालन गर्दथे ॥ १६ ॥ उनले भिन्न-भिन्न देवताका उद्देश्यले द्रव्य, देश, काल, आयु, श्रद्धा तथा ऋत्विज् आदिले समृद्धि प्राप्त सबै यज्ञ द्वारा शास्त्रोक्त विधि अनुसार भगवान् यज्ञपुरुषको सय यज्ञ गरेर पूजन गरेका थिए ॥१७॥ ती भगवान् ऋषभदेवको राज्य कालमा त्यस देशका कुनै पनि व्यक्ति आफ्ना स्वामीको प्रति दिन-दिनै बढ्ने अनुराग बाहेक अविद्यमान वस्तुहरूको जस्तै आफ्नो निम्ति कसैसित केही इच्छा राख्दैनथे ॥ १८ ॥ एक समयको कुरा हो— भगवान ऋषभदेव यता-उता डुल्दै-फिर्दै

॥ १४ ॥ यद्यच्छीर्षण्याचरितं तत्तदनुवर्तते लोकः ॥ १५ ॥ यद्यपि स्वविदितं सकलधर्मं ब्राह्मं गुह्यं ब्राह्मणैर्दर्शितमार्गेण सामादिभिरुपायैर्जनता-
मनुशशास ॥ १६ ॥ द्रव्यदेशकालवयःश्रद्धर्त्विग्विविधोद्देशोपचितैः सर्वैरपि क्रतुभिर्यथोपदेशं शतकृत्व इयाज ॥ १७ ॥ भगवतर्षभेण परिरक्ष्य-
माण एतस्मिन्वर्षे न कश्चन पुरुषो वाञ्छत्यविद्यमानमिवात्मनोऽन्यस्मात्कथंचन किमपि कर्हिचिदवेक्षते भर्तर्यनुसवनं विजृम्भितस्नेहातिशय-
मन्तरेण ॥ १८ ॥ स कदाचिदटमानो भगवानृषभो ब्रह्मावर्तगतो ब्रह्मर्षिप्रवरसभायां प्रजानां निशामयन्तीनामात्मजानवहितात्मनः प्रश्रयप्रणय-
भरसुयन्त्रितानप्युपशिक्षयन्निति होवाच ॥ १९ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे चतुर्थोऽध्यायः ॥ ४ ॥ ऋषभ उवाच ॥ नायं देहो
देहभाजां नृलोके कष्टान्कामानर्हते विड्भुजां ये ॥ तपो दिव्यं पुत्रका येन सत्त्वं शुद्ध्येद्यस्माद्ब्रह्मसौख्यं त्वनन्तम् ॥ १ ॥ महत्सेवां द्वारमाहु-
र्विमुक्तेस्तमोद्वारं योषितां सङ्गिसङ्गम् ॥ महान्तस्ते समचित्ताः प्रशान्ता विमन्यवः सुहृदः साधवो ये ॥ २ ॥ ये वा मयीशे कृतसौहृदार्था जनेषु
देहंभरवार्तिकेषु ॥ गृहेषु जायात्मजरातिमत्सु न प्रीतियुक्ता यावदर्थाश्च लोके ॥ ३ ॥ नूनं प्रमत्तः कुरुते विकर्म यदिन्द्रियप्रीतय आपृणोति ॥ न

ब्रह्मावर्त देशमा पुगे। त्यहाँ उनले अगणित ब्रह्मर्षिहरूको सभामा विराजमान आफ्ना विनीत, प्रेमी र समाहित हुने छोराहरूलाई देखे। तिनीहरूलाई शिक्षा दिने अभिप्रायले ती आफ्ना छोराहरूको समक्ष यस प्रकार भन्नलागे ॥ १९ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे नेपाली भाषाटीकायां चतुर्थोऽध्यायः ॥ ४ ॥ (ऋषभदेवको पुत्रहरूलाई उपदेश र अधूत-वृत्ति ग्रहण)—ऋषभदेव भन्दछन्—हे छोरा हो! मर्त्यलोकमा मानव शरीर पाएर मनुष्यको निम्ति यो उचित छैन कि यस उत्तम शरीरले विष्ठाभोजी शूकरादिलाई पनि सुलभ र विषयभोगमा लिप्त रहोस्। अतः त्यस तपको नै आचरण गर्नु असल छ, जसले आफ्नू अन्तःकरण शुद्ध भई अनन्त ब्रह्मानन्दको प्राप्ति गराउँछ ॥ १ ॥ वास्तवमा महा-पुरुषको सेवा नै मुक्तिको द्वार हो र कामीजनको सङ्ग नै नरकको द्वार हुन्छ। महापुरुष उनै कहिन्छन् जो समान-चित्त, शान्त स्वभाव, क्रोधहीन, सबैका सुहृद् तथा सदाचारसम्पन्न हुन्छन् ॥ २ ॥ जो एकमात्र म परमात्मासित नै प्रेम गर्दछन् ती केवल उदर-पोषणमा नै काम गर्ने व्यक्ति तथा स्त्री, पुत्र र धन आदि सामग्रीहरूले युक्त घरमा स्नेह गर्दैनन्

470

शरीर निर्वाहका लागि लौकिक कार्यमा प्रवृत्त रहने गर्दछन् ॥३॥ जुन मनुष्य प्रमादी भएर कुकर्ममा लाग्छन्, उनको त्यो प्रवृत्ति केवल इन्द्रिय तृप्तिको निम्ति हुन्छ । म यसलाई राम्रो मान्दिन, किनकि यो शरीर वस्तुतः असत् छ, तैपनि आत्मालाई जबसम्म परमात्म-तत्त्वको जिज्ञासा हुन्न, तबसम्म अज्ञानवश उसको सर्वत्र पराजय हुन्छ । किनकि अज्ञानवश जबसम्म त्यो लौकिक तथा वैदिक कर्ममा अल्झिरहन्छ, तबसम्म त्यसको चित्त कर्म-वासनामा लीन रहन्छ र त्यसैले उसलाई शारीरिक बन्धनमा बाँधिरहन्छ ॥ ४ ॥ ५ ॥ यस प्रकार अज्ञानले आत्मस्वरूप आच्छादित हुनाले नै कर्म-वासनाहरूको वशीभूत चित्त मनुष्यलाई फेरि कर्ममा लगाइदिने गर्दछ । अतएव जबसम्म जीवको म भगवानमा प्रीति हुन्न, तबसम्म त्यो देहबन्धनबाट मुक्त हुँदैन ॥ ६ ॥ मनुष्य जबसम्म आफ्नो सच्चा स्वार्थ अर्थात् परमार्थबाट असावधान रहन्छ र इन्द्रियहरूका चेष्टालाई मिथ्या मान्दैन, तबसम्म त्यो मूढ आफूलाई ठूलो बुद्धिमान ठानेर पनि विवेकहीन भएर मैथुन प्रधान गृह-पुत्र, स्त्री आदिमा आसक्त रहेर विविध प्रकारका क्लेश भोग्ने गर्दछ ॥ ७ ॥ स्त्री-पुरुषको परस्पर

साधु मन्ये यत आत्मनोऽयमसन्नपि क्लेशद आस देहः ॥ ४ ॥ पराभवस्तावदबोधजातो यावन्न जिज्ञासत आत्मतत्त्वम् ॥ यावत्क्रियास्तावदिदं
मनो वै कर्मात्मकं येन शरीरबन्धः ॥ ५ ॥ एवं मनः कर्मवशं प्रयुंक्ते अविद्ययाऽऽत्मन्युपधीयमाने ॥ प्रीतिर्न यावन्मयि वासुदेवे न मुच्यते देहयोगेन
तावत् ॥ ६ ॥ यदा न पश्यत्ययथागुणेहां स्वार्थे प्रमत्तः सहसा विपश्चित् ॥ गतस्मृतिर्विन्दति तत्र तापानासाद्य मैथुन्यमगारमज्ञः ॥७॥ पुंसः स्त्रिया
मिथुनीभावमेतं तयोर्मिथो हृदयग्रन्थिमाहुः ॥ अतो गृहक्षेत्रसुताप्तवित्तैर्जनस्य मोहोऽयमहंममेति ॥ ८ ॥ यदा मनोहृदयग्रन्थिरस्य कर्मानुबद्धो दृढ
आश्लथेत ॥ तदा जनः संपरिवर्ततेऽस्मान्मुक्तः परं यात्यतिहाय हेतुम् ॥ ९ ॥ हंसे गुरौ मयि भक्त्याऽनुवृत्त्या वितृष्णया द्वन्द्वतितिक्षया च ॥
सर्वत्र जन्तोर्व्यसनावगत्या जिज्ञासया तपसेहानिवृत्त्या ॥ १० ॥ मत्कर्मभिर्मत्कथया च नित्यं मद्देवसङ्गाद्गुणकीर्तनान्मे ॥ निर्वैरसाम्योपशमेन पुत्रा
जिहासया देहगेहात्मबुद्धेः ॥ ११ ॥ अध्यात्मयोगेन विविक्तसेवया प्राणेन्द्रियात्माभिजयेन सध्र्यक् ॥ सच्छ्रद्धया ब्रह्मचर्येण शश्वदसंप्रमादेन यमेन
वाचा ॥ १२ ॥ सर्वत्र मद्भावविचक्षणेन ज्ञानेन विज्ञानविराजितेन ॥ योगेन धृत्युद्यमसत्त्वयुक्तो लिङ्गं व्यपोहेत्कुशलोऽहमाख्यम् ॥ १३ ॥

दाम्पत्यभाव नै तिनको हृदयको दुर्भेद्य ग्रन्थि हुन्छ । त्यसैले गर्दा पुरुषलाई गृह, क्षेत्र, पुत्र, स्वजन तथा धन आदिमा 'म' र 'मेरो' यो मोह जागृत हुन्छ ॥८॥ जब मनुष्यको कर्मवासनाले गर्दा बाँधिएको हृदयको बलियो ग्रन्थि महापुरुषको सङ्गले खुलो हुन्छ, अनि त्यो गृहासक्तिबाट निवृत्त हुन्छ र सबै प्रकारका बन्धनबाट मुक्त भएर संसारका कारण-स्वरूप अहंकारलाई त्यागेर परमपद पाउँदछ ॥९॥ हे पुत्र हो ! यस संसार सागरबाट पार पाउनमा कुशल, धैर्यवान् उद्यमी तथा सत्त्वगुण-विशिष्ट पुरुषको कर्तव्य हो कि सबैको आत्म-स्वरूप म गुरुमा भक्तिभाव राख्ने, तृष्णा त्याग्ने, द्वन्द्व सहने जीवलाई कहीं पनि दुःख सहनु पर्दैन । यस विचारले, तत्त्वजिज्ञासाले, सांसारिक वासना त्याग्नाले, मेरै निम्ति कर्म गर्नाले, मेरा कथाहरू नित्य सुन्दै रहनाले, मेरा भक्तजनको सङ्ग तथा मेरै गुण-गानले, वैराग्य, त्याग, समता तथा उपशमले, शरीर र गृहादिमा 'म' र 'मेरो' भाव त्याग्ने अभि-लाषाले, आत्म विचार र एकान्त सेवनले, प्राण, इन्द्रिय तथा मनको पूर्ण संयम गर्नाले, गुरु एवं शास्त्रादिमा श्रद्धा राख्नाले, ब्रह्मचर्य र निरन्तर सावधानीले, वाणीको संयमले, सर्वत्र

मेरो सत्ता देख्नाले, अनुभव-ज्ञानपूर्ण तत्वविचार र योगद्वारा आफ्नो अहङ्काररूपी लिंग-शरीरलाई नष्ट गरिदेओस् ॥ १०–१३ ॥ अविद्यावश प्राप्त हृदय ग्रन्थिस्वरूप कर्माशय-लाई साधनद्वारा राम्ररी नष्ट पारेर ती साधनबाट पनि छुट्टियोस् ॥ १४ ॥ मेरो लोक प्राप्त गर्न इच्छुक राजा अथवा गुरुको कर्तव्य हो कि मेरो अनुग्रह पाउनको लागि आफ्ना अबोध प्रजा तथा शिष्यहरूलाई रिस त्यागेर यस्तै शिक्षा देओस् । कर्मलाई नै परम पुरुषार्थ मान्ने अज्ञानीहरूलाई फेरि कर्ममा नलगाउनु, किनकि अन्धोलाई खाडलमा घुचेटने पुरुष जस्तै ती कर्मबन्धनलाई कर्ममा नै प्रवृत्त गर्नाले कुन पुरुषार्थको सिद्धि प्राप्त गर्न सकिन्छ ? ॥ १५ ॥ सबै सांसारिक प्राणी आफ्नो वास्तविक श्रेय नजानेर अनेक थरिका कामनाले अन्धा भएर *तर्क-वितर्क गर्दै क्षणिक सुखका लागि परस्पर शत्रुता ठानेर विषय-भोग भोग्न खोज्दछन्, तर ती मूढ यस द्रोहले मिल्ने नरकादि कष्टलाई केही

कर्माशयं हृदयग्रन्थिबन्धमविद्ययाऽऽसादितमप्रमत्तः ॥ अनेन योगेन यथोपदेशं सम्यग्व्यपोह्योपरमेत योगात् ॥ १४ ॥ पुत्रांश्च शिष्यांश्च नृपो गुरुर्वा मल्लोककामो मदनुग्रहार्थः ॥ इत्थं विमन्युरनुशिष्यानतज्ज्ञान्न योजयेत्कर्मसु कर्ममूढान् ॥ कं योजयन्मनुजोऽर्थं लभेत निपातयन्नष्टदृशं हि गर्ते ॥१५॥ लोकः स्वयं श्रेयसि नष्टदृष्टिर्योऽर्थान्समीहेतापयनिकामकामः ॥ अन्योन्यवैरः सुखलेशहेतोरनन्तदुःखं च न वेद मूढः ॥ १६ ॥ कस्तं स्वयं तदभिज्ञो विपश्चिदविद्यायामंतरे वर्तमानम् ॥ दृष्ट्वा पुनस्तं सघृणः कुबुद्धिं प्रयोजयेदुत्पथगं यथाऽन्धम् ॥ १७ ॥ गुरुर्न स स्यात्स्वजनो न स स्यात्पिता न स स्याज्जननी न सा स्यात् ॥ दैवं न तत्स्यान्न पतिश्च स स्यान्न मोचयेद्यः समुपेतमृत्युम् ॥१८॥ इदं शरीरं मम दुर्विभाव्यं सत्त्वं हि मे हृदयं यत्र धर्मः॥ पृष्ठे कृतो मे यदधर्म आरादतो हि मामृषभं प्राहुरार्याः ॥१९॥ तस्माद्भवन्तो हृदयेन जाताः सर्वे महीयांसममुं सनाभम् ॥ अक्लिष्टबुद्ध्या भरतं भजध्वं

पनि बुझ्दैनन् ॥१६॥ कुमार्गगामी अन्धा पुरुष झैं त्यस बुद्धिहीन प्राणीलाई अविद्याग्रस्त देखेर कुन दयालु वा विवेकशील पुरुष जानी-जानी कसरी उही अविद्यामा प्रवृत्त गर्ला ? ॥१७॥ अतः जो सदुपदेश दिएर टाउकामा आएको मृत्युबाट बचाउन सक्तैन, त्यो गुरु हुनै सक्तैन, त्यो पिता पिता हुनै सक्तैन, त्यो माता माता हुन सक्किन, त्यो इष्टदेव इष्टदेव हुन सक्तैन र त्यो पति पति हुने अधिकारी हुन सक्तैन ॥ १८ ॥ मेरो शरीर सर्वथा तर्कबाट पर छ । धार्मिक स्थिति सम्पन्न सत्वगुण नै मेरो हृदय हो, अधर्म मेरो पृष्ठभागमा स्थित रहन्छ । अतः सज्जनहरू मलाई ऋषभदेव भन्दछन् ॥ १९ ॥ तिमी सबै मेरो हृदयबाट उत्पन्न भएका हौ, यसै कारण आफ्नो सहोदर ज्येष्ठ भ्राता महात्मा

* दृष्टान्त ( तर्क-वितर्क )—एउटा नास्तिकले हुने सन्तसित तीन प्रश्न गर्‍यो–(१) ईश्वर सर्वत्र छ, यस्तो सबै जना भन्दछन् । अनि ईश्वर किन देखिंदैन ? त्यो कहाँ छ ? यो मलाई बताऊ ! (२) यदि मनुष्य ईश्वरको प्रेरणाले सबै काम गर्दछन् । अनि कुनै कुनै बेला ईश्वर उसलाई कठोर दण्ड किन दिन्छन् ? (३) ईश्वर दुष्टलाई दण्ड दिन्छन् भने त्यो कसरी ? किन भने दुष्ट अग्निरूप छ र ईश्वर पनि अग्निरूप छ ! अनि अग्निमाथि अग्निको वश कसरी चल्दछ ?' यी तीनै प्रश्नलाई सन्तले गम्भीरतापूर्वक सुने । पछि भुईंबाट एउटा माटोको डल्ला उठाएर प्रश्नकर्ताको टाउकोमा हिर्काए । नास्तिकले अड्डामा गएर गुहार माग्यो । हाकिमले सन्तलाई डाकेर सोधे–तिमीले यसलाई किन हिर्कायौ ?' सन्तले उत्तर दिए–'इनले सोधेका तीनै प्रश्नको यो उत्तर हो ।' हाकिमले भन्यो—'कसरी ? सन्तले भने–'यो मनुष्य भन्दछ मलाई चोट लाग्यो । चोट लाग्नाले दुःख कष्ट भयो, त्यसलाई म हेर्न चाहन्छु । दुःख देखेर नै म ईश्वरलाई देखाउँला । अर्को–मैले जो गरें, ईश्वरको प्रेरणाले गरें । अनि यसले यो अपराध किन लगाइरहेको छ ? यसै प्रकार ईश्वर पनि दुष्टलाई दण्ड दिन्छन् । फेरि यसको शरीर माटोले बनेको छ र मैले हानेको डल्ला पनि माटोकै थियो । अनि माटोमा माटोको जोर कसरी चल्यो ? यसै प्रकार अग्निको पनि जोर ( बल ) अग्निमा चल्दछ ।' यस प्रकारको उत्तर सुनेर नास्तिक र हाकिम दुवै प्रसन्न भए र सन्तलाई निर्दोष मानेर छाडिदिए । त्यसै बेलादेखि त्यो नास्तिक पक्का आस्तिक बन्न गयो ।

मरतका सरलभावले सेवा गर। उनको सेवा गर्नु नै तिम्रो सर्वश्रेष्ठ धर्म हो ॥२०॥ हेर, अन्य सबै स्थावर प्राणीहरूको अपेक्षा वृक्ष श्रेष्ठ हुन्छन्। ती भन्दा सर्प आदि किरा र तीभन्दा पनि ज्ञानयुक्त पशु प्राणी श्रेष्ठ हुन्छन्। पशुको अपेक्षा मनुष्य, मनुष्य भन्दा भूत-प्रेतादि प्रमथगण, प्रमथगण भन्दा गन्धर्व, गन्धर्व भन्दा सिद्ध र सिद्धभन्दा देवताका अनुचर किन्नरादि हुन्छन् ॥२१॥ किन्नरभन्दा असुर, असुर भन्दा इन्द्रादि देवता र देवताहरूका पुत्र दक्ष आदि श्रेष्ठ मानिन्छन्। ब्रह्माका सबै पुत्रमा भगवान् शङ्कर सर्वभन्दा श्रेष्ठ छन्। ब्रह्माद्वारा उनको उत्पत्ति भएको छ, यस निम्ति ब्रह्माजी ती भन्दा पनि श्रेष्ठ छन्। ती मेरा उपासक छन्। अतएव म तीभन्दा पनि ठूलो छु र ब्राह्मण मेरा पूज्य छन् ॥२२॥ हे विप्र हो! म अरु कुनै पनि प्राणीलाई ब्राह्मण समान श्रेष्ठ मान्दिन। अनि तीभन्दा म अरु कसैलाई कसरी मान्न सक्छु? मनुष्यहरुद्वारा ब्राह्मणका मुखमा श्रद्धापूर्वक हवन गरिएको अन्न म जति प्रसन्नताले स्वीकार गर्दछु, त्यस्तो अग्निहोत्रको आहुतिस्वरूप पदार्थलाई स्वीकार गर्दिन ॥२३॥ जुन व्यक्तिले यस लोकमा अत्यन्त राम्रो र पुरातन मेरी भक्तिरूपिणी मूर्तिलाई अध्ययनादिद्वारा

शुश्रूषणं तद्भरणं प्रजानाम् ॥२०॥ भूतेषु वीरुद्भ्य उदुत्तमा ये सरीसृपास्तेषु सबोधनिष्ठाः ॥ ततो मनुष्याः प्रमथास्ततोऽपि गन्धर्वसिद्धा विबुधा- नुगा ये ॥ २१ ॥ देवासुरेभ्यो मघवत्प्रधाना दक्षादयो ब्रह्मसुतास्तु तेषाम् ॥ भवः परः सोऽथ विरिञ्चिवीर्यः स मत्परोऽहं द्विजदेवदेवः ॥ २२ ॥ न ब्राह्मणैस्तुलये भूतमन्यत्पश्यामि विप्राः किमतः परं तु ॥ यस्मिन्नृभिः प्रहुतं श्रद्धयाऽहमश्नामि कामं न तथाऽग्निहोत्रे ॥ २३ ॥ धृता तनूरु- शती मे पुराणी येनेह सत्त्वं परमं पवित्रम् ॥ शमो दमः सत्यमनुग्रहश्च तपस्तितिक्षाऽनुभवश्च यत्र ॥ २४ ॥ मत्तोऽप्यनन्तात्परतः परस्मात्स्वर्गा- पवर्गाधिपतेर्न किञ्चित् ॥ येषां किमु स्यादितरेण तेषामकिञ्चनानां मयि भक्तिभाजाम् ॥ २५ ॥ सर्वाणि मद्धिष्ण्यतया भवद्भिश्चराणि भूतानि सुता ध्रुवाणि ॥ सम्भावितव्यानि पदे पदे वो विविक्तदृग्भिस्तदुहार्हणं मे ॥ २६ ॥ मनोवचोदृक्करणेहितस्य साक्षात्कृतं मे परि- बर्हणं हि ॥ विना पुमान् येन महाविमोहात्कृतान्तपाशान्न विमोक्तुमीशेत् ॥२७॥ श्रीशुक उवाच ॥ एवमनुशास्यात्मजान्स्वयमनुशिष्टानपि लोकान- नुशासनार्थं महानुभावः परमसुहृद्भगवानृषभापदेश उपशमशीलानामुपरतकर्मणां महामुनीनां भक्तिज्ञानवैराग्यलक्षणं पारमहंस्यधर्ममुपशिक्षमाणः

धारण गरेका छन, जो पवित्र सत्वगुण, शम, दम, सत्य, दया, तप, तितिक्षा र ज्ञानादिले सम्पन्न हुन्छन् र जो स्वर्ग तथा मोक्ष दिनमा पनि समर्थ ब्रह्मादिभन्दा पनि श्रेष्ठ म अनन्त- लित केही पाउन चाहन्नन् भने ती मेरा अकिञ्चन भक्तलाई अन्य पुरुषद्वारा कुन वस्तु पाउने इच्छा हुन सक्छ? ॥ २४ ॥ २५ ॥ अतः हे पुत्र हो! तिमीहरू अखिल चराचर प्राणीहरूलाई मेरो नै स्वरूप मानेर शुद्ध बुद्धिले पद-पदमा उनको सेवा गर—उनको पूजा नै मेरो पूजन हुनेछ ॥२६॥ मन, वचन, दृष्टि तथा अन्य इन्द्रियहरूका चेष्टारूपी कर्महरू द्वारा चराचर प्राणीहरूको रूपमा पूजित म परमेश्वरको यही प्रत्यक्ष पूजा हो। यसको बिना प्राणी आफूलाई महामोहमय कालपाशबाट मुक्त पार्न सक्तैन ॥२७॥ शुकदेवजी भन्नुहुन्छ— हे राजन्! महामहिम र परम सुहृद् भगवान् ऋषभदेवले स्वयं राम्ररी शिक्षा पाएका आफ्ना सबै पुत्रलाई लोक-शिक्षा दिनको लागि यस प्रकार उपदेश दिएर आफ्ना सय छोरामा सबैभन्दा जेठा तथा परम भगवद्भक्तहरूका आश्रयस्वरूप भरतलाई पृथिवीको रक्षाका निम्ति राज्याभिषेक गरिदिए र स्वयं महामुनिको भक्ति ज्ञान तथा वैराग्यरूपी पारमहंस्य धर्मको।

उपदेश दिँदै उन्मत्त झैं दिगम्बर वृत्तिको अनुसार कपाल फुकाएका, आहवनादि सबै अग्निलाई आफूमै स्थापित गरेर विरक्त भावले ब्रह्मावर्त देशको बाहिर हिँडे। त्यस अवसरमा उनीसित परिग्रहको रूपमा केवल उनको शरीर मात्र रहेको थियो ॥ २८ ॥ ती जड-अन्धो, बाहिरो, पिशाच तथा उन्मत्त झैं अवधूत वेषमा रहँदै कसैले डाके पनि बोल्दैनथे ॥ २९ ॥ ती पुर, ग्राम, खानी, कृषकहरूको खेत, ठूला तलाऊ, पर्वतहरूका काम, सेनाहरूको विश्रामस्थल, अश्वशाला र ग्वालाहरूको झुपढी, यात्रिहरूका समूह, पर्वत, वन तथा आश्रम आदिमा बनपर्दो ढंगले डुल्नलागे। वनमा डुल्ने उत्तम हात्तीलाई जसरी मखिकादिले टोक्छन्, त्यस्तै नै उस बेला ती जहाँ जान्थे, त्यहीं उनलाई कोही दुष्ट मनुष्य हप्काउँथे, कोही कुटिदिन्थे, कोही जिउमै मुतिदिन्थे, कोही थुक्थे, कोही ढुङ्गाले हिर्काउँथे, कोही विष्ठा र धूलो फ्याँकिदिन्थे, कोही उनैमाथि अधोवायु छाड्दथे र कोही गाली गरेर अपमान गर्दथे। तैपनि ती त्यसको केही विचारै गर्दैनथे, किनकि भ्रमवश सत्य कहिने यो मिथ्या शरीमा उनलाई ममता र अभिमान केही पनि थिएन। ती कार्य-कारणरूप सम्पूर्ण जगत्‌।

स्वतनयशतज्येष्ठं परमभागवतं भगवज्जनपरायणं भरतं धरणिपालनायाभिषिच्य स्वयं भवन एवोर्वरितशरीरमात्रपरिग्रह उन्मत्त इव गगनपरिधानः प्रकीर्णकेश आत्मन्यारोपिताहवनीयो ब्रह्मावर्तात्प्रवव्राज ॥ २८ ॥ जडान्धमूकबधिरपिशाचोन्मादकवदवधूतवेषोऽभिभाष्यमाणोऽपि जनानां गृहीतमौनव्रतस्तूष्णीं बभूव ॥ २९ ॥ तत्र तत्र पुरग्रामाकरखेटवाटखर्वटशिबिरव्रजघोषसार्थगिरिवनाश्रमादिष्वनुपथमवनिचरापसदैः परिभूयमानो मक्षिकाभिरिव वनगजतर्जनताडनावमेहनष्ठीवनग्रावशकृद्रजः प्रक्षेपपूतिवातदुरुक्तैस्तदविगणयन्नेवासत्संस्थान एतस्मिन्देहोपलक्षणे सदपदेश उभयानुभवस्वरूपेण स्वमहिमावस्थानेनासमारोपिताहंममाभिमानत्वाद्विखण्डितमनाः पृथिवीमेकचरः परिबभ्राम ॥ ३० ॥ अतिसुकुमारकरचरणोरःस्थलविपुलबाह्वंसगलवदनाद्यवयवविन्यासः प्रकृतिसुन्दरस्वभावहाससुमुखो नवनलिनदलायमानशिशिरतारारुणायतनयनरुचिरः सदृशसुभगकपोलकर्णकण्ठनासो विगूढस्मितवदनमहोत्सवेन पुरवनितानां मनसि सुकुमरारासनमुपदधानः परागवलम्बमानकुटिलजटिलकपिशकेशभूरिभारोऽवधूतमलिननिजशरीरेण ग्रहगृहीत इवादृश्यत ॥ ३१ ॥ यर्हि वाव स भगवान्लोकमिमं योगस्याद्धा प्रतीपमिवाचक्षाणस्तत्प्रतिक्रियाकर्म बीभत्सितमिति व्रतमाजगरमास्थितः शयान एवाश्नाति पिबति खादत्यवमेहति हदति स्म चेष्टमान उच्चारित आदिग्धोद्देशः ॥३२॥

भित्र रहेका आफ्नो परमात्मरूपमा नै स्थित थिए। यसैले अविचल मन भएर ती एक्लै नै पृथ्वीमा डुल्न लागे ॥ ३० ॥ उनका अतिशय सुकुमार हात-खुट्टा, वक्षस्थल, विशाल बाहु, काँध, घाँटी तथा मुख आदि अंगको गठन साह्रै राम्रो थियो। तिनको स्वभावतः सुन्दर मुख मधुर मुसकानले गर्दा झन् मनोहर देखिन्थ्यो। नवीन कमल झैं विशाल र शीतल [illegible] नेत्र-कमल साह्रै राम्रा थिए। तिनका कपोल, कान, घाँटी र नासिका सलक्क परेका थिए। ती आफ्नो मन्दहास्ययुक्त मनोहर मुखारविन्दले सबै पुरनारीहरूका [illegible] पार्दथे। त्यस्ता भएर पनि ती पछाडि झुण्डिएका आफ्ना अरुणवर्ण लामा-लामा जटाका भार, अवधूत वेश एवं मलिन शरीरले ग्रहग्रस्त अर्थात् बौलाहा जस्ता [illegible] ऋषभदेवजीले जब देखे कि लौकिक जनसमूह योगसाधनमा विघ्न समान छन् र त्यसबाट जोगिनको निम्ति वीभत्सरूपले रहनु अनिवार्य छ भनेर

उनले अजिगर जस्तै वृत्ति धारण गरे र सुतेरै खाने-पिउने र मल-मूत्र आदि त्याग्नलागे । आफ्नै मलमा धेरै बेर ढलिरहनाले उनको शरीर मलमा मुछिन्थ्यो ॥३२॥ जब महापुरुषको मलको गन्धबाट सुगन्धित भएर बायु उनको चारैतिर दश योजनसम्म सबै प्रदेशलाई सुगन्धित पार्ने गर्दथ्यो ॥३३॥ फेरि गाई, मृग, कागादिको वृत्ति ग्रहण गरेर ती गाई, मृग र कौवा जस्तै कहिले हिंड्दै, उभि-उभी, कहिले बसेर र कहिले पल्टी-पल्टी खाने-पिउने र मल-मूत्र त्याग्न लागे ॥ ३४ ॥ हे राजन् ! यसरी विविध प्रकारका योगचर्याहरूका आचारी मोक्षपति भगवान् ऋषभदेव सधैं अतिशय उत्कृष्ट आनन्दको अनुभव गर्दै सबै प्राणीहरूका अन्तरात्मा आफ्नो आत्मास्वरूप वासुदेवमै अभिन्न भावले स्थित भएर सबै पुरुषार्थले परिपूर्ण भए । अतएव आफैं प्राप्त आकाशगमन, मनोजव, अन्तर्धान, परकाय-प्रवेश तथा दूर श्रवण आदि योगसिद्धि उनले आफ्नो मनले अङ्गीकार गरेनन् ॥३५॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे नेपाली भाषाटीकायां पञ्चमोऽध्यायः ॥ ५ ॥ ( भगवान् ऋषभदेवको देहत्याग वर्णन )—यति कथा सुनेर राजा परीक्षितले सोधे—हे भगवन् ! योगरूपी

तस्य ह यः पुरीषसुरभिसौगन्ध्यवायुस्तं देशं दशयोजनं समन्तात्सुरभि चकार ॥ ३३ ॥ एवं गोमृगकाकचर्यया व्रजंस्तिष्ठन्नासीनः शयानः काकमृगगोचरितः पिबति खादत्यवमेहति स्म ॥ ३४ ॥ इति नानायोगचर्याचरणो भगवान्कैवल्यपतिर्ऋषभोऽविरतपरममहानन्दानुभव आत्मनि सर्वेषां भूतानामात्मभूते भगवति वासुदेव आत्मनोऽव्यवधानान्तरोदारभावेन सिद्धसमस्तार्थपरिपूर्णो योगैश्वर्याणि वैहायसमनोजवान्तर्धान-परकायप्रवेशदूरग्रहणादीनि यदृच्छयोपगतानि नाञ्जसा नृप हृदयेनाभ्यनन्दत् ॥ ३५ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे ऋषभदेवानुचरिते पञ्चमोऽध्यायः ॥ ५ ॥ राजोवाच ॥ न नूनं भगवन् आत्मारामाणां योगसमीरितज्ञानावभर्जितकर्मबीजानामैश्वर्याणि पुनः क्लेशदानि भवितुमर्हन्ति यदृच्छयोपगतानि ॥ १ ॥ ऋषिरुवाच ॥ सत्यमुक्तं किन्त्विह वा एके न मनसोऽद्धा विश्रम्भमनवस्थानस्य शठकिरात इव संगच्छन्ते ॥ २ ॥ तथा चोक्तम्—न कुर्यात्कर्हिचित्सख्यं मनसि ह्यनवस्थिते ॥ तद्विश्रम्भाच्चिराच्चीर्णं चस्कन्द तप ऐश्वरम् ॥ ३ ॥ नित्यं ददाति कामस्य छिद्रं तमनु येऽरयः ॥ योगिनः कृतमैत्रस्य पत्युर्जायेव पुंश्चली ॥ ४ ॥ कामो मन्युर्मदो लोभः शोकमोहभयादयः ॥ कर्मबन्धश्च यन्मूलः स्वीकुर्यात्को नु तद्बुधः ॥ ५ ॥ अथैवमखिललोकपाललललामोऽपि विलक्षणैर्जडवदवधूतवेषाचरितैरविलक्षितभगवत्प्रभावो योगिनां सांपरायविधि-

वायुले प्रज्वलित ज्ञानाग्नि द्वारा जसका कर्मबीज दग्ध भइसकेका रहन्छन्, ती आत्माराम महात्माहरूका दैववश स्वतः प्राप्त भएका अणिमादि सिद्धिहरू राग-द्वेषादि क्लेशका कारण बन्दैनन् ? ॥ १ ॥ शुकजी भन्दछन्—तिमीले उचित भन्यौ तर जस्तै धूर्त किरात आफ्नू नगीचैको मृगको विश्वास गर्दैनन्, त्यस्तै महात्माजन यस चञ्चल चित्तको विश्वास गर्दैनन् ॥ २ ॥ भनेको पनि छ—जब चित्त चंचल रहन्छ, तब त्योसित कहिल्यै मित्रता नगर्नु । चित्तमा विश्वास गर्नाले नै शिवजीको चिरकाल-संचित तप भङ्ग भएको थियो ॥३॥ जस्तै-व्यभिचारिणी स्त्री आफ्ना नाठालाई मौका दिएर तीद्वारा आफूमा विश्वास गर्ने पतिको वध गराइदिन्छन् । त्यस्तै—मनको विश्वास गर्ने योगीहरूको मन काम र उसका अनुचर लोभादि शत्रुहरूलाई मौका दिएर उनलाई भ्रष्ट पारिदिन्छन् ॥ ४ ॥ जो काम, क्रोध, मद, लोभ, शोक, मोह, भय आदि शत्रुहरू तथा कर्मबन्धनको मूल कारण हो, त्यस मनमा कोही

बुद्धिमान मनुष्य कसरी विश्वास गर्ला ?' ॥५॥ यस प्रकार भगवान ऋषभदेव इन्द्रादि सबै लोकपालहरूका भूषण भएर पनि जड़ पुरुष झैं विलक्षण अवधूत वेष, भाषा र आचरणले आफ्नू ईश्वरीय प्रभाव लुकाइराखेका थिए। अन्तमा उनले योगीहरूलाई देहत्यागको विधि सिखाउनका लागि आफ्नो शरीर त्याग्न खोजे। अतः ती आफ्नू अन्तरात्मामा अभेदरूपले स्थित परमात्मालाई तादात्म्यभावले हेर्दै देहाभिमानबाट मुक्त भएर संसारबाट उपराम भए ॥ ६ ॥ यस प्रकार लिङ्गदेहको अभिमानबाट मुक्त भगवान् ऋषभदेवको स्थूल देह योगमायाको वासनावश केवल अभिमानाभासको आश्रयले यस पृथ्वीमा विचरण गर्दै दैववश कोङ्क, वेङ्क, र कुटक आदि दक्षिण कर्नाटक प्रान्तको देशमा गयो र मुखमा ढुङ्गाको डल्लो हालेर तथा कपाल फिजेर उन्मत्त झैं दिगम्बर वृत्तिले कुटकाचलको उपवनमा डुल्न लागे ॥ ७ ॥ त्यसै वेला वायुवेगले हल्लने बाँसको संघर्षबाट उत्पन्न दावानलले ऋषभदेवको शरीर समेत त्यस वनलाई भस्म पारिदियो ॥८॥ हे राजन् ! जुन वेला कलियुगमा अधर्मको वृद्धि हुनेछ, त्यसै वखत कोङ्क, वेङ्क र कुटक देशका मन्दमति राजा 'अर्हत्' ऋषभदेवजीका

मनुशिक्षयन्स्वकलेवरं जिहासु रात्मन्यात्मानमसंव्यवहितमनर्थान्तरभावेनान्वीक्षमाण उपरतानुवृत्तिरुपरराम ॥ ६ ॥ तस्य ह वा एवं मुक्तलिङ्गस्य भगवत ऋषभस्य योगमायावासनया देह इमां जगतीमभिमानाभासेन संक्रममाणः कोङ्कवेङ्ककुटकान्दक्षिणकर्णाटकान्देशान्यदृच्छयोपगतः कुटकाचलोपवन आस्यकृताश्मकवल उन्मत्त इव मुक्तमूर्धजोऽसंवीत एव विचचार ॥ ७ ॥ अथ समीरवेगविधूतवेणुविकर्षणजातोग्रदावानलस्तद्वनमालेलिहानः सह तेन ददाह ॥ ८ ॥ यस्य किलानुचरितमुपाकर्ण्य कोङ्कवेङ्ककुटकानां राजाऽर्हन्नामोपशिक्ष्य कलावधर्म उत्कृष्यमाणे भवितव्येन विमोहितः स्वधर्मपथमकुतोभयमपहाय कुपथपाखण्डमसमञ्जसं निजमनीषया मन्दः सम्प्रवर्तयिष्यते ॥ ९ ॥ येन ह वाव कलौ मनुजापसदा देवमायामोहिताः स्वविधिनियोगशौचचारित्रविहीना देवहेलनान्यपव्रतानि निजनिजेच्छया गृह्णाना अस्नानानाचमनाशौचकेशोल्लुञ्चनादीनि कलिनाऽधर्मबहुलेनोपहतधियो ब्रह्मब्राह्मणयज्ञपुरुषलोकविदूषकाः प्रायेण भविष्यन्ति ॥ १० ॥ ते च ह्यर्वाक्तनया निजलोकयात्रयाऽन्धपरम्परयाऽऽश्वस्तास्तमस्यन्धे स्वयमेव प्रपतिष्यन्ति ॥ ११ ॥ अयमवतारो रजसोपप्लुतकैवल्योपशिक्षणार्थः । तस्यानुगुणान् श्लोकान्गायन्ति ॥ १२ ॥ अहो भुवः सप्तसमुद्रवत्या द्वीपेषु वर्षेष्वधिपुण्यमेतत् ॥ गायन्ति यत्रत्यजना मुरारेः कर्माणि भद्राण्यवतारवन्ति ॥ १३ ॥ अहो नु वंशो यशसाऽवदातः

आचरणको वृत्तान्त सुनेर तथा भवितव्यताको वशीभूत भएर आफ्ना निर्भय वैदिकधर्म त्यागेर आफ्नी बुद्धिले खोटा अनुचित र पाखण्डपूर्ण धर्मको प्रचार गर्नेछन् ॥९॥ जसले कलियुगका मनुष्य देवमायाले मोहित भई आफ्आफ्नै शास्त्रविहित शौच तथा आचारहरू छाडेर बुद्धिहीन भई स्नान तथा आचमन नगरी, सदा अशुद्धताले रहने र कपाल लुछाउने आदि ईश्वरलाई तिरष्कृत गर्ने, पाखण्ड-धर्मलाई ज्यादाभावी ढङ्गले स्वीकार गरेर वेद, ब्राह्मण र भगवान् यज्ञपुरुषका निन्दक हुनेछन् ॥१०॥ ती अवैदिक लोकचर्याका अन्धपरम्परामा विश्वास गर्दै स्वयं घोर नरकमा जानेछन् ॥११॥ भगवान्को ऋषभावतार रजोगुणले भरिएका मानिसको निम्ति मोक्ष-मार्गको शिक्षाको निम्ति नै भएको थियो। उनका अगणित गुणहरूको वर्णन गर्दै मानिस यो श्लोक गाउँदछे—॥१२॥ 'अहो ! सात समुद्रयुक्त पृथिवीका सबै द्वीप र देशहरूमा यो भारतवर्ष परम पवित्र छ किनकि यहाँका मानिस भगवान्का मङ्गलमय अवतार-चरित्र-

इरु गान गर्दछन् ॥१३॥ अहो ! महाराज प्रियव्रतको उज्ज्वल र यशस्वी वंश धन्य छ ! जसमा पुराणपुरुष आदि नारायणले अवतार लिएर मोक्षप्राप्तिका साधन स्वरूप पारमहंस्य-धर्मको प्रचार गरे ॥ १४ ॥ अहो ! ती अजन्मा भगवान् ऋषभदेवको निष्ठालाई अन्य कुनै योगी आफ्नो मनबाट पनि कसरी प्राप्त गर्न सक्ला ? जुन उनीद्वारा असत मानेर त्यागिएको योगसिद्धि प्राप्त गर्नको निम्ति सतत प्रयत्न गर्दै रहन्छ' ॥१५॥ हे राजन् ! यस प्रकार सबै वेद, लोक, देवता, ब्राह्मण तथा गाई आदिका परमगुरु भगवान् ऋषभदेवको विशुद्ध चरित्र मैले तिमीलाई सुनाएँ। यो मनुष्यका सबै पाप पखालिदिन्छ। जो पुरुष यो अति मङ्गलमय पवित्र चरित्रलाई एकाग्रचित्तले श्रद्धापूर्वक सुन्दछन् र सुनाउँछन् ती दुवैको भगवान् वासुदेवमा अनन्य भक्ति हुन्छ ॥ १६ ॥ सबै विद्वज्जन ती भक्तिरूपिणी सरितामा नै आफ्ना विविध पाप तथा सांसारिक तापले सन्तप्त अन्तःकरणलाई स्नान गराउँदै त्यसबाट प्राप्त परम शान्तिले स्वयं उपस्थित मोक्षरूपी परम पुरुषार्थको पनि आदर गर्दैनन्, किनकि भगवान्का भक्त हुनाले नै तिनका सबै पुरुषार्थ सिद्ध हुने गर्दछन्

मैयव्रतो यत्र पुमान्पुराणः ॥ कृतावतारः पुरुषः स आद्यश्चचार धर्मं यदकर्महेतुम् ॥ १४ ॥ को न्वस्य काष्ठामपरोऽनुगच्छेन्मनोरथेनाप्यभवस्य योगी ॥ यो योगमायाः स्पृहयत्युदस्ता ह्यसत्तया येन कृतप्रयत्नाः ॥ १५ ॥ इति ह स्म सकलवेदलोकदेवब्राह्मणगवां परमगुरोर्भगवत ऋषभाख्यस्य विशुद्धाचरितमीरितं पुंसां समस्तदुश्चरिताभिहरणं परममहामङ्गलायनमिममनुश्रद्धयोपचितयाऽनुशृणोत्याश्रावयति वाऽवहितो भगवति तस्मिन्वासुदेव एकान्ततो भक्तिरनयोरपि समनुवर्तते ॥ १६ ॥ यस्यामेव कवय आत्मानमविरतं विविधवृजिनसंसारपरितापोपतप्यमानमनुसवनं स्नापयन्तस्तयैव परया निर्वृत्या ह्यपवर्गमात्यन्तिकं परमपुरुषार्थमपि स्वयमासादितं नो एवाद्रियन्ते भगवदीयत्वेनैव परिसमाप्तसर्वार्थाः ॥ १७ ॥ राजन्पतिर्गुरुरलं भवतां यदूनां दैवं प्रियः कुलपतिः क्व च किङ्करो वः ॥ अस्त्वेवमंग भगवान्भजतां मुकुन्दो मुक्तिं ददाति कर्हिचित्स्म न भक्तियोगम् ॥ १८ ॥ नित्यानुभूतनिजलाभनिवृत्ततृष्णः श्रेयस्यतद्रचनया चिरसुप्तबुद्धेः ॥ लोकस्य यः करुणयाऽभयमात्मलोकमाख्यान्नमो भगवते ऋषभाय तस्मै ॥ १९ ॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे ऋषभदेवानुचरिते षष्ठोऽध्यायः ॥ ६ ॥ श्रीशुक उवाच ॥ भरतस्तु महाभागवतो यदा भगवताऽवनितलपरिपालनाय संचिन्तितस्तदनुशासनपरः पंचजनीं विश्वरूपदुहितरमुपयेमे ॥ १ ॥ तस्यामु ह वा आत्मजान्कार्त्स्न्येनानुरूपाना-

॥१७॥ हे राजन् ! ती भगवान कृष्ण तिम्रो र यदुवंशीहरूका कहिले रक्षक, कहिले गुरु, कहिले इष्टदेव, कहिले सुहृद कहिले कुलपति र कहिले दूत पनि बनेका थिए। ती भगवान् प्रसन्न भएर अन्य भक्तको पनि विविध कार्य सम्पन्न गर्दै रहन्छन्। ती आफ्ना सेवकलाई त मोक्ष पनि दिन्छन्, तथापि भक्तियोग प्रदान गर्दैनन् ॥ १८ ॥ जुन ऋषभदेवदेले विषयभोगहरूको निरन्तर सेवन गर्दै आफ्नो वास्तविक श्रेय चिन्हेर चिरकालसम्म अचेत परिरहेका व्यक्तिहरूलाई निर्भय आत्मज्ञानको शिक्षा दिए र जो स्वयं सदा अनुभूयमान आत्मस्वरूपलाई प्राप्त गरेर सम्पूर्ण तृष्णाबाट मुक्त थिए। ती भगवान् ऋषभदेवलाई नमस्कार छ ॥१९॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ'कृत नेपाली भाषाटीकायां षष्ठोऽध्यायः ॥ ६ ॥ ( महाराज भरतको चरित्र )–शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! महाराज भरत परम भगवद्भक्त थिए। जब तिनलाई ऋषभदेवले पृथ्वीको रक्षा गर्न नियुक्त गर्ने विचार

गरे तब उनले विश्वरूपकी कन्या पाञ्चजनीसित विवाह गरे ॥१॥ जस्तै तामस अहङ्कारबाट शब्द स्पर्शादि पञ्चभूत र तिनका तन्मात्रा जायमान हुन्छन् त्यस्तै नै भरतजीले पनि आफ्नी भार्या पञ्चजनीको गर्भबाट पाँच पुत्र उत्पन्न गरे, ती ठीक उनैजस्ता थिए ॥२॥ तिनको नाम थियो—सुमति, राष्ट्रभृत् सुदर्शन, आवरण र धूम्रकेतु । अघिको अजनाभवर्षलाई नै राजा भरतको समयमा सबै 'भारतवर्ष' भन्दथे ॥ ३ ॥ महाराज भरत सबै शास्त्रका मर्मज्ञ थिए । यसैले ती आफाफ्ना कर्ममा निरत प्रजालाई आफ्ना पूर्वज झैं स्वयं धर्ममा स्थित रहेर ठूलो वात्सल्यभावले पालन गर्नलागे ॥ ४ ॥ होता, अध्वर्यु, उद्गाता र ब्रह्मा—यी चार ऋत्विजद्वारा श्रद्धापूर्वक गराइने अग्निहोत्र, दर्श, पूर्णमास, चातुर्मास्य, पशु तथा सोमयाग आदि अनेक साना-ठूला यज्ञहरूद्वारा तिनका प्रकृतिको भेद एवं चातुर्होत्र विधिले बेला-बेलामा यज्ञ र क्रतुस्वरूप भगवान्को पूजन गरे ॥५॥ यस प्रकार अङ्ग र क्रियाहरू समेत अनेक यज्ञको अनुष्ठानको अवसरमा जब अध्वर्युगण आहुति दिन जब हातमा हविलिन्थे तब यजमान भरत त्यस यज्ञद्वारा हुने पुण्यफललाई इन्द्रादि देवताको प्रतीकस्वरूप मन्त्रका अर्थलाई नियन्त्रण

त्मनः पञ्च जनयामास भूतादिरिव भूतसूक्ष्माणि ॥ २ ॥ सुमतिं राष्ट्रभृतं सुदर्शनमावरणं धूम्रकेतुमिति ॥ अजनाभं नामैतद्वर्षं भारतमिति यत आरभ्य व्यपदिशन्ति ॥३॥ स बहुविन्महीपतिः पितृपितामहवदुरुवत्सलतया स्वे स्वे कर्मणि वर्तमानाः प्रजाः स्वधर्ममनुवर्तमानः पर्यपालयत् ॥४॥ ईजे च भगवन्तं यज्ञक्रतुरूपं क्रतुभिरुच्चावचैः श्रद्धयाऽऽहृताग्निहोत्रदर्शपूर्णमासचातुर्मास्यपशुसोमानां प्रकृतिविकृतिभिरनुसवनं चातुर्होत्रविधिना ॥५॥ संप्रचरत्सु नानायागेषु विरचिताङ्गक्रियेष्वपूर्वं यत्तत्क्रियाफलं धर्माख्यं परे ब्रह्मणि यज्ञपुरुषे सर्वदेवतालिङ्गानां मंत्राणामर्थनियामकतया साक्षात्कर्तरि परदेवतायां भगवति वासुदेव एव भावयमान आत्मनैपुण्यमृदितकषायो हविःष्वध्वर्युभिर्गृह्यमाणेषु सयजमानो यज्ञभाजो देवांस्तान्पुरुषावयवेष्व-ध्यायत् ॥ ६ ॥ एवं कर्मविशुद्धया कर्मविशुद्धसत्त्वस्यान्तर्हृदयाकाशशरीरे ब्रह्मणि भगवति वासुदेवे महापुरुषरूपोपलक्षणे श्रीवत्सकौस्तुभवनमाला-रिदरगदादिभिरुपलक्षिते निजपुरुषहृल्लिखितेनात्मनि पुरुषरूपेण विरोचमान उच्चैस्तरां भक्तिरनुदिनमेधमानस्याजायत ॥ ७ ॥ एवं वर्षायुतसहस्र-पर्यन्तावसितकर्मनिर्वाणावसरोऽधिभुज्यमानं स्वतनयेभ्यो रिक्थं पितृपैतामहं यथादायं विभज्य सकलसम्पन्निकेतात्स्वनिकेतात्पुलहाश्रमं प्रवव्राज ॥ ८ ॥ यत्र ह वाव भगवान्हरिरद्यापि तत्रत्यानां निजजनानां वात्सल्येन सन्निधाप्यत इच्छारूपेण ॥ ९ ॥ यत्राश्रमपदान्युभयतो नाभि-

गर्ने मुख्य कर्ता परब्रह्म तथा यज्ञपुरुष भगवान् वासुदेवलाई नै अर्पण गरिदिने गर्दथे । आफ्नो भगवदर्पण-बुद्धिरूपी कौशलले हृदयका सारा राग-द्वेषादि मल फालिदिएपछि ती सूर्यादि सबै यज्ञभाग भोक्ता देवताको भगवानका नेत्रादि अवयवको रूपमा ध्यान ध्यान गर्दथे ॥ ६ ॥ यस प्रकार कर्मको शुद्धिले अन्तःकरणको पनि शुद्धि भएपछि हृदयाकाश नै जसको शरीर अर्थात् अभिव्यक्तिको स्थान थियो, ती श्रीवत्सलाञ्छन, कौस्तुभमणि, वनमाला, चक्र,शङ्ख तथा गदा आदिले सुशोभित एवं अन्तर्यामीरूपले आफ्ना भक्तका अन्तःकरणमा पुरुषरूपले विराजमान सर्वव्यापक महापुरुषरूपी भगवान् वासुदेवमा क्रमशः बढ्ने प्रबल भक्ति उत्पन्न भयो ॥७॥ यस प्रकार दस हजार वर्षपछि आफ्नो राज्यभोगको समय समाप्त गरेर महाराज भरतले आफ्नो भगिसकेको आफ्ना पूर्वजहरूको सम्पत्ति शास्त्रविधिले बाँडेर आफ्ना छोराहरूलाई सुम्पिदिए र स्वयं आफ्नो सर्वसम्पत्तिपूर्ण भवन त्यागेर पुलहाश्रम अर्थात् हरिहरक्षेत्रतिर

प्रस्थान गरे । त्यस पुलहाश्रममा भगवान् कृष्ण त्यहाँ बस्ने आफ्ना भक्तगणको इच्छानुसार विविधरूप धारण गरेर वात्सल्यभाववश अझ पनि सधैं तिनको नजीक रहने गर्दछन् ॥८-९॥ त्यहाँ चक्रनदी अर्थात् गण्डकी नामले प्रसिद्ध नदी–जसका दुवैतिर नाभि झैं चिह्न रहन्छन्, यस्ता चक्राकार शालिग्रामका शिलाहरूले ऋषिहरूका आश्रमलाई पवित्र पार्दै रहन्छन् ॥१०॥ त्यस पुलहाश्रमको यस्तो एकान्त उपवनमा एक्लै बसेर विविध प्रकारका पत्र, पुष्प, तुलसीदल, जल तथा कन्द-मूल फलादि उपहार द्वारा भगवान्को आराधना गर्दा-गर्दा जसको अन्तःकरण सबै विषयाभिलाषको निवृत्ति भइसकनाले शान्त भएको थियो ती भरतलाई परमानन्दको प्राप्ति भयो ॥ ११ ॥ यसरी नियमपूर्वक गरिएको त्यो भगवत्पूजाले र बढेको अनुरागको भारले उनको हृदय द्रवीभूत भयो र ती उद्योगहीन भए । अत्यन्त आनन्दको आवेशले उनको शरीरमा रोमांच भएर आयो । प्रबल उत्कण्ठावश उम्लेको प्रेमाश्रुले तिनका नेत्रको दर्शन-शक्ति रोकिए झैं भयो । आफ्ना प्रियतमका चरणारविन्दको ध्यानद्वारा प्राप्त भक्तियोगजनित परमानन्दले गर्दा पूरा भरिएको हृदयरूपी गम्भीर सरोवरमा बुद्धि लीन

भिर्दृषच्चक्रनदीनाम सरित्प्रवरा सर्वतः पवित्रीकरोति ॥ १० ॥ तस्मिन्वाव किल स एकलः पुलहाश्रमोपवने विविधकुसुमकिसलयतुलसिकाम्बुभिः कन्दमूलफलोपहारैश्च समीहमानो भगवत आराधनं विविक्त उपरतविषयाभिलाष उपभृतोपशमः परां निर्वृतिमवाप ॥ ११ ॥ तयेत्थमविरत-पुरुषपरिचर्यया भगवति प्रवर्धमानानुरागभरद्रुतहृदयशैथिल्यः प्रहर्षवेगेनात्मन्युद्भिद्यमानरोमपुलककुलक औत्कण्ठ्यप्रवृत्तप्रणयबाष्पनिरुद्धावलोक-नयन एवं निजरमणारुणचरणारविन्दानुध्यानपरिचितभक्तियोगेन परिप्लुतपरमाह्लादगम्भीरहृदयहृदावगाढधिषणस्तामपि क्रियमाणां भगवत्सपर्यां न सस्मार ॥ १२ ॥ इत्थं धृतभगवत ऐणेयाजिनवाससाऽनुसवनाभिषेकपिशकुटिलजटाकलापेन च विरोचमानः सूर्यर्चा भगवन्तं हिरण्मयं पुरुषमुज्जिहाने सूर्यमंडलेऽभ्युपतिष्ठन्नेतदु होवाच—॥ १३ ॥ परोरजः सवितुर्जातवेदो देवस्य भर्गो मनसेदं जजान ॥ सुरेतसाऽदः पुनराविश्य चष्टे हंसं गृध्राणं नृषद्रिङ्गिरामिमः ॥ १४ ॥ इति श्रीमद्भागवते पञ्चमस्कन्धे भरतचरिते भगवत्परिचर्यायां सप्तमोऽध्यायः ॥ ७ ॥ श्रीशुक उवाच ॥ एकदा महानद्यां कृताभिषेकनैयमिकावश्यको ब्रह्माक्षरमभिगृणानो मुहूर्तत्रयमुदकान्त उपविवेश ॥ १ ॥ तत्र तदा राजन्हरिणी

हुनाले उनलाई नियमपूर्वक गरिने भगवत्पूजाको पनि स्मरण रहेन ॥१२॥ यसै प्रकार भगवत्सेवाको नियम पालन गर्न एवं कृष्णमृगचर्म र त्रिकाल स्नानले भिजेका आफ्ना अरुणवर्ण-का बाटुला जटाजूटले सुशोभित महाराज भरत सूर्यमण्डलको उदय बेलामा हिरण्मय भगवान् पुरुषोत्तमको उपस्थान गर्थे र यस्ता ऋचाहरू पढ्दै भन्दथे—॥ १३ ॥ यो भगवानको तेज प्रकृतिभन्दा पर छ । उनले आफ्नो मनबाट जगत्लाई उत्पन्न गरे । ती आफूले उत्पन्न गरेको यस विश्वमा सर्वत्र अन्तर्यामीरूपले प्रविष्ट भएर आफ्नो चित्शक्तिद्वारा सुखका इच्छुक जीवको रक्षा गर्दछन् । अतः म त्यो बुद्धिप्रवर्तक तेजको शरणमा प्राप्त भइरहेको छु ॥ १४ ॥ इति श्री मद्भागवते महापुराणे पंचमस्कन्धे नेपाली भाषाटीकायां सप्तमोऽध्यायः ॥७॥ ( राजा भरतले मृग-मोहमा जन्मान्तरपछि मृग भई जन्मलिनु )–शुकदेव भन्दछन्–एकपल्ट राजा भरत गण्डकी नदीमा स्नान गरेर नित्य नैमित्तिक र अन्य आवश्यक कर्मबाट निवृत्त भई ब्रह्माक्षर अर्थात् ॐकारको जप गर्दै तीन मुहूर्तसम्म जलको किनारमा बसिरहे ॥ १ ॥ हे राजन् ! [illegible]

व्याकुल भएर पानी पिउन जलाशयका नजिकै आयी ॥२॥ त्यो पानी खाँदै थिई–नजीकै यौटा सिंहको अति भयङ्कर गर्जन सुनियो ॥३॥ स्वभावैले डरालु त्यो हरिणी पहिले नै चकित भावले यता-उता हेरिरहेकी थिई । गर्जनको ध्वनि सुन्नासाथ सिंहको भयले त्यसको हृदय झन व्याकुल भयो । त्यसका आँखा चञ्चल भएर आए अनि त्यो अत्यन्त भयभीत भएर तिर्खा मेटिनु भन्दा पहिले नै सहसा नदीको अर्कोतिर उफ्री ॥४॥ मृगी गर्भिणी थिई, यसनिम्ति त्यो उफन लागेपछि अत्यधिक भयले गर्दा त्यसको गर्भले ठाउँ छाड्यो र योनि-द्वारबाट निस्केर जलको प्रवाहमा पर्‍यो ॥५॥ त्यो कृष्णसार मृगी आफ्ना समूहबाट छुट्टिएकी थिई । फेरि गर्भस्राव र उफ्रने अनि सिंहको भयले व्याकुल हुनाले त्यो अझ वर्ता थाकेकी थिई । अतः त्यो फेरि उफ्री र यौटा पर्वतको गुफामा पल्टिई । त्यहाँ पल्टनासाथ त्यो मरी ॥६॥ राजर्षि भरतले त्यस दीन-हीन मृगको बच्चालाई आफ्ना बन्धुहरूसित बिछोडिएर नदीको प्रवाहमा बग्नलागेको देखे र स्वजनको समान दया गरेर त्यो मातृहीन मृग-शावकलाई समातेर आफ्नो आश्रममा ल्याए ॥७॥ भरतलाई

पिपासया जलाशयाभ्याशमेकैवोपजगाम ॥ २ ॥ तया पेपीयमान उदके तावदेवाविदूरेण नदतो मृगपतेरुन्नादो लोकभयंकर उदपतत् ॥ ३ ॥
तमुपश्रुत्य सा मृगवधूः प्रकृतिविक्लवा चकितनिरीक्षणा सुतरामपि हरिभयाभिनिवेशव्यग्रहृदया पारिप्लवदृष्टिरगततृषा भयात्सहसैवोच्चक्राम ॥ ४ ॥
तस्या उत्पतन्त्या अन्तर्वत्न्या उरुभयावगलितो योनिनिर्गतो गर्भः स्रोतसि निपपात ॥ ५ ॥ तत्प्रसवोत्सर्पण भयखेदातुरा स्वगणेन वियुज्यमाना
कस्याञ्चिद्दर्यां कृष्णसारसती निपपाताथ च ममार ॥ ६ ॥ तं त्वेणकुणकं कृपणं स्रोतसाऽनूह्यमानमभिवीक्ष्यापविद्धं बन्धुरिवानुकम्पया राजर्षिर्भरत
आदाय मृतमातरमित्याश्रमपदमनयत् ॥ ७ ॥ तस्य वा एणकुणक उच्चैरेतस्मिन्कृतनिजाभिमानस्याहरहस्तत्पोषणपालनलालनप्रीणनानुध्याने-
नात्मनियमाः सहयमाः पुरुषपरिचर्यादय एकैकशः कतिपयेनाहर्गणेन वियुज्यमानाः किल सर्व एवोदवसन् ॥ ८ ॥ अहो बतायं हरिणकुणकः कृपण
ईश्वररथचरणपरिभ्रमणरयेण स्वगणसुहृद्बन्धुभ्यः परिवर्जितः शरणं च मोपसादितो मामेव मातापितरौ भ्रातृज्ञातीन्यौथिकांश्चैवोपेयाय नान्यं
कञ्चन वेद मय्यतिविस्रब्धश्चात एव मया मत्परायणस्य पोषणपालनप्रीणनलालनमनसूयुनाऽनुष्ठेयं शरण्योपेक्षादोषविदुषा ॥ ९ ॥ नूनं ह्यार्याः
साधव उपशमशीलाः कृपणसुहृद एवंविधार्थे स्वार्थानपि गुरुतरानुपेक्षन्ते ॥१०॥ इति कृतानुषङ्गः आसनशयनाटनस्थानाशनादिषु सह मृगजहुना

बच्चाप्रति ममताको अत्यधिक अभिमान भयो । अतः नित्यप्रति त्यसको खाने-पिउने प्रबन्ध-गर्नु, व्याघ्रादिबाट रक्षा र प्यारो गरेर सुमसुम्याउनु आदि कार्यमा व्यस्त रहनाले उनको आफ्नो यम, नियम तथा भगवत्पूजा आदि सबै आवश्यक कर्म एक-एक गरेर शिथिल पर्दै गएर एकदम छुटिगए ॥८॥ उनले विचार गरे–'अहो ! यो कस्तो खेदको कुरा हो कि यो बिचरा दीन मृग-शावकलाई कालचक्रको वेगले आफ्नो समूह, सुहृद्जन र बन्धुहरूसित छुटाएर मेरो शरणमा ल्याइपुर्‍यायो । यो मलाईनै आफ्ना माता-पिता, भाई, जातिबन्धु तथा आफ्नो समूहको रूप ठानेर मेरो शरणमा आएको छ । मबाहेक यो अरु कसैलाई पनि केही जस्तो मान्दैन । यसको मप्रति अटल विश्वास छ । म पनि शरणागतको उपेक्षा गर्न दोषबाट अनभिज्ञ छु । अतएव यो मेरो आश्रित बच्चाको सावधानीपूर्वक राम्ररी पालन-पोषण, लालन-प्रीणन आदि गर्नु मेरो कर्तव्य हो ॥९॥ किनकि शान्तस्वभाव तथा दीनहरूका

रक्षक भद्रजन यस्ता शरणागत प्राणिहरूको रक्षाका लागि आफ्नो ठूलो-ठूलो स्वार्थलाई पनि हुत्याइदिने गर्दछन् ॥१०॥ यस प्रकार त्यस हरिणको बच्चामा आसक्ति बढ्नाले गर्दा महाराज भरतको चित्त त्यसैको स्नेहपाशमा यसरी बाँधियो कि बस्ने, सुत्ने, डुल्ने, उभिने तथा खान-पान आदि सबै काममा ती उसैसित बस्न-उठ्न थाले ॥११॥ उनलाई जौ, कुश, पुष्प, समिधा, पत्र, फल तथा मूलादि ल्याउन जान पर्दा चितुवा वा कुकुर आदिको भयले त्यो मृगशावकलाई आफ्नै साथमा लिएर जान्थे ॥१२॥ बाटोमा जतातै आसक्त-चित्त एवं प्रेमले गर्दा अधीर भावले ती त्यसलाई आफ्नो काँधमा बसाल्दथे । यसरी ती कहिले काखमा लिएर तथा कहिले छातीमा टाँसेर त्यसलाई प्यारो गरेर परमानन्दित हुन्थे ॥१३॥ यहाँसम्म कि नित्य नैमित्तिक कर्महरू गर्दा पनि भारतेश्वर महाराज भरत छिन-छिनमा उठेर त्यस मृगशावकलाई हेर्दथे । कहिले-कहिले उसलाई देखेर तथा स्वस्थ चित्त भएर त्यसको मङ्गल कामना

स्नेहानुबद्धहृदय आसीत् ॥११॥ कुशकुसुमसमित्पलाशफलमूलोदकान्याहरिष्यमाणो वृकसालावृकादिभ्यो भयमाशंसमानः सदा सह हरिणकुणकेन वनं समाविशति ॥ १२ ॥ पथिषु च मुग्धभावेन तत्र तत्र विषक्तमतिप्रणयभरहृदयः कार्पण्यात्स्कन्धेनोद्वहति एवमुत्सङ्ग उरसि चाधायोपलालयन्मुदं परमामवाप ॥ १३ ॥ क्रियायां निर्वर्त्यमानायामन्तरालेऽप्युत्थायोत्थाय यदैनमभिचक्षीत तर्हि वाव स वर्षपतिः प्रकृतिस्थेन मनसा तस्मा आशिष आशास्ते स्वस्ति स्याद्वत्स ते सर्वत इति ॥ १४ ॥ अन्यदा भृशमुद्विग्नमना नष्टद्रविण इव कृपणः सकरुणमतितर्षेण हरिणकुणकविरहविह्वलहृदयसन्तापस्तमेवानुशोचन्किल कश्मलं महदभिरम्भित इति होवाच ॥ १५ ॥ अपि बत स वै कृपण एणबालको मृतहरिणीसुतोऽहो ममानार्यस्य शठकिरातमतेरकृतस्य कृतविस्रम्भ आत्मप्रत्ययेन तदविगणयन्सुजन इवागमिष्यति ॥१६॥ अपि क्षेमेणास्मिन्नाश्रमोपवने शष्पाणि चरन्तं

गर्दै भन्न लाग्दथे—'बाबु ! सबै प्रकारले कल्याण होस्' ॥१४॥ एक दिन त्यो मृग निकै बेरसम्म उनलाई देखापरेन, अनि त जसको धन नष्ट भएको छ, त्यस्तो कृपण पुरुषको जस्तै ती अतिशय दुःखी भएर फेरि त्यो हरिणको बच्चाको विरहले व्याकुल तथा सन्तप्त हृदय भएर करुणावश अतिशय उत्कण्ठित भावले उसैको ध्यान गर्दै अत्यन्त *चिन्तामा प्राप्त भएर यसरी बरबराउन लागे—॥१५॥ 'हरे ! के भनौं ? त्यो दीन मृगशावक जुन पोटी मरिसकेकी मृगीको बच्चा थियो, व्याधाजस्तो बुद्धि भएको म अनार्यमा विश्वासगरेर मैले गरेका विश्वासघातादि अपराधहरू सत्पुरुषहरूको जस्तै बिर्सेर के त्यो फेरि फर्केर आउला ? ॥१६॥ के म फेरि त्यसलाई आफ्नो आश्रमको उपवनमा भगवान्‌को कृपाले सुरक्षित रहँदै तथा कुशलतापूर्वक

* दृष्टान्त ( चिन्ता ठूलो रोग )—धेरै निकै ठूलो सेठको सामुन्नेको घरमा मोटा साकी बस्तथ्यो । त्यो जुत्ता सिउँदा पनि भजन गाउँथ्यो र आनन्दले जीवन बिताउँदथ्यो । सेठ दूकान र लेन-देनमा चिन्तित रहन्थ्यो साकीको भजन सुनेर उसलाई केही शान्ति प्राप्त हुन्थ्यो । एक दिन सेठले त्यो साकीलाई सोध्यो—'तिमी दिनको कति कमाउँछौ ?' साकीले भन्यो—'दिनको आठ आना जति कमाउँछु त्यति नै मेरो खर्च छ । सेठले भन्यो—'तिम्रो भजनले मलाई आनन्द मिल्दछ । यसै निमित्त म तिमीलाई पचास रुपियाँ दिन्छु । यदि आफ्नो औषधि गराए पनि त्यति त खर्च हुने नै थियो ताप न यस्तो सुख पाउने थिइन ।' साकीले रुपियाँ पायो। अनि त्यसको सुरक्षाको चिन्ता भयो । त्यो दिनमा दुइ-तीन पल्ट ती रुपियाँ गन्दथ्यो । अब दिन-रात त्यसको मन ती रुपियाँमै लागिरहन्थ्यो । रातो पनि त्यो गन्दथ्यो र लुकाएर राखिदिने गर्दथ्यो । राति निद्रा लाग्दैनथ्यो त्यसले गर्दा दिनमा जुत्ता सिउँदा ऊँघ लाग्ने गर्दथ्यो । अब त्यसले भजन गाउन पनि बिर्सो । त्यो पूर्वजन्मको संस्कारी थियो । यसै निमित्त उसले थाहा पायो—यी सबै विपत्तिको कारण यही पचास रुपियाँ हो । अतः त्यो सेठकहाँ गयो र रुपियाँ फर्काएर भन्यो—'यसलाई अब कुनै काममा खर्च गरिदिनु होला' त्यसपछि त्यो साकी आफ्नो काममा लाग्यो र फेरि पहिले जस्तै भजन गाउन थाल्यो । उता सेठलाई पनि फेरि भजन सुन्न लाग्यो। त्यसैले शान्ति पाउन लाग्यो ।

451

हरियो हरियो दूबो चरेको देख्न पाउँला ? ॥१७॥ यस्तो त भएन कि कुनै चितुवा, कुकुर,शृगालादिको समूह अथवा एक्लै डुल्ने ( व्याघ्र आदि ) जीवले त्यसलाई खाइदिए ॥१८॥ हरे ! सम्पूर्ण जगत्‌को कल्याणार्थ प्रकट हुने भएका वेदत्रयी स्वरूप भगवान् सूर्य अस्ताउन आँटिसके तर त्यो मृगीको नासोस्वरूप मृगशावक अझसम्म फर्कर आएको छैन ॥ १९॥ के त्यो हरिण-राजकुमार म पुण्यहीनको नजीकै आएर आफ्नो बालसुलभ विविध क्रीडाहरूले आफ्ना स्वजनको शोक निवारण गर्दै फेरि मलाई आनन्दित पार्ला ? ॥२०॥ अहो ! त्यो जब आफ्नो स्वाभाविक चञ्चलतावश बर्ता उफ्रने गर्दथ्यो म त्यसलाई प्रणयकोपसहित हप्काउँथें तथा मिथ्या समाधि लगाएर यौटा आँखा बन्द गरेर बस्तथें तब यो चकित भावले नजीकै आए आफ्ना जलबिन्दु जस्तै कोमल र स-साना सींगले बारम्बार मेरा अङ्गहरू बन्याइदिने गर्दथ्यो ॥२१॥ जब कहिले त्यो कुशासनमा राखेको हवन-सामग्रीलाई दूषित पार्न लाग्दथ्यो र म त्यसलाई हप्काउँथें तब त्यो अतिशय भयभीत भएर तत्काल आफ्ना सबै चञ्चलता त्यागेर कुनै ऋषि-कुमार जस्तै आफ्ना सबै इन्द्रियको निग्रह गरेर चुपचाप

देवगृसं द्रक्ष्यामि ॥१७॥ अपि च न वृकः सालावृकोऽन्यतमो वा नैकचरो वा भक्षयति ॥ १८ ॥ निम्लोचति ह भगवान्सकलजगत्क्षेमोदयस्त्रय्यात्मा-ऽद्यापि मम न मृगवधून्यास आगच्छति ॥१९॥ अपिस्विदकृतसुकृतमागत्य मां सुखयिष्यति हरिणराजकुमारो विविधरुचिरदर्शनीयनिजमृगदारकविनोदैरसंतोषं स्वानामपनुदन्॥२०॥ क्ष्वेलिकायां मां मृषासमाधिना मीलितदृशं प्रेमसंरम्भेण चकितचकित आगत्य पृषदपरुषविषाणाग्रेण लुठति ॥२१॥ आसादितहविषि बर्हिषि दूषिते मयोपालब्धो भीतभीतः सपद्युपरतरास ऋषिकुमारवदवहितकरणकलाप आस्ते ॥२२॥ किं वा अरे आचरितं तपस्तपस्विन्याऽनया यदियमवनिः सविनयकृष्णसारतनयतनुतरसुभगशिवतमाखरखुरपदपंक्तिभिर्द्रविणविधुरातुरस्य कृपणस्य मम द्रविणपदवीं सूचयन्त्यात्मानं च सर्वतःकृतकौतुकं द्विजानां स्वर्गापवर्गकामानां देवयजनं करोति ॥२३॥ अपिस्विदसौ भगवानुडुपतिरेनं मृगपतिभयान्मृतमातरं मृगबालकं स्वाश्रमपरिभ्रष्टमनुकम्पया कृपणजनवत्सलः परिपाति ॥२४॥ किंवात्मजविश्लेषज्वरदहनशिखाभिरुपतप्यमानहृदयस्थलनलिनीकं मामुपसृतमृगीतनयं शिशिरशान्तानुरागगुणितनिजवदनसलिलामृतमयगभस्तिभिः स्वधयतीति च ॥२५॥ एवमघटमानमनोरथाकुलहृदयो मृगदारकाभासेन स्वारब्धकर्मणा योगा-

बसेर आएर बस्तथ्यो' ॥२२॥ हरे ! यो परम तपस्विनी पृथ्वीले यस्तो तपस्या गरिछन्, जो त्यो अतिशय विनीत मृगशावकका कोमल र सुखकारी साना-साना खुरका पंक्तिले, आफ्ना मृगरूपी धन लुटिनाले अत्यन्त व्याकुल मलाई त्यस द्रव्यको प्राप्तिको मार्ग देखाउँदै छ र स्वयं आफ्नो शरीरलाई पनि उसकै चरणचिह्नले विभूषित पारेर स्वर्ग तथा मोक्षका इच्छुक द्विजगणको निम्ति यज्ञभूमि बनिरहेछ॥२३॥ त्यसपछि चन्द्रमामा मृगको स्वरूप देखी तथा त्यसलाई आफ्नै हराएको मृग ठानेर भन्नलागे–'उसकी आमा सिंहको डरले मरिगएकी थिई त्यस दीन मृगशावकलाई आफ्नो आश्रमबाट अलमलिएको देखेर के ती दीनवत्सल चन्द्रदेव दयावश (आफ्नो काखामा राखेर) त्यसको रक्षा गरिरहेछन् ! ॥२४॥ अथवा चन्द्रमाका शीतल किरणले आनन्दित भएर भने—'आफ्ना पुत्रहरूको वियोग जनित दुःखमय दावानल द्वारा हृदय-कमल दग्ध हुनाले जसले मृगी-कुमारको आश्रय लिएका थिए त्यस्तो मलाई के यी चन्द्रदेव आफ्नो शीतल, शान्त, स्नेहमयी र वदनसलिलस्वरूपा अमृतमयी किरणले शान्ति पुन्याइरहेछन् ? ॥२५॥ हे राजन् ! यस प्रकार उसको पूर्णहुन सर्वथा असम्भव

1/52

थियो, त्यसो भाग्यशालीहरूले व्याकुल चित्त परम तपस्वी राजा भरत मृगशावकको आशक्तिरूपी आफ्नो प्रारब्धको कारण नै भगवदाराधनास्वरूप कर्म एवं योगमार्गबाट भ्रष्ट भए, जसले आफ्नै हृदयबाट उत्पन्न तथा परम दुस्त्यज सन्तानको मायालाई मोक्षमार्गमा विघ्नस्वरूप ठानेर त्यागिदिएको थिए, उनैलाई अन्य जातीय मृगशावकमा यस प्रकारको आसक्ति किन हुन्थ्यो ? तैपनि राजर्षि भरत विघ्नहरूको वशीभूत भएर योगबाट भ्रष्ट भए । ती त्यो मृगशवको पालन पोषण, तथा लालनादिमा एकाग्र भएर आफ्नो आत्मस्वरूप नै बिसे । त्यसै बखत जसलाई टार्न अत्यन्त कठिन थियो, त्यो प्रबल वेगवान् कराल काल, मुसाको प्वालमा सर्प आइपुगे झैं त्यस बखत ती आफ्नू नजीकै बसेको छोरोको समान त्यस मृगको बचालाई हेर्दा-हेर्दै त्यसैमा आसक्त चित्त भएर त्यसैसित आफ्नो शरीर त्यागेर साधारण मानिस झैं उनले मृग-देह पाए । तैपनि उनको पूर्वजन्मको स्मृति ( संज्ञना ) नष्ट भएको थिएन ॥२७॥ अतः त्यस योनिमा पूर्वजन्मको भगवदाराधनाको प्रभावले मृगदेह पाउने कारण जानेर ती पछितो गर्दै यस प्रकार भन्न लागे—॥२८॥ अहो ! बढो दुःखको कुरा छ कि म आत्मज्ञानी

रम्भणतो विभ्रंशितः स योगतापसो भगवदाराधनलक्षणाच्च कथमितरथा जात्यन्तर एणकुणकआसङ्गः श्रेयसः प्रतिपक्षतयाऽऽप्राक्परित्यक्तदुस्त्यज-हृदयाभिजातस्य तस्यैवमन्तरायविहतयोगारम्भणस्य राजर्षेर्भरतस्य तावन्मृगार्भकपोषणपालनप्रीणनलालनानुषङ्गेणाविगणयत आत्मानमहिरिवाखु-बिलं दुरतिक्रमः कालः करालरभस आपद्यत ॥२६॥ तदानीमपि पार्श्ववर्तिनमात्मजमिवानुशोचन्तमभिवीक्षमाणो मृग एवाभिनिवेशितमना विसृज्य सह मृगेण कलेवरं मृतमनु न मृतजन्मानुस्मृतिरितरवन्मृगशरीरमवाप ॥ २७ ॥ तत्रापि ह वा आत्मनो मृगत्वकारणं भगवदाराधनसमीहानुभावेनानु-स्मृत्य भृशमनुतप्यमान आह ॥ २८ ॥ अहो कष्टं भ्रष्टोऽहमात्मवतामनुपथाद्यद्विमुक्तसमस्तसङ्गस्य विविक्तपुण्यारण्यशरणस्यात्मवत आत्मनि सर्वेषामात्मनां भगवति वासुदेवे तदनुश्रवणमननसङ्कीर्तनाराधनानुस्मरणाभियोगेनाशून्यसकलयामेन कालेन समावेशितं समाहितं कार्त्स्न्येन पुनर्ममाबुधस्यारान्मृगसुतमनु परिसुस्राव ॥ २९ ॥ इत्येवं निगूढनिर्वेदो विसृज्य मृगीं मातरं पुनर्भगवत्क्षेत्रमुपशमशीलमुनिगणदयितं शालग्रामं पुलस्त्यपुलहाश्रमं कालञ्जरात्प्रत्याजगाम ॥ ३० ॥ तस्मिन्नपि कालं प्रतीक्षमाणः सङ्गाच्च भृशमुद्विग्न आत्मसहचरः शुष्कपर्णतृणवीरुधा वर्तमानो मृगत्वनिमित्तावसानमेव गणयन्मृगशरीरं तीर्थोदकक्लिन्नमुत्ससर्ज ॥३१॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे भरतचरितेऽष्टमोऽध्यायः ॥ ८ ॥

पुरुषहरूको मार्गबाट भ्रष्ट भएँ । मैले सर्व प्रकारका आसक्ति त्यागेर एकान्त तथा पवित्र वनको आश्रय लिएर आत्मज्ञान प्राप्त गरें । मैले आफ्नो चित्त सबैका अन्तरात्मास्वरूप भगवान वासुदेवमा उनका गुणको श्रवण, मनन तथा कीर्तन गरेर र उनैको आराधना तथा स्मरण आदि गरेर प्रत्येक पललाई सफल पार्दै सावधानीपूर्वक लगाए । परन्तु हेर ! म मूर्खको त्यही मन दैववश योटा मृगशावकको सङ्गले भ्रष्ट भएर गयो ! ॥२९॥ हे राजन् ! यस प्रकार आफ्ना वैराग्य-भावनालाई लुकाई उनले जसकी आमा मृगी थिई, त्यस मृगको स्मरण त्यागिदिए । तदनन्तर आफ्नोजन्मभूमि कालञ्जरबाट फेरि शान्ति शील मुनिको आश्रम शालग्रामतीर्थ—जुन भगवानको पवित्र क्षेत्र हो—पुलस्त्य र पुलह ऋषिको आश्रममा गए ॥३०॥ त्यहाँ रहेर तिनको त्यो मृगशरीर कालको प्रतीक्षा गर्नलाग्यो । त्यो मृग सबैको संगतिबाट डरेर एक्लै नै डुल्दथ्यो, सुकेका पात तथा घाँस खाने र झाडिहरूमा बसेर जीवन यापन गर्दो

मृगयोनि प्राप्त भएको प्रारब्धको क्षय हुने बाटो पर्खन लागे । अन्तमा उनले त्यही तीर्थ अर्थात् गण्डकी नदीको तटमा त्यसैको जलले भिजेको आफ्नो मृग-शरीर त्यागिदिए॥३१॥इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे नेपाली भाषाटीकायां अष्टमोऽध्यायः ॥८॥ ( जन्म-जन्मान्तरमा महाराज जड-भरतको ब्राह्मण कुलमा जन्म )—शुकदेव भन्दछन्—हे राजन् ! त्यसैबीच आङ्गिरस गोत्रमा जायमान शम, दम, तप, स्वाध्याय, त्याग, सन्तोष, तितिक्षा, विनय, विद्या, अर्काको गुणमा दोष-दृष्टिको अभाव, आत्मज्ञान र प्रसन्नता आदि गुणयुक्त यौटा ब्राह्मणकी जेष्ठ पत्नीबाट उनैको सदृश विद्या, शील, आचार, रूप एवं उदारता आदि गुण हुने नौ सहोदर छोरा जन्मे । तिनकी कान्छी पत्नीबाट एकैपल्ट एक पुत्र र यौटी कन्या उत्पन्न भइन् ॥१॥ तीःदुवैमा पुत्र मृग-शरीर त्यागेर आफ्नो चरम शरीरले ब्राह्मणत्व प्राप्त परम भगवद्भक्त र राजर्षि श्रेष्ठ भरत थिए—यस्तो भनिन्छ ॥२॥ त्यस ब्राह्मण कुलमा जन्म लिएर पनि भग-

श्रीशुक उवाच ॥ अथ कस्यचिद्द्विजवरस्यांगिरःप्रवरस्य शमदमतपःस्वाध्यायाध्ययनत्यागसन्तोषतितिक्षाप्रश्रयविद्याऽनसूयात्मज्ञानानन्दयुक्तस्यात्मसदृशश्रुतशीलाचारं रूपौदार्यगुणा नव सोदर्या अङ्गजा बभूवुर्मिथुनं च यवीयस्यां भार्यायाम् ॥ १ ॥ यस्तु तत्र पुमांस्तं परमभागवतं राजर्षिप्रवरं भरतमुत्सृष्टमृगशरीरं चरमशरीरेण विप्रत्वं गतमाहुः ॥ २ ॥ तत्रापि स्वजनसङ्गाच्च भृशमुद्विजमानो भगवतः कर्मबन्धविध्वंसनश्रवणस्मरणगुणविवरणचरणारविन्दयुगलं मनसा विदधदात्मनः प्रतिघातमाशङ्कमानो भगवदनुग्रहेणानुस्मृतस्वपूर्वजन्मावलिरात्मानमुन्मत्तजडान्धबधिरस्वरूपेण दर्शयामास लोकस्य ॥ ३ ॥ तस्यापि ह वा आत्मजस्य विप्रः पुत्रस्नेहानुबद्धमना आसमावर्तनात्संस्कारान्यथोपदेशं विदधान उपनीतस्य च पुनः शौचाचमनादीन्कर्मनियमाननभिप्रेतानपि समशिक्षयदनुशिष्टेन हि भाव्यं पितुः पुत्रेणेति ॥ ४ ॥ स चापि तदुह पितृसन्निधावेवासध्रीचीन-

वान्को कृपाले पूर्वजन्मको वृत्तान्त स्मरण रहनाले भरतजी यस संशयले—कतै स्वजनको सहवासले भगवद्भक्तिमा बाधा नपरोस्—तीबाट सदा टाढै बसेर अतिशय विरक्त भएर जसको श्रवण, मनन र गुणकीर्तन सम्पूर्ण विघ्न हटाइदिन्छ, ती भगवान्का चरण-कमललाई आफ्नो हृदयमा धारण गरेर स्वतन्त्र रूपले विचरण गर्न लागे । त्यस बखत ती अरूका दृष्टिमा आफूलाई बौलाहा *अन्धो र बहिरोको रूपमा प्रकट गरिरहेथे ॥३॥ उता ती द्विज श्रेष्ठले पुत्रस्नेहमा आसक्त चित्त भएर ती आफ्नो उन्मत्त पुत्रलाई पनि समावर्तनसम्म सबै संस्कार शास्त्र-

* दृष्टान्त ( तपाईं अन्धो हुनुहुन्छ )—कुनै तीर्थस्थानमा यौटा सूरदास भजन गाउँदै भिक्षा माग्दथे । तिनलाई मानिसहरू चना, केरा, अन्न र एक-दुइ पैसा दिन्थे । त्यसले सूरदास प्रसन्न थिए । एक दिन यौटा गृहस्थ आयो र सूरदासको भजन सुनेर निकै प्रसन्न भयो । उसले पाँच रुपियाको नोट सूरदासको हातमा राखिदियो । बिचरा सूरदास नोटसित अपरिचित थिए । नोटमा के लेखिएको हुन्छ, यो पनि उनलाई ज्ञान थिएन 'कसैले मेरो हातमा कागजको यौटा टुक्रा राखि दियो' यस्तो सोचेर सूरदास पछितो गर्न लाग्यो । उसले त ठानेका थिए—'सेठ ठूलो मानिस छ । दुइ-चार आना पैसा त अवश्य देला । तर यो त एकदम लोभी देखियो । कागजको यौटा टुक्रा राखिदियो' यस्तो सोचेर सूरदास पछितो गर्न लाग्यो । उसले त ठानेका थिए—'सेठ ठूलो मानिस छ । दुइ-चार आना पैसा त अवश्य देला । तर यो त एकदम लोभी देखियो । कागजको यौटा टुक्रा कागजको यौटा टुक्रा दिएर गयो ।' सूरदास यस्तै विचार गर्दै र बरबराउँदै गइरहेका थिए । नोटलाई फ्यांकिदिने तयारीमा थियो कि तिनको चिनारु परिचित आइपुग्यो र त्यसले भन्यो—'सूरदास ! यो पाँच रुपियाको नोट कहाँ पायौ ?' सूरदासले भने—'होइन, के भन्दैछौ दाइ ! तिमी पनि ठट्टा गर्न थाल्यौ !' त्यस व्यक्तिले भन्यो—'होइन, म तिमीसित किन ठट्टा गर्नें ? हेर, बजारमा त यस नोटको साटो पाँच रुपियाँ मिल्छ । दिनेले पाँच रुपियाँ दियो ।' सुनेर सूरदास प्रसन्न भए । यसै प्रकार परमात्मा पनि प्रसाद दिन्छ, किन्तु सूरदास जस्तै अन्धो हुनाले तपाईं त्यसलाई न देख्न सक्नु हुन्छ, न उसको मूल्य नै बुझ्न सक्नु हुन्छ !

456

विधिले पूर्ण पान विचार गरेर उपनयन-संस्कार गरे । त्यसपछि—'पुत्रले पिताबाट उपदेश ग्रहण गरोस्'—यो शास्त्रीय आज्ञानुसार उनले अपेक्षा नभए पनि शौच-आचमनादि कर्म र नियमको शिक्षा दिए ॥४॥ तर भरत आफ्ना पिताको समक्ष नै उनको विरुद्ध आचरण गर्नलागे । तिनका पिताले श्रावण मासदेखि उनलाई वेदाध्ययन गराउने इच्छा गरेर वसन्त तथा ग्रीष्म ऋतुको चैत्र, वैशाख, ज्येष्ठ र आषाढ यी चार महीनामा व्याहृति, प्रणव र शिरोमन्त्र सहित त्रिपदा गायत्रीको निरन्तर अध्ययन गराउँदै उनलाई त्यो मन्त्र स्वरादि सहित सिखाउन सकेनन् । यसरी आत्मा झैं आफ्नो छोरोमा प्रेम भएका ती ब्राह्मण भरतको प्रवृत्ति नभए पनि उनलाई शौच, विद्याध्ययन, व्रत, नियम र गुरु तथा अग्निको सेवा आदि ब्रह्मचर्य आश्रमका विहित नियम–'छोरोलाई राम्ररी उपदेश दिनुपर्दछ' यस दुराग्रहले शिक्षा दिंदैरहे, किन्तु आफ्नो मनोरथ पूर्ण हुनको पहिले नै जब कि सी घरको लष्ठामा आसक्त भएर भगवत्-सेवारूपी आफ्नो मुख्य कर्तव्यबाट असावधान थिए, उसै बेला कदापि नचूक्ने कालले तिनलाई मारिदियो ॥६॥ अनि तिनकी कान्छी पत्नीले आफ्नो

मिव स्म करोति छन्दांस्यध्यापयिष्यन्सह व्याहृतिभिः सप्रणवशिरस्त्रिपदीं सावित्रीं ग्रैष्मवासन्तिकान्मासानधीयानमप्यसमवेतरूपं ग्राहयामास ॥ ५ ॥ एवं स्वतनुज आत्मन्यनुरागावेशितचित्तः शौचाध्ययनव्रतनियमगुर्वनलशुश्रूषणाद्यौपकुर्वाणककर्माण्यनभियुक्तान्यपि समनुशिष्टेन भाव्यमित्यसदाग्रहः पुत्रमनुशास्य स्वयं तावदनधिगतमनोरथः कालेनाप्रमत्तेन स्वयं गृह एव प्रमत्त उपसंहृतः ॥ ६ ॥ अथ यवीयसी द्विजसती स्वगर्भजातं मिथुनं सपत्न्या उपन्यस्य स्वयमनुसंस्थया पतिलोकमगात् ॥ ७ ॥ पितर्युपरते भ्रातर एनमतत्प्रभावविदस्त्रय्यां विद्यायामेव पर्यवसितमतयो न पराविद्यायां जडमतिरिति भ्रातुरनुशासननिर्बन्धान्न्यवृत्सन्त ॥८॥ स च प्राकृतैर्द्विपदपशुभिरुन्मत्तजडबधिरेत्यभिभाष्यमाणो यदा तदनुरूपाणि प्रभाषते कर्माणि च स कार्यमाणः परेच्छया करोति । विष्टितो वेतनतो वा याञ्चया यदृच्छया चोपसादितमल्पं बहु मिष्टं कदन्नं चाभ्यवहरति परं नेन्द्रियप्रीतिनिमित्तम्॥ नित्यनिवृत्तनिमित्तस्वसिद्धविशुद्धानुभवानंदस्वात्मलाभाधिगमः सुखदुःखयोर्द्वन्द्वनिमित्तयोरसंभावितदेहाभिमानः ॥९॥ शीतोष्णवातवर्षेषु वृष इवानावृताङ्गः पीनः संहननाङ्गः स्थण्डिलसंवेशनानुन्मर्दनामज्जनरजसा महामणिरिवाभिव्यक्तब्रह्मवर्चसः कुपटावृतकटिरुपवीतेनोरुमषिणा द्विजातिरिति

गर्भबाट उत्पन्न दुवै पुत्र सौतालाई सुम्पिदिइन् र आफू पतिसित सती भई पतिलोकमा गइन् ॥७॥ पिता मरेपछि भरतका भाईले, जसको केवल कर्मकाण्डरूपी अपरा विद्यामा नै अलम्बुद्धि रहन्थ्यो र जो ब्रह्मज्ञानरूपी परा विद्याबाट अनभिज्ञ थिए, भरतको प्रभावबाट अनभिज्ञ हुनाले 'यो मूर्ख हो' यस्तो ठानेर उनले तिनलाई पढाउने आग्रह त्यागिदिए ॥८॥ जब साधारण नरपशु पनि उनलाई बौलाहा, मूर्ख, बहिरो भनेर डाक्थे तब तीपनि त्यसैअनुसारआचरण गर्न लाग्दथे । कसैले बेगार वा केही पारिश्रमिक दिई उनीसित काम गराउन खोज्दथे तब ती उसकै इच्छानुसार काम गरिदिने गर्दथे । उनलाई राम्रो वा निकृष्ट जस्तो अन्न मिल्दथ्यो, त्यसैलाई रसनेन्द्रियको नमानि केवल शरीर-निर्वाहको निम्ति खाइदिने गर्दथे । उनलाई स्वतः सिद्ध विशुद्ध ज्ञानानन्दस्वरूप आत्मज्ञान प्राप्त भइसकेको थियो । अतः हर्ष-शोकादि द्वन्दका निमित्तरूपी सुख-दुःखादिमा उनलाई देहाभिमानको केही पनि स्फूर्ति हुन्नथ्यो ॥९॥ ती शीत, ग्रीष्म, वर्षा वा आँधीको बेलामा पनि साँढे झैं नाङ्गै डुल्दथे । तिनका सबै अङ्ग स्थूल र परिपुष्ट थिए । भूमिमा पल्टने, घुकुवा नघस्ने तथा स्नान न-

7135

गर्नाले शरीरमा धूलो जम्दा तिनका ब्रह्मतेज धूलोले ढाकेको बहुमूल्य मणिका समान छकेको थियो। तिनको कम्मरमा फोहोर मैलो लुगा तथा काँधमा मलीन एवं कालो यज्ञोपवीत रहिरहन्थ्यो। अतः अज्ञानी जन उनलाई 'द्विज' वा 'कुनै अधम ब्राह्मण' भनेर अपमानित गर्दथे, तर ती त्यसमा केही ध्यान नदिएर स्वच्छन्दरूपले विचरण गर्दै रहन्थे ॥१०॥ अर्काको काम गरेर पेट पालेको देखेर उनलाई उनका भाइहरूले खेत खन्ने र मिलाउने काममा लगाइदिए। ती त्यो काम पनि गर्नलागे, किन्तु तिनलाई यस कुराको अलि कति पनि ध्यान रहन्नथ्यो कि त्यो खेतको भूमी समतल छ वा अग्लो-होचो। त्यो सानो छ अथवा धेरै ठूलो। तिनका भाइ उनलाई चामलको कनिका, पिना, भुटेको मास अथवा भाँडोमा लागेको डढेको अन्न जे जति दिन्थे ती त्यसैलाई अमृत समान ठानेर खाइदिन्थे ॥११॥ एक समय शूद्रहरूको मौटा राजाले पुत्रप्राप्तिको कामनाले देवी भद्रकालीलाई मनुष्यको बलि दिने विचार गर्‍यो ॥१२॥ त्यस शूद्रनरेशले जुन पुरुष पशुबलि दिन झिकाएको थियो, त्यो संयोगले फुस्केर भाग्यो। त्यसलाई खोज्नको निम्ति राजाका अनुचरहरू चारैतिर दगुरे

ब्रह्मबंधुरिति संज्ञयाऽतज्ज्ञजनावमतो विचचार ॥१०॥ यदा तु परत आहारं कर्म वेतनत ईहमानः स्वभ्रातृभिरपि केदारकर्मणि निरूपितस्तदपि करोति किंतु न समविषमन्यूनमधिकमिति वेद। कणपिण्याकफलीकरणकुल्माषस्थालीपुरीषादीन्यप्यमृतवदभ्यवहरति ॥११॥ अथ कदाचित्कश्चिद्वृषलपतिर्भद्रकाल्यै पुरुषपशुमालभतापत्यकामः ॥१२॥ तस्य ह दैवमुक्तस्य पशोःपदवीं तदनुचराःपरिधावन्तो निशिनिशीथसमये तमसावृतायामनधिगतपशव आकस्मिकेन विधिना केदारान्वीरासनेन मृगवराहादिभ्यः संरक्षमाणांगिरःप्रवरसुतमपश्यन् ॥ १३ ॥ अथ त एनमनवद्यलक्षणमवमृश्य भर्तृकर्मनिष्पत्तिं मन्यमाना बद्ध्वा रशनया चण्डिकागृहमुपनिन्युर्मुदा विकसितवदनाः ॥ १४ ॥ अथ पणयस्तं स्वविधिनाऽभिषिच्याहतेन वाससाच्छाद्य भूषणालेपस्रक्तिलकादिभिरुपस्कृतं भुक्तवन्तं धूपदीपमाल्यलाजाकिसलयांकुरफलोपहारोपेतया वैशससंस्थया महता गीतस्तुतिमृदङ्गपणवघोषेण च पुरुषपशुं भद्रकाल्याः पुरत उपवेशयामासुः॥१५॥अथ वृषलराजपणिः पुरुषपशोरसृगासवेन देवीं भद्रकालीं यक्ष्यमाणस्तदभिमंत्रितमसिमतिकरालनिशितमुपाददे ॥१६॥ इति तेषां वृषलानां रजस्तमः प्रकृतीनां धनमदरजउत्सिक्तमनसां भगवत्कलावीरकुलं कदर्थीकृत्योत्पथेन स्वैरं विहरतां हिंसाविहाराणां कर्मा-

आधारातको घोर अन्धकारले गर्दा त्यसलाई पक्रन सकेनन्। त्यसै बाबत दैवसंयोगले अकस्मात् तिनलाई अङ्गिरस गोत्रीय ब्राह्मण-कुमार जडभरत देखापरे। ती त्यस बखत वीरासनमा बसेर मृग, वराह आदि जीवबाट आफ्नो खेतको रक्षा गरिरहेका थिए ॥१३॥ अनि यो पुरुष पशु सबै लक्षणले युक्त छ भन्ने जानेर तथा यसद्वारा हाम्रा स्वामीको कार्य अवश्य हुनेछ भन्दै दूतहरूले उनलाई पाता फर्काएर बाँधे र प्रसन्न भई चण्डिका देवीको मन्दिरमा लगे ॥१४॥ त्यहाँ ती दस्युहरूले उनलाई विधिवत् स्नान गराए, नयाँ वस्त्र फेराए र विविध प्रकारका आभूषण, चन्दन, माला तथा तिलक आदिले विभूषित गरेर राम्ररी भोजन गराए। त्यसपछि धूप, दीप, माला, लावा, पात, अंकुर, फल तथा नैवेद्यादि सामग्री सहित बलि दानको विधिले गान, स्तुति, मृदङ्ग तथा पणव आदिको महाघोष गर्दै ती पुरुष-पशुलाई भद्रकालीको सामुन्ने लगेर बसाले ॥ १५ ॥ त्यसपछि दस्युराजको पुरोहितले त्यो पुरुष-पशुको रुधिरले देवी भद्रकालीलाई तृप्त पार्नको निम्ति देवीका मन्त्रले अभिमन्त्रित धाँटा अतिशय विकराल खड्ग उठायो ॥ १६ ॥ हे राजन! उनको स्वभाव रजोगुण तथा तमोगुणले

टाकिएको थियो, उसको मन मदको अतिरेकले उन्मत्त थियो, जो भगवान्‌का अंशस्वरूप ब्राह्मणकुललाई केही जस्तो पनि नठानेर कुमार्गमा स्वेच्छाले विहार गर्दथे र जसको हिंसामा अत्यन्त आस्था थियो, ती शूद्रहरूको हातबाट जसको वध गर्नु आपत्तिकालमा पनि निषिद्ध थियो, त्यस्ता ती ब्रह्ममावमा प्राप्त, वैरहीन र सम्पूर्ण प्राणीहरूको सुहृद् एक ब्रह्मर्षि कुमारको वधरूपी डरलाग्दो कुकर्म भइरहेको छ, यो देखेर तथा उनको ब्रह्मतेजले शरीरमा दाह उत्पन्न हुनाले देवी भद्रकाली सहसा आफ्नो प्रस्तरमूर्ति फोरेर प्रत्यक्ष प्रकट भइन् ॥१७॥त्यसपछि अतिशय असहनशीलता तथा रिसले खैंचिएका भृकुटी, कराल दान्हा र अति चञ्चल राता-राता आँखाले उसको मुखमण्डल डरलाग्दो देखिइरहेथ्यो, ती भद्रकाली मानौं सारा संसारको संहार गर्छिन् झैं, यस प्रकार अत्यन्त क्रोधले अट्टहास गर्दै त्यस स्थानबाट उफ्रिन् र त्यो अभिमन्त्रित खड्गले नै ती पापी दुष्टहरूको मस्तक-काटी-काटीकन आफ्ना गण सहित तिनको घाँटीबाट बगेको तातो-तातो रगतरूपी मदिरा पिएर उन्मत्त भई उच्च स्वरले गाउँदै-नाच्दै तिनका शिररूपी भकुण्डोले खेल्न लागिन् ॥ १८ ॥ हे राजन् ! यसै प्रकार

तिदारुणं यद्ब्रह्मभूतस्य साक्षाद्ब्रह्मर्षिसुतस्य निर्वैरस्य भूतसुहृदः सूनायामप्यननुमतमालम्भनं तदुपलभ्य ब्रह्मतेजसाऽतिदुर्विषहेण दन्दह्यमानेन वपुषा सहसोच्चचाट सैव देवी भद्रकाली ॥ १७ ॥ भृशममर्षरोषावेशरभसविलसितभ्रुकुटिविटपकुटिलदंष्ट्रारुणेक्षणाटोपातिभयानकवदना हन्तुकामेवेदं महाट्टहासमतिसंरम्भेण विमुञ्चन्ती तत उत्पत्य पापीयसां दुष्टानां तेनैवासिना विवृक्णशीर्ष्णां गलात्स्रवन्तमसृगासवमत्युष्णं सह गणेन निपीयातिपानमदविह्वलोच्चैस्तरां स्वपार्षदैः सह जगौ ननर्त विजहार च शिरःकन्दुकलीलया ॥ १८ ॥ एवमेव खलु महदभिचारातिक्रमः कार्त्स्न्येनात्मने फलति ॥ १९ ॥ न वा एतद्विष्णुदत्त महदद्भुतं यदसंभ्रमः स्वशिरश्छेदन आपतितेऽपि विमुक्तदेहाद्यात्मभावसुदृढहृदयग्रन्थीनां सर्वसत्त्वसुहृदात्मनां निर्वैराणां साक्षाद्भगवताऽनिमिषारिवरायुधेनाप्रमत्तेन तैस्तैर्भावैः परिरक्ष्यमाणानां तत्पादमूलमकुतश्चिद्भयमुपसृतानां भागवतपरमहंसानाम् ॥ २० ॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे जडभरतचरिते नवमोऽध्यायः ॥ ९ ॥ श्रीशुक उवाच ॥ अथ सिन्धुसौवीरपतेः रहूगणस्य व्रजत इक्षुमत्यास्तटे तत्कुलपतिना शिबिकावाहपुरुषान्वेषणसमये दैवेनोपसादितः स द्विजवर उपलब्ध एष पीवा युवा संहननाङ्गो

सत्पुरुषप्रति गरिएको अभिचार अर्थात् मन्त्र प्रयोगले प्राणान्त पार्ने अपराध जस्ताको त्यस्तै आफैंतिर फर्कर आउँछ ॥ १९ ॥ हे राजन् ! जसले देहादिको आत्मभावरूपिणी सुदृढ हृदय-ग्रन्थि काटिसकेको छ, जो सबै प्राणीहरूका सुहृद् र वैरहीन हुन्छन्, स्वयं भगवान् नै भद्रकाली आदि विभिन्न रूप धारण गरेर आफ्नो कहिले विफल नहुने कालचक्ररूपी शस्त्रले रक्षा गर्दछन् । जो भगवान्‌का निर्भय चरणका शरणमा प्राप्त भइसकेका हुन्छन्, ती भगवद्भक्त परमहंसको निम्ति आफ्नो मस्तक काटिने अवसर उपस्थित हुँदा पनि व्याकुल नहुनु कुनै ठूलो विस्मयको कुरा हुन सक्नैन ॥२०॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे नेपाली भाषाटीकायां नवमोऽध्यायः ॥९॥ (महाराज जडभरत र रहूगणको मिलाप) श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! एक समयको कुरा हो—सिन्धु तथा सौवीरदेशका स्वामी राजा रहूगण म्यानामा बसेर कहीं गइरहेका थिए । जब ती इक्षुमती नदीको तटमा पुगे तब तिनको म्याना बोक्ने मानिसको नाइकेलाई यौटा अर्को मानिसको खाँचो पर्‍यो । खोज्दा-खोज्दै भाग्यवश द्विजश्रेष्ठ जडभरत भेटिए । तिनलाई देखेर उसले विचार गर्‍यो—यो मनुष्य

मोटो बलियो र जवान अंग भएको छ । यस निम्ति यो गोरु-गधा झैं भारी बोक्न सर्वथा समर्थ देखिंदै छ । यति सोचेर उनले पहिलेदेखि म्यानामा लागेका ज्यामीहरूसित तिनलाई समातेर म्याना बोक्न लगाए । भरत यस कार्यको निम्ति सर्वथा अयोग्य भए पनि एक शब्द नबोली म्याना बोकेर हिड्न थाले ॥ १ ॥ बाटोमा हिंड्दा ती द्विजश्रेष्ठ खुट्टामुनि थिचिएर कुनै जीव नमरुन्–यस आशङ्काले एक बाण अगाडिको धरती हेरेर नै हिंड्दथे । यस प्रकार अन्य पीपाहरूसित उनको गति मिल्न सकिरहेको थिएन । जब म्याना हल्लन र बाङ्गिन लाग्यो, तब रहूगणले भने—'ए पीपा हो ! ताम्री हिंड ! म्यानालाई यसरी अग्लो-होचो बाङ्गो पारेर किन हिंडेका ?' ॥ २ ॥ आफ्ना स्वामीको यस्तो आक्षेपपूर्ण कुरा सुनेर चौथो उपाय अर्थात् दण्डले भयभीत भई ती पीपाहरू उतीसित भन्न लागे—॥ ३ ॥ 'हे महाराज ! हामीहरू असावधान छैनौं । हामी त हजुरको आज्ञानुसार ठीक-ठीक म्याना बोकेर हिंड्दै छौं, तर यो जुन मोटा नयाँ मानिस भर्खर पालकी बोक्न लगाइएको छ, त्यो छिटो-छिटो हिंडिरहेको छैन । यसैले गर्दा हामी पालकी लिएर हिड्न अब

गोखरवद्धुरं वोढुमलमिति पूर्वविष्टिगृहीतैः सह गृहीतः प्रसभमतदर्ह उवाह शिबिकां स महानुभावः ॥ १ ॥ यदा हि द्विजवरस्येषुमात्रावलोकानुगतेर्न समाहिता पुरुषगतिस्तदा विषमगतां स्वां शिबिकां रहूगण उपधार्य पुरुषानधिवहत आह–हे वोढारः ! साध्वतिक्रमत किमिति विषममुह्यते यानमिति ॥ २ ॥ अथ ईश्वरवचः सोपालम्भमुपाकर्ण्योपायतुरीयाच्छङ्कितमनसस्तं विज्ञापयाम्बभूवुः ॥ ३ ॥ न वयं नरदेव प्रमत्ता भवन्नियमानुपथाः साध्वेव वहामः । अयमधुनैव नियुक्तोऽपि न द्रुतं व्रजति नानेन सह वोढुमु ह वयं पारयाम इति ॥ ४ ॥ सांसर्गिको दोष एव नूनमेकस्यापि सर्वेषां सांसर्गिकाणां भवितुमर्हतीति निश्चित्य निशम्य कृपणवचो राजा रहूगण उपासितवृद्धोऽपि निसर्गेण बलात्कृत ईषदुत्थितमन्युरविस्पष्टब्रह्मतेजसं जातवेदसमिव रजसावृतमतिराह ॥ ५ ॥ अहो कष्टं भ्रातर्व्यक्तमुरुपरिश्रान्तो दीर्घमध्वानमेक एव ऊहिवान्सुचिरं नातिपीवा न संहननाङ्गो जरसा चोपद्रुतो भवान्सखे नो एवापर एते संघट्टिन इति बहुविप्रलब्धोऽप्यविद्यया रचितद्रव्यगुणकर्माशयस्वचरमकलेवरे वस्तुनि संस्थानविशेषेऽहंममेत्यध्यारोपितमिथ्याप्रत्ययो ब्रह्मभूतस्तूष्णीं शिबिकां पूर्ववदुवाह ॥ ६ ॥ अथ पुनः स्वशिबिकायां विषमगतायां प्रकुपित उवाच रहूगणः किमिदमरे त्वं

सक्दैनौं ॥४॥ दीन डोलेहरूका त्यस्ता वचन सुनेर राजा रहूगणले विचार गरे—'संसर्गले उत्पन्न हुने दोष एक व्यक्तिमा भएपछि त्योसित सम्बन्ध हुने सबै पुरुषमा आउन सक्छ ।' अतएव गुरुजनको सेवक भएर पनि क्षत्रिय स्वभाववश तिनको मनमा केही क्रोध उत्पन्न भयो । तिनको बुद्धि रजोगुणले भरियो र तो जसको ब्रह्मतेज खरानी भित्रको अग्नि झैं अस्पष्ट थियो, ती द्विजश्रेष्ठ भरतलाई भने—॥५॥ ए भाइ ! ठूलो खेदको कुरा छ कि तँ [illegible] थाकेको जस्तो लागिरहेछ । यति परबाट तँ एक्लै नै पालकी बोकेर आइरहेको छस् ! यसैसित नै यो कुरा पनि छ कि तँ धेरै मोटो, बलियो र हृष्ट-पुष्ट पनि छैनस् । र मित्र ! बुढ्यौलीले पनि तँलाई थिच्नै चिचिराखेको छ । ज्ञात भइरहेको छ कि तेरा यी साथीहरूले त अझै पालकीमा हात लाएका छैनन् ।' यसरी राजाले निकैक झगडो पनि [illegible] उनी नै चुपचाप पालकी बोकेर हिंड्दै रहे, किनकि वस्तुतः अविद्यमान भिन्न-भिन्न अंग-युक्त देखिने अविद्याका कार्यस्वरूप पञ्चभूत, इन्द्रिय तथा [illegible] आफ्नो अन्तिम शरीरमा उनलाई ममताको झुटो अभिमान रहिरहेको थिएन ॥ ६ ॥

अब राजा रहूगणले पालकी पहिले जस्तै विषमभावले हल्लिएको देखेर अतिशय रिसाई भने—'अरे ! यो के कुरा हो ! के तँ जिउँदै मृत्युको आवाहन गरिरहेको छस् त्यसैले यसरी अवज्ञा गरेर म आफ्नो स्वामीको आज्ञा टाल्दै गइरहेको छस् ? तँ ठूलो उन्मत्त जस्तै देखिन्छस् पर्खी, म दण्डपाणी यमराज जस्तै अहिल्यै तेरो उद्दण्डताको औषधि गर्दछु। जसले तँ चाँडै नै आज्ञापालक र सोझो हुनेछस् ॥७॥ आफूलाई राजा मानेर यसरी असम्बद्ध कुरा बोल्ने, रजोगुण तथा तमोगुणयुक्त अभिमानको वशीभूत भएर भगवान्‌का एकमात्र आश्रय भक्तजनको अपमान गन एवं भक्तजनको व्यवहार जान्नमा अकुशल भएर पनि आफूलाई पण्डित मान्ने राजा रहूगण समस्त प्राणीहरूका सुहृद्, आत्मा तथा ब्रह्म स्वरूपले एकत्वमा प्राप्त ती विप्रवर भरतले केही पनि नरिसाई मुसुमुसु हाँस्तै भने ॥ ८ ॥ ब्राह्मण देवता भन्दछन्—हे राजन् ! तिम्रो कथन यथार्थ हो। म यसलाई उपेक्षा गरेको मान्दिन। यदि भारी बोक्ने र बाटोमा हिंड्ने यो शरीर नै 'म' भए त मलाई यस भारको क्लेश र बाटोको श्रम अवश्य हुन्थ्यो। यस बाहेक तिम्रो यो कथन पनि उचित हो कि—'तँ बर्ता मोटो-घाटो

जीवन्मृतो मां कदर्थीकृत्य भर्तृशासनमतिचरसि । प्रमत्तस्य च ते करोमि चिकित्सां दण्डपाणिरिव जनताया यथा प्रकृतिं स्वां भजिष्यस इति ॥७॥ एवं बह्वसंबद्धमपि भाषमाणं नरदेवाभिमानं रजसा तमसाऽनुविद्धेन मदेन तिरस्कृताशेषभगवत्प्रियनिकेतं पण्डितमानिनं स भगवान् ब्रह्मभूतः सर्वभूतसुहृदात्मा योगेश्वरचर्याणां नातिव्युत्पन्नमति स्मयमान इव विगतस्मय इदमाह ॥ ८ ॥ ब्राह्मण उवाच ॥ त्वयोदितं व्यक्तमविप्रलब्धं भर्तुः स मे स्याद्यदि वीर भारः ॥ गन्तुर्यदि स्यादभिगम्यमध्वा पीवेति राशौ न विदां प्रवादः ॥ ९ ॥ स्थौल्यं कार्श्यं व्याधय आधयश्च क्षुत्तृड्भयं कलिरिच्छा जरा च ॥ निद्रा रतिर्मन्युरहंमदः शुचो देहेन जातस्य हि मे न सन्ति ॥ १० ॥ जीवन्मृतत्वं नियमेन राजन्नाद्यन्तवद्यद्विकृतस्य दृष्टम् ॥ स्वस्वाम्यभावो ध्रुव ईड्य यत्र तर्ह्युच्यतेऽसौ विधिकृत्ययोगः ॥ ११ ॥ विशेषबुद्धेर्विवरं मनाक् च पश्याम यन्न व्यवहारतोऽन्यत् ॥ क ईश्वरस्तत्र किमीशितव्यं तथापि राजन्करवाम किं ते ॥१२॥ उन्मत्तमत्तजडवत्स्वसंस्थां गतस्य मे वीर चिकित्सितेन ॥ अर्थः कियान्भवता शिक्षितेन स्तब्धप्रमत्तस्य च पिष्टपेषः ॥१३॥ श्रीशुक उवाच ॥ एतावदनुवादपरिभाषया प्रत्युदीर्य मुनिवर उपशमशील उपरतानात्म्यनिमित्त उपभोगेन कर्मारब्धं व्यपनयन्

र हृष्ट-पुष्ट पनि छैनस, किनकि हृष्ट-पुष्ट हुने आदि धर्म शरीरका नै हुन्छन्, यो तत्त्वज्ञानीहरूको वचन हो ॥९॥ स्थूलता, कृशता, आधि-व्याधि, क्षुधा, तृषा, भय, कलह, इच्छा, निद्रा, लोभ, प्रेम अभिमान एवं शोक यी सबै धर्म देहाभिमान उत्पन्न हुने व्यक्तिमा नै रहन्छन् ममा त यी अलिकति पनि छैनन ॥१०॥ हे राजन् ! अब रह्यो मर्न र बाँच्ने कुरा, जति पनि आदि-अन्त्ययुक्त परिणामशील पदार्थ छन् ती सबैमा नियमितरूपले यी दुवै कुरा विद्यमान देखिन्छन्। हे स्तुत्य ! जहाँ कहाँ स्वामी र सेवकको भाव निश्चित रहन्छ, त्यहीँ नै आज्ञा-पालन आदिको नियम लागू हुन सक्छ—अन्यत्र हुँदैन ॥ ११ ॥ राजा-प्रजाको भेदबुद्धिको निश्चित व्यवहारलाई छाडेर अरु कहीं केही अवकाश देखिन्दैन। यदि पारमार्थिक दृष्टिले हेर हो भने को कसको स्वामी हो र को कसको सेवक हो ? तथापि हे राजन् ! यदि तिमीलाई स्वामीत्वको अभिमान छ भने, भन म तिम्रो के सेवा गरौँ ॥१२॥ हे वीर ! म जस्तो मत्त, उन्मत्त, जड एवं आफ्नै स्थितिमा मग्न रहनेलाई औषधि गर्न अथवा दण्ड दिनाले तिम्रो के प्रयोजन सिद्ध हुन्छ ? यदि म साँच्चै नै मूर्ख वा प्रमादी हुँ तापनि

तिमीले दण्ड दिनु पिष्ट-पेषणकै समान व्यर्थ न छ ॥१३॥ शुकदेवजी भन्दछन्—हे राजन् ! जसको देहाभिमानको कारणास्वरूप अज्ञान नष्ट भइसकेको थियो, ती शान्तचित्त मुनिवर जडभरत राजा रहूगणको कथनलाई अनुवादको काइदाले उत्तर दिई तथा भोगद्वारा आफ्नो प्रारब्ध कर्म नष्ट गर्नका लागि फेरि राजाको पालकी पहिले जस्तै बोकेर हिंड्न लागे ॥१०॥ हे पाण्डवेय ! सिन्धु तथा सौवीर देशका नरेश राजा रहूगण पनि उत्तम श्रद्धालु हुनाले तत्त्व-जिज्ञासाको पूर्ण अधिकारी थिए । ती द्विजश्रेष्ठ जडभरतको यस प्रकार अनेक योग-ग्रन्थको अभिमत एवं हृदय-ग्रन्थिलाई छिनाल्ने वचन सुन्नासाथ रहूगण पालकीबाट तल बर्ले र राजमदलाई त्यागेर, तिनका चरणमा ठाउको राखेर अपराध क्षमा माग्दै यस प्रकार भन्नलागे—॥१५॥ हे भगवन् ! हजुरले द्विजगणको चिह्नस्वरूप यो यज्ञोपवीत धारण गर्नुभएको छ, अनि यस प्रकार गुप्तभावले विचरण गर्ने हजुर को हुनुहुन्छ ? हजुर दत्तात्रय आदि विख्यात अवधूत मध्ये त कुनै हुनुहुन्न ? हजुर कसका पुत्र हुनुहुन्छ ? र हजुरको जन्मस्थान कहाँ हो ? यहाँ कहाँबाट पाल्नुभयो ! मेरो कल्याण गर्नको निम्ति आउनु-

राजयानमपि तथोवाह ॥ १४ ॥ स चापि पाण्डवेय सिन्धुसौवीरपतिस्तत्त्वजिज्ञासायां सम्यक् श्रद्धयाऽधिकृताधिकारस्तद्धृदयग्रन्थिमोचनं द्विजवच आश्रुत्य बहुयोगग्रन्थसम्मतं त्वरयाऽवरुह्य शिरसा पादमूलमुपसृतः क्षमायन्विगतनृपदेवस्मय उवाच ॥ १५ ॥ कस्त्वं निगूढश्चरसि द्विजानां बिभर्षि सूत्रं कतमोऽवधूतः ॥ कस्यासि कुत्रत्य इहापि कस्मात्क्षेमाय नश्चेदसि नोत शुक्लः ॥ १६ ॥ नाहं विशंके सुरराजवज्रान्न त्र्यक्षशूलान्न यमस्य दण्डात् ॥ नाग्न्यर्कसोमानिलवित्तपाशाच्छंके भृशं ब्रह्मकुलावमानात् ॥ १७ ॥ तद्ब्रूह्यसङ्गो जडवन्निगूढविज्ञानवीर्यो विचरस्यपारः ॥ वचांसि योगग्रथितानि साधो न नः क्षमन्ते मनसाऽपि भेत्तुम् ॥ १८ ॥ अहं च योगेश्वरमात्मतत्त्वविदां मुनीनां परमं गुरुं वै ॥ प्रष्टुं प्रवृत्तः किमिहारणं तत् साक्षाद्धरिं ज्ञानकलावतीर्णम् ॥ १९ ॥ स वै भवाँल्लोकनिरीक्षणार्थमव्यक्तलिङ्गो विचरत्यपिस्वित ॥ योगेश्वराणां गतिमन्धबुद्धिः

भएको हजुर साक्षात् सत्वमूर्ति भगवान कपिल मुनि त हुनुहुन्न ? ॥१६॥ म इन्द्रको वज्र, रुद्रको त्रिशूल, यमराजको दण्ड र अग्नि, सूर्य चन्द्र, कुबेरका शस्त्रले पनि डराउन्न, तर म ब्राह्मण कुलको अपमान नहोओस्, यसले बर्ता डराउँछु ॥१७॥ अतः हजुर भन्नुहवस कि यसरी गम्भीर विज्ञान-वीर्यले सम्पन्न भएर आफ्नो अपार महिमालाई लुकाएर यस प्रकार असङ्ग भावले मूर्ख जस्तै विचरण गर्ने हजुर को हुनुहुन्छ ? हे साधो ! हजुरको योगग्रन्थ सम्मत वाक्यहरू बुझ्नमा मेरो चित्त कत्ति पनि समर्थ देख्दिन ॥ १८ ॥ म त आत्मतत्त्वका ज्ञाता, मुनीश्वरहरूका गुरु एवं प्रत्यक्ष भगवान्का अंशावतार योगेश्वर कपिलभगवान्सित यो सोध्नको निम्ति उनको आश्रममा जाँदै थिएँ संसारमा शरण लिनेयोग्य एकमात्र पुरुषको छन् ? ॥१९॥ उसो भए हजुर कपिल मुनि नै त सबै लोकको दशा हेर्न आफ्नो रूप लुकाएर यसरी डुलिरहनु भएको होइन ? घरमा आसक्त अन्धबुद्धि *पाखेले योगेश्वरहरूको गति

* उदाहरण—गँवार ( पाखे ) थोटा कोरी कुनै दुष्ट पुरु राजालाई भेट्न गयो । जय-जय मनिसकेपछि बोल्यो—'सरकार ! हजुर त गधा जस्तै मोटाउनु भएको छ ।' यस्तो सुनेर राजा साहेब रिसाए र उनले त्यस-लाई ह्यालखानमा हाल्न लगाए । यो कुरा सुनेर कोरीको पिता राजाकहाँ गयो र भन्नलाग्यो—'महाराज ! हजुर मेरो छोरीलाई छाडिदिनुस्, पछि बरू आफ्नो शरीर बज्रौले चिर्न लाए पनि हुन्छ ।' राजाले त्यसलाई पनि थुनाइदिए । अनि कोरिनी रानी साहेबकहाँ गई र भनी—'सरकार ! मेरी छोरा र पतिलाई छुटाइदिनोस । मेरो छोरो त हजुरको पनि छोरो, मेरो लोग्ने त हजुरको पनि लोग्ने ।' यस्ता 'पाखे' कुरा सुनेर रानी साहेब अत्यन्त हाँसिन, र तिनको सरल कुरा सुनेर दया लागी उनले ती दुवैलाई कैदबाट मुक्त गरिदिइन ।

कसरी जान सक्छ ॥२०॥ मैले सांसारिक कामबाट आफूलाई थाकेको देखेको छु, यसै निम्ति अनुमान गर्दछु कि भारी बोक्ने र बाटोमा हिंड्नाले हजुरलाई पनि श्रम अवश्य हुँदाहोला, अतएव हजुरको यो कथन—'मलाई कुनै श्रम हुँदैन' यो कुरा मैले बुझ्न सकिन। यो बाहेक हजुरले भन्नुभयो–'हाम्रो र तिम्रो स्वामी-सेवकको भाव केवल व्यवहार मात्र हो।' अतः त्यो व्यवहार मार्ग पनि त आफ्नो मूल कारणको साथ सत्य नै मानिन्छ। नभए त वस्तुतः असत् घटले जल ल्याउने आदि कार्य कसरी सम्पन्न हुन सक्छन? ॥२१॥ जस्तै– चुल्होमा बसालेको थाली आगोले तातो भइसकेपछि त्यसको जल उम्लन थाल्दछ र त्यो उम्लिरहेको जलले चामलको भित्रीभाग पनि पाक्तछ, त्यसै गरी देह, इन्द्रिय र मनद्वारा जीवलाई विषयहरूको ज्ञान भइजान्छ ॥२२॥ प्रजाको पालन र शासन गर्नको निम्ति नियुक्त गरिएका राजा पनि प्रजाको सेवक नै हुन्छ। अतः उसले उन्मत्त आदि प्राणीहरूलाई दण्ड दिनु पनि पिष्ट-पेषण जस्तो नै हो, किनकि आफ्नो धर्मको आचरण गर्नु नै भगवानको सच्चा सेवा हुन्छ र त्यस्तो गर्ने प्राणी आफ्नो सारा पापराशिलाई नष्ट पारिदिन्छ

कथ विचक्षीत गृहानुबन्धः ॥ २० ॥ दृष्टः श्रमः कर्मत आत्मनो वै भर्तुर्गन्तुर्भवतश्चानुमन्ये ॥ यथाऽसतो दानमनाद्यभावात्समूल इष्टो व्यवहार-मार्गः ॥ २१ ॥ स्थाल्यग्नितापात्पयसोऽभितापस्तत्तापतस्तण्डुलगर्भरन्धिः ॥ देहेन्द्रियस्वाशयसन्निकर्षात्तत्संसृतिः पुरुषस्यानुरोधात् ॥ २२ ॥ शास्ताऽभिगोप्ता नृपतिः प्रजानां यः किङ्करो वै न पिनष्टि पिष्टम् ॥ स्वधर्ममाराधनमच्युतस्य यदीहमानो विजहात्यघौघम् ॥ २३ ॥ तन्मे भवान्नर-देवाभिमानमदेन तुच्छीकृतसत्तमस्य ॥ कृषीष्ट मैत्रीदृशमार्तबन्धो यथा तरे सदवध्यानमंहः ॥ २४ ॥ न विक्रिया विश्वसुहृत्सखस्य साम्येन वीता-भिमतैस्तवापि ॥ महद्विमानात्स्वकृताद्धि मादृङ्नङ्क्ष्यत्यदूरादपि शूलपाणिः ॥२५॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे दशमोऽध्यायः ॥१०॥ ब्राह्मण उवाच ॥ अकोविदः कोविदवादवादान्वदस्यथो नातिविदां वरिष्ठः ॥ न सूरयो हि व्यवहारमेनं तत्त्वावमर्शेन सहामनन्ति ॥ १ ॥ तथैव राजन्नुरुगार्हमेधवितानविद्योरुविजृम्भितेषु ॥ न वेदवादेषु हि तत्त्ववादः प्रायेण शुद्धो नु चकास्ति साधुः ॥ २ ॥ न तस्य तत्त्वग्रहणाय साक्षाद्वरीयसीरपि वाचः समासन् ॥ स्वप्ने निरुक्त्या गृहमेधिसौख्यं न यस्य हेयानुमितं स्वयं स्यात् ॥ ३ ॥ यावन्मनो रजसा पूरुषस्य

॥२३॥ त्यसपछि राजा रहूगण क्षमा माग्दै यस प्रकार भन्नलागे–हे दीनबन्धो! राजत्वको अभिमानवश उन्मत्त भएर मैले हजुर जस्ता साधु-श्रेष्ठको अपमान गरें। अतएव हजुर ममाथि यस्तो कृपादृष्टि गरिदिनोस् कि जसले म हजुरको अवज्ञाजनित पापबाट मुक्त होऊँ ॥२४॥ समदृष्टिले गर्दा देहाभिमानबाट रहित तथा जगत्का हितकारी हजुरजस्ता विश्वबन्धुलाई यद्यपि यस्ता मानापमानले कुनै विकार हुन सक्तैन, तापनि आफूले गरेको महापुरुषको अपमानले मजस्तो साक्षात् शंकर झैं समर्थ भएर पनि नष्ट नभई रहन सक्तैन ॥ २५ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे दशमोऽध्यायः॥१०॥(राजा रहूगणलाई जडभरतको ज्ञानोपदेश)–जडभरत भन्दछन्–हे राजन्! वास्तवमा तिमी अज्ञ भएर पनि आत्मतत्त्वका ज्ञाता ज्ञानीहरू जस्तै कुरा गर्दछौ। यतिले तिमी तत्त्वज्ञानीहरूको समाजमा श्रेष्ठ मानिन सक्तैनौ, किनकि विचारशील पुरुष तत्वविचारको अवसरमा तिमीद्वारा प्रतिपादित व्यवहारको समर्थन गर्दैनन् ॥१॥ हे राजन्! यसै गरी गृहस्थोचित यज्ञ-विस्तारका विधिज्ञापक विस्तृतवेद-वाक्यहरूमा पनि रागादि दोषरहित विशुद्ध तत्त्वविज्ञानको अभिव्यक्ति प्रायशः भएको

छैन ॥ २ ॥ जसलाई गृहस्थोचित यज्ञादि कर्मले प्राप्त हुने स्वर्गादि सुखको फल त्याज्य हो भन्ने थाहा हुँदैन तब उपनिषद् वाक्य पनि उसलाई तत्त्वज्ञान प्राप्त गराउनमा समर्थ हुन सक्तैन ॥ ३ ॥ जबसम्म मनुष्यको चित्त सत्वगुण र तमोगुणले ढाकिएको रहन्छ, तबसम्म त्यो स्वतन्त्रतापूर्वक आफ्ना ज्ञानेन्द्रिय तथा कर्मेन्द्रिय द्वारा शुभाशुभ कर्म गर्दै रहन्छ ॥४॥ मनुष्यको मन वासनात्मक विषयमा लिप्त, गुणहरूले प्रेरित, विकार तथा भूत-इन्द्रिय आदि सोह्र कलाले युक्त रहन्छ । यही विभिन्न नामले देवता तथा मनुष्यादिको रूप धारण गरेर शरीररूपी उपाधिहरूको भेदले जीवको उत्तमता तथा अधमतालाई विस्तृत रूप प्रदान गर्दछ ॥ ५ ॥ त्यसपछि कपटपूर्ण संसार-चक्रमा गाड्ने यो मायामय मन आफ्नो देहाभिमानी जीवसित मिलेर कालचक्रबाट प्राप्त सुख-दुःख तथा तीदेखि पृथक् तीव्र मोहरूपी फल प्रदान गर्दछ ॥ ६ ॥ जबसम्म मन रहन्छ तबसम्म जीवलाई स्पष्टरूपले प्रतीय मान यो स्थूल एवं सूक्ष्म व्यवहार हुँदै रहन्छ । अतएव मानिस मनलाई नै त्रिगुणात्मक अधम संसार र गुणातीत परमोत्कृट मोक्षपदको कारण भन्दछ ॥ ७ ॥ प्रत्येक विषयासक्त मन

सत्त्वेन वा तमसा वाऽनुरुद्धम् ॥ चेतोभिराकृतिभिरातनो निरङ्कुशं कुशलं चेतरं वा ॥ ४ ॥ स वासनात्मा विषयोपरक्तो गुणप्रवाहो विकृतः षोडशात्मा ॥ बिभ्रत्पृथङ्नामभी रूपभेदमन्तर्बहिष्ट्वं च पुरस्तनोति ॥ ५ ॥ दुःखं सुखं व्यतिरक्तं च तीव्रं कालोपपन्नं फलमाव्यनक्ति ॥ आलिङ्ग्य मायारचितान्तरात्मा स्वदेहिनं संसृतिचक्रकूटः ॥ ६ ॥ तावानयं व्यवहारः सदाविः क्षेत्रज्ञसाक्ष्यो भवति स्थूलसूक्ष्मः ॥ तस्मान्मनो लिङ्गमदो वदन्ति गुणागुणत्वस्य परावरस्य ॥ ७ ॥ गुणानुरक्तं व्यसनाय जन्तोः क्षेमाय नैर्गुण्यमथो मनः स्यात् ॥ यथा प्रदीपो घृतवर्तिमश्नन् शिखाः सधूमा भजति ह्यन्यदा स्वम् ॥ पदं तथा गुणकर्मानुबद्धं वृत्तीर्मनः श्रयतेऽन्यत्र तत्त्वम् ॥ ८ ॥ एकादशासन्मनसो हि वृत्तय आकूतयः पञ्च धियोऽभिमानाः ॥ मात्राणि कर्माणि पुरं च तासां वदन्ति हैकादश वीर भूमीः ॥ ९ ॥ गन्धाकृतिः स्पर्शरसश्रवांसि विसर्गरत्यर्त्यभिजल्पशिल्पाः ॥ एकादशं स्वीकरणं ममेति शय्यामहं द्वादशमेक आहुः ॥ १० ॥ द्रव्यस्वभावाशयकर्मकालैरेकादशामी मनसो विकाराः ॥ सहस्रशः शतशः कोटिशश्च क्षेत्रज्ञतो न मिथो न स्वतः स्युः ॥ ११ ॥ क्षेत्रज्ञ एता मनसो विभूतीर्जीवस्य मायारचितस्य नित्याः ॥ आविहिताः

जीवलाई सङ्कटमा पार्दछ र उही विषयहीन भएपछि त्यसलाई शान्तिमय मोक्षपद दिइदिन्छ । जस्तै–घिउले भिजेको बत्तीलाई भक्षण गर्ने दीयो धूवाँ हुने शिखालाई धारण गर्छ र पुनः समाप्त हुनासाथ त्यो आफ्नो कारणस्वरूप अग्नितत्त्वमा लीन हुन्छ । त्यस्तै नै गुण तथा कर्ममा आसक्त मन विविध प्रकारका वृत्तिले युक्त रहन्छ र निर्गुण हुनासाथ त्यो आफ्नो कारण महतत्त्वमा गएर लीन हुन्छ ॥ ८ ॥ हे वीर राजन् ! पाँच कर्मेन्द्रिय, पाँच ज्ञानेन्द्रिय तथा एक अहङ्कार, मनका यी एघार वृत्तिहरू छन् । पाँच प्रकारका कर्म, पाँच तन्मात्रा तथा एक शरीर यी एघार तिनका आश्रयस्वरूप विषय मानिएका छन् । गन्ध, रूप, स्पर्श, रस तथा शब्द यी पाँच ज्ञानेन्द्रियहरूका विषय मानिन्छ । मलत्याग, भोग, गमन, भाषण तथा लिनु दिनु आदि व्यापार—यी कर्मेन्द्रियका विषय हुन् । शरीरलाई स्वीकार गरेर मान्नु एघारौं अहङ्कारका विषय मानिन्छन् । केही व्यक्ति अहङ्कारलाई मनको बाह्रौं वृत्ति तथा त्यसका आधारभूत शरीरलाई बाह्रौं विषय भन्दछन् ॥९-१०॥ मनका यी एघार वृत्तिहरू द्रव्य, आशय, कर्म तथा कालद्वारा परिणाममा प्राप्त भएर सयकडौं, हजारौं तथा

करोड़ौं किसिमका भड्काने गर्दछन् । यिनको अस्तित्व क्षेत्रज्ञ आत्माको नै अस्तित्वले छ । स्वतः वा परस्पर मिलेर पनि इनको कुनै स्वतन्त्र सत्ता छैन ॥११॥ संसारबन्धनको हेतुरूप कर्म गर्ने जीवको मायारचित मनको प्रवाहरूपले सदा बग्ने वृत्तिहरू जान कि जाग्रत् तथा स्वप्नावस्थामा प्रकट हुन्छन् र सुषुप्ति अवस्थामा तिरोहित हुने गर्दछन् । तिनलाई यो शुद्ध र साक्षी आत्मा सर्वदा हेर्दैरहन्छ ॥१२.। क्षेत्रज्ञ आत्मा नै सबैका अन्तःकरणमा विराजमान, जगत्को मूल कारण, स्वयं प्रकाशशील, अजन्मा ब्रह्मादिका पनि नियन्ता तथा आफ्नो अधीन मायासित सबै जीवको भिन्न विद्यमान भगवान् वासुदेव छन् ॥१३॥ जस्तै वायु सबै स्थावर जङ्गम प्राणीहरूमा प्राणरूपले प्रविष्ट भएर तिनलाई प्रेरित गर्दछ, त्यस्तै नै सबैका अन्तर्यामी तथा आत्मा र प्रकृति आदिदेखि पर भगवान् वासुदेव पनि यस प्रपञ्चमा मिसिएका छन् ॥१४॥ हे राजन् ! जबसम्म मनुष्य आफ्नो ज्ञानोदय द्वारा मायालाई तिरस्कार गरेर सबै संगत त्यागेर कामक्रोधादि शत्रुहरू तथा समस्त आत्मतत्त्व जानिसक्तैन र जबसम्म आत्माको उपाधिस्वरूप मनलाई संसारको दुःखको क्षेत्र भनी बुझ्दैनन्, तबसम्म यस संसारमा

कापि तिरोहितास्च शुद्धो विचष्टे ह्यविशुद्धकर्तुः ॥ १२ ॥ क्षेत्रज्ञ आत्मा पुरुषः पुराणः साक्षात्स्वयंज्योतिरजः परेशः ॥ नारायणो भगवान्वासुदेवः स्वमाययाऽऽत्मन्यवधीयमानः ॥ .३ ॥ यथाऽनिलः स्थावरजङ्गमानामात्मस्वरूपेण निविष्ट ईशेत् ॥ एवं परो भगवान्वासुदेवः क्षेत्रज्ञ आत्मे· दमनुप्रविष्टः ॥ १४ ॥ न यावदेतां मनुभृन्नरेन्द्र विधूय मायां वयुनोदयेन ॥ विमुक्तसङ्गो जितषट्सपत्नो वेदात्मतत्त्वं भ्रमतीह तावत् ॥ १५ ॥ न यावदेतन्मन आत्मलिङ्गं संसारतापावपनं जनस्य ॥ यच्छोकमोहामयरागलोभवैरानुबन्धां ममतां विधत्ते ॥ १६ ॥ भ्रातृव्यमेनं तददभ्रवीर्यमुपेक्षयाध्ये· धितमप्रमत्तः ॥ गुरोर्हरेश्चरणोपासनास्त्रो जहि व्यलीकं स्वयमात्ममोषम् ॥ १७ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे ब्राह्मणरहूगणसंवादे एकादशोऽध्यायः ॥ ११ ॥ रहूगण उवाच ॥ नमो नमः कारणविग्रहाय स्वरूपतुच्छीकृतविग्रहाय ॥ नमोऽवधूतद्विजबन्धुलिङ्गनिगूढनित्यानुभवाय तुभ्यम् ॥ १ ॥ ज्वरामयार्तस्य यथाऽगदं सन्निदाघदग्धस्य यथा हिमाम्भः ॥ कुदेहमानाहिविदष्टदृष्टेर्ब्रह्मन्वचस्तेऽमृतमौषधं मे ॥ २ ॥ तस्माद्भवन्तं मम संशयार्थं प्रक्ष्यामि पश्चादधुना सुबोधम् ॥ अध्यात्मयोगग्रथितं तवोक्तमाख्याहि कौतूहलचेतसो मे ॥ ३ ॥ यदाह योगेश्वर दृश्यमानं क्रिया·

डुलिनै रहन्छ । किनकि मन उसलाई मोह, राग, लोभ र वैरत्व आदि बन्धनले बाँधिइरहन्छ र त्यसको माया बढाउँदै रहन्छ । अतः जो उपेक्षा गर्दै रहनाको कारणले धेरै बलवान् भएको छ, आफ्नो आत्मालाई आच्छादित पार्ने त्यस मनरूपी प्रबल कष्टी शत्रुलाई तिमी श्रीगुरु तथा श्रीहरिका चरणको सेवारूपी शस्त्रले मार ॥१५-१७॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे नेपाली भाषाटीकायां एकादशोऽध्यायः ॥११॥ ( राजा रहूगणको प्रश्न र जडभरत द्वारा समाधान )—राजा रहूगण भन्दछन्–हे भगवन् ! जुन ईश्वरले केवल लोकरक्षाका लागि शरीर धारण गरे, आफ्नो परमानन्द स्वरूपको अनुभव गरेर जो शरीरलाई तुच्छ ठान्दछन् ती जड ब्राह्मणको स्वरूपबाट आफ्नो नित्यानुभवस्वरूपलाई लुकाइरहने अवधूत स्वरूप हजुरलाई मेरो नमस्कार छ ॥ १ ॥ हे ब्रह्मन् ! जस्तै–ज्वररोगले पीडित प्राणीलाई औषधि तथा घामले सन्तप्त मनुष्यलाई शीतल जल हितकारी हुन्छ, त्यस्तै देहाभिमानस्वरूप विषधर सर्पले डसेको मेरो निम्ति हजुरको अमृतमय वचन औषधि जस्तै छ॥२॥हे देवता ! म हजुरद्वारा आफ्ना संशयहरूको निवृत्ति पछि गराउँला । यसबखत हजुरले जो मलाई अध्यात्मयोग

उपदेश दिएको छ पहिले त्यो अझ सरल रीतिले मलाई बुझाउनोस् । त्यो जान्ने मेरो प्रबल इच्छा छ ॥३॥ हे योगेश्वर ! हजुरले जो भन्नुभयो—कर्मको प्रत्यक्ष दृश्यमान श्रम आदि फल अदृश्यमा व्यवहारको कारण भएर पनि सत्य छैन, त्यो तत्त्व-विचारको अगाडि अलिकति पनि टिक्तैन । यो विचारले मेरो बुद्धि भ्रममा परिरहेको छ ॥४॥ ब्राह्मण देवता भन्दछन्—हे राजन् ! यो शरीर पृथ्वीको विकार हो । कुनै कारणले यो पृथ्वीमा हिँड्न-डुल्न थाल्दछ । अतः यसका विविध नाम परिरहन्छन् । यसका दुइ चरण हुन्छन् । तिनको माथि क्रमशः गुल्फ (गोलीगाँठा), जानु, उह्रा, ऊरु, कटिप्रदेश, वक्षस्थल, कण्ठ तथा काँध आदि अंग हुन् ॥ ५ ॥ यसको काँधका काठको पालकी राखेको छ । त्यसमा 'सौवीरराज' नामको यौटा पार्थिव विकार बसेको छ । जसमाथि ममता राख्नाले तिमी 'म सिन्धु देशको नरेश हुँ ।' यस दुर्मदले अन्धो भएका छौ ॥६॥ तर यसले तिम्रो श्रेष्ठता सिद्ध हुँदैन । जो बिचरा अत्यन्त दीन दुःखी र शोचनीय भइरहेछन् ती डोलेहरूलाई व्यर्थ बेगारमा समायौ, यस निम्ति तिमी ठूलो क्रूर र धृष्ट हौ । महापुरुषहरूको सभामा जो 'म प्रजाको रक्षक हुँ' यसरी लामो-लामो

फलं सद्व्यवहारमूलम् ॥ न ह्यञ्जसा तत्त्वविमर्शनाय भवानमुष्मिन्भ्रमते मनो मे ॥ ४ ॥ ब्राह्मण उवाच ॥ अयं जनो नाम चलन्पृथिव्यां यः पार्थिवः पार्थिव कस्य हेतोः ॥ तस्यापि चांघ्रयोरधिगुल्फजङ्घाजानूरुमध्योरुशिरोधरांसाः ॥ ५ ॥ अंसेऽधि दार्वी शिबिका च यस्यां सौवीरराजेत्यपदेश आस्ते ॥ यस्मिन्भवान्रूढनिजाभिमानो राजाऽस्मि सिन्धुष्विति दुर्मदान्धः ॥ ६ ॥ शोच्यानिमांस्त्वमधिकष्टदीनान्विष्ट्या निगृह्णन्निरनुग्रहोऽसि ॥ जनस्य गोप्ताऽस्मि विकत्थमानो न शोभसे वृद्धसभासु धृष्टः ॥ ७ ॥ यदा क्षितावेव चराचरस्य विदाम निष्ठां प्रभवं च नित्यम् ॥ तन्नामतोऽन्यद्व्यवहारमूलं निरूप्यतां सत्क्रिययाऽनुमेतम् ॥ ८ ॥ एवं निरुक्तं क्षितिशब्दवृत्तमसन्निधानात्परमाणवो ये ॥ अविद्यया मनसा कल्पितास्ते येषां समूहेन कृतो विशेषः ॥ ९ ॥ एवं कृशं स्थूलमणुर्बृहद्यदसच्च सज्जीवमजीवमन्यत् ॥ द्रव्यस्वभावाशयकालकर्मनाम्नाऽजयाऽवेहि कृतं द्वितीयम् ॥ १०॥ ज्ञानं विशुद्धं परमार्थमेकमनन्तरं त्वबहिर्ब्रह्म सत्यम् ॥ प्रत्यक् प्रशान्तं भगवच्छब्दसंज्ञं यद्वासुदेवं कवयो वदन्ति ॥ ११ ॥ रहूगणैतत्तपसा न याति न चेज्यया निर्वपणाद्गृहाद्वा ॥ न छन्दसा नैव जलाग्निसूर्यैर्विना महत्पादरजोऽभिषेकम् ॥ १२ ॥ यत्रोत्तमश्लोकगुणानुवादः प्रस्तूयते

धाक लगाउँछौ, यसले तिमी शोभित हुँदैनौ ॥७॥ जब म यो जान्दछु—निखिल चराचर प्राणीहरूको उत्पत्ति र लय सधैं पृथ्वीबाट हुन्छ तब तिनको कामले नाम बाहेक अरू व्यवहारको मूल के बुझिन्छ—त्यो तिमी मलाई भन ॥८॥ यसै गरी 'पृथिवी' शब्दको अस्तित्व पनि निरर्थक नै छ, किनकि त्यो आफ्नो कारणस्वरूप ती सूक्ष्म परमाणुहरूमा लय हुन्छ, जसका समवायले पृथ्वीरूप कार्यको सिद्धि हुन्छ । ती परमाणु पनि अविद्या द्वारा मनले नै कल्पित गरिन्छन् ॥९॥ त्यसै गरी अरू पनि जो कृश, स्थूल, सानो, ठूलो सत्, असत् एवं चेतन-अचेतन जगत् देखिन्छ, त्यो द्रव्य, स्वभाव, आशय, काल र कर्म आदि नामाभिधा भगवान्‌की मायाको नै कार्य हो भन्ने जान ॥ १० ॥ अतः जुन विशुद्धज्ञान स्वरूप अद्वितीय, भित्र-बाहिरको भेदले रहित, व्यापक तथा अन्तर्मुख रहन्छ, त्यही अत्यन्त शान्त तथा परमार्थ सत्य छ । त्यसैलाई पण्डितहरू 'भगवान्' र उसैलाई 'वासुदेव' पनि भन्दछन् ॥ ११ ॥ तर हे राजा रहूगण ! यो ज्ञान महापुरुषका चरण-रजलाई मस्तकमा धारण नगरीकन केवल तप, यज्ञ, दान, गृहस्थोचित धर्मको पालन, वेदाध्ययन तथा जल

अग्नि या सूर्यको उपासना आदि सो धनले प्राप्त हुँदैन ॥१२॥ किनकि महापुरुषहरूका सभामा भगवान्का गुण-गान र विषय-वासनालाई हटाउने सम्भाषण हुन्छ । नित्यप्रति त्यसको सेवन गर्नाले त्यो भगवत्-कथा मोक्षका अभिलाषीको, शुद्ध बुद्धिलाई भगवान् वासुदेवमा लगाइदिन्छ ॥ १३ ॥ म पूर्वजन्ममा भरत नामको राजा थिएँ । त्यस बखत म लौकिक तथा पारलौकिक विषयहरूको सङ्ग त्यागेर भगवान्को उपासनामा तत्पर रहन्थें । तैपनि मृगको सङ्गतिले परमार्थ भ्रष्ट भएर अर्को जन्ममा मृगयोनिमा पुग्नगएँ ॥ १४ ॥ तर भगवान् कृष्णको आराधनाको महिमाले त्यस योनिमा पनि मलाई पूर्वजन्मको स्मरण बनी रह्यो । अतः अब म जनसंसर्गले शंकितचित्त रहेर सदा असंगभावले आफूलाई लुकाई विचरण गर्दछु ॥१५॥ मेरो त यस्तो विचार छ कि मनुष्य वैराग्य तथा साधु-समागम द्वारा प्राप्त ज्ञानरूपी खड्गले यस लोकमा नै मोहबन्धन काटी भगवान्का लीलाहरूको कथन र स्मरण द्वारा निरन्तर भगवान्को ध्यान गर्दै संसार-सागरलाई पार गरेर भगवान्को नजीकै पुग्न सक्छ ॥ १६ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे पं० गौरीशंकर

ग्राम्यकथाविघातः ॥ निषेव्यमाणोऽनुदिनं मुमुक्षोर्मतिं सतीं यच्छति वासुदेवे ॥ १३ ॥ अहं पुरा भरतो नाम राजा विमुक्तदृष्टश्रुतसङ्गबन्धः ॥ आराधनं भगवत ईहमानो मृगोऽभवं मृगसङ्गाद्धतार्थः ॥ १४ ॥ सा मां स्मृतिर्मृगदेहेऽपि वीर कृष्णार्चनप्रभवा नो जहाति ॥ अथो अहं जन-सङ्गादसङ्गो विशङ्कमानोऽविवृतश्चरामि ॥ १५ ॥ तस्मान्नरोऽसङ्गसुसङ्गजातज्ञानासिनेहैव विवृक्णमोहः ॥ हरिं तदीहाकथनस्मृतिभ्यां लब्धस्मृतिर्या-त्यतिपारमध्वनः ॥ १६ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे ब्राह्मणरहूगणसंवादे द्वादशोऽध्यायः ॥ १२ ॥ ब्राह्मण उवाच ॥ दुरत्ययेऽ-ध्वन्यजया निवेशितो रजस्तमःसत्त्वविभक्तकर्मदृक् ॥ स एष सार्थोऽर्थपरः परिभ्रमन्भवाटवीं याति न शर्म विन्दति ॥ १ ॥ यस्यामिमे षण्नरदेव दस्यवः सार्थं विलुम्पन्ति कुनायकं बलात् ॥ गोमायवो यत्र हरन्ति सार्थिकं प्रमत्तमाविश्य यथोरणं वृकः ॥ २ ॥ प्रभूतवीरुत्तृणगुल्मगह्वरे कठोर-दंशैर्मशकैरुपद्रुतः ॥ क्वचित्तु गन्धर्वपुरं प्रपश्यति क्वचित्क्वचिच्चाशुरयोल्मुकग्रहम् ॥ ३ ॥ निवासतोयद्रविणात्मबुद्धिस्ततस्ततो धावति भो अटव्याम् ॥ क्वचिच्च वात्योत्थितपांशुधूम्रा दिशो न जानाति रजस्वलाक्षः ॥ ४ ॥ अदृश्यझिल्लीस्वनकर्णशूल उलूकवाग्भिर्व्यथितान्तरात्मा ॥ अपुण्यवृक्षान्

'चमिष्ठ' कृत नेपाली भाषाटीकायां द्वादशोऽध्यायः ॥१२॥ ( संसाररूपी वनको वर्णन र रहूगणको शंका समाधान )—ब्राह्मणदेव भन्दछन्—हे राजन् ! मायाद्वारा दुर्गम प्रवृत्तिमार्गमा लागेको र सत्वादि विभिन्न प्रकारका कर्मको विभाग देख्ने सुखरूपी धनमा आसक्त जीवरूपी वणिक्समूह भौंतारिंदै संसाररूपी वनमा आउँछ तर यहाँ त्यो केही सुख पाउन्न ॥ १ ॥ हे राजन् ! यस वनमा पाँच ज्ञानेन्द्रिय र मन यी छ चोर रहन्छन्, ती त्यो जीवरूपी वणिक् समूहको—जसको बुद्धिरूपी नायक दुलो उद्दण्ड छ—हठपूर्वक सबै धन लुटेर लिन्छन् । जाते भेडाको बथानमा पसेर चितुवाले तिनका बच्चा ध्याएर लैजान्छ, त्यस्तै उहाँ बस्ने स्त्री-पुत्रादिरूपी स्याल त्यो सोझो वणिकलाई यता-उता तान्न लाग्दछन् ॥ २ ॥ त्यो संसाररूपी वन काम्यकर्मरूपी अनेक लता, तृण र झाडीहरूले गर्दा अत्यन्त दुर्गम रहन्छ । त्यसमा अल्झेर जीव कहिले नीच पुरुषरूपी लामखुट्टे, डाँसले टोक्नाले पीडित हुन्छ । कहिले मायाको गन्धर्व नगर र कहिले अतिशय चञ्चल एवं आगो उगेल्ने वेताल देख्दछ ॥ ३ ॥ त्यो वासस्थान, जल तथा धन आदिको खोजीमा आसक्त भएर त्यस वनमा यता-उता

६९५

भौतारिँदै रहन्छ । कहिले उसका आँखामा स्त्रीरूपी आँधीबाट उठेको रागरूपी धुलो भरिनाले उसलाई दिशाहरू वा कर्मकासाक्षी देवताहरूको पनि ज्ञान रहन्न ॥४॥ त्यो कहिले-कहिले नदेखिने शत्रुरूपी झ्याउँकिरीका कर्णकटु शब्द सुन्थ्यो, कहिले राजारूपी उल्लूको बोलीले उसको चित्त सार्है दुःखी हुने गर्दथ्यो । त्यो कहिले भोकलाग्नाले पाप-वृक्षको आड लिएर तथा कहिले पिपासाकुल भएर मिथ्या विषय भोगरूपिणी मृगतृष्णाको जलतिर दगुर्न लाग्दछ ॥५॥ कहिले त्यो सुकेकी नदीतिर दगुर्दछ र कहिले अन्न नपाउनाले गर्दा भोकले व्याकुल भएर आपुसमा नै भोजनार्थ अन्न माग्न थाल्दछ । कहिले त्यो दावानल जस्तै दुःखदायी घरमा पुगेर शोकरूपी अग्निले सन्तप्त हुन्छ र कहिले यक्षहरू अर्थात् राजाहरू द्वारा प्राणरूपी धन हरण गर्नाले दुःखी हुन्छ ॥६॥ कहिले शूरवीर व्यक्ति उसको सर्वस्व खोसिलिन्छन्, अनि खिन्न मन र शोकाकुल भएर कष्टले मूर्च्छा पर्दछ र

श्रयते क्षुधार्दितो मरीचितोयान्यभिधावति कचित् ॥ ५ ॥ कचिद्धितोयाः सरितोऽभियाति परस्परं चालभते निरन्धः ॥ आसाद्य दावं कचि-दग्नितप्तो निर्विद्यते क्व च यक्षैर्हृतासुः ॥ ६ ॥ शूरैर्हृतस्वः क्व च निर्विण्णचेताः शोचन्विमुह्यन्नुपयाति कश्मलम् ॥ कचिच्च गन्धर्वपुरं प्रविष्टः प्रमोदते निर्वृतवन्मुहूर्तम् ॥ ७ ॥ चलन्कचित्कण्टकशर्कराङ्घ्रिर्नगारुरुक्षुर्विमना इवास्ते ॥ पदे पदेऽभ्यन्तरवह्निनार्दितः कौटुम्बिकः क्रुध्यति वै जनाय ॥ ८ ॥ कचिन्निगीर्णोऽजगराहिना जनो नावैति किञ्चिद्विपिनेऽपविद्धः ॥ दष्टः स्म शेते क्व च दन्दशूकैरन्धोऽन्धकूपे पतितस्तमिस्रे ॥ ९ ॥ कर्हि स्मचित्क्षुद्ररसान्विचिन्वंस्तन्मक्षिकाभिर्व्यथितो विमानः ॥ तत्रातिकृच्छ्रात्प्रतिलब्धमानो बलाद्विलुम्पन्त्यथ तं ततोऽन्ये ॥ १० ॥ कचिच्च शीतात-

कहिले गन्धर्वनगर अर्थात् कुटुम्बको बन्धनमा पुगेर एक मुहूर्तको निम्ति सुखी जस्तै भएर आनन्दमग्न हुने गर्दछ ॥७॥ कर्म गर्ने लोभले हिंड्दा-हिंड्दा काँढा र ढुङ्गारूपी विघ्नले गर्दा विफल हुने गर्दछ । उसका कुटुम्ब निकै सन्तप्त हुन्छन् । यस कारण त्यो पद-पदमा जठरानलले तप्त भएर आफ्ना स्वजनमाथि रिस गर्नथाल्दछ ॥८॥ कहिले त्यो अजिंगर सर्पद्वारा निलिएर वनमा फ्याँकिएका मृतकको समान पडिरहन्छ । त्यस वेला उसलाई आफ्नो तन-मनको पनि सुद्धि रहन्न । कहिले वनमा सर्पादि जन्तुहरू अर्थात् दुर्जनले टोक्नाले अन्धो भएर यौटा निस्पट्ट अँध्यारो कुवामा पर्दछ ।.९॥ कहिले ऊ परस्त्री तथा परधनको *लोभरूपी महको खोजमा भौंतारिन थाल्दछ, अनि मौरीहरूद्वारा पीडित हुनाले धेरै क्लेश हुन्छ । यदि कुनै प्रकारले त्यहाँ सफलता पाए पनि अन्य शत्रुहरूले थ्याँक्छन् ॥१०॥ कहिले-कहिले त्यो शीत, ताप, वायु तथा वर्षाबाट आफ्नो रक्षा गर्न असमर्थ

* उदाहरण ( लोभले मृत्यु )— यौटा धनाढ्य व्यक्ति सार्है लोभी थियो । धनी भएर पनि लोभ छुट्दैनथ्यो । यो साधारण कुरा हो—लोभीसित नै धन एकत्र हुन्छ । जस्तै व्यवहारमा नल्याइने मल थमिलिन्छ र त्यो मलले रोग उत्पन्न गरेर मारिदिन्छ । त्यसै गरी व्यवहारमा नलागेर एकत्र भएको धनले अभिमान आदि रोग उत्पन्न गरेर मनुष्यलाई अधोगति पुऱ्याइदिन्छ । अतः त्यो लोभी प्रत्येक साता आफ्नो रुपियाँ गन्दथ्यो । कसैले देख्छ कि भनेर गन्ने बेलामा ऊ एक्लै कोठामा बस्तथ्यो । एक दिन त्यो कुकुटीमा बसेर नोटका मुठा गनिसकेको थियो । अब मोहर गन्न आँटेको थियो । त्यसै बेला उसको कारिन्दा कुनै काम परेर कुकुरी कोठाभै आइपुग्यो । ऐठछे भित्रबाट ठूलो सेफको ढोका थुन्यो र बाहिरबाट चुकुल खसेर स्वतः ताल्चा थुनियो । भित्रबाट त्यो धेरै करायो । तर सेफको ठूलो ढोका बन्द हुनाले त्यसको शब्द सुनिएन । घरका मानिसले त्यो लोभीको धेरै खोजी गरे, तर त्यसको पत्तो लागेन । लोभी सेफमा थुनिएको होला भन्ने कसैले विचार गर्न सकेनन् । त्यो लोभी त्यहीं कराई-कराई मऱ्यो । खोजी गर्दागर्दै एक साता बित्यो तर पत्तो लागेन । निकै दिनपछि हिसाब मिलाउन जब उसको छोरोले सेफ खोल्दा त्यसबाट कोहिको कुहेको लाश हात लाग्यो ।

हुने गर्दछ । कहिले काहीं आपुसमै अलि-अलि व्यापार गर्न लाग्दछ भने लोभवश अर्कालाई झुक्याएर उमित शत्रुता किन्दछ ॥११॥ कहिले काहीं त्यस संसार-वनमा धन नष्ट हुनाले गर्दा उचित शय्या, आसन र बस्ने पनि रहन्न । त्यसपछि अर्काको वस्तुमा आफ्ना आँखा गडाएर उचित माग्न थाल्दछ, तैपनि त्यसको कामना पूर्ण भएझैं हुँदैन र उसले अर्का द्वारा अपमानित हुनुपर्दछ ॥१२॥ यस प्रकार व्यवहारिक सम्बन्धमा पैसाको अर्कोसित द्वन्द्व बढ्दै जाँदा पनि ऊ परस्पर विवाहादि सम्बन्ध स्थापित गर्दछ र फेरि यही बाटोमा धन नाश आदि विविध सङ्कट भोग्दै मरे तुल्य हुन्छ ॥१३॥ त्यसपछि त्यो नमिकुलमूह आफ्ना मरिसकेका साथीहरूलाई त्यहीं छाडेर नवीन उत्पन्न हुने साथीहरूलाई सँगै लिएर अगाडि बढ्दछ । हे वीर ! तीमध्ये कहिल्यै कोही पनि अत आजसम्म पछि फर्केको छ, न यस मार्गमा बल्लोपट्टि परमानन्दमय योग मार्गमा नै प्रवृत्त भएको छ ॥१४॥ जस जसले ठूला-ठूला दिक्पालहरूलाई जितेका थिए, ती धीर-वीर पुरुष पनि 'यो पृथ्वी मेरो हुन्' यस्तो ममत्वयुक्त अभिमान गरेर आपुसमा वैरत्व ठानी

पवातवर्षप्रतिक्रियां कर्तुमनीश आस्ते ॥ क्वचिन्मिथो विपणन्यच्च किञ्चिद्विद्वे षमृच्छत्युत वित्तशाठ्यात् ॥ ११ ॥ क्वचित्क्वचित्क्षीणधनस्तु तस्मिन् शय्यासनस्थानविहारहीनः ॥ याचन्परादप्रतिलब्धकामः पारक्यदृष्टिर्लभतेऽवमानम् ॥ १२ ॥ अन्योन्यवित्तव्यतिषङ्गवृद्धवैरानुबन्धो विवदन्मि-थश्च ॥ अध्वन्यमुष्मिन्नुरुकृच्छ्रवित्तबाधोपसर्गैर्विहरन्विपन्नः ॥ १३ ॥ तांस्तान्विपन्नान्स हि तत्र तत्र विहाय जातं परिगृह्य सार्थः ॥ आवर्त-तेऽद्यापि न कश्चिदत्र वीराध्वनः परमुपैति योगम् ॥ १४ ॥ मनस्विनो निर्जितदिग्गजेन्द्रा ममेति सर्वे भुवि बद्धवैराः ॥ मृधे शयीरन्न तु तद्व्र-जन्ति यन्न्यस्तदण्डो गतवैरोऽभियाति ॥ १५ ॥ प्रसज्जति क्वापि लताभुजाश्रयस्तदाश्रयाव्यक्तपदद्विजस्पृहः ॥ क्वचित्कदाचिद्धरिचक्रतस्त्रसन्सख्यं विधत्ते बककङ्कगृध्रैः ॥ १६ ॥ तैर्वञ्चितो हंसकुलं समाविशन्नरोचयन् शीलमुपैति वानरान् ॥ तज्जातिरासेन सुनिर्वृतेन्द्रियः परस्परोद्वीक्षणविस्मृ-तावधिः ॥ १७ ॥ द्रुमेषु रंस्यन्सुतदारवत्सलो व्यवायदीनो विवशः स्वबन्धने ॥ क्वचित्प्रमादाद्गिरिकन्दरे पतन्वल्लीं गृहीत्वा गजभीत आस्थितः ॥ १८ ॥ अतः कथञ्चित्स विमुक्त आपदः पुनश्च सार्थं प्रविशत्यरिन्दम ॥ अध्वन्यमुष्मिन्नजया निवेशितो भ्रमञ्जनोऽद्यापि न वेद कश्चन

युद्धमा मर्दछन् तथापि त्यस पदलाई पाउन सक्तैनन्, जसलाई अजातशत्रु परमहंसगण प्राप्त गर्दछन् ॥१५॥ यस संसाररूपी वनमा भौंतारिने त्यो जनसमुदाय कहिले लतादिका भर लिएर मीठो बोल्ने पक्षी अर्थात् बालकहरूमा मग्न हुन्छ र कहिले सिंहका समूह अर्थात् कालचक्रले डरेर बकुल्लो, कङ्क र गिद्ध आदिरूपी पाखण्डीहरूका साथ प्रीति गर्न थाल्दछ ॥१६॥ जब ऊ तिनीहरूसित धोका खान्छ अनि हंसका पंक्ति अर्थात् ब्राह्मणकुलमा प्रविष्ट हुने उद्योग गर्दछ । तब उसलाई तिनको आचार पनि रुच्दैन, अनि बानरहरू अर्थात् चंचल स्वभावका व्यक्तिमा गएर मिसिन्छ र तिनका जातीय-स्वभावानुसार विषय भोग द्वारा आफ्ना इन्द्रियलाई तृप्त पार्दछ र परस्पर यसले अर्कोको सुख देख्दा देख्दै आयुको अवधिसम्म बिर्सन्छ ॥१७॥ कहिले ऊ वृक्ष अर्थात् घरमा रमण गर्छ, कहिले स्त्री-पुत्रादिमा आसक्त हुन्छ र मैथुनादिको अभिलाषाले दीन बनेर आफ्ना बन्धन छिनाल्नमा असमर्थ हुने गर्दछ । कहिले असावधानीवश पर्वतका गुफा अर्थात् रोगादिमा ढलेर त्यसमा बस्ने हात्ती अर्थात् मृत्युबाट भयभीत भएर कुनै लता अर्थात् प्रारब्ध कर्मलाई समातेर

त्यसैको भरमा डुल्दिई रहन्छ ॥ १८ ॥ हे अरिन्दम ! उसलाई कुनै प्रकारले यस विपत्तिबाट मुक्ति मिल्नासाथ फेरि आफ्ना साथीहरूमाथि गएर मिसिन्छ । जो मनुष्य मायाको प्रेरणावश त्यस समूहमा एकपल्ट पुगेपछि उसलाई संसार-वनमा भौंतारिंदै अन्त्यसम्म आफ्ना परम पुरुषार्थको पत्ता पाउन सक्तैन ॥१९॥ हे रहूगण ! तिमी जहिलेसम्म यही मार्गमा भुलिएका छौ । अब प्रजावर्गलाई दण्ड दिने कार्य त्यागेर सबै प्राणीहरूसित मित्रता गरेर विषयबाट उपराम होऊ र हातमा भगवत्सेवाले धारिलो पारिएको ज्ञानरूपी खड्ग लिएर यो मार्गको पारी पुग ॥२०॥ राजा रहूगण भन्दछन्–अहो ! सबै योनिका जन्ममा यो मानव जन्म नै सर्वाधिक कल्याणकारी छ । स्वर्गादि अन्य लोकमा प्राप्त देवयोनिको जन्मले पनि के लाभ हुन सक्दछ—जहाँ श्रीहृषीकेश भगवान्‌का पवित्र यश सुनेर कृतकृत्यता प्राप्त हजुरजस्ता महात्माहरूको दर्शन पाउन सकिन्न ॥ २१ ॥ जसको क्षणिक समागमले मेरा कुतर्कमूलक अज्ञान नष्ट भयो, हजुरका ती चरण कमलको रज सेवन गर्नाले जसका सबै पाप नष्ट भइसकेका छन्, ती महानुभावलाई भगवान्‌को निर्मल भक्ति प्राप्त हुनु कुनै पनि

॥ १६ ॥ रहूगण त्वमपि ह्यध्वनोऽस्य संन्यस्तदण्डः कृतभूतमैत्रः ॥ आसज्जितात्मा हरिसेवया शितं ज्ञानासिमादाय तरातिपारम् ॥ २० ॥ राजोवाच ॥ अहो नृजन्माखिलजन्मशोभनं किं जन्मभिस्त्वपरैरप्यमुष्मिन् ॥ न यद्धृषीकेशयशःकृतात्मनां महात्मनां वः प्रचुरः समागमः ॥ २१ ॥ न ह्यद्भुतं त्वच्चरणाब्जरेणुभिर्हतांहसो भक्तिरधोक्षजेऽमला ॥ मौहूर्तिकाद्यस्य समागमाच्च मे दुस्तर्कमूलोऽपहतोऽविवेकः ॥२२॥ नमो महद्भ्योऽस्तु नमः शिशुभ्यो नमो युवभ्यो नम आवटुभ्यः ॥ ये ब्राह्मणा गामवधूतलिङ्गाश्चरन्ति तेभ्यः शिवमस्तु राज्ञाम् ॥ २३ ॥ श्रीशुक उवाच ॥ इत्येवमुत्तरामातः स वै ब्रह्मर्षिसुतः सिन्धुपतय आत्मसतत्त्वं विगणयतः परानुभावः परमकारुणिकतयोपदिश्य रहूगणेन सकरुणमभिवन्दितचरण आपूर्णार्णव इव निभृतकरणोर्म्याशयो धरणिमिमां विचचार ॥ २४ ॥ सौवीरपतिरपि सुजनसमवगतपरमात्मसतत्त्व आत्मन्यविद्याध्यारोपितां च देहात्ममतिं विससर्ज ॥ एवं हि नृप भगवदाश्रिताश्रितानुभावः ॥ २५ ॥ राजोवाच ॥ यो ह वा इह बहुविदा महाभागवत त्वयाऽभिहितः परोक्षेण वचसा जीवलोकभवाध्वा स ह्यार्यमनीषया कल्पितविषयो नाञ्जसाऽव्युत्पन्नलोकसमधिगमः ॥ अथ तदेवैतद्दुरवगमं समवेतानुकल्पेन

विस्मयको कुरा छैन ॥२२॥ बालक, युवा र ब्रह्मचारी आदि सबै आश्रम हुनेलाई नमस्कार छ । जुन ब्रह्मज्ञानी ब्राह्मण पृथिवीमा अवधूत भेषले डुल्दछन् उनी द्वारा प्रभुताको मदले उत्पन्न राजाहरूको मङ्गल होस् ॥२३॥ शुकदेवजी भन्नुहुन्छ—हे औतरेय ! यस प्रकार परम प्रभावशाली ब्रह्मर्षि-पुत्र भरत आफ्नो अपमान गर्ने सिन्धुदेशका नरेश रहूगणलाई अति करुणावश उपदेश दिएर उनीद्वारा करुणापूर्ण समुद्र झैं आफ्नो मनको इन्द्रियरूपिणी तरङ्गलाई शान्त पारेर पृथ्वीतलमा डुल्न लागे ॥२४॥ उता सौवीरपति राजा रहूगणले पनि उनको सत्संगबाट परमात्मतत्त्वको ज्ञान प्राप्त गरेर आफूमा अविद्यावश आरोपित देहात्मबुद्धि त्यागिदिए, किनकि भगवान्‌का आश्रित भक्तका शरणमा आउने पुरुषहरूको प्रभाव नै यस्तो हुन्छ ॥ २५ ॥ राजा परीक्षित भन्दछन्–हे शुकदेवजी ! हजुर ठूला विद्वान् हुनुहुन्छ । हजुरले व्यापारीहरूको संसार-मार्गको रूपकबाट बुद्धिमान् पुरुषहरूले बुझ्ने योग्य जुन उपदेश दिनुभयो, त्यो साधारण मनुष्यको बुद्धिमा सरलताले पस्न सक्तैन । अतः हजुरसित मेरो प्रार्थना छ—यस कठिन विषयलाई हजुर अझ सरल रीतिले भनेर बुझाउनोस्

॥ २६ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे नेपाली भाषाटीकायां त्रयोदशोऽध्यायः ॥१३॥ ( भवाटवीको सरल व्याख्या )—शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! देहाभिमानीलाई जो सत्त्वादिगुणले हुने शुभाशुभ र मिश्र कर्मको योगले निर्मित विविध प्रकारका देहसित संयोगरूपी अनादि संसार प्राप्त हुन्छ, त्यसको अनुभवको द्वाररूपिणी मन आदि छ इन्द्रियहरू द्वारा विवशभावले यो जीवसमूह बाटो बिराएर भयङ्कर वनमा भौंतारिंदै वणिक् समुदाय झैं भगवान विष्णुको आश्रित रहने मायाको प्रेरणाले दुर्गम पथ झैं–जसमा हिड्न अत्यन्त कठिन हुन्छ, त्यस्तो बाटोमा परेर आफ्नो शरीरले गरेका कर्मका फल भोग्दै श्मशान समान अतिशय अशुभ संसार-वनमा पुग्दछ । त्यसको व्यापार अनेक विघ्नहरूले गर्दा विफल हुने गर्दछ । तैपनि अन्त्यसम्म यो संसाररूपी दुःखलाई शान्त पार्ने भगवानका चरणको रसिक भ्रमरहरूको बाटोको अनुसरण गर्दैन । यस संसाररूपी वनमा मनसहित जुन छ इन्द्रिय छन्, तिनै आफ्ना कुत्सित कर्मानुसार चोरहरू झैं मानिन्छन् ॥ १ ॥ जसको पाले बडो दुष्ट छ । त्यो एक असावधान वणिक्को ठूलो कष्टले कमाएको धर्मोपयोगी

निर्दिश्यतामिति ॥ २६ ॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे त्रयोदशोऽध्यायः ॥ १३ ॥ स होवाच ॥ य एष देहात्ममानिनां सत्त्वादिगुणविशेषविकल्पितकुशलाकुशलसमवहारविनिर्मितविविधदेहावलिभिर्वियोगाद्यनादिसंसारानुभवस्य द्वारभूतेन षडिन्द्रियवर्गेण तस्मिन्दुर्गाध्ववदसुगमेऽध्वन्यापतित ईश्वरस्य भगवतो विष्णोर्वशवर्तिन्या मायया जीवलोकोऽयं यथा वणिक्सार्थोऽर्थपरः स्वदेहनिष्पादितकर्मानुभवः श्मशानवदशिवतमायां संसाराटव्यां गतो नाद्यापि विफलबहुप्रतियोगेहस्तत्तापोपशमनीं हरिगुरुचरणारविन्दमधुकरानुपदवीमवरुन्धे । यस्यामु ह वा एते षडिन्द्रियनामानः कर्मणा दस्यव एव ते ॥ १ ॥ तद्यथा पुरुषस्य धनं यत्किञ्चिद्धर्मौपयिकं बहुकृच्छ्राधिगतं साक्षात्परमपुरुषाराधनलक्षणो योऽसौ धर्मस्तं तु साम्पराय उदाहरन्ति ॥ तद्धर्म्यं धनं दर्शनस्पर्शनश्रवणास्वादनावघ्राणसंकल्पव्यवसायगृहग्राम्योपभोगेन कुनाथस्याजितात्मनो यथा सार्थस्य तथाऽजितात्मनो विलुम्पन्ति ॥ २ ॥ अथ च यत्र कौटुम्बिका दारापत्यादयो नाम्ना कर्मणा वृकसृगाला एवानिच्छतोऽपि कदर्यस्य कुटुम्बिन उरणकवत्संरक्ष्यमाणं मिषतोऽपि हरन्ति ॥ ३ ॥ यथा ह्यनुवत्सरं कृष्यमाणमप्यदग्धबीजं क्षेत्रं पुनरेवावपनकाले गुल्मतृणवीरुद्भिर्गह्वरमिव भवत्येवमेव गृहाश्रमः कर्मक्षेत्रं यस्मिन्न हि कर्माण्युत्सीदन्ति यदयं कामकरण्ड एष आवसथः ॥ ४ ॥ तत्र गतो दंशमशकसमापसदैर्मनुजैः शलभ-

धनलाई जसरी चोर लुटेर लैजान्छन्, त्यसै गरी दुर्बुद्धि एवं अजितेन्द्रिय पुरुषको अत्यन्त क्लेश खपेर प्राप्त गरेको सत्कर्मरूपी धन–जो परमपुरुष परमात्माको निष्काम आराधनास्वरूप परलोकमा निःश्रेयसको हेतु कहिएको छ–यी मनसहित छ–इन्द्रिय–हेर्नु, स्पर्श गर्नु, सुन्नु, चाख्नु, सुँघ्नु संकल्प-विकल्प तथा निश्चय गर्नु आदि क्रियाहरू द्वारा सबै सांसारिक विषय भोगमा अल्झाएर नष्ट पारिदिन्छन् ॥ २ ॥ यति मात्र होइन, त्यस संसाररूपी वनमा बस्ने उसका कुटुम्ब पनि, जो नामले त आफ्ना स्त्री-पुत्रादि नै कहिन्छन्, चर कुटिल कर्मले गर्दा साक्षात् हिंसक पशु जस्तै हुन्छन् । ती त्यो बिचरा दीन कुटुम्बीको धन उसको अनिच्छाले देख्ता-देख्तै यसरी खोसेर लान्छन्, जस्तै–गोठाला द्वारा सुरक्षित भेडा-बाख्रालाई घिसार्दै लैजान्छ ॥ ३ ॥ जसरी प्रतिवर्ष जोतिने खेत बीज दग्ध नहुनाले गर्दा खेतीको समय उपस्थित भएपछि झाडी,

लता तथा तृण आदिका द्वारा अति गहन हुन्छ, त्यस्तै नै यो गृहस्थाश्रम पनि कर्मभूमि हो, यसमा कर्मको कहिल्यै अन्त्य हुन पाउन्न। किनकि यो घर त कर्म-वासनाहरूको भण्डार हो ॥४॥ घररूपी सांसारिक झ्याउलोमा पुगेपछि उसको धनरूपी बाह्यप्राणलाई लामाखुट्टे र डाँस झैं नीच पुरुष तथा गलह, पक्षी, चोर र मूषकादि द्वारा क्षति पुग्दछ। यस मार्गमा भौंतारिँदै त्यो अविद्या द्वारा काम्य कर्ममा आसक्त आफ्नो चित्तमा दृष्टिदोषवश गन्धर्व नगर जस्तै यस असत्य मर्त्यलोकलाई सत्य मान्न थाल्दछ ॥५॥ फेरि भोजन, जलपान र मैथुन आदि विविध विषयतिर दगुर्छ, कहिले अग्नि पाउने इच्छावश आतुर भएर अगिया-बेतालातिर उसलाई पक्रनको निम्ति दगुर्न थालुण्य जस्तै सम्पूर्ण दोषको आश्रयस्वरूप सुवर्णको निम्ति व्याकुल भएर उसैको वर्ण हुने रजोगुणले भ्रम्न भएर विष्ठा झैं सुवर्णतिर दगुरेर त्यसलाई समाउन खोज्दछ ॥६॥७॥ त्यो कहिले गृह, जल तथा धन आदि अनेक जीवनोपयोगी साधनहरूमा आसक्त भएर यस संसाररूपी वनमा यता-उता दगुर्दै रहन्छ ॥८॥ त्यो कहिले चक्रवात झैं स्त्रीद्वारा काखमा बसालिएर तत्काल

शाकुन्ततस्करमूषकादिभिरुपरुध्यमानबहिःप्राणः क्वचित्परिवर्तमानोऽस्मिन्नध्वन्यविद्याकामकर्मभिरुपरक्तमनसाऽनुपपन्नार्थं नरलोकं गन्धर्वनगरमुपपन्न-मिति मिथ्यादृष्टिरनुपश्यति ॥ ५ ॥ तत्र च क्वचिदातपोदकनिभान्विषयानुपधावति पानभोजनव्यवायादिव्यसनलोलुपः ॥ ६ ॥ क्वचिच्चाशेषदो-षनिषदनं पुरीषविशेषं तद्वर्णगुणनिर्मितमतिः सुवर्णमुपादित्सत्यग्निकामकातर इवोल्मुकपिशाचम् ॥ ७ ॥ अथ कदाचिन्निवासपानीयद्रविणाद्य-नेकात्मीयजीवनाभिनिवेश एतस्यां संसाराटव्यामितस्ततः परिधावति ॥ ८ ॥ क्वचिच्च वात्यौपम्यया प्रमदयाऽऽरोहमारोपितस्तत्कालरजसा रजनी-भूत इवासाधुमर्यादो रजस्वलाक्षोऽपि दिग्देवता अतिरजस्वलमतिर्न विजानाति ॥ ९ ॥ क्वचित्सकृदवगतविषयवैतथ्यः स्वयं पराभिध्यानेन विभ्रं-शितस्मृतिस्तयैव मरीचितोयप्रायांस्तानेवाभिधावति ॥ १० ॥ क्वचिदुलूकझिल्लीस्वनवदतिपरुषरभसाटोपं प्रत्यक्षं वा रिपुराजकुलनिर्भर्त्सितेना-शितव्यथितकर्णमूलहृदयः ॥ ११ ॥ स यदा दुग्धपूर्वसुकृतस्तदा कारस्करकाकतुण्डाद्यपुण्यद्रुमलताविषोदपानवदुभयार्थशून्यद्रविणाञ्जीवन्मृता-न्स्वयं जीवन्म्रियमाण उपधावति ॥ १२ ॥ एकदाऽसत्प्रसङ्गान्निकृतमतिर्व्युदकस्रोतःस्खलनवदुभयतोऽपि दुःखदं पाखण्डमभियाति ॥ १३ ॥ यदा

रागरूपी धूलोले दृष्टि धमिलिनाले अन्धो तथा मलिन-चित्त जस्तै भएर साधु पुरुषहरूको मर्यादालाई पनि त्यागिदिन्छ र बुद्धिको रजोगुणले आच्छादित हुनाले आफ्ना कर्मका दिशास्वरूप देवतालाई पनि जान्न सक्तैन र आफूलाई एक्लो मान्न थाल्दछ ॥९॥ त्यो कहिले स्वतः एकपल्ट विषयको मिथ्यापन बुझेर पनि देहाभिमान तथा विवेक-बुद्धि नष्ट हुनाले गर्दा ती मरुमरीचिकाको सदृश दृश्यमान विषयतिर दगुर्न थाल्दछ ॥१०॥ कहिले उल्लू तथा झ्याउँकिरीका वचन समान शत्रुहरू र राजाहरूका समक्ष तथा परोक्षरूपमा हप्काएपछि उसका कान तथा हृदयलाई ठूलो कष्ट हुन्छ ॥११॥ जब त्यस प्राणीका पूर्व-संचित पुण्य क्षीण भइसक्छन् तब त्यो बाँचेर पनि मरेको मुर्दा समान भएर कारस्कर र काकतुण्ड आदि पापवृक्ष, लताहरू, विषयुक्त कूपहरूको समान जसको धन यसलोक र परलोक दुवैको काममा आउँदैन तथा जो जीवित भएर पनि मुर्दाहरूको समान हुन्छन्–यस्ता धनवान्को भर पर्दछ ॥१२॥ त्यो कहिले असत् पुरुषका साथ सहवास गर्नाले बुद्धि भ्रष्ट भएर जल भएको नदीमा परे जस्तै यो लोक र परलोकका दुःखदायी पाखण्डमा

भएर अल्झिन्छ ॥१३॥ जब शत्रुहरूले विघ्न पार्नाको कारण उसलाई अन्न मिल्दैन, तब पिता-पुत्रहरूबाट जोगिन वर्षेको सम्पत्तिको एक टुक्रा पनि देख्दछ—तब त्यो उनीहरूलाई काटेर खान पनि उद्यत हुन सक्छ ॥१४॥ कहिले दावानल झैं प्रिय वस्तुले विहीन र अत्यन्त दुःखपूर्ण घरमा पुग्दछ तब शोकाग्नि द्वारा सन्तप्त भएर धेरै खिन्न बन्दछ ॥१५॥ कहिले काल समान भयङ्कर राजकुलरूपी राक्षसहरू द्वारा आफ्नो प्राणप्रिय धन अपहृत गरेर लगिदिनाले मरेको मुर्दा झैं निर्जीव हुन्छ ॥१६॥ कहिले अभिलषित पदार्थहरूको समान प्रतीत हुने पितामह आदि असत् सम्बन्धलाई सत्य मानेर तिनबाट हुने स्वप्न तुल्य क्षणिक सुखको उपयोग गर्दछ ॥१७॥ त्यो कहिले गृहस्थाश्रमको निम्ति विहित कर्मका अतिशय भारस्वरूप पर्वतमा उक्लन खोज्दछ तब लौकिक विपत्तिहरूले खिन्न भएर काँटा र ढुङ्गाले व्याप्त क्षेत्रमा पसेको व्यक्ति जस्तै दुःखित भइजान्छ ॥१८॥ कहिले काहीं त्यो निर्धन दुःसह जठराग्निले अधीर भएर आफ्ना कुटुम्ब प्रति रिस गर्दछ ॥१९॥ त्यसपछि ऊ निद्रारूपी अजिङ्गर द्वारा निलिनाले अज्ञानरूपी घोर अन्धकारमा डुबेर

तु परबाधयाऽन्ध आत्मने नोपनमति तदा हि पितृपुत्रबर्हिष्मतः पितृपुत्रान्वा स खलु भक्षयति ॥ १४ ॥ क्वचिदासाद्य गृहं दाववत्प्रियार्थविधुरम· सुखोदर्कं शोकाग्निना दह्यमानो भृशं निर्वेदमुपगच्छति ॥ १५ ॥ क्वचित्कालविषमितराजकुलरक्षसाऽपहृतप्रियतमधनासुः प्रमृतक इव विगत जीवलक्षण आस्ते ॥ १६ ॥ कदाचिन्मनोरथोपगतपितामहाद्यसत्सदिति स्वप्ननिर्वृतिलक्षणमनुभवति ॥ १७ ॥ क्वचिद्गृहाश्रमकर्मचोदनातिभर· गिरिमारुरुक्षमाणो लोकव्यसनकर्शितमनाः कण्टकशर्कराक्षेत्रं प्रविशन्निव सीदति ॥ १८ ॥ क्वचिच्च दुःसहेन कायाभ्यन्तरवह्निना गृहीतसारः स्वकुटुम्बाय क्रुध्यति ॥ १९ ॥ स एव पुनर्निद्राऽजगरगृहीतोऽन्धे तमसि मग्नः शून्यारण्य इव शेते नान्यत्किञ्चन वेद शव इवापविद्धः ॥ २० ॥ कदाचिद्भग्नमानदंष्ट्रो दुर्जनदन्दशूकैरलब्धनिद्राक्षणो व्यथितहृदयेनानुक्षीयमाणविज्ञानोऽन्धकूपेऽन्धवत्पतति ॥ २१ ॥ कर्हिचित्काममधुलवा· न्विचिन्वन् यदा परदारपरद्रव्याण्यवरुन्धानो राज्ञा स्वामिभिर्वा निहतः पतत्यपारे निरये ॥ २२ ॥ अथ च तस्मादुभयथाऽपि हि कर्मास्मिन्नात्मनः संसारावपनमुदाहरन्ति ॥ २३ ॥ मुक्तस्ततो यदि बन्धाद्देवदत्त उपाच्छिनत्ति तस्मादपि विष्णुमित्र इत्यनवस्थितिः ॥ २४ ॥ क्वचिच्च शीतवाता·

शून्य अरण्यमा फ्याँकिएको मुर्दा समान निदाउने गर्दछ । तब त्यसलाई कुनै वस्तुको ज्ञान रहन्न ॥२०॥ कहिले जब सर्परूपी दुर्जन उसको गर्वरूपी दाँत भाँचिदिन्छन्, तब उसलाई एक क्षण पनि निद्रा लाग्दैन र त्यो हार्दिक वेदनाले गर्दा छिन-छिनमा विवेक-शक्ति नष्ट हुनाले अन्त्यमा अन्धो पुरुष जस्तै अँध्यारो कुवामा भएर खसिन्छ ॥२१॥ कहिले विषयरूपी मधुकण खोज्दा-खोज्दै जब परस्त्री र परधनलाई प्राप्त गर्न उद्योग गर्दछ तब स्वामी अथवा राजा द्वारा मारिएर अपार नरकमा खसिन्छ ॥२२॥ हे राजन् ! यसै कारण यस्तो भनिएको छ कि प्रवृत्ति-मार्गमा गरिएका लौकिक तथा वैदिक दुवै प्रकारका कर्म जीवलाई जन्म-मरणरूपी यस संसारमा डुलाउने खालका हुन्छन् ॥२३॥ यदि त्यस बन्धनबाट कसै गरी छुटकारा पाइयो भने पनि ती स्त्री-पुत्र र धन आदि देवदत्त नामको कुनै गौँटा अर्कौ पुरुषले खोसेर लैजान्छ र त्यसपछि फेरि विष्णुमित्र नामक कुनै तेस्रो व्यक्ति खोस्दछ । ती कहिल्यै एक ठाउँमा स्थिर रहन्नन् ॥२४॥ कहिले काहीं शीत तथा वायु आदि अनेक आधिभौतिक तथा आध्यात्मिक दुःखदायिनी परिस्थिति रोक्नमा असमर्थ हुनाले कारण त्यो

अपार चिन्ताहरूले खिन्न हुन्छ ॥ २५ ॥ कहिले परस्पर व्यवहार गर्दागर्दै कसैको अलिकति चोर्दछ भने लोलुपताले गर्दा अकारण शत्रुता गर्न पुग्दछ ॥ २६ ॥ हे राजन् ! यस मार्गमा सुख, दुःख, राग, द्वेष, भय, अभिमान, प्रमाद, उन्माद, शोक, मोह, लोभ, मत्सरता, ईर्ष्या, अपमान, क्षुधा, पिपासा आधि अर्थात् मानसिक कष्ट, व्याधि अर्थात् शारीरिक कष्ट, जन्म, जरा तथा मरण आदि विविध क्लेश हुन्छन् ॥२६।.२७॥ यो विघ्न भरिएको बाटोमा भौंतारिएको जनसमुदाय कहिले देवमायारूपिणी स्त्रीका बाहुलतामा बाँधिएर विवेकभ्रष्ट हुन्छ । अनि जसलाई सुख दिन त्यो घर आदि बनाउने चिन्तामा लीनरहन्छ, आफ्नी स्त्री र त्यसैका आश्रयले प्राप्त छोरा र छोरी आदिका मीठा तोतेबोली हेराई एवं चेष्टाहरूमा लिप्त

ध्यनेकाधिदैविकभौतिकात्मीयानां दशानां प्रतिनिवारणेऽकल्पो दुरन्तचिन्तया विषण्ण आस्ते ॥ २५ ॥ क्वचिन्मिथो व्यवहरन्यत्किञ्चिद्धनमन्येभ्यो वा काकिणिकामात्रमप्यपहरन्यत्किञ्चिद्वा विद्वेषमेति वित्तशाठ्यात् ॥ २६ ॥ अध्वन्यमुष्मिन्निम उपसर्गास्तथा सुखदुःखरागद्वेषभयाभिमानप्रमादोन्माद-शोकमोहलोभमात्सर्येर्ष्यावमानक्षुत्पिपासाधिजन्मजरामरणादयः ॥ २७ ॥ क्वापि देवमायया स्त्रिया भुजलतोपगूढः प्रस्कन्नविवेकविज्ञानो यद्विहार गृहारम्भाकुलहृदयस्तदाश्रयावसक्तसुतदुहितृकलत्रभाषितावलोकविचेष्टितापहृतहृदय आत्मानमजितात्माऽपारेऽन्धे तमसि प्रहिणोति ॥ २८ ॥ कदा-चिदीश्वरस्य भगवतो विष्णोश्चक्रात्परमाण्वादिद्विपरार्धापवर्गकालोपलक्षणात्परिवर्तितेन वयसा रंहसा हरत आब्रह्मतृणस्तम्भादीनां भूतानामनि-मिषतो मिषतां वित्रस्तहृदयस्तमेवेश्वरं कालचक्रनिजायुधं साक्षाद्भगवन्तं यज्ञपुरुषमनादृत्य पाखण्डदेवताः कङ्कगृध्रबककवटप्राया आर्यसमयपरिहृताः सांकेत्येनाभिधत्ते ॥ २९ ॥ यदा पाखण्डिभिरात्मवञ्चितैस्तैरुरु वञ्चितो ब्रह्मकुलं समावसंस्तेषां शीलमुपनयनादि श्रौतस्मार्तकर्मानुष्ठानेन भगवतो

तिनैहरू द्वारा चित्त चोरिएपछि त्यो अजितेन्द्रिय पुरुष आफूलाई घोर अन्धकारमय नरकमा घुचेटिदिन्छ ॥ २८ ॥ कहिले काहीं ब्रह्मदेखि तृणपर्यन्त सबै जीवको आयु आफ्नो वेगले हरण गर्दै सबैले हेर्दा-हेर्दै एक क्षणमा त्यसको संहार गर्ने एवं परमाणुदेखि द्विपरार्धसम्म क्षण घडी आदि नामले कहिने एवं षडैश्वर्यसम्पन्न भगवान् विष्णुका शस्त्ररूपी काल-चक्रले भयभीत भएर त्यो यज्ञपुरुष श्रीनारायणको आराधनारूपी सच्चा धन त्यागेर कङ्क, गृध्र, बकुल्लो तथा उल्लू सदृश शिष्टाचारले हीन र अप्रामाणिक वचनमा भुलेर, पाखण्डमय अन्य देवताको आश्रय लिन्छ ॥ २९॥ जब आफूद्वारा झुक्याइएका पाखण्डीहरुद्वारा उसलाई अझ ठूलो धोकामा पर्नुपर्दछ, अनि त्यो विप्रकुलमा प्रविष्ट हुन्छ तर उपनयन

* दृष्टान्त ( सच्चा धन )—एक पल्ट थोरै धनीको घरमा आगो लाग्यो । त्यसले आफ्ना कुटुम्बी र सेवकहरूलाई बाकेर ठूलो सावधानीले सबै वस्तु बाहिर निकाल्न लगायो । मेच-कुर्सी, लुगाका थाकहरू, पुस्तक र सेफ आदि सामान बाहिर निकियो । यति बेरमा आगो चारैतिर फैलियो । घरको स्वामी बाहिर आएर सबैको साथमा उभिएको थियो । त्यसले सचेतित सोध्यो—'भित्र केही छुटेको त छैन ?' उनीहरूले भने— छैन, तापनि हामी एकपल्ट फेरि गएर हेर्दछौं । ती व्यक्तिले भित्र गएर हेर्दा मालिकको एकमात्र छोरो थोरै कोठामा परिरहेको देखियो । त्यो कोठा घेर बसो डढिसकेको थियो । अब के गर्ने, यस्तो विचार गरेर ती सबै बाहिर आए र ठाउँको ठाउँ है भन्नलागे—'हरे ! हामी अभागी घरको सामान बोक्न तनमा लाग्यौं, तर सामानको स्वामीलाई त बचाउने बिर्सेछौं !' भनाइको तात्पर्य के भने—'संसारी सामान त परिश्रम गरे फेरि प्राप्त हुन सक्छ, तर ती पदार्थहरूका भोक्ता आत्माको के गति होला !' यो कुरा बुद्धिमा आउन नसक्ने कारण सांसारिक वस्तुमा आसक्त व्यक्तिले पछि पछुतोमा पर्नुपर्दछ ।

502

संस्कारपछि श्रौत-स्मार्त आदि कर्मले भगवान् यज्ञपुरुषको आराधना गर्नु आदि उनको स्वभाव उनलाई मनपर्दैन । अतएव ऊ तिनलाई छाडेर शूद्रकुलको शरण लिन्छ र आत्मशुद्धि नहुनाले त्यो वेदविहित कर्महरूको अधिकारी नहुनाले गर्दा वानरहरू झैं सदा कुटुम्ब पोषण तथा स्त्री पुरुषको सम्बन्धमा नै हुदैको रहन्छ ॥ ३० ॥ त्यहाँ स्वच्छन्द विहार गर्नाले उसको बुद्धि सान्है दीन-हीन भएर जान्छ, अनि त्यो पौटाले अर्काको मुखतिर हेर्न आदि विविध प्रकारका भोगहरूमा आसक्त भई आफ्नो मरण बेलाको अवधिलाई पनि बिर्सन्छ ॥ ३१ ॥ जस्तो कि वृक्षहरू झैं केवल सांसारिक भोग नै फल हुन्छ, यस्तो गृहस्थीमा वानर समान सुख मान्दै त्यो स्त्री-पुत्रादिमा आसक्त भई मैथुनादि विषय भोगमा नै समय व्यतीत गर्न थाल्दछ ॥ ३२ ॥ यस प्रकार प्रवृत्ति मार्गबाट अलमिएको त्यो जनसमुदाय गिरि-गुहारूपी रोगहरूमा अल्झेर सर्वदा मृत्युरूपी हात्तीसित डराइरहन्छ ॥ ३३ ॥ कहिले शीत, वायु आदि नाना प्रकारका आधिदैविक, आधिभौतिक तथा आध्यात्मिक दुःखलाई निवृत्त गर्नमा असमर्थ भएर त्यो दुष्कर विषयको चिन्तन गरेर खिन्न हुन्छ ॥ ३४ ॥ कहिले काहीं

यज्ञपुरुषस्याराधनमेव तदरोचयन् शूद्रकुलं भजते निगमाचारेऽशुद्धितो यस्य मिथुनीभावः कुटुम्बभरणं यथा वानरजातेः ॥ ३० ॥ तत्रापि निरव-रोधः स्वैरेण विहरन्नतिकृपणबुद्धिरन्योन्यमुखनिरीक्षणादिना ग्राम्यकर्मणैव विस्मृतकालावधिः ॥ ३१ ॥ क्वचिद्द्रुमवदैहिकार्थेषु गृहेषु रंस्यन्यथा वानरः सुतदारवत्सलो व्यवायक्षणः ॥ ३२ ॥ एवमध्वन्यवरुन्धानो मृत्युगजभयात्तमसि गिरिकन्दरप्राये ॥ ३३ ॥ क्वचिच्छीतवाताद्यनेकदैविकभौ-तिकात्मीयानां दुःखानां प्रतिनिवारणेऽकल्पो दुरन्तविषयविषण्ण आस्ते ॥ ३४ ॥ क्वचिन्मिथो व्यवहरन्यत्किञ्चिद्धनमुपयाति वित्तशाठ्येन ॥३५॥ क्वचित्क्षीणधनः शय्यासनाशनाद्युपभोगविहीनो यावदप्रतिलब्धमनोरथोपगतादानेऽवसितमतिस्ततोऽवमानादीनि जनादभिलभते ॥ ३६ ॥ एवं वित्तव्यतिषङ्गविवृद्धवैरानुबन्धोऽपि पूर्ववासनया मिथ उद्वहत्यथापवहति ॥ ३७ ॥ एतस्मिन्संसाराध्वनि नानाक्लेशोपसर्गबाधित आपन्नवि-पन्नो यत्र यस्तमु ह वावेतरस्तत्र विसृज्य जातं जातमुपादाय शोचन्मुह्यन्बिभ्यद्विवदन्क्रन्दन्संहृष्यन्गायन्नुह्यमानः साधुवर्जितो नैवावर्ततेऽद्यापि यत आरब्ध एष नरलोकसार्थो यमध्वनः पारमुपदिशति ॥ ३८ ॥ यदिदं योगानुशासनं वा एतदवरुन्धते । यन्न्यस्तदण्डा मुनय उपशमशीला

परस्परको व्यवहारमा धनको निम्ति अर्कालाई धोका दिएर केही धन प्राप्त गर्दछ ॥ ३५ ॥ कहिले धन नष्ट हुनाले गर्दा सुत्ने, बस्ने र खाने पनि सामग्रीको अभावले इच्छित वस्तु नपाउनाले ऊ तिनलाई पाउने निश्चय गर्दछ र जता-तर्तै मनुष्यहरू द्वारा अपमान आदि पाउँदछ ॥ ३६ ॥ यस प्रकार धनको आसक्तिवश परस्पर वैरभाव बढ्नाले पनि त्यो पूर्व-वासनाको कारण आपसमा विवाहादिक अनेक सम्बन्ध गर्दै त्यसलाई त्याग्दै रहन्छ ॥३७॥ हे राजन् ! यस प्रकार यो संसार-मार्गमा चक्कर खाइरहने जनसमुदाय अनेक थरिका क्लेश तथा विघ्नद्वारा बाधित भएर पनि भगवान्‌को मायाले बाँधिएको हुनाले बाटोमा जति-जति आपत्तिग्रस्त वा मृत्युमा प्राप्त हुन्छ, उति-उति त्यसलाई उहीं छाड्दै, नयाँ उत्पन्न जन्लाई आफूतिर लिंदै शोक, मोह तथा भयको वशीभूत हुँदै र विषाद, रुदन, हर्ष तथा गान गर्दै बराबर अगाडि नै बढ्दै जान्छ । तीमध्ये भगवद्भक्त प्राणी बाहेक अरु कुनै पनि प्राणी जहाँबाट यस संसार-मार्गको आरम्भ भएको रहन्छ र जो यसको अन्तिम खुड्किलो छ, ती परमात्मा नजीकै पुग्न पाउन्न ॥ ३८ ॥ जसले यस योगको अनुशासनलाई अंगीकार गरेका

503

छन् ती शान्तिशील तथा संयतचित्त विरक्त मुनिजन त्यसमा प्रवृत्त हुन्छन् । अरू साधारण पुरुष त्यहाँसम्म पुग्न सक्तैनन् ॥३९॥ दिग्गजलाई पनि जित्नसक्ने, ठूला-ठूला यज्ञको अनुष्ठान गर्ने राजर्षिहरूको निम्ति पनि यो मार्ग ठूलो दुर्गम छ । ती पनि यसपृथ्वीमा 'यो मेरो हुन्' यस भावले वैरत्व ठानेर यसलाई यहीं छाडी युद्धभूमिमा निदाउँछन् ॥ ४० ॥ पूर्वजन्मकृत पुण्यकर्मरूपिणी लताहरूको आश्रय लिएर यो जीव कसै गरी ती आपत्ति अथवा नरकबाट छुटिगए पनि फेरि उसै गरी संसार-सागरमा यता उता भौंतारिँदै मानव समुदायमा फेरि आएर मिल्दछ । स्वर्गादि माथिका लोकमा जाने जतिको पनि यही दशा हुन्छ ॥४१॥ शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! जडभरतको विषयमा उप वेलाका मानिस भन्दथे–जस्तै कुनै झींगा गरुडसित संघर्ष गर्न सक्तैन, त्यस्तै नै राजर्षि भरतका मार्गको कुनै अन्य राजा मनले पनि अनुसरण गर्न सक्तैन ॥ ४२ ॥ पुण्यकीर्ति भगवान्‌को प्राप्तिको लालसाले असले उत्सुक भएर आफ्नो तरुण अवस्थामा नै दुस्त्यज एवं अतिमनोरम स्त्री, पुत्र, मित्र र राज्यादिलाई विष्ठाको समान त्यागिदिएका थिए ॥४३॥ जुन राजर्षि भरतले दुस्त्यज पृथ्वी,

उपरतात्मानः समवगच्छन्ति ॥ ३९ ॥ यदपि दिगिभजयिनो यज्विनो ये वै राजर्षयः किं तु परं मृधे शयीरन्नस्यामेव ममेयमिति कृतवैरानुबन्धायां विसृज्य स्वयमुपसंहृताः ॥ ४० ॥ कर्मवल्लीमवलम्ब्य तत आपदः कथञ्चिन्नरकाद्विमुक्तः पुनरप्येवं संसाराध्वनि वर्तमानो नरलोकसार्थमुपयाति एवमुपरि गतोऽपि ॥४१॥ तस्येदमुपगायन्ति—आर्षभस्येह राजर्षेर्मनसाऽपि महात्मनः ॥ नानुवर्त्मार्हति नृपो मक्षिकेव गरुत्मतः ॥ ४२ ॥ यो दुस्त्यजान्दारसुतान्सुहृद्राज्यं हृदिस्पृशः ॥ जहौ युवैव मलवदुत्तमश्लोकलालसः ॥ ४३ ॥ यो दुस्त्यजान्क्षितिसुतस्वजनार्थदारान्प्रार्थ्यां श्रियं सुरवरैः सदयावलोकाम् ॥ नैच्छन्नृपस्तदुचितं महतां मधुद्विट्सेवानुरक्तमनसामभवोऽपि फल्गुः ॥ ४४ ॥ यज्ञाय धर्मपतये विधिनैपुणाय योगाय सांख्यशिरसे प्रकृतीश्वराय ॥ नारायणाय हरये नम इत्युदारं हास्यन्मृगत्वमपि यः समुदाजहार ॥ ४५ ॥ य इदं भगवतः सभाजितावदातगुणकर्मणो राजर्षेर्भरतस्यानुचरितं स्वस्त्ययनमायुष्यं धन्यं यशस्यं स्वर्ग्यापवर्ग्यं वाऽनुशृणोत्याख्यास्यत्यभिनन्दति च सर्वा एवाशिष आत्मन आशास्ते न काञ्चन परत इति ॥ ४६ ॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे भरतोपाख्याने पारोक्ष्यविवरणं नाम चतुर्दशोऽध्यायः ॥ १४ ॥ श्रीशुक

पुत्र, स्वजन, सम्पत्ति तथा स्त्री र जसको निम्ति देवता पनि लालायित रहन्छन्, किन्तु जो स्वयं भरतको कृपा-कटाक्षको मार्ग हेर्ने, ती लक्ष्मीको उनले केही पनि इच्छा गरेनन् । यो सबै उनकै योग्य थियो, किनकि जुन व्यक्तिको चित्त भगवान्‌को सेवामा लागिरहन्छ तिनको दृष्टिमा मोक्षपद पनि तुच्छ हुन्छ ॥ ४४ ॥ जुन महाराज भरतले मृगको शरीर त्याग गरेर पनि उच्च स्वरले भनेका थिए—'धर्मका रक्षक, धर्मानुष्ठानमा पटु, योगका रूप, सांख्य शास्त्रका सिद्धान्त र प्रकृतिका पति यज्ञपुरुष नारायण श्रीहरिलाई नमस्कार छ' ती महापुरुषको अनुकरण कसले गर्न सक्नेछ ? ॥४५॥ जसका उज्ज्वल गुण, तथा कर्महरूको भक्तजन प्रशंसा गर्दछन्, ती भगवद्भक्त तथा राजर्षि भरतको कल्याणकारी, आयुवर्धक, धनप्रद, कीर्तिकारी, स्वर्ग तथा मोक्षादि प्राप्त गराउने चरित्र जो पुरुष सुन्दछ, सुनाउछ वा अनुमोदन गर्दछ उसका सबै इच्छा स्वतः पूर्ण हुन्छन्, त्यसलाई अर्काको पापबाट केही वास्ता रहन्न ॥४६॥ इति श्रीमद्भागवते महापुराणे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषा टीकायां चतुर्दशोऽध्यायः ॥१४॥ (महाराज भरतको वंशविस्तार)—श्रीशुकदेवजी भन्दछन–

हे राजन् ! भरतका पुत्रको नाम सुमति थियो, यो पहिल्यै भनिसकेको छु । त्यसलाई पनि ऋषभदेवकै बाटोमा लागेको देखेर कलिमा धेरै पाखण्डी र अनार्यहरू आफ्नो दुर्बुद्धिले गर्दा वेद-विरुद्ध कल्पना गरेर उसलाई देवता मान्नन् ॥१॥ उसकी वृद्धसेना नामकी स्त्रीबाट देवताजित् नामको पुत्र उत्पन्न भयो ॥२॥ देवताजित्की पत्नी असुर्याको गर्भबाट देवद्युम्न, देवद्युम्नकी पत्नी धेनुमतीबाट परमेष्ठी र परमेष्ठीकी पत्नी सुवर्चलाबाट प्रतीह नामको छोरो जन्म्यो ॥ ३ ॥ उसले अन्य जनलाई आत्मविद्याको उपदेश दिई स्वयं शुद्धचित्त भएर परमपुरुष भगवान्को प्रत्यक्ष दर्शन गरेका थिए ॥४॥ प्रतीहकी पत्नी सुवर्चलाबाट प्रतिहर्ता, प्रस्तोता र उद्गाता नामका तीन पुत्र जन्मे, तो यज्ञादि कर्ममा निपुण थिए। उनमा प्रतिहर्ताकी पत्नी स्तुतिबाट अज र भूमा नामका दुइ पुत्र भए ॥ ५ ॥ भूमाकी स्त्री ऋषिकुल्याबाट उद्गीथ, उद्गीथकी स्त्री देवकुल्याबाट प्रस्ताव र प्रस्तावकी पत्नी वियुत्साबाट विभु नामका पुत्र भए। विभुकी पत्नी रतिको गर्भबाट पृथुषेण र पृथुषेणकी पत्नी आकूतिबाट नक्त नामको पुत्र उत्पन्न भयो । नक्तकी पत्नी द्युतिबाट उदारकीर्ति राजर्षि गयको जन्म भयो, जो जगत्को रक्षाका

उवाच ॥ भरतस्यात्मजः सुमतिर्नामाभिहितो यमु ह वाव केचित्पाखण्डिन ऋषभपदवीमनुवर्तमानं चानार्या अवेदसमाम्नातं देवतां स्वमनीषया पापीयस्या कलौ कल्पयिष्यन्ति ॥ १ ॥ तस्माद्वृद्धसेनायां देवताजिन्नाम पुत्रोऽभवत् ॥ २ ॥ अथासुर्यां तत्तनयो देवद्युम्नस्ततो धेनुमत्यां सुतः परमेष्ठी तस्य सुवर्चलायां प्रतीह उपजातः ॥ ३ ॥ य आत्मविद्यामाख्याय स्वयं संशुद्धो महापुरुषमनुसस्मार ॥ ४ ॥ प्रतीहात्सुवर्चलायां प्रतिहर्तादयस्त्रय आसन्निज्याकोविदाः सूनवः प्रतिहर्तुः स्तुत्यामजभूमानावजनिषाताम् ॥ ५ ॥ भूम्न ऋषिकुल्यायामुद्गीथस्ततः प्रस्तावो देवकुल्यायां प्रस्तावान्नियुत्सायां हृदयज आसीद्विभुर्विभो रत्यां च पृथुषेणस्तस्मान्नक्त आकूत्यां जज्ञे । नक्ताद्द्युतिपुत्रो गयो राजर्षिप्रवर उदारश्रवा अजायत साक्षाद्भगवतो विष्णोर्जगद्रिरक्षिषया गृहीतसत्त्वस्य कलात्मवत्त्वादिलक्षणेन महापुरुषतां प्राप्तः ॥ ६ ॥ स वै स्वधर्मेण प्रजापालनपोषणप्रीणनोपलालनानुशासनलक्षणेनेज्यादिना च भगवति महापुरुषे परावरे ब्रह्मणि सर्वात्मनार्पितपरमार्थलक्षणेन ब्रह्मविच्चरणानुसेवयाऽऽपादितभगवद्भक्तियोगेन चाभीक्ष्णशः परिभावितातिशुद्धमतिरुपरतानात्म्य आत्मनि स्वयमुपलभ्यमानब्रह्मात्मानुभवोऽपि निरभिमान एवावनिमजूगुपत् ॥ ७ ॥ तस्येमां गाथां पाण्डवेय पुराविद उपगायन्ति ॥ ८ ॥ गयं नृपः कः प्रतियाति कर्मभिर्यज्वाभिमानी बहुविद्धर्मगोप्ता ॥ समागतश्रीः सदसस्पतिः सतां

निमित्त सत्वगुण स्वीकार गर्ने भएका साक्षात् विष्णु भगवान्का कला हुनाले गर्दा महापुरुषत्वका प्राप्त भए ॥६॥ महाराज गयले धर्मको अनुसार प्रजाको पालन, पोषण, प्रीणन, लालन तथा यज्ञादि द्वारा ब्रह्मादि भन्दा पनि श्रेष्ठ परमपुरुष परब्रह्म परमात्मालाई परमार्थभावले आफ्ना सबै कर्म समर्पण गर्नाको कारण एवं ब्रह्मवेत्ता महापुरुषहरूको चरणसेवाले प्राप्त भक्तियोग द्वारा सतत भगवच्चिन्तन गर्दै आफ्नो चित्त शुद्ध पारेर देहादिक अनात्म वस्तुहरूबाट अहंभाव हटाउँदै आफ्नो आत्माको ब्रह्मस्वरूपबाट अनुभव गरे । यति सबै भएर पनि ती निरभिमान भावले पृथ्वीको पालन गर्दै रहे ॥७॥ हे पाण्डवपुत्र ! पूर्वकालीन इतिहासज्ञ महात्माजन राजर्षि गयको विषयमा गाथा गाउँछन्– ॥ ८ ॥ 'अहो ! आफ्ना कर्मले महाराज गयको समानता अरु कुन राजाले गर्न सक्ला ? किनकि साक्षात् भगवान्का अंश राजर्षि गय बाहेक अरु कोही पनि यस्ता यज्ञको विधायक, सर्वमान्य, बहुज्ञ, धर्मका रक्षक, लक्ष्मीवान,

साधु-समितिका शिरोमणि र सत्पुरुषका सच्चा सेवक हुन सक्दैन ॥ ९ ॥ उसका गङ्गा आदि नदीहरूमित सरसङ्कल्पवती, परम साध्वी, श्रद्धा, मैत्री तथा दया आदि दक्षपुत्रिहरूले अतिशय प्रसन्न मनले अभिषेक गरेका थिए । यद्यपि तिनको कुनै कामना थिएन, तापनि तिनको गुणरूपी बाछोको प्रेमले स्तनहरूमा दूध उम्लेर आउनाले गोरूपिणी पृथ्वीले प्रजाको सबै कामनाहरूलाई दुग्धरूपले पूर्ण पारेकी थिइन् ॥१०॥ यद्यपि ती निष्काम थिए तापनि स्वयं वेदहरूले उनका कामना पूर्ण पारे । युद्धमा उसका बाणले घाइते भएर अनेक राजाहरूले विविध प्रकारका उपहार समर्पण गरेर उसको धर्मयुक्त प्रजा-पालन तथा दक्षिणादिले सन्तुष्ट भएर ब्राह्मणहरूले परलोकमा आफ्नो कर्मफलको छैटौं भाग दिएका थिए ॥११॥ उसको यज्ञमा वर्ता सोमपान गरेर इन्द्र उन्मत्त भएका थिए र उसको अत्यन्त श्रद्धा र निश्चल भक्तिभावले अर्पण गरिएको यज्ञफललाई साक्षात् विष्णुरूप यज्ञपुरुषले स्वीकार गरेका थिए ॥१२॥ जो तृप्त भएपछि देवता, तिर्यक्, मनुष्य, वृक्ष तथा तृणादिदेखि लिएर ब्रह्मपर्यन्त संसारका सबै जीव तुरुन्त तृप्त हुने गर्दथे, ती विश्वका प्राणस्वरूप भगवान्‌ले प्रसन्न भएर

मत्सेवकोऽन्यो भगवत्कलामृते ॥ ९ ॥ यमभ्यषिञ्चन्परया मुदा सतीः सत्याशिषो दक्षकन्याः सरिद्भिः ॥ यस्य प्रजानां दुदुहे धराऽऽशिषो निराशिषो गुणवत्सस्नुतोधाः ॥ १० ॥ छन्दांस्यकामस्य च यस्य कामान्दुदुहुराजह्रुरथो बलिं नृपाः ॥ प्रत्यञ्चिता युधि धर्मेण विप्रा यदाशिषां षष्ठमंशं परेत्य ॥११॥ यस्याध्वरे भगवानध्वरात्मा मघोनि माद्यत्युरुसोमपीथे ॥ श्रद्धाविशुद्धाचलभक्तियोगसमर्पितेज्याफलमाजहार ॥ १२ ॥ यत्प्रीणनाद्बर्हिषि देवतिर्यङ्मनुष्यवीरुत्तृणमाविरिञ्चात् ॥ प्रीयेत सद्यः स ह विश्वजीवः प्रीतः स्वयं प्रीतिमगाद्गयस्य ॥ १३ ॥ गयाद्गयन्त्यां चित्ररथः सुगतिरवरोधन इति त्रयः पुत्रा बभूवुश्चित्ररथादूर्णायां सम्राडजनिष्ट ॥ १४ ॥ तत उत्कलायां मरीचिर्मरीचेर्बिन्दुमत्यां बिन्दुमानुदपद्यत । तस्मात्सरघायां मधुनामाऽभवन्मधोः सुमनसि वीरव्रतस्ततो भोजायां मन्थुप्रमन्थू जज्ञाते । मन्थोः सत्यायां भौवनस्ततो दूषणायां त्वष्टाऽजनिष्ट । त्वष्टुर्विरोचनायां विरजो विरजस्य शतजित्प्रवरं पुत्रशतं कन्या च विषूच्यां किल जाता ॥ १५ ॥ तत्रायं श्लोकः ॥ प्रैयव्रतं वंशमिमं विरजश्चरमोद्भवः ॥ अकरोदत्यलं कीर्त्या विष्णुः सुरगणं यथा ॥ १६ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे प्रियव्रतवंशानुकीर्तनं नाम पंचदशोऽध्यायः ॥१५॥ राजोवाच ॥ उक्तस्त्वया भूमण्डलायामविशेषो यावदादित्यस्तपति यत्र चासौ ज्योतिषां गणैश्चन्द्रमा वा सह दृश्यते ॥ १ ॥ तत्रापि प्रियव्रतरथचर·

जुन महाराज गयका सम्मान गरेका थिए तिनको समता कसले गर्न सक्छ ? ॥ १३ ॥ ती महाराज गयकी गयन्ती नामकी भार्याबाट चित्ररथ, सुगति र अवरोधन यी तीन पुत्र भए तिनमा चित्ररथकी ऊर्णा नामकी पत्नीबाट सम्राट् उत्पन्न भए ॥१४॥ सम्राट्‌की पत्नी उत्कलाबाट मरीचि र मरीचिकी पत्नी बिन्दुमतीबाट बिन्दुमान नामका छोरा जन्मे । बिन्दुकी पत्नी सरघाबाट मधु नामका पुत्र उत्पन्न भए । मधुकी स्त्री सुमनाबाट वीरव्रत र वीरव्रतकी स्त्री भोजाबाट मन्थु र प्रमन्थु नामका दुइ छोरा भए । तीमध्ये मन्थुकी स्त्री सत्याबाट भौवन, भौवनकी स्त्री दूषणाबाट त्वष्टा, त्वष्टाकी स्त्री विरोचनाबाट विरज तथा विरजकी विषूची नामकी भार्याबाट शतजित् आदि सय पुत्र र यौटी कन्या भइन् ॥ १५ ॥ विरजको विषयमा यो श्लोक कहिन्छ–'जस्तै विष्णु भगवान् देवताहरूको शोभा बढाउँछन् त्यस्तै अन्त्यमा उत्पन्न राजा विरजले आफ्नु शुभ्र कीर्तिले महाराज प्रियव्रतको वंश अलंकृत गरिदिए ॥१६॥ इति

श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे नेपाली भाषाटीकायां पंचदशोऽध्यायः ॥ १५ ॥ ( भुवनकोशको विस्तार वर्णन )–यति कथा सुनी राजा परीक्षितले सोधे–हे महामुने ! जहाँसम्म सूर्यको प्रकाश छ र जहाँसम्म तारागण समेत चन्द्रमा देखिन्छन्, त्यहाँसम्म सारा भूमण्डलको विस्तार हजुरले मलाई सुनाइसक्नुभयो ॥ १ ॥ त्यसैको प्रसङ्गमा हजुरले जुन भन्नुभएको थियो यस पृथ्वीया राजा प्रियव्रतको रथको पांग्राले बनेका लीकबाट सात समुद्र बने र तिनले सात द्वीपको रचना भयो । अतः म यी सबैको परिमाण र लक्षण समेत विवरण जान्ने इच्छुक छु । ॥२॥ भगवान्‌को सगुण तथा स्थूल रूपमा लागेको मन स्वयं प्रकाश परब्रह्म भगवान् वासुदेवको निर्गुण तथा अत्यन्त सूक्ष्म रूपमा पनि लाग्न सक्छ । अतः हे गुरो ! तिनको स्थूल स्वरूप यस ब्रह्माण्डको विस्तारपूर्वक वर्णन गर्नुहवस् ॥ ३ ॥ शुकदेवजी भन्नलागे—'हे महाराज ! कांही पुरुष देवता समान आयु पाएर पनि भगवान्‌को माया र तिनका गुणहरूको विस्तारक अन्त्य मन तथा वाणीले वर्णन गर्नमा समर्थ हुन सक्तैन । अतः म मुख्य-मुख्य नाम, रूप, परिमाण तथा लक्षणहरूका व्याख्याको प्रसङ्गमा भूगोलको वर्णन

णपरिखातैः सप्तभिः सप्त सिन्धव उपक्लृप्ता यत एतस्याः सप्तद्वीपविशेष विकल्पस्त्वया भगवन्खलु सूचित एतदेवाखिलमहं मानतो लक्षणतश्च सर्वं विजिज्ञासामि ॥ २ ॥ भगवतो गुणमये स्थूलरूप आवेशितं मनो ह्यगुणेऽपि सूक्ष्मतम आत्मज्योतिषि परे ब्रह्मणि भगवति वासुदेवाख्ये क्षममावेशितुं तदु हैतद्गुरोऽर्हस्यनुवर्णयितुमिति ॥ ३ ॥ ऋषिरुवाच ॥ न वै महाराज भगवतो मायागुणविभूतेः काष्ठां मनसा वचसा वाऽधिगन्तुमलं विबुधायुषापि पुरुषस्तस्मात्प्राधाण्येनैव भूगोलकविशेषं नामरूपमानलक्षणतो व्याख्यास्यामः ॥ ४ ॥ यो वायं द्वीपः कुवलयकमलकोशाभ्यन्तरकोशो नियुतयोजनविशालः समवर्तुलो यथा पुष्करपत्रम् ॥ ५ ॥ यस्मिन्नव वर्षाणि नवयोजनसहस्रायामान्यष्टभिर्मर्यादागिरिभिः सुविभक्तानि भवन्ति ॥ ६ ॥ एषां मध्ये इलावृतं नामाभ्यन्तरवर्षं यस्य नाभ्यामवस्थितः सर्वतः सौवर्णः कुलगिरिराजो मेरुर्द्वीपायामसमुन्नाहः कर्णिकाभूतः कुवलयकमलस्य मूर्धनि द्वात्रिंशत्सहस्रयोजनविततो मूले षोडशसहस्रं तावताऽन्तर्भूम्यां प्रविष्टः ॥ ७ ॥ उत्तरोत्तरेणेलावृतं नीलः श्वेतः शृङ्गवानिति त्रयो रम्यकहिरण्मयकुरूणां वर्षाणां मर्यादागिरयः प्रागायता उभयतः क्षारोदावधयो द्विसहस्रपृथव एकैकशः पूर्वस्मात्पूर्वस्मादुत्तर उत्तरो दशांशाधिकांशेन दैर्ध्य एव ह सन्ति ॥ ८ ॥ दक्षिणेनेलावृतं निषधो हेमकूटो हिमालय इति प्रागायता तथा नीलादयोऽयुतयोजनोत्सेधा हरिवर्षकिम्पुरुषभारतानां

गर्दछु ॥ ४ ॥ हामीहरू जुन द्वीपमा बस्तछौं यो ब्रह्माण्ड कमलको कोश अर्थात् मध्यभाग झैं विद्यमान छ । यस द्वीपको विस्तार एक लाख योजन छ र यो कमल पत्रको समान वाटुलो छ ॥ ५ ॥ यसमा नौ-नौ हजार योजन विस्तारका नौ वर्ष ( देश ) छन् जुन आठ सीमा विभाजक पर्वतहरूले भिन्न-भिन्न बाँडिएका छन् ॥ ६ ॥ यिनको माझमा इलावृत नामको देश छ । ती पर्वतहरूका राजा सुमेरु सबै पर्वतका माझमा छ, जुन भूमण्डलरूपी कमलको कर्णिका समान छ र माथिबाट तलसम्म सुवर्णमय छ । त्यसको शिखरको विस्तार बत्तीस हजार योजन छ र जरा (फेदी) को विस्तार सोह्र हजार योजन छ । त्यो त्यति नै अर्थात् सोह्र हजार योजन पृथ्वीभित्र घुसेको छ ॥ ७ ॥ इलावृत वर्षभन्दा उत्तर-क्रमशः नील, श्वेत तथा शृङ्गवान् नामका तीन पर्वत छन् । जुन रम्यक, हिरण्मय र कुरु तीन देशको सीमा निर्धारण गर्दछन् । ती पूर्व-पश्चिम क्षारसमुद्रसम्म फैलिएका छन् । तीबाट प्रत्येक

पर्वतको मोटाई दुइ हजार योजन छ र पहिलेको अपेक्षा पछिल्लो पर्वत लमाईमा दसमांशभन्दा अलिकति मात्र न्यूनाधिक छ ।।८।। यस्तै इलावृतवर्षको दक्षिणतिर निषध, हेमकूट तथा हिमालय नामका तीन पर्वत छन् । ती सबै नीलादि पर्वतको सदृश पूर्व-पश्चिमतिर फैलिएका छन् र दस हजार योजन अग्ला छन् । इनीबाट क्रमशः इलावृत, किम्पुरुष र भारतवर्षको सीमा विभाजन हुन्छ ।।९।। यसै प्रकार इलावृतखण्डको पूर्व र पश्चिमतिर नील तथा निषध पर्वतसम्म फैलिएको गन्धमादन एवं माल्यवान् नामका दुइ पर्वत छन् । यिनको चौडाई दुइ सहस्र योजन छ र यो केतुमाल तथा भद्राश्व नामका दुइ देशको सीमा निर्धारित गर्दछन् ।।१०।। यिनको अतिरिक्त मन्दर, मेरुमन्दर, सुपार्श्व र कुमुद यी चार हजार योजन अग्ला चार पर्वत मेरु पर्वतका आधारभूत खाँबा झैं बनेका छन् ।।११।। यी चारै पर्वतमा तिनका ध्वजा समान आँप, जामुनो, कदम्ब र बरका चार वृक्ष छन् । यी एघार सय योजन अग्ला तथा त्यति नै शाखाहरूको विस्तारले युक्त छन् र यिनको मोटाई सय योजन छ ।।१२।। हे नरश्रेष्ठ ! यी पर्वतहरूमा घिउ, मह, उखुको रस तथा मीठो पानीका चार सरोवर छन्, जसमा नुहाउने

तथासंख्यम् ॥ ९ ॥ तथैवेलावृतमपरेण पूर्वेण च माल्यवद्गन्धमादनावानीलनिषधायतौ द्विसहस्रं पप्रथतुः केतुमालभद्राश्वयोः सीमानं विदधाते ॥ १० ॥ मन्दरो मेरुमन्दरः सुपार्श्वः कुमुद इत्ययुतयोजनविस्तारोन्नाहा मेरोश्चतुर्दिशमवष्टम्भगिरय उपक्लृप्ताः ॥ ११ ॥ चतुर्ष्वेतेषु चूतजम्बूकदम्बन्यग्रोधाश्चत्वारः पादपप्रवराः पर्वतकेतव इवाधिसहस्रयोजनोन्नाहास्तावद्विटपविततयः शतयोजनपरिणाहाः ॥ १२ ॥ ह्रदाश्चत्वारः पयोमध्विक्षुरसमृष्टजला यदुपस्पर्शिन उपदेवगणा योगैश्वर्याणि स्वाभाविकानि भरतर्षभ धारयन्ति ॥ १३ ॥ देवोद्यानानि च भवन्ति चत्वारि नन्दनं चैत्ररथं वैभ्राजकं सर्वतोभद्रमिति ॥ १४ ॥ येष्वमरपरिवृढाः सहसुरललनाललामयूथपतय उपदेवगणैरुपगीयमानमहिमानः किल विहरन्ति ॥१५॥ मन्दरोत्सङ्ग एकादशशतयोजनोत्तुङ्गदेवचूतशिरसो गिरिशिखरस्थूलानि फलान्यमृतकल्पानि पतन्ति ॥ १६ ॥ तेषां विशीर्यमाणानामतिमधुरसुरभिसुगन्धिबहुलारुणरसोदेनारुणोदा नाम नदी मन्दरगिरिशिखरान्निपतन्ती पूर्वेणेलावृतमुपप्लावयति ॥ १७ ॥ यदुपजोषणाद्भवान्या अनुचरीणां पुण्यजनवधूनामवयवस्पर्शसुगन्धवातो दशयोजनं समन्तादनुवासयति ॥ १८ ॥ एवं जम्बूफलानामत्युच्चनिपातविशीर्णानामनस्थिप्रायाणा-

यक्ष-किन्नरादि उपदेवहरूको विना प्रयत्न नै स्वभावतः सबै योग-सिद्धिहरू प्राप्त हुने गर्दछन् ।।१३।। यसै प्रकार यिनमा नन्दन, चैत्ररथ, वैभ्राजक र सर्वतोभद्र नामका उपवन पनि छन् ।।१४।। तिनमा देवाङ्गनाहरूका युथपति देवता विहार गर्छन् र गन्धर्वादि उपदेगण त्यस बखत उनको महिमा वर्णन गर्दछन् ।।१५।। मन्दरपर्वतको काखमा जुन एघार सय योजन अग्लो यौटा आँपको वृक्ष छ, त्यसबाट पहाडका टुक्रा समान ठूला-ठूला तर अमृत समान स्वादिष्ट फल चुहुन्छन् ।।१६।। ती फल फुटेपछि तिनबाट जुन अतिशय सुगन्धित र अरुणवर्णको रस बग्दछ, त्यसबाट उत्पन्न अरुणोदा नदी मन्दराचलको शिखरबाट झरेर आफ्नो जलले इलावृत खण्डको पूर्वी भाग सिंचित पार्दछ ।।१७।। त्यसको जल सेवन गर्नाले श्रीपार्वतीकी सखी यक्षपत्नीहरूका अङ्गबाट यस्तो सुगन्ध निस्कन्छ कि तिनको अङ्ग तथा अवयवहरूको स्पर्श गरेर बग्ने वायु तिनको चारैतिर दस योजनासम्म सबै प्रदेशलाई सुवासित पार्दै रहन्छ ।।१८।। यसै प्रकार धेरै माथिबाट झर्ने हात्तीको समान ठूला-ठूला र धेरै गाना कोया हुने जामुनका फल फुटनाले गर्दा तिनको रसबाट उत्पन्न जम्बू नामको नदी

मेरुपर्वतको हजार योजन अग्लो शिखरबाट पृथ्वीमा झरेर आफ्नो जलले इलावृत खण्डको दक्षिणी भागलाई आद्र पार्दछ ॥१९॥ त्यस नदीको दुवैतिरको माटो त्यहीं रसमा भिजी तथा वायु र सूर्यको संयोगले सुखेपछि देवलोकलाई सर्वदा विभूषित पार्ने जम्बूनद नामक सुवर्णको रूपमा परिणत हुने गर्दछ ॥२०॥ जसलाई देवता तथा गन्धर्वादि आफ्ना तरुणी सुन्दरीहरूका साथै मुकुट, कटक तथा किङ्किणी आदि गहनाको रूपमा धारण गरिराख्दछन् ॥२१॥ सुपार्श्व नामक पर्वतमा उम्रेको जो यौटा धेरै ठूलो कदम्बको वृक्ष छ, त्यसका पाँच कोटरबाट महका पाँच धाराहरू बग्दछन्, जसको मोटाई आयामको छ। यस प्रकार सुपार्श्व पर्वतको शिखरबाट गिरेका यी पाँच मधुधाराहरू इलावृत खण्डको पश्चिमी भागलाई आफ्नो सुगन्धले सुरभित पार्दै बग्दछिन् ॥२२॥ तिनको रस पिउने प्राणिहरूको मुखबाट निस्कने वायु सबैतिर सय योजनसम्मको भूमिलाई सुगन्धित पार्दै रहन्छिन् ॥२३॥ त्यसै प्रकार कुमुद पर्वतमा शतवल्श नामको जुन्न वृक्ष छ, त्यसका हाँगाहरूबाट दूध, दही, घिउ, शखर, अन्नादि तथा वस्त्र, शय्या, आसन एवं आभूषणादिका नद निस्कन्छन्।

मिभकायनिभानां रसेन जम्बू नाम नदीं मेरुमन्दरशिखरादयुतयोजनादवनितले निपतन्ती दक्षिणेनात्मानं यावदिलावृतमुपस्यन्दयति ॥ १९ ॥ तावदुभयोरपि रोधसोर्या मृत्तिका तद्रसेनानुविध्यमाना वाय्वर्कसंयोगविपाकेन सदाऽमरलोकाभरणं जाम्बूनदं नाम सुवर्णं भवति ॥ २० ॥ यदु ह वाव विबुधादयः सह युवतिभिर्मुकुटकटककटिसूत्राद्याभरणरूपेण खलु धारयन्ति ॥ २१ ॥ यस्तु महाकदम्बः सुपार्श्वनिरूढो यास्तस्य कोटरेभ्यो विनिःसृताः पंचायामपरिणाहाः पंच मधुधाराः सुपार्श्वशिखरात्पतन्त्योऽपरेणात्मानमिलावृतमनुमोदयन्ति ॥२२॥ या ह्युपयुञ्जानानां मुखनिर्वासितो वायुः समन्ताच्छतयोजनमनुवासयति ॥२३॥ एवं कुमुदनिरूढो यः शतवल्शो नाम वटस्तस्य स्कन्धेभ्यो नीचीनाः पयोदधिमधुघृतगुडान्नाद्यम्ब-रशय्यासनाभरणादयः सर्व एव कामदुघा नदाः कुमुदाग्रात्पतन्तस्तमुत्तरेणेलावृत्तमुपयोजन्ति ॥ २४ ॥ यानुपजुषाणानां न कदाचिदपि प्रजानां वलीपलितक्लमस्वेददौर्गन्ध्यजरामयमृत्युशीतोष्णवैवर्ण्योपसर्गादयस्तापविशेषा भवन्ति यावज्जीवं सुखं निरतिशयमेव ॥ २५ ॥ कुरङ्गकुररकुसुम्भ-वैकंकत्रिकूटशिशिरपतंगरुचकनिषधशिनीवासकपिलशंखवैदूर्यजारुधिहंसर्षभनागकालञ्जरनारदादयो विंशतिगिरयो मेरोः कर्णिकाया इव केसर-भूता मूलदेशे परित उपक्लृप्ताः ॥ २६ ॥ जठरदेवकूटौ मेरुं पूर्वेणाष्टादशयोजनसहस्रमुदगायतौ द्विसहस्रं पृथुतुङ्गौ भवतः। एवमपरेण पवनपारि-

ती सबै इच्छानुसार भोगका दाता छन्। कुमुद पर्वतको शिखरबाट तल बगेर ती इलावृत खण्डको उत्तरी भागलाई सींचदै रहन्छन् ॥२४॥ ती नदले सबै पदार्थको उपयोग गर्नाले त्यहाँ बस्ने मानिसका गालामा चाउरी पर्नु, थाक्नु, शरीरमा पसीना आउनु, शरीरबाट दुर्गन्ध निस्कनु, मृत्यु, सर्दी-गर्मी र शरीरको कान्ति बदलिनु आदि विघ्नले कत्ति पनि दुःख दिंदैनन् र उनलाई जीवनभरि पूरा-पूरा सुख प्राप्त हुन्छ ॥२५॥ हे राजन्! कमलको कर्णिकाको सबैतिर जस्तै केशर हुन्छ, त्यस्तै नै मेरुपर्वतको मूल प्रदेशमा उसको चारैतिर कुरङ्ग, कुरर कुसुम्भ, वैकङ्क, त्रिकूल, शिशिर, पतङ्ग, रुचक, निषध, शिनीवास, कपिल, शङ्ख, वैदूर्य, जारुधि, हंस, ऋषभ, नाग, कालञ्ज तथा नारद आदि बीस पर्वत विद्यमान छन् ॥२६॥ मेरु भन्दा पूर्वतिर जठर र देवकूट नामका दुइ पर्वत छन्, जो उत्तरतिर अठार हजार योजन लामा, दुइ हजार योजन चाक्ला र त्यति नै अग्ला छन्। यसै प्रकार पश्चिमतिर

पवन तथा पारियात्र, दक्षिणतिर कैलास एवं करवीर तथा उत्तरतिर पूर्वाभिमुख फैलिएका त्रिशृङ्ग र मकर नामका दुइ पर्वत छन् । यी आठै पर्वतले घेरिएको सुमेरु पर्वत चारैतिरबाट घेरिएको अग्नि समान तेजस्वी देखिन्छ ॥२७॥ यस्तो भनाइ छ—सुमेरुपर्वतको टाउराको माझमा ब्रह्माजीको सम चतुष्कोण र सुवर्णमयी पुरी विद्यमान छ, जसको विस्तार हजार अयुत योजन छ ॥२८॥ त्यसको तल चारैरित पूर्वादि आठै दिशा र उपदिशाहरूमा तिनका अधिपति इन्द्रादिक आठै दिक्पालहरूका आठ पुरी छन्, जुन आफ्आफ्ना स्वामीको अनुरूप तथा परिमाणमा ब्रह्माजीको पुरीभन्दा एक चौथाई लामो र चाक्लो छ ॥ २९ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे नेपाली भाषाटीकायां षोडशोऽध्यायः ॥ १६ ॥ ( गङ्गाको उत्पत्ति विवरण र शिवजी द्वारा सङ्कर्षणको स्तुति )—शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! जब साक्षात् यज्ञमूर्ति भगवान् विष्णुले राजा बलिको यज्ञशालामा गएर तीनै लोकलाई ढाक्नको निम्ति आफ्ना पाउ बढाए तब उनका बायाँ पाउको बूढी औंलाको नङ्को आघातले माथिको ब्रह्माण्ड फाट्यो । त्यसको प्वालबाट निस्केर ब्रह्माण्डदेखि बाहिर जुन जल धारा

यात्रौ दक्षिणेन कैलासकरवीरौ प्रागायतावेवमुत्तरतस्त्रिशृङ्गमकरावष्टभिरेतैः परिसृतोऽग्निरिव परितश्चकास्ति काञ्चनगिरिः ॥ २७ ॥ मेरोर्मूर्धनि भगवत आत्मयोनेर्मध्यत उपक्लृप्तां पुरीमयुतयोजनसाहस्रीं समचतुरस्रां शातकौम्भीं वदन्ति ॥ २८ ॥ तामनु परितो लोकपालानामष्टानां यथा-दिशं यथारूपं तुरीयमानेन पुरोऽष्टावुपक्लृप्ताः ॥ २९ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे भुवनकोशवर्णनं नाम षोडशोऽध्यायः ॥ १६ ॥
श्रीशुक उवाच ॥ तत्र भगवतः साक्षाद्यज्ञलिङ्गस्य विष्णोर्विक्रमतो वामपादाङ्गुष्ठनखनिर्भिन्नोर्ध्वाण्डकटाहविवरेणान्तः प्रविष्टा या बाह्यजलधारा तच्चरणपङ्कजावनेजनारुणकिञ्जल्कोपरञ्जिताखिलजगदघमलापहोपस्पर्शनामला साक्षाद्भगवत्पदीत्यनुपलक्षितवचोऽभिधीयमानाऽतिमहता कालेन युगसहस्रोपलक्षणेन दिवो मूर्धन्यवततार यत्तद्विष्णुपदमाहुः ॥ १ ॥ यत्र ह वाव वीरव्रत औत्तानपादिः परमभागवतोऽस्मत्कुलदेवताचरणार-विन्दोदकमिति यामनुसवनमुत्कृष्यमाणभगवद्भक्तियोगेन दृढं क्लिद्यमानान्तर्हृदय औत्कण्ठ्यविवशामीलितलोचनयुगलकुड्मलविगलितामलबाष्प-कलयाऽभिव्यज्यमानरोमपुलककुलकोऽधुनापि परमादरेण शिरसा बिभर्ति ॥ २ ॥ ततः सप्त ऋषयोऽस्मत्प्रभावाभिज्ञा यां ननु तपस आत्यन्तिकी

आयो, त्यो ती चरणकमललाई धुनाले त्यसको अरुणवर्ण केशरसित मिसिएर रातो रंगको भयो । यो निर्मल जलधारा स्पर्श हुनासाथ जगत् सबै पाप नष्ट पारिदिन्छ । त्यसलाई परिले अरु केही नभनेर सबै साक्षात् 'भगवत्पदी' भन्दथे । ब्रह्माण्डकटाहबाट त्यो हजारौं युग दीर्घकालपछि स्वर्गबाट माथि विराजमान साक्षात् ध्रुवलोकमा जसलाई 'विष्णुपदी पनि भन्दछन्, तल बर्लिन् ॥१॥ हे वीरव्रत ! त्यस लोकमा राजा उत्तानपादका छोरा परम भगवद्भक्त ध्रुव बस्तछन् । ती नित्य बढ्ने भक्तियोगद्वारा 'यो हाम्रो कुलदेवताको चरणोदक हो' यस्तो मानेर त्यो जललाई अब ठूलो आदर साथ आफ्नो शिरमा चढाउँछन्, तब तिनको हृदय प्रेमावेगले अत्यन्त गद्गद् हुने गर्दछ । उत्कण्ठावश जब चिम्लिएका दुवै नेत्र-कमल बाट निर्मल आँसुका धारा बग्न थाल्दछन् र शरीरमा रोमाञ्च हुने गर्दछ ॥२॥ त्यसपछि सर्वात्मा भगवान् वासुदेवको अटल र अचल भक्तिभाव प्राप्त गरेर जसले सबै कामनाहरूको

परित्याग गरिदिएका छन्, ती आत्मपरायण सप्तर्षिगण ती गङ्गाजीको प्रभावबाट अभिज्ञ हुनाले गर्दा 'तपस्याको सर्वप्रधान सिद्धि यही हो' यस्तो ठानेर उसलाई ठूला आदरल आज पनि आफ्ना जटामा धारण गरिरहेछन् । जस्तै मुमुक्षुजन स्वतः प्राप्त श्रमणिरूपिणी मुक्तिलाई शिरमा चढाउँछन् ॥ ३ ॥ शिवजीको जटाबाट गङ्गा–हजारौं करोड देवताहरूका विमानहरूले भरी आकाशमार्गबाट तल बर्सदी र चन्द्रलोकलाई आप्लावित पार्दै मेरुशिखरको ब्रह्मपुरीमा पुग्दछिन् । त्यस ब्रह्मपुरीमा ती चार धाराहरूमा विभक्त भएर सीता, अलकनन्दा चक्षु र भद्रा यी नामबाट चारै दिशाहरूमा बग्दै अन्त्यमा नद तथा नदीहरूका अधीश्वर समुद्रमा गएर मिल्दछिन् ॥४॥५॥ तिनका सीता ब्रह्मपुरीबाट बगेर मेरुपर्वतको केशर समान देखिने भएका

सिद्धिरेतावती भगवति सर्वात्मनि वासुदेवेऽनुपरतभक्तियोगलाभेनैवोपेक्षितान्यार्थात्मगतयो मुक्तिमिवागतां मुमुक्षव इव सबहुमानमद्यापि जटाजूटैरुद्वहन्ति ॥ ३ ॥ ततोऽनेकसहस्रकोटिविमानानीकसङ्कुलदेवयानेनावतरन्तीन्दुमण्डलमावार्य ब्रह्मसदने निपतति ॥ ४ ॥ तत्र चतुर्धा भिद्यमाना चतुर्भिर्नामभिश्चतुर्दिशमभिस्पन्दती नदनदीपतिमेवाभिविशति सीताऽलकनन्दा चक्षुर्भद्रेति ॥ ५ ॥ सीता तु ब्रह्मसदनात्केसराचलादिगिरिशिखरेभ्योऽधोऽधः प्रस्रवन्ती गन्धमादनमूर्धसु पतित्वाऽन्तरेण भद्राश्ववर्षं प्राच्यां दिशि क्षारसमुद्रमभिप्रविशति ॥ ६ ॥ एवं माल्यवच्छिखरान्निपतन्ती ततोऽनुपरतवेगा केतुमालमभि चक्षुः प्रतीच्यां दिशि सरित्पतिं प्रविशति ॥ ७ ॥ भद्रा चोत्तरतो मेरुशिरसो निपतिता गिरिशिखराद्गिरिशिखरमतिहाय शृङ्गवतः शृङ्गादवस्यन्दमाना उत्तरांस्तु कुरूनभित उदीच्यां दिशि जलधिमभिप्रविशति ॥ ८ ॥ तथैवालकनन्दा दक्षिणेन ब्रह्मसदनाद्बहूनि गिरिकूटान्यतिक्रम्य हेमकूटाद्धैमकूटान्यतिरभसतररंहसा लुठन्ती भारतमभिवर्षं दक्षिणस्यां दिशि जलधिमभिप्रविशति । यस्यां

पर्वतहरूमा हुँदै ठूलो वेगले बग्दै गन्धमादन पर्वतको शिखरमा झर्दछिन् । ती भद्राश्व खण्डलाई प्लावित पार्दै पूर्वतिर क्षारसमुद्रमा मिल्दछिन् ॥ ६ ॥ यसै प्रकार चक्षु नदी माल्यवान्को शिखरमा हुँदै केतुमाल वर्षमा अनवरत गतिले पश्चिमतर्फ बग्दै समुद्रमा मिल्न पुग्दछिन् ॥ ७ ॥ भद्रा नदी मेरुपर्वतको उत्तरतिरको शिखरबाट तल झरेर यौटा पर्वतमा बग्दै अन्त्यमा शृङ्गवान्को शिखरबाट झरेर उत्तर कुरुदेशमा उत्तरतिर बग्दै समुद्रमा मिल्न पुग्दछिन् ॥ ८ ॥ अलकनन्दा ब्रह्मपुरीको दक्षिण भागबाट बगेर अनेक पर्वतहरू नाघ्दै हेमकूलमा पुग्दछिन् र त्यहाँबाट अत्यन्त तीव्र तथा अप्रतिहत वेगले हिमालयको शिखरलाई चिर्दै अन्त्यमा भारतवर्ष पुगेर अनेक देश, नगरहरूबाट बग्दै अन्त्यमा दक्षिण दिशाको

---

※ दृष्टान्त ( कथा मणिले मुक्ति दिन्छ )—उनै नगरमा यौटा साहू बस्तथ्यो । त्योसित यौटा बहुमूल्य मणि थियो । त्यो जब बूढो भयो, तब उसले त्यो मणि आफ्ना छोराहरूलाई दिएर भन्यो—"यो माणि बहुमूल्य छ, यसको सुरक्षा गर्नु । रात्रिमा पनि यसको रक्षा गर्दै रहनु ।" छोराले पिताको सल्लाह स्वीकार गरे । ती रातभरि जागै रहेर मणिको रक्षा गर्नलागे । पहिले कान्छो छोरो जागै बस्यो । त्यसले मणि बाहिर झिक्नासाथ झल्ल प्रकाश फैलियो । त्यो एक क्षणसम्म मणिलाई हेर्दै रह्यो । पछि जब समय बिताउन कठिन भयो, तब त्यसले मणिलाई धूलोमा गाड्ने र झिक्ने गर्नलाग्यो । त्यसपछि अर्को छोरोको पालो आयो । त्यसले मणिको प्रकाशमा त्यहाँका सबै वस्तु जम्मा पार्‍यो । पछि तेस्रो छोरोको पालो । उसले ढोका खोलेर मणिलाई घरबाट बाहिर लगेर राख्यो । त्यसमा चन्द्रमाका किरण परेपछि उसबाट अमृत चुहुन लाग्यो । त्यसले त्यो अमृत पियो र अमर भयो । यसको भाव यो कि—भक्तिरूपी मणि प्राप्त प्राप्त गरेर तमोगुणी मनुष्य भोग भोग्दछ—'म त शुद्ध हुँ । 'मलाई के पाप लाग्दछ !' यस्तो भनेर त्यो आफैंमाथि र शास्त्रमा धूलो फाल्दै जान्छ । अर्को रजोगुणी व्यक्ति शास्त्रलाई बुझेर तथा विविध युक्तिहरू गरेर धन कमाउन थाल्दछन् अनि जीवन पर्यन्त रजोगुणमै तन्मय रहन्छन् । तेस्रा सत्वगुणी पुरुष त्यसबाट अमृतमय मोक्ष प्राप्त गर्दछन् ।

समुद्रमा मिल्दछिन् । यसमा स्नान गर्नका लागि आउने व्यक्तिलाई पद-पदमा अश्वमेध र राजसूय आदि महायज्ञहरूको फल पाउन पनि दुर्लभ रहन्न ॥९॥ यसै प्रकार प्रत्येक देशमा मेरु आदि पर्वतबाट निस्कने अरू पनि सयकडौं नद तथा नदीहरू छन् ॥१०॥ यी सबै खण्डमा केवल भारतवर्ष नै कर्मभूमि छ । बाँकी आठ खण्ड स्वर्गवासी पुरुषका शेष पुण्यलाई भोग्नको निम्ति तोकिएका छन् । अतः इनलाई भूलोकस्थित स्वर्ग पनि भन्दछन् ॥११॥ यहाँका देवता समान पुरुषहरूको आयु मनुष्यको गणनानुसार दश हजार वर्षको हुन्छ तिनमा हजार हात्तीको बल रहन्छ र तिनको वज्रसमान शरीरमा जुन शक्ति, जुन यौवन र जुन आमोदजनित उल्लास हुन्छन्, तिनले ती धेरै कालसम्म मैथुनादि विषयभोग भोग्दछन् । तिनका आयुको जब केवल एक वर्ष शेष रहन्छ, तब तिनकी भार्याहरू गर्भवती हुन्छन् । यस प्रकार त्यहाँ सधैं त्रेतायुगको समानस्थिति रहन्छ ॥१२॥ सबै ऋतुमा फूलका गुच्छा आदि र नवीन कोपिलाका समृद्धिले न्यूस्रिएका शाखाहरू हुने वृक्षले त्यहाँका बगैंचा । सुशोभित रहन्छन् । ती आश्रम गृह तथा वर्ष-पर्वतका गुफाहरूमा अनेक थरिका फक्रेका नवीन कमल-कुसुमको

स्नानार्थं चागच्छतः पुंसः पदेपदेऽश्वमेधराजसूयादीनां फलं न दुर्लभमिति ॥ ९ ॥ अन्ये नदा नद्यश्च वर्षे वर्षे सन्ति बहुशो मेर्वादिगिरिदुहितरः
शतशः ॥ १० ॥ तत्रापि भारतमेव वर्षं कर्मक्षेत्रमन्यान्यष्ट वर्षाणि स्वर्गिणां पुण्यशेषोपभोगस्थानानि भौमानि स्वर्गपदानि व्यपदिशन्ति
॥ ११ ॥ एषु पुरुषाणामयुतपुरुषायुर्वर्षाणां देवकल्पानां नागायुतप्राणानां वज्रसंहननबलवयोमोदप्रमुदितमहासौरतमिथुनव्यवायापवर्गवर्षधृतैक-
गर्भकलत्राणां तत्र तु त्रेतायुगसमः कालो वर्तते ॥ १२ ॥ यत्र ह देवपतयः स्वैः स्वैर्गणनायकैर्विहितमहार्हणाः सर्वर्तुकुसुमस्तबकफलकिसल-
यश्रिया नम्यमानविटपलताविटपिभिरुपशोभमानरुचिरकाननाश्रमायतनवर्षगिरिद्रोणीषु तथा चामलजलाशयेषु विकचविविधनववनरुहामोदमुदित-
राजहंसजलकुक्कुटकारण्डवसारसचक्रवाकादिभिर्मधुकरनिकराकृतिभिरुपकूजितेषु जलक्रीडादिभिर्विचित्रविनोदैः सुललितसुरसुन्दरीणां कामक-
लितविलासहासलीलावलोकाकृष्टमनोदृष्टयः स्वैरं विहरन्त ॥ १३ ॥ नवस्वपि वर्षेषु भगवान्नारायणो महापुरुषः पुरुषाणां तदनुग्रहायात्म-
तत्त्वव्यूहेनात्मनाऽद्यापि सन्निधीयते ॥ १४ ॥ इलावृते तु भगवान्भव एक एव पुमान्न ह्यन्यस्तत्रापरो निविशति भवान्याः शापनिमित्तज्ञो
यत्प्रवेक्ष्यतः स्त्रीभावस्तत्पश्चाद्वक्ष्यामि ॥ १५ ॥ भवानीनाथैः स्त्रीगणार्बुदसहस्रैरवरुध्यमानो भगवतश्चतुर्मूर्तेर्महापुरुषस्य तुरीयां तामसीं

सुगन्ध पाएर प्रसन्न मनले कूजित राजहंस, जल-कुक्कुट, कारण्डव, सारस तथा चखेवा आदि पक्षिहरू एवं गुञ्जन गर्ने भ्रमरसमूहलाई भिन्न-भिन्न जातले सुशोभित जलाशयहरूमा उहाँका श्रेष्ठ देवतागण आफाफ्ना सेवकमा प्रमुख व्यक्तिहरूद्वारा अनेक प्रकारका सामग्रीले पूजित भएर परमसुन्दरी देवाङ्गनाहरूका साथै तिनका कामजनित विलासपूर्ण हास र क्रीडाकटाक्षले मन तथा नेत्र आकृष्ट भएपछि किसिम-किसिमका कौतुक गर्दै स्वच्छन्द विहार गर्दछन् ॥१३॥ माथि कानौवर्षमा परमपुरुष नारायण त्यहाँ भएका पुरुषहरूमा अनुग्रह गर्नका लागि आफ्ना विभिन्न मूर्तिले आज पनि विराजमान रहन्छन् ॥१४॥ इलावृत खण्डमा एक्लै शङ्करजी नै पुरुष छन् । ती भगवान्‌को श्रापले त्यहाँ कुनै पनि अर्को पुरुष जान सक्तैन, किनकि त्यहाँ जो जान्छ, त्यो स्त्रीमा परिवर्तित हुन्छ । अगाडी नवौं स्कन्धमा यस विषयको विस्तृत वर्णन गरिने छ ॥१५॥ त्यहाँ पार्वतीआदि हजारअर्बुद स्त्रीहरूले घेरिएका भगवान शिवजी

512

परमात्माको चतुर्व्यूह मूर्तिहरूका कारणस्वरूप सङ्कर्षण नामको चौथो तामसी मूर्तिको समाधियोग द्वारा ध्यान गर्दै र यस मन्त्रलाई जप्दै स्तुति गान गर्दछन् । श्रीशङ्कर भगवान् भन्नुहुन्छ–जसको द्वारा सबै गुणको अभिव्यक्ति हुन्छ, तो अनन्त र अव्यक्त मूर्ति परम पुरुष भगवान् सङ्कर्षणलाई बारम्बार नमस्कार छ ॥१६॥१७॥ हे आराध्यदेव ! हजुरका चरण-कमल भक्तहरूका रक्षक हुन् । हजुर सबै ऐश्वर्यका आश्रय हुनुहुन्छ । हजुरले आफ्नो भूतभावन स्वरूप भक्तगणको प्रति पूर्णरूपले प्रकट गर्नुभएको छ र हजुर भक्तलाई संसारबाट मुक्त पार्न र अभक्तलाई त्यस बन्धनमा बाँध्ने छन् । यस्ता परमप्रभु हजुरलाई म नमस्कार गर्दछु ॥१८॥ हे प्रभो ! क्रोध जित्नमा असमर्थ हाम्रो दृष्टि जस विषयहरूमा लिप्त भएर गाडिन्छ, त्यसै गरी जो हजुरको दृष्टि संसारतिर हेरिरहे पनि मायामयी विषयवासनाले भरिएको चित्तको वृत्तिहरूमा केही पनि लिप्त हुन जाँदैन, तो परम समर्थ हजुरको आफ्नो अन्तःकरणलाई जित्ने इच्छा भएका कुन पुरुष आदर नगर्लान् ? ॥१९॥ जो पुरुषलाई आफ्नो मायाले मोहित पार्दै मदिरा पानले अरुण नयन भएका देखिन्छन् र जसका चरणको स्पर्श गर्नाले कामवश

मूर्तिं प्रकृतिमात्मनः सङ्कर्षणसंज्ञामात्मसमाधिरूपेण सन्निधाप्यैतदभिगृणन्भव उपधावति ॥ १६ ॥ श्रीभगवानुवाच ॥ ॐ नमो भगवते महा-
पुरुषाय सर्वगुणसंख्यानायानन्तायाव्यक्ताय नम इति ॥ १७ ॥ भजे भजन्यारणपादपङ्कजं भगस्य कृत्स्नस्य परं परायणम् ॥ भक्तेष्वलं
भावितभूतभावनं भवापहं त्वां भवभावमीश्वरम् ॥ १८ ॥ न यस्य मायागुणचित्तवृत्तिभिर्निरीक्षतो ह्यण्वपि दृष्टिरज्यते ॥ ईशे यथा नोऽजित
मन्युरंहसां कस्तं न मन्येत जिगीषुरात्मनः ॥ १९ ॥ असद्दृशो यः प्रतिभाति मायया क्षीबेन मध्वासवताम्रलोचनः ॥ न नागवध्वोऽर्हण ईशिरे
ह्रिया यत्पादयोः स्पर्शनधर्षितेन्द्रियः ॥ २० ॥ यमाहुरस्य स्थितिजन्मसंयमं त्रिभिर्विहीनं यमनन्तमृषयः ॥ न वेद सिद्धार्थमिव क्वचित्स्थितं
भूमण्डलं मूर्धसहस्रधामसु ॥ २१ ॥ यस्याद्य आसीद्गुणविग्रहो महान्विज्ञानधिष्ण्यो भगवानजः किल ॥ यत्सम्भवोऽहं त्रिवृता स्वतेजसा
वैकारिकं तामसमैन्द्रियं सृजे ॥ २२ ॥ एते वयं यस्य वशे महात्मनः स्थिताः शकुन्ता इव सूत्रयन्त्रिताः ॥ महानहंवैकृततामसेन्द्रियाः सृजाम
सर्वे यदनुग्रहादिदम् ॥ २३ ॥ यन्निर्मितां कर्ह्यपि कर्मपर्वणीं मायां जनोऽयं गुणसर्गमोहितः ॥ न वेद निस्तारणयोगमञ्जसा तस्मै नमस्ते विलयोदया-
त्मने ॥ २४ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे सप्तदशोऽध्यायः ॥१७॥ श्रीशुक उवाच ॥ तथा च भद्रश्रवा नाम धर्मसुतस्तत्कुलपतयः

चित्त चञ्चल भएर आउँछ र सबै नागपत्नीहरू पूजा निवेदन गर्नमा असमर्थ हुन्छन् ॥२०॥ वेदमन्त्र जसलाई जगत्को उत्पत्ति स्थिति र लयका कारण भन्दछन् र वास्तवमा यी तीनै अवस्थाहरूबाट पृथक् रहनाले जसलाई ऋषि-मुनि अनन्त भन्दछन् र जो आफ्ना सहस्र मस्तकमा सरसयुँ सदृश राखिएका भूमण्डलको विषयमा यति पनि जान्दैनन् कि त्यो कहाँ राखिएको छ ॥२१॥ जसद्वारा उत्पन्न म आफ्ना त्रिगुणमय तेज अर्थात् त्रिविध अहङ्कारले देवता, इन्द्रिय र प्राणिहरूको रचना गर्दछु, तो सत्वगुणका एकमात्र आश्रय ब्रह्मा जसको महत्तत्व नामक गुणयुक्त स्वरूप छ, त्यस्ता हजुरलाई नमस्कार ॥२२॥ महत्तत्व, अहङ्कार, इन्द्रियाभिमानी देवता, इन्द्रियहरू र पञ्चभूतगणादि र हामीसबै देवता डोरीमा बाँधिएका पक्षी जस्तै जुन महात्माको वशमा रहेर उसैको कृपा-कटाक्षले यस जगत्को रचना गर्छन् र सत्वादि गुणको सृष्टिले मोहित यो जीव जसले रचेको कर्मरूपिणी ग्रन्थिहरूले युक्त माया तथा

त्यसबाट सहजमा मुक्त हुने उपाय जान्दैन। अखिल जगत्‌को सृष्टि र प्रलयरूपधारी ती हजुर प्रभुलाई नमस्कार गर्दछु ॥२३-२४॥ इति श्रीमद्भागवते महापुराणे पञ्चम स्कन्धे नेपाली भाषाटीकायां सप्तदशोऽध्यायः ॥ १७ ॥ ( विभिन्न देशको विस्तार )—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन्! यसै प्रकार भद्राश्वखण्डमा धर्मका पुत्र भद्रश्रवा तथा तिनका प्रमुख सेवक साक्षात् भगवान वासुदेवको हयग्रीव नामको धर्ममयी प्रिय मूर्तिलाई परम समाधिले आफ्नो हृदयमा स्थापित गरेर यो मन्त्र जप्दै स्तुति गरिरहन्छन् ॥१॥ भद्रश्रवागणहरू भन्दछन्—चित्तलाई पवित्र पार्ने साक्षात् धर्म-भगवान्‌लाई नमस्कार छ ॥ २ ॥ अहो! भगवान्‌को लीला बडो विचित्र छ। त्यसैले गर्दा यो जीव सम्पूर्ण लोकहरूका संहारक काललाई देखेर पनि देख्न सक्तैन। अएतव तुच्छ विषयलाई भोग्न सर्वथा असत्‌को ध्यान गर्दै पुत्र पिताको दाह-कर्म गरिसकेपछि पनि *अन्न र ती स्वजनहरू द्वारा उपार्जित धनको उपभोग

पुरुषा भद्राश्ववर्षे साक्षाद्भगवतो वासुदेवस्य प्रियां तनुं धर्ममयीं हयशीर्षाभिधानां परमेण समाधिना सन्निधाप्येदमभिगृणन्त उपधावन्ति ॥ १ ॥ भद्रश्रवस ऊचुः ॥ ॐ नमो भगवते धर्मायात्मविशोधनाय नम इति ॥२॥ अहो विचित्रं भगवद्विचेष्टितं घ्नन्तं जनोऽयं हि मिषन्न पश्यति ॥ ध्यायन्न सद्यर्हि विकर्म सेवितुं निर्हृत्य पुत्रः पितरं जिजीविषति ॥ ३ ॥ वदन्ति विश्वं कवयः स्म नश्वरं पश्यन्ति चाध्यात्मविदो विपश्चितः ॥ तथापि मुह्यन्ति तवाज मायया सुविस्मितं कृत्यमजं नतोऽस्मि तम् ॥ ४ ॥ विश्वोद्भवस्थाननिरोधकर्म ते ह्यकर्तुरङ्गीकृतमप्यपावृतः ॥ युक्तं न चित्रं त्वयि कार्यकारणे सर्वात्मनि व्यतिरिक्ते च वस्तुतः ॥ ५ ॥ वेदान्युगान्ते तमसा तिरस्कृतान् रसातलाद्यो नृतुरङ्गविग्रहः ॥ प्रत्याददे वै कवयेऽभि याचते तस्मै नमस्तेऽवितथेहिताय इति ॥ ६ ॥ हरिवर्षे चापि भगवान्नरहरिरूपेणास्ते ॥ तद्रूपग्रहणनिमित्तमुत्तरत्राभिधास्ये ॥ तद्दयितं

गर्दै बाँचिरहन खोज्दछ ॥ ३ ॥ कतिपय विद्वान्‌को भनाई छ—जगत् नाशवान छ र आत्मज्ञानको विचक्षण पुरुष उसलाई नाशवान देख्दछन्। तैपनि हे अजन्मा! हजुरकी मायाले जन समुदाय मोहित हुने गर्दछन्, यस्ता अत्यन्त विस्मयजनक अगणित कार्य गर्ने भएका हजुर प्रभुलाई म नमस्कार गर्दछु ॥ ४ ॥ हे प्रभो! हजुर सर्वथा अकर्ता तथा आवरण शून्य हुनुहुन्छ, तैपनि वेदहरूले जगत्‌को उत्पत्ति, स्थिति र प्रलय हजुरकै कर्म हुन् भन्दछन्। हजुरको विषयमा यो कुनै विस्मयको कुरा होइन, किनकि सबै कामका कारण-स्वरूप हजुर सर्वात्माकी माया द्वारा यो कर्म हुनु सम्भव छ। वस्तुतः हजुर आफ्नो शुद्ध स्वरूपले सर्वथा अलग हुनुहुन्छ। जसले मनुष्य तथा घोड़ा समान शरीर धारण गरेर प्रलयकालमा तमोगुणप्रधान मधुकैटभ दैत्यद्वारा हरिएका वेद—कविहरूले मागेपछि रसातलबाट ल्याएर दिनुभयो, सत्य इच्छाशक्ति हुने हजुरलाई नमस्कार ॥६॥ हरिवर्षखण्डमा नृसिंहरूपले विराजमान

* दृष्टान्त ( अन्न अनुसारको बुद्धि )—यौटा ब्राह्मण ठूलो पण्डित थिए। ती सदा ईश्वरसित यही प्रार्थना गर्दथे—'मेरो मन कुनै दिन पनि अनीतिमा नलागोस्!' एक दिन राजाले केही सोध्नको लागि ती पण्डित-लाई डाकन पठाए। पण्डित राजमहलमा पुगेर यौटा किलामा हार झुण्डिएको देखे। तिनको मन चञ्चल भएर आयो। राजासित कुराकानी गरेर उनले चुपचाप हार लिएर बाहिर निस्के। तिनले आउँदा आउँदै बाटोमा विचार गरे—मैले आज अधर्म गरें।' ती तत्काल फर्केर गए र राजालाई हार बुझाएर क्षमा मागे। यसले राजालाई आश्चर्य भयो। पण्डितले घर आएर पत्नीसित सोधे—'आज कसको अन्नले सिधोले भोजन तयार गरेकी थियौ?' स्त्रीले भनिन्—'यौटा सुनारले सिधा दिएर गएको थियो।' पण्डितले सुनारसित सोधे—'तेरो कमाई कस्तो थियो?' सुनारले उत्तर दियो—'मैले यौटा ग्राहकको सुन चोरेको थिएँ, र त्यसैको पैसाले एक मास सिधा तपाईंकहाँ पनि पठाइदिएँ।' पण्डितले विचार गरे—चोरीको अन्न खानाले यही फल हुन्छ।' तिनले प्रायश्चित्त स्वरूप एक दिन उपवास गरे र स्त्रीलाई भने—अब कसैले केही वस्तु दिन आए त्यो वस्तु नलिनु।

4514

रहनु हुन्छ। उनको यस रूपलाई धारण गर्न कारण अगाडि गएर ( सप्तम स्कन्धमा ) बताइने छ। महापुरुषका योग्य गुणले सम्पन्न, दैत्य तथा दानव कुललाई पवित्र पार्ने स्वभाव तथा सदाचारले युक्त परम भगवद्भक्त प्रह्लादजी त्यो हरिवर्ष खण्डका निवासी अन्य पुरुषहरूका साथै अनन्य र अव्यवहित भक्तिभावले त्यो प्रिय स्वरूपको उपासना गर्दै यस मन्त्र र स्तोत्रको पाठ गर्दै रहन्छन्–श्रीनृसिंह भगवानलाई नमस्कार छ। हे प्रभो! हजुर अग्नि आदि सबै तेजका पनि तेज हुनुहुन्छ। हे वज्रनख! हे वज्रदंष्ट्र! मेरा कर्मवासनाहरूलाई हजुर भस्म गर्नोस्, मेरा अज्ञानरूपी अन्धकारलाई निलिदिनोस्—ॐ स्वाहा क्षौम् ॥ ७।८ ॥ हे प्रभो! समस्त विश्वको कल्याण होस्। दुष्ट जनहरू आफ्नो कुटिलता त्यागेर सज्जन बनुन्। सबै प्राणी आफ्नो बुद्धिले परस्पर यौटाले अर्काको भलो गर्ने सोचून्। हाम्रो मन शुभ मार्गमा लागोस्। हाम्रो बुद्धि निष्काम भावले श्री अधोक्षज भगवान्मा प्रवृत्त होस् ॥ ९ ॥ हे प्रभो! घर, स्त्री, पुत्र, धन तथा भाई बन्धुहरूमा कहिल्यै पनि हाम्रो आसक्ति नहोस्। यदि भए पनि केवल भगवान्का भक्तगणमा होस्। किनकि जो धीर पुरुष

रूपं महापुरुषगुणभाजनो महाभागवतो दैत्यदानवकुलतीर्थीकरणशीलाचरितः प्रह्रादोऽव्यवधानानन्यभक्तियोगेन सह तद्वर्षपुरुषैरुपास्ते इदं चोदाहरति ॥ ७ ॥ ॐ नमो भगवते नरसिंहाय नमस्तेजस्तेजसे आविराविर्भव वज्रनख वज्रदंष्ट्र कर्माशयान् रन्धय रन्धय तमो ग्रस ग्रस ॐ स्वाहा ॥ अभयमभयमात्मनि भूयिष्ठा ॐ क्षौम् ॥ ८ ॥ स्वस्त्यस्तु विश्वस्य खलः प्रसीदतां ध्यायन्तु भूतानि शिवं मिथो धिया ॥ मनश्च भद्रं भजतादधोक्षजे आवेश्यतां नो मतिरप्यहैतुकी ॥ ९ ॥ मागारदारात्मजवित्तबन्धुषु सङ्गो यदि स्याद्भगवत्प्रियेषु नः ॥ यः प्राणवृत्त्या परितुष्ट आत्मवान्सिद्ध्यत्यदूरान्न तथेन्द्रियप्रियः ॥ १० ॥ यत्सङ्गलब्धं निजवीर्यवैभवं तीर्थं मुहुः संस्पृशतां हि मानसम् ॥ हरत्यजोऽन्तः श्रुतिभिर्गतोऽङ्गजं को वै न सेवेत मुकुन्दविक्रमम् ॥ ११ ॥ यस्यास्ति भक्तिर्भगवत्यकिञ्चना सर्वैर्गुणैस्तत्र समासते सुराः ॥ हरावभक्तस्य कुतो महद्गुणा मनोरथेनासति धावतो बहिः ॥ १२ ॥ हरिर्हि साक्षाद्भगवाञ्छरीरिणामात्मा झषाणामिव तोयमीप्सितम् ॥ हित्वा महांस्तं यदि सज्जते गृहे तदा महत्त्वं वयसा दम्पतीनाम् ॥ १३ ॥ तस्माद्रजोरागविषादमन्युमानस्पृहाभयदैन्याधिमूलम् ॥ हित्वा गृहं संसृतिचक्रवालं नृसिंहपादं भजताकुतो-

केवल शरीर निर्वाह योग्य अन्नादिले सन्तुष्ट रहन्छ, त्यसलाई जति छिटै सिद्धि प्राप्त हुन्छ, त्यसै गरी इन्द्रियलोलुप पुरुषलाई छिटै सिद्धि प्राप्त हुँदैन ॥१०॥ भगवद्भक्तको सहवासले प्राप्त भगवान्का उदार चरित्रहरूका कथारूपी तीर्थलाई कानद्वारा पुनः पुनः श्रवण गर्नेहरूका हृदयमा प्रविष्ट भएर भगवान् अज तिनका शारीरिक तथा मानसिक मलको मार्जन गरिदिनु हुन्छ। अतः भगवान् मुकुन्दका ती पवित्र चरित्रको सेवन नगर्ने को होला? ॥११॥ जुनसुकै पुरुषको भगवानमा निःस्वार्थ भक्ति हुन्छ, त्यसको सेवामा धर्म-ज्ञानादि सबै सद्गुणहरू सहित सबै देवता सदा उपस्थित रहन्छन्। जो पुरुष भगवान्को भक्त छैन र विविध प्रकारका संकल्प गरेर सर्वदा बाह्य तथा तुच्छ विषयहरू तर्फ दगुर्दै रहन्छ, त्यसमा महापुरुषहरूका गुण कसरी आउन सक्छन्? ॥१२॥ जसरी माछाका निम्ति जल नै अभीष्ट रहन्छ, त्यस्तै नै साक्षात् विष्णु भगवान् नै सबै देहधारीहरूका प्रिय आत्मा हुनुहुन्छ। उनलाई त्यागेर यदि कुनै प्राणी घर आदिमा आसक्त रहन्छ भने ती दम्पती अर्थात् स्त्री-पुरुषको बडत्व केवल आयुमा नै रहनजान्छ–गुणको बडप्पन रहन्न ॥१३॥ अतएव हे दैत्यगण हो! तिमीहरू

क्रोध, अभिमान, इच्छा, भय, दीनता तथा मानसिक सन्तापका मूल कारण एवं जन्म-मरणरूपी संसार-चक्रलाई वहन गर्न पर हटाउँलाई त्यागेर भगवान् नृसिंहका अभयदायक चरण-कमलको शरण लेऊ ॥१४॥ केतुमाल खण्डमा लक्ष्मीजी, संवत्सर प्रजापतिका छोरा र तिनकी कन्याहरूको कल्याण गर्न भगवान् कामदेवको रूपमा विराजमान रहन्छन् । ती कन्या-हरू र छोराहरूको संख्या मनुष्यका परमाणुको दिन तथा रात्रिको बराबर अर्थात् छत्तीस हजार वर्ष छ र ती नै उस खण्डका अधिपति मानिन्छन् । ती परम पुरुष श्रीनारायणका परमास्त्र सुदर्शन चक्रको तेजले भयभीत ती कन्याहरूको गर्भ-प्रत्येक वर्षको अन्त्यमा निष्प्राण भएर तुहुने गर्दछ ॥१५॥ त्यहाँ कामदेवको रूपमा स्थित भगवान् आफ्ना अतिशय राम्रा गति विलास तथा मधुर हास्यमय क्रीडा-कटाक्षको लीलाले अलि-अलि माथितिर उठेका सुन्दर भृकुटीले अलंकृत आफ्नो मनोहर मुखारविन्दको शोभाले लक्ष्मीजीको अभिनन्दन गर्दै आफ्ना इन्द्रियहरूलाई सुखी पार्दछन् ॥१६॥ लक्ष्मीजी आफ्नो परम समाधि योगद्वारा भगवान्को त्यो मायामय स्वरूपको रात्रिको वेला प्रजापति संवत्सरकी कन्याहरू तिनका पतिहरूका साथै

भयमिति ॥१४॥ केतुमालेऽपि भगवान्कामदेवस्वरूपेण लक्ष्म्याः प्रियचिकीर्षया प्रजापतेर्दुहितॄणां पुत्राणां तद्वर्षपतीनां पुरुषायुषाऽहोरात्रपरिसंख्या-
नां यासां गर्भा महापुरुषमहास्त्रतेजसोद्वेजितमनसां विध्वस्ता व्यसवः संवत्सरान्ते विनिपतन्ति ॥ १५ ॥ अतीव सुललितगतिविलासविलसितरु
चिरहासलेशावलोकलीलया किञ्चिदुत्तम्भितसुन्दरभ्रूमण्डलसुभगवदनारविन्दश्रिया रमां रमयन्निन्द्रियाणि रमयते ॥ १६ ॥ तद्भगवतो मायामयं
रूपं परमसमाधियोगेन रमादेवी संवत्सरस्य रात्रिषु प्रजापतेर्दुहितृभिरुपेताहःसु च तद्भर्तृभिरुपास्ते इदं चोदाहरति ॥ १७ ॥ ॐ ह्रां ह्रीं ह्रूं ॐ
नमो भगवते हृषीकेशाय सर्वगुणविशेषैर्विलक्षितात्मने आकूतीनां चित्तीनां चेतसां विशेषाणां चाधिपतये षोडशकलाय छन्दोमयायान्नमयायामृत-
मयाय सर्वमयाय सहसे ओजसे बलाय कान्ताय कामाय नमस्ते उभयत्र भूयात् ॥ १८ ॥ स्त्रियो व्रतैस्त्वा हृषिकेश्वरं स्वतो ह्याराध्य लोके पति-
माशासतेऽन्यम् ॥ तासां न ते वै परिपान्त्यपत्यं प्रियं धनायूंषि यतोऽस्वतन्त्राः ॥ १९ ॥ स वै पतिः स्यादकुतोभयः स्वयं समन्ततः पाति भया-
तुरं जनम् ॥ स एक एवेतरथा मिथो भयं नैवात्मलाभादधि मन्यते परम् ॥ २० ॥ या तस्य ते पादसरोरुहार्हणं निकामयेत्साऽखिलकामलम्पटा ॥

उपासना गर्दथिन् र यस मन्त्रको जप र स्तुति गर्दै भन्दथिन्–॥१७॥ इन्द्रियहरूका नियन्ता, सबै श्रेष्ठ गुणले सम्पन्न, क्रियाशक्ति, ज्ञानशक्ति र सङ्कल्प-अध्यवसाय आदि चित्तका धर्म र उनका विषयका अधीश्वर, एघार इन्द्रिय एवं पाँच विषय–यी सोह्र कलाले युक्त, वेदोक्त कर्मले प्राप्य तथा जो अन्नमय र अमृतमय तथा सर्वमय छन् । ती साहस तथा मनोबल, ओज अर्थात् इन्द्रियबल र बल अर्थात् शारीरिक बलरूपी परम सुन्दर 'ॐ ह्रां ह्रीं-ह्रूँ' यो बीज मन्त्र सहित भगवान् कामदेवलाई सर्वतोभावले नमस्कार छ ॥१८॥ हे भगवन् ! हजुर इन्द्रियहरूका स्वामी हुनुहुन्छ । संसारका स्त्रीहरू विविध प्रकारका व्रतद्वारा हजुरको आराधना गरेर अन्य पतिको कामना गर्दछन्, तर ती पति उनका प्रियपुत्र, धन, आयु आदिको रक्षा गर्न सक्तैनन्, किनकि ती स्वयं परतन्त्र छन् ॥१९॥ सच्चा पति वा रक्षक उही हो, जो स्वयं सबै प्रकारले निर्भय भएर र अन्य भयभीत व्यक्तिको सबै प्रकारले रक्षा गर्नसकून् । यस्ता पति एक हजुरनै हुनुहुन्छ । जो जन आत्मलाभभन्दा ठूलो अरु वस्तु मान्दैनन्, ती यस्तो नगरेर अनेक ईश्वर मान्दछन् मने तिनमा परस्पर भयको भावना बनिरहोस् ॥२०॥ हे भगवन् !

जुन स्त्री निष्काम भावले हजुरका चरण-कमलको पूजा गर्छन्, तिनका कामनाहरू पूर्ण हुन्छन् । यदि ती कुनै फलको कामनाले उपासना गर्छन् भने तिनलाई केवल त्यो फलनै प्राप्त हुन्छ । त्यस फलको भोग समाप्त भएपछि आफूले मागेको भोग नष्ट हुनाले उसलाई सन्ताप भोग्नु पर्दछ ! ॥२१॥ हे अजित ! मलाई प्राप्त गर्नेको लागि इन्द्रिय सुखका अभिलाषी ब्रह्मा तथा महादेव आदि सबै सुरासुर घोर तपस्या गर्दछन्, किन्तु हजुरका चरणको केवल भरोसा गर्ने भक्त बाहेक अरु कसैलाई पनि म प्राप्त हुन सक्तिन किनकि मेरो मन सदैव हजुरमै लागिरहन्छ ॥२२॥ हे अच्युत ! हजुर आफ्ना जुन वन्दनीय करकमल भक्तजनका मस्तकमा राख्नुहुन्छ, त्यो मेरो शिरमा पनि राख्नुहवस् । हजुर जो मलाई केवल श्रीवत्सलाञ्छनरूपले आफ्नो वक्षस्थलमा धारण गर्नुहुन्छ, त्यो सर्वसमर्थ हजुरको मायामयी लीलाको भेद सहजै कसले जान्न सक्तछ ?' ॥२३॥ पूर्वसमयमा रम्यकवर्षमा भगवान्ले त्यहाँका अधिपति मनुलाई आफ्नो परम प्रिय मत्स्यावतारको रूप देखाउनुभएको थियो । अहिले पनि महाराज मनु भगवान्को त्यही रूपको भक्तियोगद्वारा उपासना गर्दै यस मन्त्रको जप गर्दछन्।.२४॥ 'सर्वप्रधान

तदेव रासीप्सितमीप्सितोऽर्चितो यद्भग्नयाञ्चा भगवन्प्रतप्यते ॥ २१ ॥ मत्प्राप्तयेऽजेश सुरासुरादयस्तप्यन्त उग्रं तप ऐन्द्रिये धियः ॥ ऋते भवत्पादपरायणान्न मा विंदन्त्यहं त्वद्धृदया यतोऽजित ॥ २२ ॥ स त्वं ममाप्यच्युत शीर्ष्णि वन्दितं कराम्बुजं यत्त्वदधायि सात्वताम् ॥ बिभर्षि मां लक्ष्मवरेण्य मायया क ईश्वरस्येहितमूहितुं विभुरिति ॥ २३ ॥ रम्यके च भगवतः प्रियतमं मात्स्यमवताररूपं तद्वर्षपुरुषस्य मनोः प्राक्प्रदर्शितं स इदानीमपि महता भक्तियोगेनाराधयतीदं चोदाहरति ॥ २४ ॥ ॐ नमो भगवते मुख्यतमाय नमः सत्त्वाय प्राणायौजसे महसे बलाय महामत्स्याय नम इति ॥ २५ ॥ अन्तर्बहिश्चाखिललोकपालकैरदृष्टरूपो विचरस्युरुस्वनः ॥ ईश्वरस्त्वं य इदं वशेऽनयन्नाम्ना यथा दारुमयीं नरः स्त्रियम् ॥ २६ ॥ यं लोकपालाः किल मत्सरज्वरा हित्वा यतन्तोऽपि पृथक् समेत्य च ॥ पातुं न शेकुर्द्विपदश्चतुष्पदः सरीसृपं स्थाणु यदत्र दृश्यते ॥ २७ ॥ भवान्युगान्तार्णव ऊर्मिमालिनि क्षोणीमिमामोषधिवीरुधां निधिम् ॥ मया सहोरुक्रमतेऽज ओजसा तस्मै जगत्प्राणगणात्मने नम इति ॥ २८ ॥ हिरण्मयेऽपि भगवान्निवसति कूर्मतनुं बिभ्राणस्य तत्प्रियतमां तनुमर्यमा सह वर्षपुरुषैः पितृगणाधिपतिरुपधावति मंत्रमिमं

सत्त्वगुणी, सूत्रात्मा, मानसिक, ऐन्द्रियिक र शारीरिक बलले युक्त महामत्स्यरूपधारी भगवानलाई नमस्कार छ ॥२५॥ हे प्रभो ! नटले जसरी कठपुतलीहरूलाई नचाउँछ, त्यस्तै नै अनेक नामले सारा संसारलाई कर्ममा लगाएर जसले उनलाई आफ्नो अधीन पारेका छन्, ती महान् घोष गर्ने वेदरूपी जगदीश्वर हजुर ब्रह्मा आदि सबै लोकपालहरूप्रति अलक्षित रहेर प्राणीहरूको बाहिर भित्र बराबर विचरण गर्दै रहनु हुन्छ ॥२६॥ हे नाथ ! जसलाई त्यागिदिएपछि अर्काको उत्कर्ष सहन नसक्ने ईर्ष्याले इन्द्रादि देवता भिन्ना-भिन्नै वा परस्पर मिलेर पनि मनुष्य, पशु, सरीसृप, तथा स्थावर आदि जति जीव देखिन्छन्, तीमध्ये उ कसैको रक्षा गर्न सक्तैनन् ॥२७॥ हे अज ! हजुर परमेश्वर नै म सहित सबै औषधिहरू र लताहरूकी आश्रयस्वरूपा यस पृथ्वीको रक्षा गर्नका लागि उत्ताल तरंगहरूले परिपूर्ण प्रलयकालीन समुद्रमा ठूलो उत्साहले विचरण गर्नु भएको थियो, यस्तो संसारका प्राणस्वरूप हजुरलाई हाम्रो नमस्कार छ' ॥२८॥ हिरण्मयवर्षमा भगवान् कूर्मरूप धारण गरेर रहनु हुन्छ । त्यहाँका निवासीहरू सहित पितृराज अर्यमा भगवान्को प्रियतम मूर्तिको उपासना गर्दै

यो मन्त्र जप्दछन्—॥२९॥ 'जो सर्वं सात्त्विकगुणले युक्त रहन्छन्, जसका स्थानको कुनै निश्चित ठेगाना छैन र जो कालको मर्यादाबाट पनि बाहिर छन्, ती सर्वव्यापक तथा सर्वात्मा रूपरूप भगवानलाई नमस्कार छ, नमस्कार छ ॥ ३० ॥ हे भगवान् ! राम्ररी रूपको प्रतीति नहुनाले जसको गणना गर्न सकिन्न, यस प्रकार नाना रूपहरूमा प्रतीयमान मायाले नै प्रकाशित यो प्रपंच जसको स्वरूप छ, ती अनिर्वचनीय स्वरूप हुने हजुरलाई म नमस्कार गर्दछु ॥ ३० ॥ हे देव ! हजुर नै जरायु, स्वेदज, उद्भिज, जङ्गम, स्थावर, देवता, ऋषि, पितृगण, भूत, इन्द्रिय, स्वर्ग, आकाश, पृथ्वी, पर्वत, नदी, समुद्र, द्वीप, ग्रह तथा तारा आदि भिन्न-भिन्न नामले विख्यात हुनुहुन्छ ॥ ३२ ॥ असंख्य नामरूप तथा आकृतिले युक्त हजुरमा कपिलादि विद्वानहरूले जुन तत्त्वका चौबीस संख्या निश्चित गरेका छन्, त्यो संख्या जुन तत्त्वज्ञानले निवृत्त भएर जान्छ, त्यस्ता सांख्य-सिद्धान्तस्वरूप हजुर परमेश्वरलाई नमस्कार छ ॥३३॥ उत्तर कुरु खण्डमा भगवान् यज्ञपुरुष वाराहरूप धारण गरेर विराजमान रहन्छन् । त्यहाँका निवासीहरूसहित साक्षात् पृथ्वीदेवी अविचल भक्तियोगले उनको उपासना

चानुजपति ॥ ॥२९॥ ॐ नमो नमो भगवते अकूपाराय सर्वसत्त्वगुणविशेषणाय नोपलक्षितस्थानाय नमो वर्ष्मणे नमो भूम्ने नमो नमोऽवस्थानाय नमस्ते ॥ ३० ॥ यद्रूपमेतन्निजमाययाऽर्पितमर्थस्वरूपं बहुरूपरूपितम् ॥ संख्या न यस्यास्त्ययथोपलम्भनात्तस्मै नमस्तेऽव्यपदेशरूपिणे ॥ ३१ ॥ जरायुजं स्वेदजमण्डजोद्भिजं चराचरं देवर्षिपितृभूतमैन्द्रियम् ॥ द्यौः खं क्षितिः शैलसरित्समुद्रद्वीपग्रहर्क्षेत्यभिधेय एकः ॥ ३२ ॥ यस्मिन्नसंख्येयविशेषनामरूपाकृतौ कविभिः कल्पितेयम् ॥ संख्या यथाऽतत्त्वदृशाऽपनीयते तस्मै नमः सांख्यनिदर्शनाय त इति ॥ ३३ ॥ उत्तरेषु च कुरुषु भगवान्यज्ञपुरुषः कृतवाराहरूप आस्ते तं तु देवी हैषा भूः सह कुरुभिरस्खलितभक्तियोगेनोपधावति इमां च परमामुपनिषदमावर्तयति ॥३४॥ ॐ नमो भगवते मन्त्रतत्त्वलिंगाय यज्ञक्रतवे महाध्वरावयवाय महापुरुषाय नमः कर्मशुक्लाय त्रियुगाय नमस्ते ॥ ३५ ॥ यस्य स्वरूपं कवयो विपश्चितो गुणेषु दारुष्विव जातवेदसम् ॥ मथ्नन्ति मथ्ना मनसा दिदृक्षवो गूढं क्रियार्थैर्नम ईरितात्मने ॥ ३६ ॥ द्रव्यक्रियाहेत्वयनेशकर्तृभिर्मायागुणैर्वस्तुनिरीक्षितात्मने ॥ अन्वीक्षयाङ्गातिशयात्मबुद्धिभिर्निरस्तमायाकृतये नमो नमः ॥ ३७ ॥ करोति विश्वस्थितिसंयमोदयं यस्येप्सितं नेप्सितमीक्षितुर्गुणैः ॥ माया यथाऽयो भ्रमते तदाश्रयं ग्राव्णो नमस्ते गुणकर्मसाक्षिणे ॥ ३८ ॥ प्रमथ्य दैत्यं प्रतिवारणं मृधे यो मां

गर्दी छिन्। यस परम उत्कृष्ट उपनिषद्को आवृत्ति गर्दछिन्—॥३४॥ मन्त्र द्वारा जसको तत्त्व जानिन्छ, जो यज्ञ तथा क्रतुका मूर्ति हुन्, महायज्ञादि जसका अङ्ग छन्, ती शुद्ध कर्ममय तथा त्रिगुणमूर्ति श्रीवाराह भगवान्लाई बारम्बार नमस्कार छ ॥३५॥ जसरी ऋत्विक्गण अरणी मन्थन द्वारा अग्नि प्रकट गर्दछन्, त्यस्तै कर्मका फल-कामनाहरूले ढाकिएका जसको स्वरूपलाई देख्ने कामनावश परम विज्ञ पण्डित आफ्नो मनरूपी मन्थनकाठद्वारा राम्ररी मन्थन गर्दछन्, यसरी प्रकट हुने ती अव्यक्त स्वरूप हजुरलाई प्रणाम छ ॥३६॥ यम-नियम आदि योगाङ्गको पालन गर्नाले जसको बुद्धि दृढ भइसकेको छ त्यस्ता महापुरुष इन्द्रिय, इन्द्रियहरूका अधिष्ठाता देवता, शरीर, काल तथा अहङ्कार आदि मायाका कार्यहरू देखेर आफ्ना विचारद्वारा जसका सच्चा स्वरूपलाई देख्दछन्, ती मायिक आकृतिहरू रहित हजुरलाई बारम्बार प्रणाम छ ॥ ३७ ॥ जरतै चुम्बकको आश्रित रहने फलाम उसको सन्निधिले डुल्ने-फिर्ने

गर्दछ, त्यसै जीव सर्वसाक्षी प्रभुताई इच्छा मात्रले आफ्नो मात्र होइन, प्रत्युत सबै प्राणीको निम्ति प्रकृति आफ्ना गुणहरू द्वारा जगत्‌को उत्पत्ति, स्थिति र प्रलय गर्दछ । ती गुणका साक्षीस्वरूप हजुर परमात्मालाई प्रणाम छ ॥ ३७ ॥ जस्तै मोटा हात्तीले अर्को हात्तीलाई पछार्छ, आफ्नो प्रतिद्वन्द्वी हिरण्याक्ष दैत्यलाई युद्धमा मारेर जुन आदिसूकर रूप हजुर मलाई रसातलबाट झिकेर तथा दाह्रामा राखेर राजराज झैं खेलवाड गर्दै समुद्रबाट बाहिर ल्याउनुभयो, ती प्रभुलाई म प्रणाम गर्दछु ॥३८-३९॥ इति श्रीमद्भागवते पञ्चमस्कन्धे नेपाली भाषा-टीकायां अष्टादशोऽध्यायः ॥१८॥ ( किंपुरुषवर्ष र र भारतवर्षको वर्णन )—शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! किम्पुरुषवर्षमा लक्ष्मणका जेठा दाजू आदिपुरुष सीतापति भगवान् रामका चरणको सामीप्यका रसिक परम भागवत श्रीहनुमान किन्नरगणका संगै निश्चल भावले उनको उपासना गर्न गर्दछन् ॥ १ ॥ उनीहरूमध्ये किन्नरश्रेष्ठ आर्ष्टिषेण समेत गन्धर्वद्वारा गीयमान आफ्ना प्रभु भगवान् रामका पवित्र कथाहरू सुन्दै स्वयं पनि यो स्तोत्र गान गरिरहन्छन्—॥२॥ पवित्र कीर्ति भगवान् रामलाई प्रणाम छ ! ती सत्पुरुषका लक्षण र शीलले युक्त,

रसाया जगदादिसूकरः ॥ कृत्वोग्रदंष्ट्रे निरगादुदन्वतः क्रीडन्निवेभः प्रणताऽस्मि तं विभुमिति ॥ ३९ ॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे भुवनकोशवर्णनं नामाष्टादशोऽध्यायः ॥ १८ ॥ श्रीशुक उवाच ॥ किंपुरुषे वर्षे भगवन्तमादिपुरुषं लक्ष्मणाग्रजं सीताभिरामं रामं तच्चरणसन्निकर्षाभिरतः परमभागवतो हनुमान्सह किंपुरुषैरविरतभक्तिरुपास्ते ॥ १ ॥ आर्ष्टिषेणेन सह गन्धर्वैरनुगीयमानां परमकल्याणीं भर्तृभगवत्कथां समुपशृणोति स्वयं चेदं गायति ॥ २ ॥ ॐ नमो भगवते उत्तमश्लोकाय नम आर्यलक्षणशीलव्रताय नम उपशिक्षितात्मन उपासितलोकाया नमः साधुवादनिकषणाय नमो ब्रह्मण्यदेवाय महापुरुषाय महाराजाय नम इति ॥ ३ ॥ यत्तद्विशुद्धानुभवमात्रमेकं स्वतेजसा ध्वस्तगुणव्यवस्थम् ॥ प्रत्यक् प्रशान्तं सुधियोपलम्भनं ह्यनामरूपं निरहं प्रपद्ये ॥ ४ ॥ मर्त्यावतारस्त्विह मर्त्यशिक्षणं रक्षोवधायैव न केवलं विभोः ॥ कुतोऽन्यथा स्याद्रमतः स्व आत्मनः सीताकृतानि व्यसनानीश्वरस्य ॥ ५ ॥ न वै स आत्माऽऽत्मवतां सुहृत्तमः सक्तस्त्रिलोक्यां भगवान्वासुदेवः ॥ न स्त्रीकृतं कश्मलमश्नुवीत न लक्ष्मणं चापि विहातुमर्हति ॥ ६ ॥ न जन्म नूनं महतो न सौभगं न वाङ् न बुद्धिर्नाकृतिस्तोषहेतुः ॥ तैर्यद्विसृष्टानपि नो वनौकसश्चकार सख्ये बत लक्ष्मणाग्रजः ॥ ७ ॥ सुरोऽसुरो वाप्यथ वानरो नरः सर्वात्मना यः सुकृतज्ञमुत्तमम् ॥ भजेत रामं

संयतचित्त, साधुवादका कसौटी ( कसी ) र ब्राह्मण भक्त छन् । ती लोकपूजित महाराज रामलाई म बारम्बार प्रणाम गर्दछु ॥ ३ ॥ जो विशुद्ध, अनुभवगम्य, अद्वितीय, स्वरूपका प्रकाशले जाग्रदादि सबै अवस्थालाई तिरस्कार गर्ने, अन्तर्यामी, अतिशय शान्त, शुद्धबुद्धिद्वारा ग्रहण गरिने योग्य नाम र रूप रहित र अहङ्कार शून्य छन्, म ती प्रभुको शरणमा छु ॥४॥ भगवानको मनुष्यावतार केवल रावणादि राक्षसलाई मार्नको निमित्त नै होइन मनुष्यलाई अति शिक्षा दिनका लागि भएको थियो । नभए ती आत्माराम र साक्षात् ईश्वरलाई सीताको निम्ति त्यस्तो क्लेश किन हुन्थ्यो ? ॥५॥ किनकि धीर पुरुषका आत्मा र प्रियतम ती भगवान् राम त्रैलोक्यका कुनै पनि वस्तुमा आसक्त हुँदैनन् । अतः नत उनलाई सीताको दुःख हुन सक्थ्यो, न ती लक्ष्मणलाई नै त्याग्न सक्थे ॥६॥ न उत्तम कुलमा जन्म, न सुन्दरता, न वाक्‌चातुर्य, न बुद्धि, न आकृति नै ती भगवानलाई प्रसन्न पार्ने साधन हो ।

यो कुरा सिखाउनको निम्ति नै लक्ष्मणाग्रज भगवान् रामले उपर्युक्त गुणहरूले हीन वानरहरूसित मित्रता गरेका थिए ॥७॥ अतएव देवता, असुर वानर मनुष्य यीमध्ये कोही पनि हाँस्, ती उत्तम कृतज्ञ-शिरोमणि र नररूपधारी रामलाई अनन्यभावले भजोस् । ती समस्त कोसलवासी हरूलाई विमानमा बसालेर स्वर्गभन्दा पनि माथि निजधाममा लगेका थिए ॥८॥ यसै भारतवर्षमा भगवान् नर र नारायण यी दुइ रूप धारण गरेर आत्मनिष्ठ पुरुषहरूमा कृपा गर्नका लागि अव्यक्त रहेर कल्पान्तसम्म प्रचलित रहने तपस्या गर्दछन् । जसले कर्मज्ञान, वैराग्य, ऐश्वर्य र उपशमको उत्तरोत्तर वृद्धि हुन्छ र अन्त्यमा परमात्माको उपलब्धिसम्म पनि हुन्छ ॥९॥ त्यहीं भगवान्‌ले भनेका सांख्य तथा योगशास्त्र समेत जसमा भगवान्‌को प्रभाव वर्णित छ, त्यो सावर्णि मनुलाई पाञ्चरात्र शास्त्रको उपदेश गर्दै नारदजी वर्णाश्रम धर्म पालन गर्ने भारतीय प्रजाका साथ अत्यन्त भक्तिभावले भगवान्‌को उपासना गर्दै

मनुजाकृतिं हरिं य उत्तराननयत्कोसलान्दिवमिति ॥ ८ ॥ भारतेऽपि वर्षे भगवान्नारायणाख्य आकल्पान्तमुपचितधर्मज्ञानवैराग्यैश्वर्योपशमः परमात्मोपलम्भनमनुग्रहायात्मवतामनुकम्पया तपोऽव्यक्तगतिश्चरति ॥ ९ ॥ तं भगवान्नारदो वर्णाश्रमवतीभिर्भारतीभिः प्रजाभिर्भगवत्प्रोक्ताभ्यां सांख्ययोगाभ्यां भगवदनुभावोपवर्णनं सावर्णेरुपदेक्ष्यमाणः परमभक्तिभावेनोपसरति इदं चाभिगृणाति ॥ १० ॥ ॐ नमो भगवते उपशमशीलायोपरतानात्म्याय नमोऽकिञ्चनवित्ताय ऋषिऋषभाय नरनारायणाय परमहंसपरमगुरवे आत्मारामाधिपतये नमो नम इति ॥ ११ ॥ गायति चेदम्—कर्तास्य सर्गादिषु यो न बध्यते न हन्यते देहगतोऽपि दैहिकैः ॥ द्रष्टुर्न दृग्यस्य गुणैर्विदूष्यते तस्मै नमोऽसक्तविविक्तसाक्षिणे ॥ १२ ॥ इदं हि योगेश्वर योगनैपुणं हिरण्यगर्भो भगवान् जगाद यत् ॥ यदन्तकाले त्वयि निर्गुणे मनो भक्त्या दधीतोज्झितदुष्कलेवरः ॥ १३ ॥ यथैहिकामुष्मिककामलम्पटः सुतेषु दारेषु धनेषु चिन्तयन् ॥ शङ्क हि विद्वान्कुकलेवरात्ययाद्यस्तस्य यत्नः श्रम एव केवलम् ॥ १४ ॥ तन्नः प्रभो

यस स्तोत्रको पाठ गर्दछन्—॥१०॥ 'अनात्मभावले हीन, निर्धनका धन, ऋषिश्रेष्ठ परमहंसका परमगुरु र आत्मारामका अधीश्वर भगवान् नर-नारायणलाई बारम्बार नमस्कार छ' ॥११॥ यो मन्त्र पढ्दै ती यस प्रकार भगवान्‌का गुण गाउँछन्—'जगत्‌को उत्पत्तिआदिका कर्ता भएर पनि जो कर्तृत्वको अभिमानमा बाँधिन्नन्, जो शरीरमै रहेर पनि त्यसका धर्म-भोक-प्यास आदिको वशीभूत हुँदैनन् र द्रष्टा भएर पनि जसको दृष्टि दृश्यका दोषबाट दूषित हुन पाउन्न, ती निःसङ्ग निर्मल र सर्वसाक्षी परमात्मालाई बारम्बार नमस्कार ॥१२॥ हे योगेश्वर ! हिरण्यगर्भ ब्रह्माले ⊙उपदेश दिंदै योगमार्गमा सबभन्दा ठूलो बुद्धिमत्ता यही कहिएको छ कि मनुष्य अन्त्य समयमा देहाभिमान त्यागेर भक्तिसित हजुर निर्गुण परमात्मामा मन लगाओस् ॥१३॥ जस्तै लौकिक तथा पारलौकिक भोगका लोभी र मूढपुरुष पुत्रकलत्र तथा धनआदिको चिन्ता गर्दै मृत्युसित डराउने गर्दछन्, त्यस्तै नै जुन विद्वान्‌ल

⊙ उदाहरण—( अफलातूनका चार उपदेश )—महात्मा अफलातून ( प्लेटो ) मर्ने बेलामा आफ्ना बालकहरूलाई चार उपदेश दिएर मरेका थिए, तिनमा दुइटा बिर्सि दिने र दुइटा सधैं सम्झि रहनका लागि थिए। १—अरूले तिम्रो विरुद्ध के गरेको वा भनेको हो, त्यसलाई बिर्सिदेऊ ( क्षमा )। २—तिमीले यदि कसैलाई केही उपकार गरेका छौ भने त्यो पनि बिर्सिदेऊ ( निरहङ्कार )। ३—यो कुरा सदैव सम्झिराख कि एक दिन मर्नु छ ( वैराग्य )। ४—यो पनि सधैं सम्झिराख कि कुनै मनुष्यले तिम्रो भलो वा नराम्रो गर्न सक्तैन। यी कुराहरूलाई यदि राम्ररी विचार गर्‍यौ भने थाह हुनेछ कि त्रिभुवनका रचयिता परमात्माले सबै गर्न सक्छन् ( भगवानमा विश्वास )।

520

यः कुत्सित छुट्‌ला कि भन्ने डर बनिरहन्छ, त्यसको ज्ञानप्राप्त्यर्थ गर्ने प्रयत्न व्यर्थ हुन्छन् ॥१४॥ अतः हे प्रभो ! हजुर मलाई आफूमा सधाउँमाउनी आफ्नू भक्तियोग प्रदान गर्नुहोस् । जसले हे अधोक्षज ! हजुरको मायाको संकेतद्वारा यस निन्द्य शरीरमा स्थित दुर्भेद्य ममता तथा अहङ्कार हामी तत्काल भेदन गर्न सकौं ॥१५॥ हे राजन् ! यस भारतवर्षमा पनि अनेक पर्वत र धेरै थरि नदीहरू छन् । जस्तै–मलय, मङ्गलप्रस्थ, मैनाक, त्रिकूट, ऋषभ, कूटक, कोल्लक, सह्य, देवगिरि, ऋष्यमूक, श्रीशैल, वेङ्कट, वारिधार, विन्ध्य, शुक्तिमान, ऋक्षगिरि, पारियात्र, द्रोण, चित्रकूट, गोवर्धन, रैवतक, ककुभ, नील, गोकामुख, इन्द्रकील, कामगिरि आदि । यी बाहेक पनि सयकडौं तथा हजारौं पर्वत छन् र तिनबाट निस्केका असंख्य नद र नदीहरू छन् ॥१६॥ केवल नामले नै पवित्र पार्ने यी नदीहरूको जलमा भारतीय प्रजा स्नान गर्दछन् ॥१७॥ ती मुख्य-मुख्य नदीहरू यी हुन्–चन्द्रवशा, ताम्रपर्णी, अवटोदा,

त्वं कुकलेवरावर्पितां त्वन्माययाऽहंममतामधोक्षज ॥ भिन्द्याम येनाशु वयं सुदुर्भिदां विधेहि योगं त्वयि नः स्वभावमिति ॥ १५ ॥ भारतेऽप्यस्मिन्वर्षे सरिच्छैलाः सन्ति बहवो मलयो मङ्गलप्रस्थो मैनाकस्त्रिकूटः ऋषभः कूटकः कोल्लकः सह्यो देवगिरिर्ऋष्यमूकः श्रीशैलो वेङ्कटो महेन्द्रो वारिधारो विन्ध्यः शुक्तिमानृक्षगिरिः पारियात्रो द्रोणश्चित्रकूटो गोवर्धनो रैवतकः ककुभो नीलो गोकामुख इन्द्रकीलः कामगिरिरिति चान्ये च शतशः सहस्रशः शैलास्तेषां नितम्बप्रभवा नदा नद्यश्च सन्त्यसंख्याताः ॥ १६ ॥ एतासामपो भारत्यः प्रजा नामभिरेव पुनन्तीनामात्मना चोपस्पृशन्ति ॥ १७ ॥ चन्द्रवशा ताम्रपर्णी अवटोदा कृतमाला वैहायसी कावेरी वेणी पयस्विनी शर्करावर्ता तुङ्गभद्रा कृष्णा वेण्या भीमरथी गोदावरी निर्विन्ध्या पयोष्णी तापी रेवा सुरसा नर्मदा चर्मण्वती सिन्धुरन्ध्यः शोणश्च नदौ महानदी वेदस्मृतिर्ऋषिकुल्या त्रिसामा कौशिकी मन्दाकिनी यमुना सरस्वती दृषद्वती गोमती सरयू रोधस्वती सुषोमा शतद्रुश्चन्द्रभागा मरुद्वृधा वितस्ता असिक्नी विश्वेति महानद्यः ॥ १८ ॥ अस्मिन्नेव वर्षे पुरुषैर्लब्धजन्मभिः शुक्ललोहितकृष्णवर्णेन स्वारब्धेन कर्मणा दिव्यमानुषनारकगतयो बह्व्य आत्मन आनुपूर्व्येण सर्वा ह्येव सर्वेषां विधीयन्ते यथावर्णविधानमपवर्गश्चापि भवति ॥ १९ ॥ योऽसौ भगवति सर्वभूतात्मन्यनात्म्येऽनिरुक्तेऽनिलयने परमात्मनि वासुदेवेऽनन्यनिमित्तभक्तियोगलक्षणो नानागतिनिमित्ताऽविद्याग्रन्थिरन्धनद्वारेण यदा हि महापुरुषपुरुषप्रसङ्गः॥२०॥ एतदेव हि देवा गायन्ति ॥ अहो अमीषांकिमकारि शोभनं प्रसन्न एषां

कृतमाला, वैहायसी, कावेरी, वेणी, पयस्विनी, शर्करावर्ता, तुङ्गभद्रा, कृष्णा, वेण्या, भीमरथी, गोदावरी, निर्विन्ध्या, पयोष्णी, तापी, रेवा, सुरसा, नर्मदा, चर्मण्वती, सिन्धु तथा शोण नामक दुइ नद, महानदी, वेदस्मृति, ऋषिकुल्या, त्रिसामा, कौशिकी, मन्दाकिनी, यमुना, सरस्वती, दृषद्वती, गोमती, सरयु, रोधस्वती, सुषोमा, शतद्रु, चन्द्रभागा, मरुद्वृधा, वितस्ता, असिक्नी तथा विश्वा यी महानदीहरू हुन् ॥१८॥ भारतवर्षमा जन्म लिने पुरुषहरूलाई आफूले गरेका सात्विक, राजस, तामस कर्मानुसार देव, मनुष्य तथा नरकादि लोकमा विविध प्रकारका गतिहरू प्राप्त हुन्छन् किनकि आफाफ्ना कर्मानुसार यी सबै योनिहरू क्रमशः सबैलाई मिल्दछन् । यहाँ देशमा ब्राह्मणादि चारै वर्णका लागि निश्चित गरिएका संन्यास आदि धर्मको पालन गर्नाले मोक्ष पनि प्राप्त हुन सक्छ ॥१९॥ हे राजन् ! सबै प्राणीका अन्तरात्मा भगवान् वासुदेवमा अनन्य तथा निष्काम भक्तिमात्र नै सच्चा मोक्षपद हो ।

विविध प्रकारका गति प्राप्त गराउने अविद्यारूपिणी हृदयग्रन्थि काटिएपछि जब महापुरुषको संगति प्राप्त हुन्छ, अनि मात्र मुक्ति मिल्दछ ॥ २० ॥ 'मानवजन्म नै सबै पुरुषार्थको साधन हो ।' देवताहरू पनि भन्दछन्—'अहो ! जसको निम्ति सर्वदा हाम्रो लालसा बनिरह्यो, त्यो भगवत् सेवाको निम्ति उपयोगी यस मानव शरीरले जुन जीवले भारतवर्षमा जन्म लिएको छ, तीबाट यस्तो कुन पुण्य कर्म भएको छ कि जसले स्वयं श्रीहरि भगवान् ती माथि प्रसन्न भएका छन् ॥२१॥ स्वर्गलोकको प्रभुता दिलाउने यी सारहीन र दुष्कर यज्ञ, तप, व्रत र दानदिले के लाभ होला ? जहाँ इन्द्रियहरूका भोगको अधिकताले थिचिएर रहनाले भगवान्का चरण-कमलको स्मरण नै हुन पाउन्न ॥२२॥ स्पर्श मात्र होइन, जहाँ मनुष्यको एक-एक कल्पको आयु हुन्छ, तर त्यसपछि फेरि संसार-चक्रमा फर्कर आउनुपर्दछ त्यने ती ब्रह्मलोकादि पाउने अपेक्षा अल्पायु भएर भूमिमा जन्म लिनु न उत्तम छ, किनकि भारतवर्षमा धीर पुरुष एक क्षणमा नै आफ्ना सबै कर्म भगवान्लाई अर्पण गरेर उनको अभयपद पाउँदछन् ॥ २३ ॥ जहाँ भगवत्-कथारूपिणी अमृतमयी सरिता बग्दिनन्, जहाँ भगवानका आश्रित भगवद्भक्त साधुजन वर्तैनन् र जहाँ यज्ञपुरुष विष्णु भगवानको पूजा अर्चा आदिको निम्ति ठूला-ठूला उत्सव हुँदैनन्, त्यो यदि ब्रह्मलोक नै होस् तापनि नसोग्

स्विदुत स्वयं हरिः यैर्जन्म लब्धं नृषु भारताजिरे मुकुन्दसेवौपयिकं स्पृहा हि नः ॥ २१ ॥ किं दुष्करैर्नः क्रतुभिस्तपोव्रतैर्दानादिभिर्वा द्युज-
येन फल्गुना ॥ न यत्र नारायणपादपङ्कजस्मृतिः प्रमुष्टातिशयेन्द्रियोत्सवात् ॥ २२ ॥ कल्पायुषां स्थानजयात्पुनर्भवात्क्षणायुषां भारतभूजयो
वरम् ॥ क्षणेन मर्त्येन कृतं मनस्विनः संन्यस्य संयान्त्यभयं पदं हरेः ॥ २३ ॥ न यत्र वैकुण्ठकथासुधाऽऽपगा न साधवो भागवतास्तदाश्रयाः ॥
न यत्र यज्ञेशमखा महोत्सवाः सुरेशलोकोऽपि न वै स सेव्यताम् ॥ २४ ॥ प्राप्ता नृजातिं त्विह ये च जन्तवो ज्ञानक्रियाद्रव्यकलापसंभृताम् ॥ न
वै यतेरन्नपुनर्भवाय ते भूयो वनौका इव यान्ति बन्धनम् ॥ २५ ॥ यैः श्रद्धया बर्हिषि भागशो हविर्निरुप्तमिष्टं विधिमन्त्रवस्तुतः ॥ एकः पृथङ्नाम
भिराहुतो मुदा गृह्णाति पूर्णः स्वयमाशिषां प्रभुः ॥ २६ ॥ सत्यं दिशत्यर्थितमर्थितो नृणां नैवार्थदो यत्पुनरर्थिता यतः ॥ स्वयं विधत्ते भजतामनि-
च्छतामिच्छापिधानं निजपादपल्लवम् ॥ २७ ॥ यद्यत्र नः स्वर्गसुखावशेषितं स्विष्टस्य सूक्तस्य कृतस्य शोभनम् ॥ तेनाजनाभे स्मृतिमज्जन्म नः

॥२४॥ जुन प्राणिहरूले यस भारतवर्षमा ज्ञानेन्द्रिय, कर्मेन्द्रिय तथा पञ्चभूतका चातुर्यले युक्त मानव जन्म पाएको छ, ती यदि आवागमनको चक्रबाट बाहिर निस्कने उपाय गर्दैनन् भने जंगलीहरूका समान फेरि कहिले न कहिले बन्धनमा पर्दछ ॥२५॥ जसको द्वारा यज्ञमा अगणित देवताको उद्देश्यले भिन्न-भिन्न भाग छिकेर श्रद्धापूर्वक विधि, मन्त्र तथा द्रव्यादि द्वारा दिएको हवि, इन्द्रादि विभिन्न नामले आवाहित सर्वव्यापी तथा सबै कामनाहरू पूर्ण गराउनमा समर्थ नारायण अतिशय प्रसन्नतापूर्वक स्वयं स्वीकार गर्दछन् ॥ २६ ॥ सकाम उपासक पुरुषलाई भगवान् तिनको अभिलषित पदार्थ दिन्छन्—यो उचित हो, तर ती मुख्य वस्तु दिँदैनन् । यही कारण हो कि उनलाई फेरि अन्य कामनाहरू उत्पन्न हुन्छन् । यसको विपरीत ती आफ्ना निष्काम भक्तलाई आफ्नो चरण-कमल दिन्छन्, जुन सबै इच्छाहरू पर सारेर भगाइदिन्छ ॥२७॥ अतएव यदि हामीले माँगेका स्वर्गसुखबाट पुण्यका पूजन,अध्ययन र सुकर्म जस्ता केही पनि पुण्य शेष छ भने त्यसको प्रभावले यस भारतवर्षमा हामीलाई श्रीहरिको स्मरणार्थ मानव जन्म प्राप्त होस्, किनकि भगवान आफ्नो भजन

गर्ने भक्तको सवथा कल्याण गर्दछन्' ॥२८॥ शुकदेव भन्दछन्—हे राजन् ! केही व्यक्तिको भनाई छ—राजा सगरका छोराले आफ्नो यज्ञको घोड़ाको खोजीमा यी पृथ्वीलाई सबैतिर बाट खनेका थिए। तिनले त्यस्तो गर्नाले जम्बूद्वीपमा आठ उपद्वीप अरु बनेका थिए ॥२९॥ ती द्वीप स्वर्णप्रस्थ, चन्द्रशुक्ल, आवर्तन, रमणक, मन्दरहरिण, पाञ्चजन्य सिंहल र लङ्का हुन् ॥३०॥ हे भारत ! यस प्रकार मैले तिमीलाई यस जम्बूद्वीपको वर्षविभाग जस्तो मैले गुरुजनबाट सुनेथें त्यस्तो सुनाएँ ॥३१॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां एकोनविंशोऽध्यायः॥१९॥(अन्य छ द्वीप र लोकालोक पर्वतको वर्णन)–शुकदेवजी भन्दछन्–हे राजन् ! म अब प्रमाण तथा स्थितिअनुसार प्लक्षादि द्वीपका वर्षविभागको वर्णन गर्दछु ॥१॥ जस्तै–मेरु पर्वत जम्बूद्वीपले घेरिएको छ, उसै गरी यो जम्बूद्वीप पनि आफ्नै बराबर विस्तार हुने क्षारसमुद्रले घेरिएको छ। जस्तै खाई बाहिरको उपवनले घेरिइरहन्छ त्यसै गरी क्षारसमुद्र पनि आफू भन्दा दोब्बर विस्तृत प्लक्षद्वीपले घेरिएको छ। प्लक्षद्वीपमा जम्बूद्वीपस्थ जामुन वृक्षको समान नै एक सुवर्णमय प्लक्ष

स्याद्वर्षं हरिर्यद्भजतां शं तनोति ॥ २८ ॥ श्रीशुक उवाच ॥ जम्बूद्वीपस्य च राजन्नुपद्वीपानष्टौ हैक उपदिशन्ति सगरात्मजैरश्वान्वेषण इमां महीं परितो निखनद्भिरुपकल्पितान् ॥२९॥ तद्यथा स्वर्णप्रस्थश्चन्द्रशुक्ल आवर्तनोरमणको मन्दरहरिणः पाञ्चजन्यः सिंहलो लंकेति॥३०॥ एवं तव भारतोत्तमजम्बूद्वीपवर्षविभागो यथोपदेशमुपवर्णित इति ॥३१॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे जम्बूद्वीपवर्णनं नामैकोनविंशोऽध्यायः ॥१९॥ श्रीशुक उवाच ॥ अतः परं प्लक्षादीनां प्रमाणलक्षणसंस्थानतो वर्षविभाग उपवर्ण्यते ॥ १ ॥ जम्बूद्वीपोऽयं यावत्प्रमाणविस्तारस्तावता क्षारोदधिना परिवेष्टितो यथा मेरुर्जम्ब्वाख्येन लवणोदधिरपि ततो द्विगुणविशालेन प्लाक्षाख्येन परीक्षिप्तो यथा परिखा बाह्योपवनेन प्लक्षो जम्बूप्रमाणो द्वीपाख्याकरो हिरण्मय उत्थितो यत्राग्निरुपास्ते सप्तजिह्वस्तस्याधिपतिः प्रियव्रतात्मज इध्मजिह्वः स्वं द्वीपं सप्त वर्षाणि विभज्य सप्तवर्षनामभ्य आत्मजेभ्य आकलय्य स्वयमात्मयोगेनोपरराम ॥ २ ॥ शिवं यवसं सुभद्रं शान्तं क्षेममममृतमभयमिति वर्षाणि तेषु गिरयो नद्यश्च सप्तैवाभिज्ञाताः ॥ ३ ॥ मणिकूटो वज्रकूट इन्द्रसेनो ज्योतिष्मान्सुपर्णो हिरण्यष्ठीवो मेघमाल इति सेतुशैला अरुणा नृम्णाऽऽङ्गिरसी सावित्री सुप्रभाता ऋतम्भरा सत्यम्भरा इति महानद्यः ॥ यासां जलोपस्पर्शनविधूतरजस्तमसो हंसपतङ्गोर्ध्वायनसत्याङ्गसंज्ञाश्चत्वारो वर्णाः सहस्रायुषो विबुधोपमसंदर्शनप्रजननाः स्वर्गद्वारं त्रय्या

(पाकरी) छ त्यसै कारण उसको नाम 'प्लक्षद्वीप' भयो। त्यहाँ सात जिब्रो हुने अग्नि विराजमान रहन्छन्। त्यस द्वीपका स्वामी प्रियव्रत-पुत्र महाराज इध्मजिह्व थिए। उनले आफ्नो यस द्वीपलाई सात वर्ष (खण्ड) मा बाँडेर ती वर्षका समान नै नाम हुने आफ्ना छोरालाई सुम्पिदिए र स्वयं अध्यात्मयोगको आश्रय लिएर विरक्त भए ॥२॥ ती वर्ष उनका छोराहरूका नाम हो–शिव, यवस, सुभद्र, शान्त, क्षेम, अमृत तथा अभय। ती द्वीपमा पनि सात पर्वत तथा सात नदीहरू प्रसिद्ध छन् ॥ ३ ॥ उनमा मणिकूट, वज्रकूट, इन्द्रसेन, ज्योतिष्मान, सुपर्ण, हिरण्यष्ठीव र मेघमाल यी सात मर्यादा पर्वत हुन् र अरुण, नृम्णा, आङ्गिरसी, सावित्री, सुप्रभाता, ऋतम्भरा तथा सत्यम्भरा यी सात महानदी हुन्। यी नदीका जलमा स्नान गर्नाले जसका रजोगुण र तमोगुण क्षीण भइसकेका छन्,जसको परमाणु हजार वर्षको छ र जसबाट देवता समान रूप हुने सन्तान जन्मन्छन्। ती हंस,पतङ्ग, ऊर्ध्वायन तथा सत्याङ्गनामक

523

त्यहाँका चारै वर्णका मानिस त्रयीविद्याद्वारा तीनै वेदमा वर्णित सर्वान्तर्यामी सूर्य भगवान्‌को उपासना गर्दछन् ॥४॥ ती यसरी उनको स्तुति गर्दछन्–'जो सत्य अर्थात् अनुष्ठीयमान अथवा प्रतीयमान धर्म, वेद तथा शुभाशुभ फलका अधिष्ठाता छन्, ती पुराणपुरुष विष्णुका स्वरूप भगवान् सूर्यलाई हामी प्रणाम गर्दछौँ ॥ ५ ॥ प्लक्षादि पाँच द्वीपका निवासी सबै मनुष्यलाई जन्मतः आयु, इन्द्रिय, मनोबल, इन्द्रियबल, शारीरिकबल, बुद्धि तथा पराक्रमका समान रूपले सिद्धि प्राप्त हुन्छ' ॥६॥ जस्तै–प्लक्षद्वीप आफू जस्तै विस्तृत इक्षुरस रामको समुद्रले आवृत्त छ । त्यसै गरी उसको द्विगुण विस्तृत शाल्मली द्वीप पनि उतिनै परिमाण हुने सुरा ( रक्सी ) को सागरले आवृत छ । त्यहाँ प्लक्षद्वीप जत्तै परिमाण भएको योटा शाल्मलीवृक्ष छ । जसमा वेदध्वनि गर्न पक्षिराज गरुडको निवासस्थान कहिन्छ । त्यो शाल्मली ( सीमल ) वृक्ष नै त्यस द्वीपको नामकरणको हेतु हो ॥८॥ उस द्वीपका प्रभु प्रियव्रतका छोरा महाराज यज्ञबाहुले आफ्नो द्वीपको सात भाग पारे र आफ्ना सात छोरालाई उनकै नामानुसार ती सुरोचन, सौमनस्य, रमणक, देववर्ष, पारिभद्र, आप्यायन,

विद्यया भगवन्तं त्रयीमयं सूर्यमात्मानं यजन्ते ॥ ४ ॥ प्रत्नस्य विष्णो रूपं यत्सत्यस्य ऋतस्य ब्रह्मणः अमृतस्य मृत्योश्च सूर्यमात्मानमीमहीति ॥ ५ ॥ प्लक्षादिषु पंचसु पुरुषाणामायुरिन्द्रियमोजः सहो बलं बुद्धिर्विक्रम इति च सर्वेषामौत्पत्तिकी सिद्धिरविशेषेण वर्तते ॥६॥ प्लक्षः स्वसमाने- नेक्षुरसोदेनावृतो यथा तथा द्वीपोऽपि शाल्मलो द्विगुणविशालः समानेन सुरोदेनावृतः परिवृंक्ते ॥ ७ ॥ यत्र ह वै शाल्मली प्लक्षायामा यस्यां वाव किल निलयमाहुर्भगवतश्छन्दस्तुतः पतत्त्रिराजस्य सा द्वीपहूतये उपलक्ष्यते ॥८॥ तद्द्वीपाधिपतिः प्रियव्रतात्मजो यज्ञबाहुः स्वसुतेभ्यः सप्तभ्यस्तन्नामानि सप्त वर्षाणि व्यभजत्सुरोचनं सौमनस्यं रमणकं देववर्षं पारिभद्रमाप्यायनमविज्ञातमिति ॥ ९ ॥ तेषु वर्षाद्रयो नद्यश्च सप्तैवाभिज्ञाताः स्वरसः शतशृङ्गो वामदेवः कुन्दो मुकुन्दः पुष्पवर्षः सहस्रश्रुतिरिति ॥ अनुमतिःसिनीवाली सरस्वती कुहू रजनी नन्दा राकेति ॥१०॥ तद्वर्षपुरुषाः श्रुतधरवीर्यधरवसुन्धरेषन्धरसंज्ञा भगवन्तं वेदमयं सोममात्मानं वेदेन यजन्ते ॥११॥ स्वगोभिः पितृदेवेभ्यो विभजन् कृष्णशुक्लयोः ॥ प्रजानां सर्वासां राजान्धः सोमो न अस्त्विति ॥ १२ ॥ एवं सुरोदाद्बहिस्तद्द्विगुणः समानेनावृतो घृतोदेन यथा पूर्वः कुशद्वीपो यस्मिन्कुशस्तम्बो देवकृतस्तद्द्वीपाख्याकरो ज्वलन इवापरः स्वशष्परोचिषा दिशो विराजयति ॥ १३ ॥ तद्द्वीपपतिः प्रैयव्रतो राजन्हिरण्यरेता नाम स्वं द्वीपं सप्तभ्यः स्वपुत्रेभ्यो यथाभागं

तथा अविज्ञात नामका सात वर्ष ( देश ) सुम्पिदिए ॥९॥ त्यहाँ पनि सात वर्ष पर्वत र सातै नदिहरू प्रसिद्ध छन् । जस्तै–स्वरस, शतशृङ्ग, वामदेव, कुन्द, मुकुन्द, पुष्पवर्ष र सहस्र श्रुति —यी सात पर्वत तथा अनुमति, सिनीवाली, सरस्वती, कुहू, रजनी, नन्दा र राका–यी सात नदी छन् ॥१०॥ ती वर्षका निवासी श्रुतधर, वीर्यधर, वसुन्धर, र इषधर नामक चार देशका पुरुष वेदमूर्ति, सर्वान्तर्यामी भगवान् चन्द्रमाको वेदमन्त्रद्वारा उपासना गर्दछन् ॥ ११ ॥ ती यस प्रकार स्तुति गर्दै भन्दछन्–जो कृष्ण तथा शुक्ल पक्षका रूपमा आफ्ना किरणको विभाग गरेर देवता, पितर र सम्पूर्ण प्रजालाई अन्न दिन्छन्, ती चन्द्रदेव हाम्रा राजा हुन् ॥१२॥ यसै प्रकार मदिराको समुद्रका चारैतिर उभन्दा दोबर तथा पूर्ववत् आफूजस्तै विस्तृत घिउका समुद्रले घेरिएको कुशद्वीप छ । त्यस द्वीपमा भगवान्‌ले बनाएका कुशहरूको योटा झाड़ी छ । त्यो द्वीपको नामलाई सार्थक पार्दै र अर्को अग्निदेव झैं आफ्ना कोपिला-

हरूको कान्तिले सबै दिशा आलोकित पार्ने गर्दछ ॥१३॥ हे राजन् ! त्यस द्वीपका प्रभु महाराज प्रियव्रतका छोरा हिरण्यरेता थिए । उनले त्यस द्वीपको सात भाग पारी–वसु, वसुदान, दृढरुचि, नाभिगुप्त, स्तुत्यव्रत, विविक्त तथा वामदेव नामक आफ्ना सात छोरालाई यथोचित काइदाले बाँडिदिए र स्वयं तप गर्न गए ॥१४॥ ती देशको सीमा निर्धारित गर्ने पनि सात पर्वत र सात नदी छन् । उनमा चक्र, चतुःशृङ्ग, चित्रकूट, देवानीक, ऊर्ध्वरोमा र द्रविण यी सात पर्वत रसकुल्या, मधुकुल्या, मित्रविन्दा, श्रुतविन्दा, देवगर्भा, घृतच्युता तथा मन्त्रमाला–यी सात नदी छन् ॥१५॥ ती नदीका जलमा स्नान गरेर कुशद्वीपका निवासी कुशल, कोविद, अभियुक्त तथा कुलक नामका चार वर्ण हुने पुरुष अग्निरूप श्रीहरिको यज्ञादि कर्म-कौशलले पूजा गर्दछन् ॥१६॥ ती भन्दछन्–'हे अग्ने ! हजुर साक्षात् परब्रह्मलाई हवि पुर्‍याउनु हुन्छ । अतः भगवान्‌का अङ्गस्वरूप देवगणको यजन द्वारा हजुर ती परमपुरुषको नै यजन गर्नोस्' ॥१७॥ हे राजन ! जस्तै कुशद्वीप घिउको समुद्रले घेरिएको छ, त्यस्तै घिउको भन्दा अगाडि त्यो देखि दोबरविस्तृत क्रौंचद्वीप चारैतिरबाट

विभज्य स्वयं तप आतिष्ठत वसुवसुदानदृढरुचिनाभिगुप्तस्तुत्यव्रतविविक्तवामदेवनामभ्यः ॥ १४ ॥ तेषां वर्षेषु सीमागिरयो नद्यश्चाभिज्ञाताः सप्त सप्तैव चक्रश्चतुःशृङ्गः कपिलश्चित्रकूटो देवानीक ऊर्ध्वरोमा द्रविण इति रसकुल्या मधुकुल्या मित्रविन्दा श्रुतविन्दा देवगर्भा घृतच्युता मन्त्रमालेति ॥ १५ ॥ यासां पयोभिः कुशद्वीपौकसः कुशलकोविदाभियुक्तकुलकसंज्ञा भगवन्तं जातवेदसरूपिणं कर्मकौशलेन यजन्ते ॥ १६ ॥ परस्य ब्रह्मणः साक्षाज्जातवेदोऽसि हव्यवाट् ॥ देवानां पुरुषाङ्गानां यज्ञेन पुरुषं यजेति ॥ १७ ॥ तथा घृतोदाद्बहिः क्रौञ्चद्वीपो द्विगुणः स्वमानेन क्षीरोदेन परित उपक्लृप्तो यथा कुशद्वीपो घृतोदेन यस्मिन् क्रौञ्चो नाम पर्वतराजो द्वीपनामनिर्वर्तक आस्ते ॥ १८ ॥ योऽसौ गुहप्रहरणोन्मथितनितम्बकुञ्जोऽपि क्षीरोदेनासिच्यमानो भगवता वरुणेनाभिगुप्तो विभयो बभूव ॥ १९ ॥ तस्मिन्नपि प्रैयव्रतो घृतपृष्ठो नामाधिपतिः स्वे द्वीपे वर्षाणि सप्त विभज्य तेषु पुत्रनामसु सप्त रिक्थादान्वर्षपान्निवेश्य स्वयं भगवान्भगवतः परमकल्याणयशस आत्मभूतस्य हरेश्चरणारविन्दमुपजगाम ॥ २० ॥ आमो मधुरुहो मेघपृष्ठः सुधामा भ्राजिष्ठो लोहितार्णो वनस्पतिरिति घृतपृष्ठसुतास्तेषां वर्षगिरयः सप्त सप्तैव नद्यश्चाभिख्याताः ॥ शुक्लो वर्धमानो भोजन उपबर्हिणो नन्दो नन्दनः सर्वतोभद्र इति अभया अमृतौघा आर्यका तीर्थवती वृत्तिरूपवती पवित्रवती शुक्लेति ॥ २१ ॥ यासामम्भः पवित्रममलमुपयुञ्जानाः

आफ्नै जति फैलिएको क्षीरसमुद्रले आवृत्त छ । उस द्वीपको 'क्रौञ्चद्वीप' यो नाम सार्थक पार्ने क्रौञ्च नामको धेरै ठूलो पर्वत छ ॥१८॥ जो कुनै बेला स्वामी कार्तिकेयको अस्त्र-प्रहारले कटि-प्रदेश र लता-विटपादिले क्षीण भएर पनि क्षीर-समुद्रले सिञ्चित एवं भगवान् वरुणले रक्षित भएर निर्भय बनिरहन्छ ॥१९॥ त्यसका प्रभु प्रियव्रत-पुत्र राजा घृतपृष्ठले पनि आफ्नो द्वीपको सात भाग पारेर तिनमा प्रजा-पालनका लागि उस्तै नाम हुने आफ्ना सात उत्तराधिकारी छोरालाई नियुक्त गरे र स्वयं सबै जीवका अन्तरात्मा, मङ्गलमय, कीर्तिमान् नारायणका पवित्र चरणको शरण लिए ॥२०॥ ती महाराज घृतपृष्ठका आम, मधुरुह, मेघपृष्ठ, सुधामा, भ्राजिष्ठ, लोहितार्ण र वनस्पति–यी सात छोरा थिए । तिनका वर्षहरूमा पनि सात मर्यादापर्वत तथा सात नदी छन् । जस्तै–शुक्ल, वर्धमान, भोजन, उपबर्हिण, नन्द, नन्दन र सर्वतोभद्र यी सात पर्वत र अभया, अमृतौघा,

आर्यका, तीर्थवती, वृत्तिरूपवती, पवित्रवती तथा शुक्ला नामकी सात नदी छन् ॥२१॥ असको पवित्र एवं निर्मल जलको सेवन गर्ने त्यहाँका पुरुष, ऋषभ, द्रविण तथा देवक यी चार जातका मानिस जलले भरि अंजलि द्वारा जल-देवता वरुणको उपासना गर्ने गर्दछन् ॥ २२ ॥ स्तुति गर्दै ती भन्दछन्—'हे जलदेव ! तिमी सबैभन्दा ठूला छौ । तिमीलाई परमात्माबाट सामर्थ्य प्राप्त छ । तिमी भूः, भुवः तथा स्वः यी तीनै लोकलाई पवित्र पार्दछौ । अतः तिमी स्वभावैले पाप-नाशक छौ । हामी आफ्नो शरीरले तिम्रो स्पर्श गर्दछौं, तिमी हामीलाई पवित्र पार' ॥२३॥ त्यसै प्रकार क्षीर समुद्रभन्दा पनि अगाडि त्यसको चारैतिर बत्तीस लाख योजन विस्तृत शाकद्वीप छ जुन आफू समान नै विस्तृत महीको समुद्रले घेरिएको छ र त्यहाँ उस द्वीपको नामकरण गर्ने यौटा ठूलो शाकवृक्ष छ, त्यसको अतिशय मनोहर सुगन्ध सम्पूर्ण द्वीपलाई सुवासित पार्दछ ॥२४॥ मेधातिथि त्यसका स्वामी राजा प्रियव्रतका नै छोरा थिए । ती आफ्नो द्वीपलाई सात खण्डमा विभक्त गरेर तथा तिनमा उनकै समान नामका पुरजव मनोजव पवमान, धूम्रानीक चित्ररेफ, बहुरूप र विश्वाधार नामका सात पुत्रलाई नियुक्त गरेर

पुरुषऋषभद्रविणदेवसंज्ञा वर्षपुरुषा आपोमयं देवमपां पूर्णेनाञ्जलिना यजन्ते ॥ २२ ॥ आपः पुरुषवीर्याः स्थ पुनन्तीर्भूर्भुवः सुवः ॥ ता नः पुनीतामीवघ्नीः स्पृशतामात्मना भुव इति ॥ २३ ॥ एवं पुरस्तात्क्षीरोदात्परित उपवेशितः शाकद्वीपो द्वात्रिंशल्लक्षयोजनायामः समानेन च दधिमण्डोदेन परितो यस्मिन् शाको नाम महीरुहः स्वक्षेत्रव्यपदेशको यस्य ह महासुरभिगन्धस्तं द्वीपमनुवासयति ॥ २४ ॥ तस्यापि प्रैयव्रत एवाधिपतिर्नाम्ना मेधातिथिः सोऽपि विभज्य सप्त वर्षाणि पुत्रनामानि तेषु स्वात्मजान्पुरोजवमनोजवमानपवमानधूम्रानीकचित्ररेफबहुरूपविश्वाधारसंज्ञान्निधायाधिपतीन्स्वयं भगवत्यनन्त आवेशितमतिस्तपोवनं प्रविवेश ॥२५॥ एतेषां वर्षमर्यादागिरयो नद्यश्च सप्त सप्तैव ईशान उरुशृङ्गो बलभद्रः शतकेसरः सहस्रस्रोतो देवपालो महानस इति अनघाऽऽयुर्दा उभयस्पृष्टिरपराजिता पञ्चपदी सहस्रस्रुतिर्निजधृतिरिति ॥ २६ ॥ तद्वर्षपुरुषा ऋतव्रतसत्यव्रतदानव्रतानुव्रतनामानो भगवन्तं वाय्वात्मकं प्राणायामविधूतरजस्तमसः परमसमाधिना यजन्ते ॥ २७ ॥ अन्तः प्रविश्य भूतानि यो बिभर्त्यात्मकेतुभिः ॥ अन्तर्यामीश्वरः साक्षात्पातु नो यद्वशे स्फुटम् ॥ २८ ॥ एवमेव दधिमण्डोदात्परतः पुष्करद्वीपस्ततो द्विगुणायामः समन्तत उपकल्पितः समानेन स्वादूदकेन समुद्रेण बहिरावृतो यस्मिन् बृहत्पुष्करं ज्वलनशिखामलकनकपत्रायुतायुतं भगवतः कमलासनस्याध्यासनं परिकल्पितम् ॥ २९ ॥

स्वयं भगवान् अनन्तमा बुद्धि लगाई तपोवन गए ॥२५॥ ती वर्षहरूमा पनि मर्यादा-पर्वत र नदीहरूको संख्या सात नै थियो। त्यहाँ ईशान, उरुशृङ्ग, बलभद्र, शतकेसर, सहस्रस्रोत, देवपाल र महानस नामका सात पर्वत तथा अनघा, आयुर्दा, उभयस्पृष्टि, अपराजिता, पञ्चपदी, सहस्रश्रुति र निजधृति नामका सात नदी छन् ॥२६॥ ती वर्षहरूको ऋतव्रत, सत्यव्रत, दान, व्रत र अनुव्रत नामका चार जातिका पुरुष प्राणायामद्वारा आफ्ना रजोगुण र तमोगुणलाई क्षीण पारेर परम समाधिद्वारा वायुरूपधारी श्रीहरिको आराधना गर्दछन् ॥२७॥ जो समस्त प्राणीहरूको भित्र आफ्नो वृत्तिद्वारा प्रवेश गरेर तिनको पालन गर्दछन् तथा साराजगत् असका अधीन छन् ती अन्तर्यामी ईश्वर हाम्रो रक्षा गरून्' ॥ २८ ॥ यसै प्रकार महीको समुद्रदेखि अगाडि त्यसको चारैतिर उसभन्दा दोबर विस्तृत पुष्करद्वीप छ । यो चारैतिरबाट आफूजस्तै परिमाण भएका गुलियो पानीको समुद्रले घेरिएको छ । अतः अग्निशिखा झैं

प्रकाशमान र अतिशय निर्मल तथा हजारौं-लाखौं पंखुडी हुने यौटा कमल उरेको छ, जसमा भगवान ब्रह्माको आसन रहन्छ ॥ २९ ॥ त्यस द्वीपका मध्यभागमा उसका अर्वाचीन र पराचीन नामका दुइ वर्षका सीमा निश्चित गर्ने मानसोत्तर नामको यौटा पर्वत छ, जुन दश हजार योजन अग्लो र त्यति नै विस्तृत छ। त्यसको माथि चारै दिशामा इन्द्रादिक लोकपालका चार पुरीहरू छन्। मेरु पर्वतको चारैतिर परिक्रमा गर्ने सूर्यका रथको संवत्सररूपी चक्र त्यसमाथि देवताहरूका दिन र रातको क्रमले सधैं घुमिरहन्छ ॥३०॥ त्यस द्वीपका अधिपति प्रियव्रतका पुत्र वीतिहोत्र आफ्ना रमणक र धातकी नामका दुइ पुत्रलाई दुवै वर्षका अधिपति बनाएर स्वयं आफ्ना पूर्वजहरू झैं भगवत्सेवामा लागिरहन्छन् ॥३१॥ त्यहाँका निवासी ब्रह्मारूपी भगवान्को ब्रह्मसालोक्यादि प्राप्ति गराउने भगवान्को आराधना गर्दै भन्दछन्—॥ ३२ ॥ 'जो ती प्रसिद्ध कर्मफलका लक्षण छन् तथा जुन ब्रह्मस्वरूपको सर्वजना पूजन गर्दछन्, ती अद्वितीय तथा शान्तस्वरूप भगवानलाई प्रणाम छ' ॥ ३३ ॥ श्रीशुकदेव भन्नु हुन्छ—हे राजन्! त्यसको अगाडि लोकालोक नामको पर्वत छ, जो सबै तर्फबाट घेरं

तद्द्वीपमध्ये मानसोत्तरनामैक एवार्वाचीनपराचीनवर्षयोर्मर्यादाचलोऽयुतयोजनोच्छ्रायायामो यत्र तु चतसृषु दिक्षु चत्वारि पुराणि लोकपालानामिन्द्रादीनां यदुपरिष्टात्सूर्यरथस्य मेरुं परिभ्रमतः संवत्सरात्मकं चक्रं देवानामहोरात्राभ्यां परिभ्रमति ॥ ३० ॥ तद्द्वीपस्याप्यधिपतिः प्रयव्रतो वीतिहोत्रो नामैतस्यात्मजौ रमणकधातकिनामानौ वर्षपती नियुज्य स स्वयं पूर्वजवद्भगवत्कर्मशील एवास्ते ॥ ३१ ॥ तद्वर्षपुरुषा भगवन्तं ब्रह्मरूपिणं सकर्मकेन कर्मणाऽऽराधयन्तीदं चोदाहरन्ति ॥३२॥ यत्तत्कर्ममयं लिङ्गं ब्रह्मलिङ्गं जनोऽर्चयेत् ॥ एकान्तमद्वयं शान्तं तस्मै भगवते नम इति ॥३३॥ ऋषिरुवाच ॥ ततः परस्ताल्लोकालोकनामाचलो लोकालोकयोरन्तराले परित उपक्षिप्तः ॥ ३४ ॥ यावन्मानसोत्तरमेर्वोरन्तरं तावती भूमिः काञ्चन्यादर्शतलोपमा यस्यां प्रहितः पदार्थो न कथञ्चित्पुनः प्रत्युपलभ्यते तस्मात्सर्वसत्त्वपरिहृताऽऽसीत् ॥ ३५ ॥ लोकालोक इति समाख्या यदनेनाचलेन लोकालोकस्यान्तर्वर्तिनाऽवस्थाप्यते ॥३६॥ स लोकत्रयान्ते परित ईश्वरेण विहितो यस्मात्सूर्यादीनां ध्रुवापवर्गाणां ज्योतिर्गणानां गभस्तयोऽर्वाचीनांस्त्रींल्लोकानावितन्वाना न कदाचित्पराचीना भवितुमुत्सहन्ते तावदुन्नहनायामः ॥३७॥ एतावाँल्लोकविन्यासो मानलक्षणसंस्थाभिर्विचिन्तितः कविभिः स तु पञ्चाशत्कोटिगणितस्य भूगोलस्य तुरीयभागोऽयं लोकालोकाचलः ॥३८॥ तदुपरिष्टाच्चतसृष्वाशास्वात्मयोनिनाऽखिलजगद्गुरुणाऽधिनिवेशिता

द्वारा प्रकाशित तथा अप्रकाशित लोकका मध्यमा विराजमान छ ॥३४॥ सुमेरु पर्वतबाट मानसोत्तर पर्वत-पर्यन्त जति अन्तर छ, त्यति नै विस्तृत भूमि शुद्धोदक समुद्रको अर्कोपट्टि पनि विद्यमान छ। त्यसको अगाडि सुवर्णमयी भूमि छ, जो ऐना समान स्वच्छ छ तथा त्यसमा गिरेको वस्तु फेरि फर्केर आउन्न। अतः त्यहाँ कुनै पनि प्राणी रहन्नन् ॥३५॥ यस पर्वतको लोकालोक नाम यस कारण हुन गयो—सूर्यद्वारा प्रकाशित तथा अप्रकाशित लोकहरूका माझमा विद्यमान छ॥३६॥यसलाई परमात्माले तीनै लोकको बाहिर उसको चारैतिर स्थापित गरिदिएका छन्। यो यति अग्लो छ कि यसको एकातिर तीनै लोकलाई प्रकाशित पार्ने सूर्य तथा ध्रुव आदि सबै ज्योतिर्गणका किरण यसको अर्कोपट्टि कहिल्यै पनि जान सक्तैनन् ॥३७॥ यस प्रकार प्रमाण, लक्षण तथा स्थितिअनुसार विद्वान्हरूले यी लोकको यति नै विस्तार कहेका छन्। ती सबै मिलेर पचास करोड योजन छ। विविध प्रमाणले प्रमाणित

समस्त भूगोलको चौथो भाग त्यो एक्लो लोकालोक पर्वत छ ॥३८॥ त्यसमा चारै दिशामा सारा संसारका गुरु आत्मयोनि ब्रह्माजीले सबै लोकको स्थितिका निम्ति ऋषभ, पुष्करचूड, वामन तथा अपराजित नामका चार गजराज नियुक्त गरिराखेका छन् ॥ ३९ ॥ आफ्नो अंशस्वरूप ती दिग्गज तथा इन्द्रादि लोकपालका विविध पराक्रमको अभिवृद्धि गर्न सुदर्शन आदि आयुधहरूले सुसज्जित बाहुले युक्त महाविभूतिपति सर्वान्तरयामी भगवान् धर्म, ज्ञान, वैराग्य, ऐश्वर्य तथा अणिमादि आठ महासिद्धिहरूले युक्त आफ्नो विशुद्ध सत्वमय विग्रह धारण गरेर विष्वक्सेन आदि पार्षदले घेरिएर सबै लोकको कल्याणार्थ त्यस पर्वतराजमा रहछन् ॥४०॥ यस प्रकार आफ्नी मायाले रचित लोकयात्राको रक्षाका निम्ति भगवान् विविध स्वरूप धारण गरेर यहाँ कल्पान्तसम्म विराजमान रहन्छन् ॥४१॥ त्यस लोकको भित्री भूभागको जति परिमाण छ, त्यसैले उसको बाहिरी भागमा स्थित आलोक पर्वतको पनि विस्तृत व्याख्या भइजान्छ । त्यसको बाहिर योगेश्वर नै ठीक-ठीक आउन-जान सक्छन् ॥४२॥ हे राजन् ! स्वर्ग र पृथ्वीको माझमा ब्रह्माण्डको केन्द्रमा सूर्यको स्थिति रहन्छ । सूर्य र ब्रह्माण्ड-

ये द्विरदपतय ऋषभः पुष्करचूडो वामनोऽपराजित इति सकललोकस्थितिहेतवः ॥३८॥ तेषां स्वविभूतीनां लोकपालानां च विविधवीर्योपबृंहणाय भगवान्परममहापुरुषो महाविभूतिपतिरन्तर्याम्यात्मनो विशुद्धसत्त्वं धर्मज्ञानवैराग्यैश्वर्याद्यष्टमहासिद्ध्युपलक्षणं विष्वक्सेनादिभिः स्वपार्षदप्रवरैः परिवारितो निजवरायुधोपशोभितैर्निजभुजदण्डैः संधारयमाणस्तस्मिन्गिरिवरे समन्तात्सकललोकस्वस्तय आस्ते ॥ ४० ॥ आकल्पमेवं वेषं गत एष भगवानात्मयोगमायया विरचितविविधलोकयात्रागोपीथायेत्यर्थः ॥ ४१ ॥ योऽन्तर्विस्तार एतेन ह्यलोकपरिमाणं च व्याख्यातं तद्बहिर्लोकालोकाचलात् ततः परस्ताद्योगेश्वरगतिं विशुद्धामुदाहरन्ति ॥ ४२ ॥ अण्डमध्यगतः सूर्यो द्यावाभूम्योर्यदन्तरम् ॥ सूर्याण्डगोलयोर्मध्ये कोट्यः स्युः पञ्चविंशतिः ॥४३॥ मृतेऽण्ड एष एतस्मिन्यदभूत्ततो मार्तण्ड इति व्यपदेशः ॥ हिरण्यगर्भ इति यद्धिरण्याण्डसमुद्भवः ॥४४॥ सूर्येण हि विभज्यन्ते दिशः खं द्यौर्मही भिदा ॥ स्वर्गापवर्गौ नरका रसौकांसि च सर्वशः ॥४५॥ देवतिर्यङ्मनुष्याणां सरीसृपसवीरुधाम् ॥ सर्वजीवनिकायानां सूर्य आत्मा दृगीश्वरः ॥ ४६ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे भुवनकोशवर्णने समुद्रवर्षसंनिवेशपरिमाणलक्षणो विंशतितमोऽध्यायः ॥ २० ॥ श्रीशुक उवाच ॥ एतावानेव भूवलयस्य सन्निवेशः प्रमाणलक्षणतो व्याख्यातः ॥ १ ॥ एतेन हि दिवो मण्डलमानं तद्विद उपदिशन्ति यथा द्विदल-

गोलकको मध्य सबैतिरबाट पच्चीस करोड योजनको फरक छ ॥४३॥ सूर्य मृत अर्थात् मरेको अण्डबाट उत्पत्ति भएको हो, त्यसैले इनलाई सबैले मार्तण्ड भन्दछन् । हिरण्मय अर्थात् प्रकाशमान ब्रह्माण्ड द्वारा उत्पन्न हुनाले नी 'हिरण्यगर्भ' पनि भनिन्छन् ॥४४॥ सूर्य द्वारा नै दिशा, आकाश, द्युलोक, भूलोक, स्वर्ग, अपवर्ग, नरक र रसातलादि सबै भागहरूको विभाजन हुन्छ ॥४५॥ सूर्य नै देवता, तिर्यक् मनुष्य, सरीसृप तथा लता वृक्षादि सबै जीवसमूहका आत्मा, साक्षी र प्रभु हुन् ॥४६॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे नेपाली भाषाटीकायां विंशोऽध्यायः ॥२०॥ ( सूर्यको रथ र गति वर्णन )–शुकदेव भन्नुहुन्छ–हेराजन् ! समस्त भूमण्डलको प्रमाण तथा लक्षणसहित पूर्णविस्तार यति नै कहिएको छ ॥१॥ प्रमाणका ज्ञाता विद्वान् पुरुष यसैको अनुसार स्वर्गमण्डलको पनि विस्तार यति नै भन्दछन् । जस्तो कि मूँग, मास र चना आदिका द्विदलबाट एक दलको परिमाण राम्ररी बुझिन्छ

अर्कोको पनि सजिलै अनुमान हुन्छ । ती दुवैको माझमा अन्तरिक्ष लोक छ, जो ती दुवैमित जोरिएको छ ॥२॥ जसका निवासी ज्योतिर्गणका स्वामी सूर्यनारायण स्वयं तातेर सारा त्रिलोकलाई आफ्नो तेजले तप्त पार्दै तथा प्रकाशले प्रकाशित गर्दछन् । ती सूर्यनारायण उत्तरायण, दक्षिणायन तथा विषुवत् नामका बाटोमा मन्द, शीघ्र तथा समान गतिले हिंड्दै समयको अनुसार राशिहरूमा अग्लो-होचो तथा समतल स्थानहरूमा गएर दिन तथा रात्रिमा ठूलो सानो र समान तुल्याउँछन् ॥३॥ जब सूर्य मेष तथा तुला राशिमा हुन्छन्, तब दिन र रात बराबर हुन्छन् । जब ती वृषादि पाँच राशिहरूमा रहन्छन् तब प्रत्येक महीना रात्रिमा क्रमशः एक एक घडी कम हुँदै जान्छ र दिन लामो हुँदै जान्छ ॥४॥ जब सूर्य वृश्चिकादि पाँच राशिहरूमा जान्छन् तब दिन तथा रातमा यसको विपरीत हुन्छ अर्थात् उस बखत दिन घट्तै जान्छ र रात विस्तार-विस्तार बढ्दै जान्छ ॥५॥ यसै प्रकार दक्षिणायन

योर्निष्पापादीनां ते अन्तरेणान्तरिक्षं तदुभयसंधितम् ॥ २ ॥ यन्मध्यगतो भगवांस्तपतां पतिस्तपन आतपेन त्रिलोकीं प्रतपत्यवभासयत्यात्मभामा स एष उदगयनदक्षिणायनवैषुवतसंज्ञाभिर्मान्द्यशैघ्र्यसमानाभिर्गतिभिरारोहणावरोहणसमानस्थानेषु यथासवनमभिपद्यमानो मकरादिषु राशिष्वहो· रात्राणि दीर्घह्रस्वसमानानि विधत्ते ॥३॥ यदा स मेषतुलयोर्वर्तते तदाऽहोरात्राणि समानानि भवन्ति । यदा वृषभादिषु पञ्चसु च राशिषु चरति तदाऽहान्येव वर्धन्ते ह्रसति च मासि मास्येकैका घटिका रात्रिषु ॥४॥ यदा वृश्चिकादिषु पञ्चसु वर्तते तदाऽहोरात्राणि विपर्ययाणि भवन्ति ॥५॥ यावद्दक्षिणायनमहानि वर्धन्ते यावदुदगयनं रात्रयः ॥ ६ ॥ एवं नवकोट्य एकपञ्चाशल्लक्षाणि योजनानां मानसोत्तरगिरिपरिवर्तनस्योपदि· शन्ति तस्मिन्नैन्द्रीं पुरीं पूर्वस्मान्मेरोर्देवधानी नाम दक्षिणतो याम्यां संयमनीं नाम पश्चाद्वारुणीं निम्लोचनीं नाम उत्तरतः सौम्यां विभावरीं नाम तासूदयमध्याह्नास्तमयनिशीथानीति भूतानां प्रवृत्तिनिमित्तानि समयविशेषेण मेरोश्चतुर्दिशम् ॥ ७ ॥ तत्रत्यानां दिवसमध्यङ्गत एव सदाऽऽदित्यस्तपति सव्येनाचलं दक्षिणेन करोति ॥ ८ ॥ यत्रोदेति तस्य ह समानसूत्रनिपाते निम्लोचति यत्र क्वचन स्यन्दनेनाभितपति तस्य हैष समानसूत्रपाते प्रस्वापयति तत्र गतं न पश्यन्ति ते तं समनुपश्येरन् ॥ ९ ॥ यदा चैन्द्र्याः पुर्याः प्रचलते पञ्चदशघटिकाभिर्याम्यां पाद· कोटिद्वयं योजनानां सार्धद्वादशलक्षाणि साधिकानि चोपयाति ॥ १० ॥ एवं ततो वारुणीं सौम्यामैन्द्रीं च पुनस्तथाऽन्ये च ग्रहाः सोमादयो नक्षत्रैः

आरम्भ हुने बेलासम्म दिन र उत्तरायण लाग्ने बेलासम्म रातहरू बढ्दछन् ॥६॥ यस प्रकार पण्डित जन मानसोत्तर पर्वतमा सूर्यको तीव्र, मन्द तथा समान गतिले परिक्रमा गरेको परिमाण नौ करोड एकाउन्न लाख योजन भन्दछन् । त्यस पर्वतमा सुमेरुको पूर्वतिर इन्द्रको देवधानी पुरी, दक्षिण दिशामा यमराजको संयमनी पुरी, पश्चिममा वरुणको निम्लोचनी पुरी र उत्तरतिर सोमदेवको विभावरी पुरी छ–यस्तो भन्दछन् । ती पुरीहरूमा मेरुको चारै दिशाहरूमा बेला-बेलामा सबै प्राणीहरूको प्रवृत्ति र निवृत्तिका कारणस्वरूप सूर्योदय, मध्याह्न, सूर्यास्त तथा अर्धरात्रि आदि समय हुँदै रहन्छन् ॥७॥ हे राजन् ! मेरु पर्वतमा निवास गर्ने प्राणीहरूलाई सूर्यदेव मध्याह्नमा तप्त पार्दछन् र जाने बेलामा मेरु पर्वतलाई बायाँ पारेर हिड्नाले पनि उनलाई दाहिनेतिर पारे झैं देखिन्छन् ॥ ८ ॥ सूर्यदेव जुन दिशामा उदाउँछन्, त्यसको ठीक सामुन्नेतिर अस्ताउँछन् । जहाँ पुगेर अर्थात्

मध्याह्नकालमा प्राणीका शरीरबाट पसीना चुहाउँदै जीवलाई तप्त पर्दै र ठीक उनको विपरीत दिशामा उनलाई सुताइदिन्छन् । त्यस अवस्थामा अर्थात् आधा रातमा जो जन मध्याह्न कालमा उनलाई राम्ररी देख्न सक्छन्, ती नै उनको विपरीत दिशामा पुगेका ती सूर्यदेवलाई देख्न पाउन्नन् ॥९॥ सूर्यदेव जब इन्द्रको पुरीमा जान्छन् तब पन्ध्र घडीको भित्र सवा दुइ करोड, साढे बाह लाख योजनभन्दा पनि बढी बाटो नाघि सक्छन् ॥ १० ॥ यसै क्रमले ती वरुण तथा सोमका पुरीहरूलाई पारी तर्दै फेरि इन्द्रकै पुरीमा फर्कर पुग्दछन् । चन्द्रमा आदि अन्य ग्रह पनि उनकै समान ज्योतिश्चक्रबाट अन्य नक्षत्रहरूका संगै उदित र अस्त हुने गर्दछन् ॥ ११ ॥ यस प्रकार ती विविध पुरीहरूमा चक्कर लगाउँदै ती सूर्य भगवानको वेदत्रयीरूपी दिव्य रथ एक मुहूर्तमा चौंतीस लाख आठ सय योजनभन्दा पनि केही बढी हिँड्दछ ॥१२॥ सूर्य भगवानको रथको संवत्सर नामक चक्रमा मासरूपी बाह चक्र रहन्छन्, उनमा छ ऋतुहरू नेमी तीन चतुर्मासा उसका नाभि हुन् । त्यस रथको एक टुप्पा मेरुमा र अर्को मानसोत्तर पर्वतमा स्थित रहन्छ । यही धुरीमा संलग्न सूर्यका रथको

सह ज्योतिश्चक्रे समभ्युद्यन्ति सह वा निम्लोचन्ति ॥ ११ ॥ एवं मुहूर्तेन चतुस्त्रिंशल्लक्षयोजनान्यष्टशताधिकानि सौरो रथस्त्रयीमयोऽसौ चतसृषु परिवर्तते पुरीषु ॥ १२ ॥ यस्यैकं चक्रं द्वादशारं षण्नेमि त्रिणाभि संवत्सरात्मकं समामनन्ति ॥ तस्याक्षो मेरोर्मूर्धनि कृतो मानसोत्तरे कृतेतरभागो यत्र प्रोतं रविरथचक्रं तैलयन्त्रचक्रवद्भ्रमन्मानसोत्तरगिरौ परिभ्रमति ॥ १३ ॥ तस्मिन्नक्षे कृतमूलो द्वितीयोऽक्षस्तुर्यमानेन संमितस्तैलयन्त्राक्षवद्ध्रुवे कृतोपरिभागः ॥ १४ ॥ रथनीडस्तु षट्त्रिंशल्लक्षयोजनायतस्तत्तुरीयभागविशालस्तावान्रविरथयुगो यत्र हयाश्छन्दोनामानः सप्तारुणयोजिता वहन्ति देवमादित्यम् ॥ १५ ॥ पुरस्तात्सवितुररुणः पश्चाच्च नियुक्तः सौत्ये कर्मणि किलास्ते ॥१६॥ तथा वालखिल्या ऋषयोऽङ्गुष्ठपर्वमात्राः षष्टिसहस्राणि पुरतः सूर्यं सूक्तवाकाय नियुक्ताः संस्तुवन्ति ॥ १७ ॥ तथाऽन्ये च ऋषयो गन्धर्वाप्सरसो नागा ग्रामण्यो यातुधाना देवा इत्येकैकशो गणाः सप्तचतुर्दश मासि मासि भगवन्तं सूर्यमात्मानं नानानामानं पृथङ्नानानामानः पृथक्कर्मभिर्द्वन्द्वश उपासते ॥ १८ ॥ लक्षोत्तरं सार्धनवकोटियोजनपरिमण्डलं भूवलयस्य क्षणेन सगव्यूत्युत्तरं द्विसहस्रयोजनानि स भुङ्क्ते ॥ १९ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे ज्योतिश्चक्र-

चक्का कोलको धुरा ( मेरु ) ईं घुम्दै मेरु पर्वतको चारैतिर मानसोत्तर धुमिरहन्छ ॥ १३ ॥ उसै धुरीमा जोरिएको मूलभाग हुने यौटा अर्को धुरी छ, जो विस्तारमा त्यसको केवल एक चौथाई छ । उसको ऊर्ध्वभाग कोलको धुराको समान ध्रुवलोकमा जोरिएको छ ॥ १४ ॥ त्यस रथमा बस्ने स्थान छत्तीस लाख योजन र उसको चौथाई योजन चौडाई छ । त्यसको जुवा छत्तीस लाख योजन लामो छ, जसमा अरुण नामका सारथि द्वारा जोतिएका गायत्री आदि छन्दका नामपरक सात घोडा छन्, तिनै सूर्य भगवान्को रथलाई तान्दछन् ॥१५॥ ती सूर्यदेवको समक्ष सारथि कार्यमा नियुक्त भएर उनैतिर मुख फर्काएर बस्दछन् ॥ १६ ॥ सूर्यको अगाडितिर उनको स्तुति गर्नका लागि नियुक्त बूढीऔंलाको गाँठो बराबर लामो र चाक्लो वालखिल्य आदि साठी हजार ऋषि उनको स्तुति गर्दै अघि-अघि हिँड्दछन् ॥ १७ ॥ भिन्न-भिन्न नाम हुने अनेक ऋषि, गन्धर्व, अप्सरा, नाग, यक्ष राक्षस तथा देवताहरूका समुदाय प्रत्येक महीनामा आफ्ना-भिन्न-भिन्न कर्मद्वारा दुइ-दुइ मिलेर प्रति महीना विभिन्न नाम धारण गर्न भएका परमात्मा भगवान सूर्यको उपासना गर्दछन् । ती सबै चौध-चौधका

संख्यामा छन्, किन्तु पुच्छरूपवाट सबै मिलाएर सात नै गनिन्छन् ॥१८॥ हे राजन् ! यो रथैले सहित सूर्य भगवान् भूमण्डलको मानसोत्तरवर्ती नौ करोड़ एकाउन्न लाख योजन विस्तृत घेराको दुइ कोश अधिक दुइ हजार योजन दूरीलाई केवल एक क्षणमै नाघ्दछन् ॥१९॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे नेपाली भाषाटीकायां एकविंशति तमोऽध्यायः ॥२१॥ ( भिन्न-भिन्न ग्रहका स्थिति र गति वर्णन )-राजा परीक्षितले सोधे-हे भगवन् ! हजुरले जुन यो भन्नुभयो कि यद्यपि भगवान् सूर्य मेरु र ध्रुवलाई दाहिने पारेर घुम्दछन्, तथापि राशिहरूको समक्ष जाने बेलामा उनको त्यो गति दक्षिणावर्त हुन पाउन्न, यो म कसरी बुझन सक्ने छु ॥ १ ॥ शुकदेव भन्न हुन्छ-हे राजन् ! जस्तै घुमिरहेको कुमालेको चक्रसंगै तर त्यसमाथि अर्कोतिर हिंड्ने कमिलाको गति त्यसदेखि पृथक् नै हुन्छ । किनकि त्यो भिन्न-भिन्न समयमा त्यस चक्रको भिन्न-भिन्न भागहरूमा देखिन्छ । त्यस्तै नै कालचक्रमा परेर मेरु तथा ध्रुवलाई दाहिने पारेर घुमिरहे पनि सूर्य आदि ग्रहहरूको गति त्यसदेखि भिन्न नै हुन्छ, किनकि ती काल भेदले विभिन्न राशिहरु र नक्षत्रहरुमा देखिन्छन् ॥२॥ वेद

सूर्यरथमण्डलवर्णनं नामैकविंशतितमोऽध्यायः ॥ २१ ॥ राजोवाच ॥ यदेतद्भगवत आदित्यस्य मेरुं ध्रुवं च प्रदक्षिणेन परिक्रामतो राशीनाभिमुखं प्रचलितं चाप्रदक्षिणं भगवतोपवर्णितममुष्य वयं कथमनुमिमीमहीति ॥ १ ॥ स होवाच ॥ यथा कुलालचक्रेण भ्रमता तदाश्रयाणां पिपीलिकादीनां गतिरन्यैव प्रदेशान्तरेष्वप्युपलभ्यमानत्वादेवं नक्षत्रराशिभिरुपलक्षितेन कालचक्रेण ध्रुवं मेरुं च प्रदक्षिणेन परिधावता सह परिधावमानानां तदाश्रयाणां सूर्यादीनां ग्रहाणां गतिरन्यैव नक्षत्रान्तरे राश्यन्तरे चोपलभ्यमानत्वात् ॥ २ ॥ स एष भगवानादिपुरुष एव साक्षान्नारायणो लोकानां स्वस्तय आत्मानं त्रयीमयं कर्मविशुद्धिनिमित्तं कविभिरपि च वेदेन विजिज्ञास्यमानो द्वादशधा विभज्य षट्सु वसन्तादिष्वृतुषु यथोपजोषमृतुगुणान्विदधाति ॥ ३ ॥ तमेतमिह पुरुषास्त्रय्या विद्यया वर्णाश्रमाचारानुपथा उच्चावचैः कर्मभिराम्नातैर्योगवितानैश्च श्रद्धया यजन्तोऽञ्जसा श्रेयः समधिगच्छन्ति ॥ ४ ॥ अथ स एष आत्मा लोकानां द्यावापृथिव्योरन्तरेण नभोवलयस्य कालचक्रगतो द्वादशमासान्भुङ्क्ते राशिसंज्ञान्संवत्सरावयवान्मासः पक्षद्वयं दिवा नक्तं चेति सपादर्क्षद्वयमुपदिशन्ति यावता षष्ठमंशं भुञ्जीत स वै ऋतुरित्युपदिश्यते संवत्सरावयवः ॥ ५ ॥ अथ च यावताऽर्धेन नभोवीथ्यां प्रचरति तं कालमयनमाचक्षते ॥ ६ ॥ अथ च यावन्नभोमण्डलं सह द्यावापृथिव्योर्मण्डलाभ्यां कार्त्स्न्येन सह भुञ्जीत

र विद्वान जन उसको गति जान्नका लागि अनेक तर्कना गर्दछन्, ती आदिपुरुष नारायण नै लोकको कल्याण तथा वेदोक्त कर्महरूको शुद्धिका लागि कालमूर्तिलाई मासरूपले बाह्र भागहरूमा विभक्त गरेर वसन्तादि छ ऋतुमा उनको योग्य गुणको विधान गर्दछन् ॥३॥ यस लोकमा वेदत्रयी द्वारा प्रतिपादित वर्णाश्रमधर्मको अनुगमनशील पुरुष आफ्ना साना-ठूला विहित कर्म तथा योग-साधनाले श्रद्धापूर्वक उनको उपासना गरेर सजिलैसित कल्याणमा प्राप्त हुने गर्दछन् ॥४॥ ती सूर्यनारायण सबैका आत्मा हुन् । ती पृथ्वी र आकाशको माझमा स्थित आकाश-मण्डलमा कालगतिले घुमिरहने संवत्सरका अवयवरूपी मेषादि राशिपरक बाह्र महीनाको उपभोग गर्दछन् । तीमध्ये प्रत्येक महीनालाई चान्द्रमानले शुक्ल तथा कृष्ण दुइ पक्षको, पितृमानले एक रात-दिनको र सौरमानले सवा दुइ नक्षत्रको भन्दछन् । उति कालमा सूर्यदेव संवत्सरका एक षष्ठांश उपभोग गर्दछन्, त्यसैलाई संवत्सरका अवयवस्वरूप एक

ऋतु भन्दछन् ।।५।। जति बेरमा सूर्य आकाश मार्गको आधा भाग समाप्त पार्दछन्, त्यति समय एक अयन कहिन्छ ।।६।। जति समयमा ती आफ्नो मन्द, शीघ्र र समान गतिले स्वर्ग एवं पृथिवी समेत सारा आकाश मण्डललाई नाघिसक्दछन्, त्यसैलाई संवत्सर परिवत्सर, इडावत्सर, अनुवत्सर तथा वत्सर भन्दछन् ।।७।। सूर्यकाकिरणभन्दा एक लाख योजन माथिर चन्द्रमाको निवास छ । ती सबै नक्षत्रको अघि-अघि र अत्यन्त छिटो-छिटो हिंड्नाले सूर्यको एक वर्षको भोगलाई दुइ पक्षमा, एक महीनाको भोगलाई सवा दुइ नक्षत्रमा र एक पक्षको भोगलाई एक दिनमै भोगिसक्तन् ।।८।। कृष्ण र शुक्लपक्षमा क्षय तथा वृद्धिमा प्राप्त आफ्ना कलाहरू द्वारा पितृगण र देवताका दिन-रातलाई विभक्त पार्दै सबै जीव समूहको प्राण तथा जीवरूपी त्यो चन्द्रमा तीस-तीस मुहूर्तमा एक-एक नक्षत्र भोग्दछ ।।९।। सोह्र कलाहरूले युक्त, मनोमय, अन्नमय, अमृतमय तथा पुरुषरूपी जुन भगवान् चन्द्रदेव छन् ,तिनको मनुष्य, मन, पशु, पक्षी, सर्प तथा वृक्षादिमा प्राण संचारको स्वभावले युक्त हुनाले सबै सर्वमय भन्दछन् ।।१०।। चन्द्रमा भन्दा तीन लाख योजन माथिर

त कालं संवत्सरं परिवत्सरमिडावत्सरमनुवत्सरं वत्सरमिति भानोर्मान्द्यशैघ्र्यसमगतिभिः समामनन्ति ॥ ७ ॥ एवं चन्द्रमा अर्कगभस्तिभ्य उपरिष्टाल्लक्षयोजनत उपलभ्यमानोऽर्कस्य संवत्सरभुक्तिं पक्षाभ्यां मासभुक्तिं सपादर्क्षाभ्यां दिनेनैव पक्षभुक्तिमग्रचारी द्रुततरगमनो भुङ्क्ते ॥ ८ ॥ अथ चापूर्यमाणाभिश्च कलाभिरमराणां क्षीयमाणाभिश्च कलाभिः पितॄणामहोरात्राणि पूर्वपक्षापरपक्षाभ्यां वितन्वानः सर्वजीवनिवहप्राणो जीवश्चैकमेकं नक्षत्रं त्रिंशता मुहूर्तैर्भुङ्क्ते ॥ ९ ॥ य एष षोडशकलः पुरुषो भगवान्मनोमयोऽन्नमयोऽमृतमयो देवपितृमनुष्यभूतपशुपक्षिसरीसृपवीरुधां प्राणाप्यायनशीलत्वात्सर्वमय इति वर्णयन्ति ॥ १० ॥ तत उपरिष्टात्त्रिलक्षयोजनतो नक्षत्राणि मेरुं दक्षिणेनैव कालायन ईश्वरयोजितानि सहाभिजिताऽष्टाविंशतिः ॥ ११ ॥ तत उपरिष्टादुशना द्विलक्षयोजनत उपलभ्यते ॥ पुरतः पश्चात्सहैव वाऽर्कस्य शैघ्र्यमान्द्यसाम्याभिर्गतिभिरर्कवच्चरति ॥ लोकानां नित्यदाऽनुकूल एव प्रायेण वर्षयंश्चारेणानुमीयते स वृष्टिविष्टम्भग्रहोपशमनः ॥ १२ ॥ उशनसा बुधो व्याख्यातस्तत उपरिष्टाद् द्विलक्षयोजनवर्ती बुधः सोमसुत उपलभ्यमानः प्रायेण शुभकृद्यदार्काद्व्यतिरिच्येत तदातिवाताभ्रप्रायानावृष्ट्यादिभयमाशंसते ॥ १३ ॥ अत ऊर्ध्वं – मङ्गारकोऽपि जनलक्षद्वितय उपलभ्यमानस्त्रिभिः पक्षैरेकैकशो राशीन्द्वादशानुभुङ्क्ते यदि न वक्रेणाभिवर्तते प्रायेणाशुभग्रहोऽघशंसः ॥ १४ ॥ तत

द्वारा कालचक्रमा नियुक्त अभिजित्समेत अट्ठाइस नक्षत्र छन्, जो मेरुलाई दाहिने पारेर घुम्दछन् ।।११।। तीभन्दा दुइ लाख योजन माथि शुक्र देखिन्छन् । ती सूर्यको शीघ्र, मन्द र समान गति अनुसार कहिले पछि तथा कहिले संगै रहेर सूर्यको समान नै हिंड्दछन् । ती जलवर्षा गर्ने भएका हुनाले प्रायः सबैको सर्वदा अनुकूल नै रहने गर्दछन् । उनको गतिले यस्तो ज्ञात हुन्छ कि ती वृष्टिका अवरोधक ग्रहहरूलाई शान्त पार्दछन् ।।१२।। जसरी शुक्रको व्याख्या गरिएको छ, त्यसैले बुधको व्याख्या पनि भइजान्छ । शुक्रभन्दा दुइ लाख योजन माथि सोमको पुत्र बुध रहन्छ । बुध प्रायः मङ्गलकारी नै छ, किन्तु जब त्यो सूर्यको गतिलाई उल्लङ्घन गरेर हिंड्दछ, तब अत्यन्त आंधी पानी तथा अनावृष्टिको भय सूचित गर्दछ ।।१३।। त्यसको दुइ लाख योजन माथिर मङ्गलको स्थिति छ । त्यो मङ्गल यदि वक्र गतिले नहिंडे देखि एक-एक राशिलाई तीन-तीन पक्षमा भोग्दै सबै बाह

राशिहरूलाई भोग्ने गर्दछ । त्यो प्रायः अशुभ ग्रह हो र अमङ्गल-सूचक पनि छ ॥१४॥ त्यो भन्दा दुइ लाख योजन माथितिर बृहस्पति बस्तछन् । ती सुरगुरु यदि वक्रगतिले हिंडेनन् भने एक-एक राशिलाई एक-एक वर्षकालमा भोग्दछन् । ती प्रायः गर्भ ब्राह्मण-कुलका अनुकूल रहन्छन् ॥१५॥ बृहस्पति भन्दा पनि दुइ लाख योजन माथि शनिश्चर छन् । ती एक-एक राशिमा तीस-तीस महीना रहन्छन् र उतिनै वर्षमा सबै राशिहरूलाई भोग्दछन् । ती शनिदेव प्रायः सबैका लागि अशान्तिकारक कहिन्छन् ॥ १६ ॥ तीभन्दा माथि एघार लाख योजन टाढा कश्यपादि सप्तर्षिगणको स्थिति छ । ती सबै लोकको मङ्गल-कामना गर्दै भगवान् विष्णुको परमपद स्वरूप ध्रुवलोकको प्रदक्षिणा गर्दै रहन्छन् ॥ १७ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चम स्कन्धे नेपाली भाषा-टीकायां द्वाविंशोऽध्यायः॥२२॥ ( शिशुमार चक्र )–शुकदेव भन्दछन्–हे राजन् ! ती सप्तर्षिभन्दा तेह्र लाख योजन पर–जसलाई विष्णुकोपरमपद

उपरिष्टाद्द्विलक्षयोजनान्तरगतो भगवान्बृहस्पतिरेकैकस्मिन् राशौ परिवत्सरं परिवत्सरं चरति यदि न वक्रः स्यात्प्रायेणानुकूलो ब्राह्मकुलस्य ॥ १५ ॥ तत उपरिष्टाद्योजनलक्षद्वयात्प्रतीयमानः शनैश्चर एकैकस्मिन्राशौ त्रिंशन्मासान्विलम्बमानः सर्वानेवानुपर्येति तावद्भिरनुवत्सरैः प्रायेण हि सर्वेषामशान्तिकरः ॥ १६ ॥ तत उत्तरस्मादृषय एकादशलक्षयोजनान्तर उपलभ्यन्ते य एव लोकानां शमनुभावयन्ते भगवतो विष्णोर्यत्परमं पदं तत्प्रदक्षिणं प्रक्रमन्ति ॥ १७ ॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे ज्योतिश्चक्रवर्णने द्वाविंशोऽध्यायः ॥ २२ ॥ श्रीशुक उवाच ॥ अथ तस्मात्परतस्त्रयोदशलक्षयोजनान्तरतो यत्तद्विष्णोः परमं पदमभिवदन्ति । यत्र ह महाभागवतो ध्रुव औत्तानपादिरग्निनेन्द्रेण प्रजातिना कश्यपेन धर्मेण च समकालयुग्भिः सबहुमानं दक्षिणतः क्रियमाण इदानीमपि कल्पजीविनामाजीव्य उपास्ते तस्येहानुभाव उपवर्णितः ॥ १ ॥ स हि सर्वेषां ज्योतिर्गणानां ग्रहनक्षत्रादीनामनिमिषेणाव्यक्तरंहसा भगवता कालेन भ्राम्यमाणानां स्थाणुरिवावष्टम्भ ईश्वरेण विहितः शश्वदवभासते ॥ २ ॥ यथा मेढीस्तम्भ आक्रमणपशवः संयोजितास्त्रिभिः सवनैर्यथास्थानं मण्डलानि चरन्त्येवं भगणा ग्रहादय एतस्मिन्नन्तर्बहिर्योगेन कालचक्र आयोजिता ध्रुवमेवालम्ब्य वायुनोदीर्यमाणा आकल्पान्तं परिचङ्क्रमन्ति नभसि यथा मेघाः श्येनादयो वायुवशाः कर्मसारथयः परिवर्तन्ते एवं ज्योतिर्गणाः प्रकृतिपुरुषसंयोगानुगृहीताः कर्मनिर्मितगतयो भुवि न पतन्ति ॥ ३ ॥ केचनैतज्ज्योतिरनीकं शिशुमारसंस्थानेन भगवतो वासु-

भन्दछन्, त्यही ध्रुवलोक हो । जहाँ–परम भगवद्भक्त र उत्तानपादका पुत्र ध्रुवजी नक्षत्ररूपले विराजमान छन् । ती आकुसित नै अग्नि, इन्द्र, प्रजापति, कश्यप र धर्मादिद्वारा परिक्रमा गरिँदै अझ पनि विराजमान छन् । ती कल्पान्तसम्म स्थित रहने भएका भूलोकादिका आधार हुन् । उनको ऐहलौकिक पराक्रम चौथा स्कन्धमा आइसकेको छ ॥ १ ॥ त्यो ध्रुवलोक निरन्तर अव्यक्त गति हुने भगवान् कालद्वारा ग्रह-नक्षत्रादि सम्पूर्ण ज्योतिमण्डलका ईश्वर द्वारा स्थापित आधारस्तम्भको भाँति सर्वदा देदीप्यमान रहन्छ ॥२॥ जस्तै–दाइँ गर्ने मौकामा बीचको खाँबोबाट सानो, मध्यम र ठूलो डोरीद्वारा बाँधिएर धान माड्ने पशु निकट, मध्य तथा अर्को, क्रमले आफ्ना आफ्ना स्थानमा त्यो खाँबोको चारैतिर मण्डलकार भएर घुम्दछन्, त्यस्तै नै सबै नक्षत्र र ग्रहगण यस कालचक्रको बाहिर-भित्र क्रमशः नियुक्त भएर ध्रुवलोकको नै भरमा आफाफना स्थानमा वायुद्वारा प्रेरित भएर कल्पान्तसम्म घुम्दै रहन्छन् ।

त्यस्तै नै जसको गति क्रमको अनुसार निश्चित गरिएको छ, ती ज्योतिर्गण पनि पुरुषाधिष्ठित मायाको प्रभावले आकाशमा बराबर घुम्दै रहन्छन्, पृथ्वीमा झर्दैनन् ॥३॥ केही विद्वान् यो ज्योतिश्चक्रको स्थिति शिशुमार अर्थात् मकररूपधारी भगवान् वासुदेवको योगमायामा बताउँछन् ॥ ४ ॥ यो शिशुमार चक्र कुण्डलको आकारको छ र यसको शिर तलतिर फर्कको रहन्छ । यसको पुच्छरको अग्रभागमा ध्रुव, लाङ्गूल अर्थात् पुच्छरको तल्लो भागमा प्रजापति, अग्नि तथा धर्म रहन्छन् । पुच्छरको मूल भागमा धाता-विधाता र त्यसको कटि प्रदेशमा सप्तर्षिगण रहन्छन् । शिशुमारको दक्षिणावर्त तथा कुण्डलाकार शरीरको दाहिने पार्श्वमा जुन चौद्ध नक्षत्र छन्, तिनको उत्तरायण र वाम-पार्श्वमा स्थित चौद्ध नक्षत्रलाई दक्षिणायन भन्दछन् । लोकमा शिशुमारको शरीरको विस्तार कुण्डलाकार हुनाले उसका दुवै पार्श्वका अवयव-संख्या पनि बराबर हुन्छन् । त्यस्तै नै शिशुमार चक्रका दुवैतिरका नक्षत्र पनि बराबर छन् । यसको पिठिउँमा अजवीथी र उदरमा आकाशगङ्गा बग्दछिन् ॥ ५ ॥ हे राजन् ! यसको दाहिने तथा बायाँ कटिभागमा पुनर्वसु र पुष्य नक्षत्र छन् । दाहिने चरणको

देवस्य योगधारणायामनुवर्णयन्ति ॥ ४ ॥ यस्य पुच्छाग्रेऽवाक्शिरसः कुण्डलीभूतदेहस्य ध्रुव उपकल्पितस्तस्य लाङ्गूले प्रजापतिरग्निरिन्द्रो धर्म इति पुच्छमूले धाता विधाता कट्यां सप्तर्षयः । तस्य दक्षिणावर्तकुण्डलीभूतशरीरस्य यान्युदगयनानि दक्षिणपार्श्वे तु नक्षत्राण्युपकल्पयन्ति दक्षिणायनानि तु सव्ये । यथा शिशुमारस्य कुण्डलाभोगसन्निवेशस्य पार्श्वयोरुभयोरप्यवयवाः समसंख्या भवन्ति । पृष्ठे त्वजवीथी आकाशगङ्गा चोदरतः ॥ ५ ॥ पुनर्वसुपुष्यौ दक्षिणवामयोः श्रोण्योरार्द्राऽऽश्लेषे च दक्षिणवामयोः पश्चिमयोः पादयोरभिजिदुत्तराषाढे दक्षिणवामयोर्नासिकयोः यथासंख्यं श्रवणपूर्वाषाढे दक्षिणवामयोर्लोचनयोर्धनिष्ठा मूलं च दक्षिणवामयोः कर्णयोर्मघादीन्यष्ट नक्षत्राणि । दक्षिणायनानि वामपार्श्ववङ्क्रिषु युञ्जीत । यथैव मृगशीर्षादीन्युदगयनादिषु दक्षिणपार्श्ववङ्क्रि प्रातिलोम्येन प्रयुञ्जीत । शतभिषाज्येष्ठे स्कन्धयोर्दक्षिणवामयोर्न्यसेत् ॥ ६ ॥ उत्तराहनावगस्तिरधराहनौ यमो मुखेषु चाङ्गारकः शनैश्चर उपस्थे बृहस्पतिः ककुदि वक्षस्यादित्यो हृदये नारायणो मनसि चन्द्रो नाभ्यामुशना स्तनयोरश्विनौ बुधः प्राणापानयो राहुर्गले केतवः सर्वाङ्गेषु रोमसु सर्वे तारागणाः ॥ ७ ॥ एतदुहैव भगवतो विष्णोः सर्वदेवतामयं रूपमहरहः सन्ध्यायां प्रयतो वाग्यतो निरीक्षमाण उपतिष्ठेत । नमो ज्योतिर्लोकाय कालायनायानिमिषां पतये महापुरुषायाभिधीमहीति ॥८॥ ग्रहर्क्षताराभय-

पृष्ठभागमा आर्द्रा र अश्लेषा छन् । दाहिने र बायाँ नाकको प्वालमा क्रमशः अभिजित् र उत्तराषाढा नक्षत्र छन् । दाहिने र बायाँ नेत्रमा श्रवण र पूर्वाषाढा एवं दाहिने र बायाँ कानमा धनिष्ठा र मूल नक्षत्र छन् । मघा आदि आठ दक्षिणायन नक्षत्र बायाँ करङ र विपरीत क्रमले मृगशीर्ष आदि आठ उत्तरायण नक्षत्र दाहिने करङमा रहन्छन् । शतभिषा र ज्येष्ठा–यी दुइ नक्षत्र क्रमशः दाहिने र बायाँ काँधमा विराजमान रहन्छन्–यस्तो बुझ ॥६॥ यसको माथिल्लो चिउँडोमा अगस्त्य, तल्लो चिउँडोमा यमराज, मुखमा मङ्गल, उपस्थमा शनि, काँधमा बृहस्पति, वक्षस्थलमा सूर्य, हृदयमा नारायण, मनमा चन्द्रमा, नाभिमा शुक्र दुवै स्तनमा अश्विनीकुमार, प्राण तथा अपानमा बुध, घाँटीमा राहु, सबै अङ्गमा केतु र रौंमा तारागणको स्थिति छ ॥७॥ हे राजन् ! विष्णु भगवान्को यो सर्वदेवमय स्वरूपको निरन्तर सायंकालको समयमा पवित्र तथा मौनभावले ध्यान गर । सबै ज्योतिर्गणको आधार कालचक्र-

रूप सर्वदेवाधिपति परमपुरुष परमात्मालाई हाम्रो प्रणाम छ। हामी उनैको ध्यान गर्दछौं। यो मन्त्र पठेर स्तुति गरोस् ॥८॥ जुन पूर्वोक्त मन्त्रको जपमा संलग्न पुरुषको सबै पाप-लाई पखाल्ने तथा ग्रह, नक्षत्र र तारागणका रूपमा प्रकाशमान भगवान्‌का अधिदैविक स्वरूपलाई नित्य प्रातः, सायं तथा मध्याह्न–तीनै कालमा वन्दन, स्मरण गर्दछ भने त्यसका सबै पाप तत्काल नष्ट भएर जान्छ ॥९॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे नेपाली भाषाटीकायां त्रयोविंशोऽध्यायः ॥२३॥ अत (वादि लोकहरूको तल सात लोकको वर्णन)–शुकदेव भन्नुहुन्छ–हे राजन्! कतिपय व्यक्तिको भनाई छ–सूर्यभन्दा दस हजार योजन तल अन्य नक्षत्रसमान राहु घुमिरहन्छ। यसलाई भगवान्‌को कृपाले देवत्व र ग्रहत्व लाभ भएको हो। वास्तवमा यो कालो मुखको असुराधम स्वयं कुनै योग्य छैन। हे तात! यसको जन्म र कर्मको वृत्तान्त अगाडि कहिने छ ॥१॥ हे राजन्! अत्यन्त तातो हुने सूर्यमण्डलको विस्तार दस हजार योजन भनिन्छ। त्यसै गरी चन्द्र-मण्डलको विस्तार बाह्र हजार योजन र राहुको विस्तार तेह्र हजार योजन छ। यो राहु अमृत-पानको वेला बाधा पान भएका सूर्य

माधिदैविकं पापापहं मन्त्रकृतां त्रिकालम् ॥ नमस्यतः स्मरतो वा त्रिकालं नश्येत तत्कालजमाशु पापम् ॥ ९ ॥ इति श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे शिशुमारसंस्थावर्णनं नाम त्रयोविंशतितमोऽध्यायः ॥ २३ ॥ श्रीशुक उवाच ॥ अधस्तात्सवितुर्योजनायुते स्वर्भानुर्नक्षत्रवच्चरतीत्येके। योऽसावमरत्वं ग्रहत्वं चालभत भगवदनुकम्पया स्वयमसुरापसदः सैंहिकेयो ह्यतदर्हस्तस्य तात जन्मकर्माणि चोपरिष्टाद्वक्ष्यामः ॥ १ ॥ यददस्तरणेर्मण्डलं प्रतपतस्तद्वि स्तरतो योजनायुतमाचक्षते। द्वादशसहस्रं सोमस्य त्रयोदशसहस्रं राहोर्यः पर्वणि तद्व्यवधानकृद्वैरानुबन्धः सूर्याचन्द्रमसावभिधावति ॥ २ ॥ तन्निशाम्योभयत्रापि भगवता रक्षणाय प्रयुक्तं सुदर्शनं नाम भागवतं दयितमस्त्रं तत्तेजसा दुर्विषहं मुहुः परिवर्तमानमभ्यवस्थितो मुहूर्तमुद्विजमानश्चकितहृदय आरादेव निवर्तते तदुपरागमिति वदन्ति लोकाः ॥ ३ ॥ ततोऽधस्तात्सिद्धचारणविद्याधराणां सदनानि तावन्मात्र एव ॥ ४ ॥ ततोऽधस्ताद्यक्षरक्षः पिशाचप्रेतभूतगणानां विहाराजिरमन्तरिक्षं यावद्वायुः प्रवाति यावन्मेघा उपलभ्यन्ते ॥ ५ ॥ ततोऽधस्ताच्छतयोजनान्तर इयं पृथिवी यावद्धंसभासश्येनसुपर्णादयः पतत्रिप्रवरा उत्पतन्तीति ॥ ६ ॥ उपवर्णितं भूमेर्यथा संनिवेशावस्थानमवनेरप्यधस्तात्सप्त भूविवरा एकैकशो योजनायुतान्तरेणायामविस्तारेणोपक्लृप्ता अतलं वितलं सुतलं तलातलं महातलं रसातलं पाता-

चन्द्रमाको वैरत्व स्मरण गरेर अमावस्या तथा पूर्णिमाको दिन तीमाथि आक्रमण गर्न गर्दछ ॥२॥ यो जानेर भगवान्‌ले सूर्य तथा चन्द्रमाको रक्षाका लागि ती दुवैको नजीक आफ्नो प्रिय आयुध सुदर्शन चक्र नियुक्त गरिराखेको छ। त्यो चक्र बराबर घुमिरहनाले राहु त्यसको सहिनसक्नु तेजले उद्विग्न तथा चकित भएर एक मुहूर्त तिनको सामु अडिएर सहसा फर्कन्छ। यसैलाई सबै ग्रहणकाल भन्दछन् ॥३॥ राहुको त्यति नै (दस हजार योजन) तल सिद्ध, चारण र विद्याधरादिको निवासस्थान छ ॥४॥ ती भन्दा तल यक्ष, राक्षस, पिशाच, प्रेत, तथा भूतगणहरूको विहारस्थल अन्तरिक्ष छ, त्यहाँसम्म वायु चलिरहन्छ र मेघ देखिइरहन्छन् ॥५॥ त्योभन्दा सय योजन पर यी पृथिवी छन्। जहाँसम्म, हंस, भास, श्येन् र गरुड आदि ठूला-ठूला पक्षिहरू उड्दछन्, त्यही यसको चरम सीमा हो ॥६॥ हे राजन्! भूमिको विस्तार आदिको वर्णन मैले पहिले नै गरिसकेको छु। यसको पनि तल एक-एक गरेर

यस्ता सात बिलछन्, तीमध्ये एक-एक बिल दस-दस हजार योजनाको अन्तरमा छन् र तिनको लम्बाई चौडाई ब्रह्माण्ड-कटाहको सदृश छ। तिनका नाम हुन्—अतल-वितल, सुतल,तलातल महातल, रसातल र पाताल ॥७॥ यी बिलरूपी स्वर्गमा, जहाँ स्वर्गभन्दा पनि बढी काम, ऐश्वर्य, अन्नादि महती विभूतिहरूले युक्त भवन, उद्यान र क्रीडा तथा विहारका स्थान छन्। जहाँ दैत्य, दानव र नागगण विविध भाँतिका मायामय आमोद-प्रमोद गर्दछन्। ती प्रभुहरूका स्त्री, पुत्र, सुहृद् तथा अनुचर आदि सर्वदा प्रसन्न चित्त र अनुरक्त रहन्छन् अनि तिनका भोगहरूको प्रतिघात गर्न ईश्वरको निम्ति पनि कठिन छ ॥ ८ ॥ हे महाराज ! ती बिलहरूमा महामायावी मयदानव द्वारा रचित नगरीहरू प्रमुख श्रेष्ठ मणिहरूले रचित चित्र-विचित्र भवन अट्टालिका, नगरेको द्वार, सभा, मन्दिर, चौबाटो र आयतनादिले नाग तथा असुर-दम्पति एवं परेवा, शुक-सारिका आदि पक्षिहरू द्वारा संकुलित कृत्रिम भूमि एवं ती लोकका अधिपतिहरूको उत्तम प्रासादबाट सुसज्जित भएर जगमगाइरहन्छ ॥ ९ ॥ त्यहाँका सबै उद्यान फूल-फल, गुच्छा तथा सुन्दर कोपिलाहरूका भारले झुकेका हाँगा न्युरिरहन्छन र जो

लमिति ॥ ७ ॥ एतेषु हि बिलस्वर्गेषु स्वर्गादप्यधिककामभोगैश्वर्यानन्दविभूतिः सुसमृद्धभवनोद्यानाक्रीडाविहारेषु दैत्यदानवकाद्रवेया नित्यप्रमुदितानुरक्तकलत्रापत्यबन्धुसुहृदनुचरा गृहपतय ईश्वरादप्यप्रतिहतकामा मायाविनोदा निवसन्ति ॥ ८ ॥ येषु महाराज मयेन मायाविना विनिर्मिताः पुरो नानामणिप्रवरप्रवेकविरचितविचित्रभवनप्राकारगोपुरसभाचैत्यचत्वरायतनादिभिर्नागासुरमिथुनपारावतशुकसारिकाकीर्णकृत्रिमभूमिभिर्विवरेश्वरगृहोत्तमैः समलंकृताश्चकासति ॥ ९ ॥ उद्यानानि चातितरां मनइन्द्रियानन्दिभिः कुसुमफलस्तबकसुभगकिसलयावनतरुचिरविटपविटपिनां लताङ्गालिङ्गितानां श्रीभिः समिथुनविविधविहङ्गमजलाशयानाममलजलपूर्णानां झषकुलोल्लङ्घनक्षुभितनीरजकुमुदकुवलयकह्लारनीलोत्पललोहितशतपत्रादिवनेषु कृतनिकेतनानामेकविहाराकुलमधुरविविधस्वनादिभिरिन्द्रियोत्सवैरमरलोकश्रियमतिशयितानि ॥ १० ॥ यत्र ह वाव न भयमहोरात्रादिभिः कालविभागैरुपलक्ष्यते ॥ ११ ॥ यत्र हि महाहिप्रवरशिरोमणयः सर्वं तमः प्रबाधन्ते ॥ १२ ॥ न वा एतेषु वसतां दिव्यौषधिरसायनान्नपानस्नानादिभिराधयो व्याधयो वलीपलितजरादयश्च देहवैवर्ण्यदौर्गन्ध्यस्वेदक्लमग्लानिरिति वयोऽवस्थाश्च भवन्ति ॥ १३ ॥ न हि तेषां कल्याणानां प्रभवति कुतश्चन मृत्युर्विना भगवत्तेजसश्चक्रापदेशात् ॥ १४ ॥ यस्मिन्प्रविष्टेऽसुरवधूनां प्रायः पुंसवनानि भयादेव स्रवन्ति

लता-पाशले बाँधिएका छन्, यस्ता तरुवरको शोभा छ, जसमा चक्रवाक आदि विविध पक्षिहरूका जोडा रहन्छन्, ती निर्मल जलले भरिएका जलाशयको सुषमा र तिनमा उफ्रने माछाले गर्दा चञ्चल जलमा स्थित कमल, कुमुद, कुवलय, कह्लार, नीलोत्पल, राता कमल तथा शतपत्रादि वनका निवासी पक्षीहरूको अनवरत चलिरहने थरि-थरिका सुमधुर शब्द द्वारा समस्त इन्द्रियका निम्ति उत्सव झैं सुख-साधनहरू परिपूर्ण हुनाले देवलोकको शोभालाई पनि तुच्छ पारिदिन्छन् ॥१०॥ त्यहाँ रात-दिन आदिकालको विभागले हुने भयकरता पनि पनि देखिन्न ॥११॥ ठूला-ठूला नागको मस्तकका मणिहरू नै त्यहाँको अन्धकारलाई धपाउन सक्छन् ॥१२॥ दिव्य औषधि, रसायन, अन्न, पान तथा स्नानादिक सेवन गर्दै रहनाले गर्दा मानसिक अथवा शारीरिक क्लेश, गालामा चाउरी पर्नु रूपाल पाक्नु, वृद्धावस्था प्राप्त हुनु, देह कान्तिविहीन बन्नु, दुर्गन्ध, खेद, श्रम तथा ग्लानि हुनु र आयुका

साथै शरीरको अवस्था साटन् आदि विकार त्यहाँकामा उत्पन्न हुँदैन ॥ १३ ॥ ती पुण्यवान् पुरुषको सुदर्शन-चक्र नामक तेजको अतिरिक्त अरु कुनै प्रकारले मृत्यु हुन सक्तैन ॥ १४ ॥ त्यो चक्र उहाँ पुग्नासाथ असुर-नारीहरूको गर्भ डरले नै स्रवित तथा पतित हुने गर्दछ ॥ १५ ॥ अतल-लोकमा मयदानवको पुत्र बल नामक योटा असुर रहन्छ । त्यसले छयान्नब्बे प्रकारका मायाको रचना गरेको छ । तीमध्ये केही हिजो-आजका मायावी पुरुषले पनि धारण गरिरहन्छन् । कुनै वेला त्यस असुरले 'हाई' योटा रहन्छ । त्यसले छयान्नब्बे प्रकारका मायाको रचना गरेको छ । तीमध्ये केही हिजो आजका मायावी पुरुषले पनि धारण गरिरहन्छन् । कुनै वेला त्यस असुरले 'हाई' गर्दा असुरको मुखबाट स्वैरिणी अर्थात् स्वेच्छाचारिणी, कामिनी अर्थात् कामातुरा र पुंश्चली, चंचल स्वभाव भएकी तीन थरिका नारी प्रकट भए, जो उस लोकमा गएका पुरुषहरूलाई हाटक नामको मदिरा पिलाएर सम्भोगमा समर्थ तुल्याउँछन् । अनि आफ्ना हाव भावमय कटाक्ष, प्रणयपूर्ण हास्य, कुराकानी र आलिङ्गनादि द्वारा तीसित यथेच्छ रमण गर्दछन्, हाटक रस पिएपछि मनुष्य मदान्ध हुन्छ र आफूलाई दस हजार गजराजको बलले सम्पन्न ठानेर 'म ईश्वर हूँ' 'म सिद्ध हूँ' । यसरी ठूला-ठूला कुरा गर्दै गफ चुटन थाल्दछ । त्योभन्दा तल वितल नामको

पतन्ति च ॥ १५ ॥ अथातले मयपुत्रोऽसुरो बलो निवसति येन ह वा इह सृष्टाः षण्णवतिर्मायाः काश्चनाद्यापि मायाविनो धारयन्ति । यस्य च जृम्भमाणस्य मुखतस्त्रयः स्त्रीगणा उदपद्यन्त स्वैरिण्यः कामिन्यः पुंश्चल्य इति या वै विलायनं प्रविष्टं पुरुषं रसेन हाटकाख्येन साधयित्वा स्वविलासावलोकनानुरागस्मितसंलापोपगूहनादिभिः स्वैरं किल रमयन्ति । यस्मिन्नुपयुक्तः पुरुष ईश्वरोऽहं सिद्धोऽहमित्ययुतमहागजबलमात्मानमभिमन्यमानः कत्थते मदान्ध इव ॥ १६ ॥ ततोऽधस्ताद्वितले हरो भगवान्हाटकेश्वरः स्वपार्षदभूतगणावृतः प्रजापतिसर्गोपबृंहणाय भवो भवान्या सह मिथुनीभूत आस्ते । यतः प्रवृत्ता सरित्प्रवरा हाटकी नाम नदी भवयोर्वीर्येण यत्र चित्रभानुर्मातरिश्वना समिध्यमान ओजसा पिबति तन्निष्ठ्यूतं हाटकाख्यं सुवर्णं भूषणेनासुरेन्द्रावरोधेषु पुरुषाः सह पुरुषीभिर्धारयन्ति ॥ १७ ॥ ततोऽधस्तात्सुतले उदारश्रवाः पुण्यश्लोको विरोचनात्मजो बलिर्भगवता महेन्द्रस्य प्रियं चिकीर्षमाणेनादितेर्लब्धकायो भूत्वा वटुवामनरूपेण पराक्षिप्तलोकत्रयो भगवदनुकम्पयैव पुनः प्रवेशित इन्द्रादिष्वविद्यमानया सुसमृद्धया श्रियाऽभिजुष्टः स्वधर्मेणाराधयंस्तमेव भगवन्तमाराधनीयमपगतसाध्वस आस्तेऽधुनापि ॥ १८ ॥ नो एवैतत्साक्षात्कारो भूमिदानस्य यत्तद्भगवत्यशेषजीवनिकायानां जीवभूतात्मभूते परमात्मनि वासुदेवे तीर्थतमे पात्र उपपन्ने परया श्रद्धया परमादरसमाहितमनसा

भूविवरमा आफ्ना पार्षद तथा भूतगणले आवृत्त भगवान हाटकेश्वर शिव निवास गर्दछन् । ती प्रजापतिको सृष्टि बढाउनका लागि भवानीसित रमण गर्दछन् । शिव पार्वतीको तेजले हाटकी नामकी योटी उत्तम नदी निस्किन्छन्, उसको जल वायुले प्रज्वलित अग्नि निकै उत्साहले पिउने गर्दछन् । ती अग्निले थुकेको हाटक नामक सुवर्ण दैत्य राजाहरूको अन्तःपुरमा पुरुष तथा स्त्री आभूषणको रूपमा धारण गर्दछन् ॥ १६॥१७ ॥ वितल तलको तल सुतललोक छ । त्यहाँ इन्द्रको भलो गर्नका लागि आदितिको गर्भबाट वामन रूपमा अवतार लिएर भगवान्‌ले जोमि: तीनै लोक खोसिलिएका थिए, ती महायशस्वी एवं पवित्र कीर्ति विरोचन-पुत्र राजा बलि भगवान्‌को कृपाले इन्द्रादि देवताहरूलाई पनि अप्राप्य अतुलित सम्पत्ति-सम्पन्न भएर आफ्नो धर्माचरण द्वारा उनै परमपूज्य प्रभुको आराधना गर्दै आज पनि त्यहाँ निर्भय भएर बसेका छन् ॥ १८ ॥ हे राजन ! सबै जीवका आत्मास्वरूप

अन्तर्यामी, आत्माराम र साक्षात् परमात्मा वासुदेव समान पवित्रतम पात्र उपस्थित भएमा उनलाई परम श्रद्धा तथा अतिशय आदरपूर्वक एकाग्रचित्तले दिएको भूमिदान साक्षात् मोक्ष-को द्वार नै हो। केवल सुतललोकको ऐश्वर्य त्यसको फल कदापि हुन सक्तैन ॥ १९ ॥ छींकने, लड्ने तथा चिप्लने आदिको अवसरमा विवश भावले पनि जसको एकपल्ट नाम लिनाले पुरुष त्यो कर्मबन्धनबाट मुक्त हुन्छ, जसको मुमुक्षु जन योग साधनादि विविध प्रकारका उपायद्वारा पनि मुक्त हुन सक्तैनन् ॥२०॥ आफ्ना ज्ञानी भक्तलाई आफ्नो स्वरूप प्रदान गर्ने भएका तथा सबै प्राणीहरूका आत्मास्वरूप ती प्रभुलाई आत्मभावले समर्पण गरेको भूमिदानको फल के यो सुतललोकको राज्य नै हुन सक्छ ? ॥२१॥ यदि भगवान्ले राजा बलिलाई उनको फल, परमात्म-चिन्तनलाई विस्मरण पारिदिने मायामय भोग तथा ऐश्वर्य नै दिए, अनि त उनले बलिमाथि केही पनि कृपा गरेनन् ॥२२॥ किनकि जब निरुपाय भएर भगवानले छलले जसको सबै राज्य खोसे, केवल त्यसको शरीरमात्र छाडे तथा बलिलाई वरुण पाशले बाँधेर पर्वतको कन्दरामा थुनिदिए। अनि उनले यही भनेका

संप्रतिपादितस्य साक्षादपवर्गद्वारस्य यद्बिलनिलयैश्वर्यम् ॥ १९ ॥ यस्य ह वाव क्षुतपतनप्रस्खलनादिषु विवशः सकृन्नामाभिगृणन्पुरुषः कर्मबन्ध-नमञ्जसा विधुनोति यस्य हैव प्रतिबाधनं मुमुक्षवोऽन्यथैवोपलभन्ते ॥ २० ॥ तद्भक्तानामात्मवतां सर्वेषामात्मन्यात्मद आत्मतयैव ॥ २१ ॥ न वै भगवान्नूनममुष्यानुजग्राह यदुत पुनरात्मानुस्मृतिमोषणं मायामयभोगैश्वर्यमेवातनुतेति ॥ २२ ॥ यत्तद्भगवताऽनधिगतान्योपायेन याञ्चाच्छले-नापहृतस्वशरीरावशेषितलोकत्रयो वरुणपाशैश्च संप्रतिमुक्तो गिरिदर्यां चापविद्ध इति होवाच ॥ २३ ॥ नूनं बतायं भगवानर्थेषु न निष्णातो योऽसाविन्द्रो यस्य सचिवो मन्त्राय वृत एकान्ततो बृहस्पतिस्तमतिहाय स्वयमुपेन्द्रेणात्मानमयाचतात्मनश्चाशिषो नो एव तद्दास्यमतिगम्भीरवयसः कालस्य मन्वन्तरपरिवृत्तं कियल्लोकत्रयमिदम् ॥ २४ ॥ यस्यानुदास्यमेवास्मत्पितामहः किल वव्रे न तु स्वपित्र्यं यदुताकुतोभयं पदं दीयमानं भग-वतः परिमिति भगवतोपरते खलु स्वपितरि ॥ २५ ॥ तस्य महानुभावस्यानुपथममृजितकषायः को वाऽस्मद्विधः परिहीणभगवदनुग्रह उपजिग-मिषतीति ॥ २६ ॥ तस्यानुचरितमुपरिष्टाद्विस्तरिष्यते तस्य भगवान्स्वयमखिलजगद्गुरुर्नारायणो द्वारि गदापाणिरवतिष्ठते निजजनानुकम्पित-

थिए ॥२३॥ 'मलाई खेद छ—इन्द्र विद्वान भएर पनि आफ्नो रुच्या स्वार्थ साधनमा निपुण छैनन्।' उनले सम्मतिको निम्ति अतिशय श्रद्धाले बृहस्पतिलाई आफ्ना मन्त्री बनाए, तापनि उनको अवहेलना गरेर विष्णु भगवान् प्रसन्न भएपछि उनकै सेवा जस्तो वरदान नमागेर उनकोद्वारा मसित आफ्नो निम्ति भोग नै मागेका छन्। जसको अवस्थाको अन्त छैन, यस्तो कालको केवल एक मन्वन्तर वितेपछि नै छिन्न-भिन्न हुने तीनै लोकको ऐश्वर्य उनको चरण-सेवाको साम्मुन्ने के मूल्य हुन सक्छ ? ॥२४॥ हाम्रा पितामह प्रह्लाद-जीले भगवान्‌द्वारा आफ्ना पिता हिरण्यकशिपु मारिएपछि प्रभुले दिंदा पनि भगवानबाट परै राख्ने ठानेर आफ्ना पिताको अकण्टक राज्य स्वीकार गरेनन्। बरु भगवानको सेवाको-नै वरदान मागे ॥२५॥ ती महानुभावका चरण-चिह्नको अनुसरण गर्ने सङ्कल्प कोही मजस्तै वासनामा लिप्त तथा भगवत्-कृपा शून्य पुरुष कसरी गर्न सक्छ ?' ॥२६॥ श्रीशुकदेवजी भन्नुहुन्छ—हे राजन् ! जसले दिग्विजयको प्रसङ्गमा आफ्ना पादाङ्गुष्ठको प्रहार गरेर रावणलाई हजारौं योजन पर फ्याँकिदिएका थिए ती सम्पूर्ण जगत्का गुरु साक्षात् नारायण आफ्ना

भक्तमा दयालु भएर हातमा गदा लिएर उसको ढोकामा सधैं उपस्थित रहन्छन्, ती राजा बलिको चरित्र अगाडि विस्तारले वर्णन गरिने छ ॥ २७ ॥ सुतललोक भन्दा तल तलातल-लोकमा त्रिपुराधिपति दानवराज मय बस्तछ । पूर्वकालमा तीनैं लोकको कल्याण-कामनाले शङ्कर भगवान्ले उसका तीनैं पुर भस्म पारेका थिए र उनैको कृपाले यो स्थान उपलब्ध भएको थियो । त्यो मायावीहरूको सर्वश्रेष्ठ गुरु हो र शिवजीद्वारा सबै प्रकारले सुरक्षित रहनाले सुदर्शन चक्रसित पनि निर्भय रहेर त्यहाँका निवासीहरूबाट आदरित हुँदै रहन्छ ॥२८॥ त्यो भन्दा तल महातलमा कद्रूबाट उत्पन्न अनेक शिर हुने सर्पको 'क्रोधवश' नामको यौटा समुदाय बस्तछ । तिनमा कुहक, तक्षक, कालिय र सुषेण आदि महाकाय सर्प मुख्य हुन् । ती विष्णु भगवान्‌का वाहन पक्षिराज गरुड़सित सदा भयभीत रहन्छन् । तैपनि कहिले काहीं उन्मत्त भएर आफ्ना स्त्री-पुत्र, मित्र र कुटुम्बसित विहार गर्न लाग्दछन् ॥ २९ ॥ त्यो भन्दा

हृदयो येनाङ्गुष्ठेन पदा दशकन्धरो योजनायुतायुतं दिग्विजय उच्चाटितः ॥ २७ ॥ ततोऽधस्तात्तलातले मयो नाम दानवेन्द्रस्त्रिपुराधिपतिर्भगवता पुरारिणा त्रिलोकीशं चिकीर्षुणा निर्दग्धस्वपुरत्रयस्तत्प्रसादाल्लब्धपदो मायाविनामाचार्यो महादेवेन परिरक्षितो विगतसुदर्शनभयो महीयते ॥ २८ ॥ ततोऽधस्तान्महातले काद्रवेयाणां सर्पाणां नैकशिरसां क्रोधवशो नाम गणः कुहकतक्षककालियसुषेणादिप्रधाना महाभोगवन्तः पतत्त्रिराजाधिपतेः पुरुषवाहादनवरतमुद्विजमानाः स्वकलत्रापत्यसुहृत्कुटुम्बसङ्गेन क्वचित्प्रमत्ता विहरन्ति ॥ २९ ॥ ततोऽधस्ताद्रसातले दैतेया दानवाः पणयो नाम निवातकवचाः कालेया हिरण्यपुरवासिन इति विबुधप्रत्यनीका उत्पत्त्या महौजसो महासाहसिनो भगवतः सकललोकानुभावस्य हरेरेव तेजसा प्रतिहतबलावलेपा बिलेशया इव वसन्ति । ये वै सरमयेन्द्रदूत्या वाग्भिर्मन्त्रवर्णाभिरिन्द्राद्बिभ्यति ॥३०॥ ततोऽधस्तात्पाताले नागलोकपतयो वासुकिप्रमुखाःशङ्खकुलिकमहाशङ्खश्वेतधनंजयधृतराष्ट्रशङ्खचूडकम्बलाश्वतरदेवदत्तादयो महाभोगिनो महामर्षा निवसन्ति । येषामु ह वै पंचसप्तदशशतसहस्रशीर्षाणां फणासु विरचिता महामणयो रोचिष्णवः पातालविवरतिमिरनिकरं स्वरोचिषा विधमन्ति ॥ ३१ ॥ इति

तल रसातलमा पणि नामक निवातकवच, काले य र हिरण्यपुर निवासी देवद्रोही दैत्य तथा दानवगण रहन्छन् । ती जन्मतः ठूला उत्साही तथा परम साहसी हुन्छन्, किन्तु सम्पूर्ण लोकमा व्याप्त प्रभाव भएका श्रीहरिको तेजले नै हतवीर्य भएर ती सर्प झैं यता-उता लुकेर बस्छन् । इन्द्रकी दूती सरमाले उच्चारण गरेकी मन्त्रवर्णरूप कटु-वाक्यले ती सधैं भयभीत रहन्छन् * ॥३०॥ रसातलभन्दा तल पाताल लोक छ । त्यो वासुकि प्रधान शङ्ख, कुलिक, महाशङ्ख, श्वेत, धनञ्जय, धृतराष्ट्र, शङ्खचूड, कम्बल, अश्वतर र देवदत्तादि महाक्रोधी एवं ठूला-ठूला शरीर हुने नागलोकाधिपति उहीं रहन्छन् । ती मध्ये कसैको पाँच, कसैको सात, कसैको दस, कसैको सय र कसैको हजार फणा ( शिर ) सम्म छन् । तिनका फणाको

* उदाहरण—वेदमा यौटा आख्यायिका छ—जब पणि नामक दैत्यहरूले पृथ्वीलाई रसातलमा लुकाइदिए तब इन्द्रले पृथ्वीलाई खोज्नको निमित्त सरमा नामकी यौटी दूती पठाए। जब त्यो रसातलमा पुगी तब दैत्यहरूले सन्धिको सन्धिको इच्छा प्रकट गरेर सरमासित सोधे—'सरमा ! तिम्रो के इच्छा छ ?' तर सरमाले सन्धि गर्न अस्वीकार गरी र इन्द्रको स्तुति गर्दै भनी—'हता इन्द्रेण पणयः शयध्वम्' अर्थात् हे पणिगण ! तिमी इन्द्रका हातबाट मरेर शयन गर ।' यसै श्रापको कारणले उनलाई सदैव इन्द्रको भय बनिरहन्छ ।

अतिशय दीप्तिशालिनी मणिहरू आफ्नू कान्तिले त्यो पाताल-विवरको सबै अन्धकार नष्ट पार्दै रहन्छन् ॥ ३१ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे नेपाली भाषाटीकायां चतुर्विंशोऽध्यायः ॥ २४ ॥ ( सङ्कर्षणको विवरण र स्तुति ) शुकदेव भन्दछन्—हे राजन् ! त्यो पातालखलोकको मूलप्रदेशमा तीस हजार योजना पर 'अनन्त' नामले प्रसिद्ध भगवान्को तामसी नित्यकला रहन्छ जसलाई अहङ्काररूपले द्रष्टा तथा दृश्यलाई जोर्न हुनाले भक्तजन 'संकर्षण' भन्ने गर्दछन् ॥ १ ॥ जुन हजार मस्तक हुने भगवान् अनन्तका यौटै मस्तकमा राखिएको सो भूमण्डल सरस्यूँको दाना समान प्रतीत हुन्छ ॥ २ ॥ प्रलयकाल आएपछि ती विश्वको संहार गर्न चाहन्छन्, अति क्रोध वश घुमिरहेका तिनका भृकुटीको मध्यभागबाट हातमा तीन टुप्पा भएको त्रिशूल लिएर एघार मूर्ति र तीन नेत्र हुने संकर्षण नामक रुद्र प्रकट हुन्छन् ॥ ३ ॥ अन्य श्रेष्ठ भक्तसहित अतिशय भक्ति भावले प्रणाम गर्दै जसका

श्रीमद्भागवते महापुराणे पंचमस्कन्धे राह्वादिस्थितिबिलस्वर्गमर्यादानिरूपणं नाम चतुर्विंशतितमोऽध्यायः ॥ २४ ॥ श्रीशुक उवाच ॥ तस्य मूलदेशे त्रिंशद्योजनसहस्रान्तर आस्ते या वै कला भगवतस्तामसी समाख्याताऽनन्त इति सात्वती या द्रष्टृदृश्ययोः संकर्षणमहमित्यभिमानलक्षणं यं संकर्षणमित्याचक्षते ॥ १ ॥ यस्येदं क्षितिमण्डलं भगवतोऽनन्तमूर्तेः सहस्रशिरस एकस्मिन्नेव शीर्षणि ध्रियमाणं सिद्धार्थ इव लक्ष्यते ॥ २ ॥ यस्य ह वा इदं कालेनोपसंजिहीर्षतोऽमर्षविरचितभ्रमद्भ्रुवोरन्तरेण सांकर्षणोनाम रुद्र एकादशव्यूहस्त्र्यक्षस्त्रिशिखं शूलमुत्तम्भयन्नुदतिष्ठत् ॥ ३ ॥ यस्यांघ्रिकमलयुगलारुणविशदनखमणिखण्डलेष्वहिपतयः सह सात्वतर्षभैरेकान्तभक्तियोगेनावनमन्तः स्ववदनानि परिस्फुरत्कुण्डलप्रभामण्डितगण्डस्थलान्यतिमनोहराणि प्रमुदितमनसः खलु विलोकयन्ति ॥ ४ ॥ यस्यैव हि नागराजकुमार्य आशिष आशासानाश्चार्वङ्गवलयविलसितविशदविपुलधवलसुभगरुचिरभुजरजतस्तम्भेष्वगुरुचंदनकुङ्कुमपङ्कानुलेपेनावलिम्पमानास्तदभिमर्शनोन्मथितहृदयमकरध्वजावेशरुचिरललितस्मितास्तदनुरागमदमुदितमदविघूर्णितारुणकरुणावलोकनयवदनारविन्दं सव्रीडं किल विलोकयन्ति ॥ ५ ॥ स एव भगवाननन्तोऽनन्तगुणार्णव आदिदेव उपसंहृतामर्षरोषवेगो लोकानां स्वस्तय आस्ते ॥ ६ ॥ ध्यायमानः सुरासुरोरगसिद्धगन्धर्वविद्याधरमुनिगणैरनवरतमदमुदितविकृतविह्वललोचनः सुललितमुखरिकामृतेनाप्यायमानः स्वपार्षदविबुधयूथपतीनपरिम्लानरागनवतुलसिकामोदमध्वास-

युगल चरण कमलका स्वच्छ र अरुण वर्ण हुने नखमणिमण्डित नागाधिपतिगण अति आनन्दित भएर झलझलाउने कुण्डलका कान्तिले सुशोभित तथा कमनीय कपोल युक्त आफ्नो मनोहर मुखारविन्दको दर्शन गर्न गर्दछन् ॥ ४ ॥ जसको शरीर मण्डलमा सुशोभित रजतस्तम्भ समान विशाल, स्वच्छ तथा श्वेतपनका बाहुमा विविध प्रकारका कामनाले अगुरु, चन्दन तथा कुंकुम-पङ्कको अनुलेपन गर्ने वेलामा परम सुन्दरी नागकन्याहरू उनको अंगस्पर्शले विचलित आफ्ना हृदयमा कामावेग हुनाले मधुर मनोहर एवं मन्द हास्ययुक्त भएर तिनका मदविह्वल सकरुण अरुण नेत्रले सुशोभित तथा प्रेममदले प्रमुदितले मुखारविन्दतिर लज्जा भाव लिएका छन् ॥ ५ ॥ उनै अनन्त गुण-सागर

आदिदेव अनन्त भगवान् अमर्ष र रोषको वेग रोकेर त्यहाँ समस्त लोकको कल्याणार्थ विराजमान रहन्छन् ॥६॥ देवता, असुर, सिद्ध, गन्धर्व, विद्याधर र मुनिगण निरन्तर जसको सेवा गर्न गर्दछन्, जो मदपानलले प्रसन्न तथा विकृत र विह्वल नयन हुने छन्, आफ्ना सुललित वचनरूपी अमृतले देवयूथपतिहरू तथा पार्षदहरूलाई सन्तुष्ट राख्दछन्, जसले नीलो वस्त्र र यौटै कुण्डल धारण गरेका छन् र जो आफ्नो मनोहर तथा सुन्दर यौटा भुजदण्ड हलोको मुठमा राखेका छन्, ती उदार लीलाधारी भगवान् शेष, जस्तै—इन्द्रको गजराज उन्मत्त भ्रमरका सुमधुर गुञ्जानले समलंकृत छन् ॥ ७ ॥ हे राजन् ! जुन अनन्त भगवान् श्रवण र ध्यान गरेपछि मुमुक्षु जनको हृदयमा आविर्भूत भएर अनादिकालको कर्मवासनाहरूले ग्रथित उनका सत्त्व, रज र तमोगुणात्मिका अविद्यामयी हृदय-ग्रन्थिलाई तत्काल काटिदिन्छन्, उनको महिमा स्वयंभू ब्रह्माका पुत्र नारदले तुम्बुरु गन्धर्वसित एकपल्ट ब्रह्माको

येन माद्यन्मधुकरव्रातमधुरगीतश्रियं वैजयन्तीं स्वां वनमालां नीलवासा एककुण्डलो हलककुदि कृतसुभगसुन्दरभुजो भगवान्माहेन्द्रो वारणेन्द्र
इव काञ्चनीं कक्षामुदारलीलो बिभर्ति ॥ ७ ॥ य एष एवमनुश्रुतो ध्यायमानो मुमुक्षूणामनादिकालकर्मवासनाग्रथितमविद्यामयं हृदयग्रन्थिं
सत्त्वरजस्तमोमयमन्तर्हृदयं गत आशु निर्भिनत्ति तस्यानुभावान्भगवान्स्वायम्भुवो नारदः सह तुम्बुरुणा सभायां ब्रह्मणः संश्लोकयामास ॥ ८ ॥
उत्पत्तिस्थितिलयहेतवोऽस्य कल्पाः सत्त्वाद्याः प्रकृतिगुणा यदीक्षयाऽऽसन्। यद्रूपं ध्रुवमकृतं यदेकमात्मन्नानाधात्कथमु ह वेद तस्य वर्त्म ॥९॥ मूर्तिं
नः पुरुकृपया बभार सत्त्वं संशुद्धं सदसदिदं विभाति यत्र ॥ यल्लीलां मृगपतिराददेऽनवद्यामादातुं स्वजनमनांस्युदारवीर्यः ॥ १० ॥ यन्नाम
श्रुतमनुकीर्तयेदकस्मादार्तो वा यदि पतितः प्रलम्भनाद्वा ॥ हन्त्यंहः सपदि नृणामशेषमन्यं कं शेषाद्भगवत आश्रयेन्मुमुक्षुः ॥ ११ ॥ मूर्धन्यर्पित-
मणुवत्सहस्रमूर्ध्नो भूगोलं सगिरिसरित्समुद्रसत्त्वम् ॥ आनन्त्यादनिमितविक्रमस्य भूम्नः को वीर्याण्यधिगणयेत्सहस्रजिह्वः ॥ १२ ॥ एवंप्रभावो
भगवाननन्तो दुरन्तवीर्योरुगुणानुभावः ॥ मूले रसायाः स्थित आत्मतन्त्रो यो लीलया क्ष्मां स्थितये बिभर्ति ॥ १३ ॥ एता ह्येवेह नृभिरुपग-

सभामा यस प्रकार गाएका थिए ॥ ८ ॥ संसारको उत्पत्ति, स्थिति र लयका कारणस्वरूप जो प्रकृतिका सत्त्वादि गुण छन्, ती जसको दृष्टिपातले आफआफ्ना कार्यहरूमा समर्थ हुन्छन् जसको रूप अनन्त तथा अनादि छ, जो एक्लै सबै प्रपंचलाई धारण गरेका छन्, ती श्रीसंकर्षणका तत्त्व सहजै कसले जान्न सक्छ ? ॥ ९ ॥ जसमा कार्य-कारणरूपी यो सबै प्रपञ्च भासमान भइरहेको छ, जसको शूर-वीरतारूपिणी उदार लीला सिंहले ग्रहण गरेको छ, ती परम पराक्रमी भगवान्ले आफ्ना भक्तको चित्त चोर्नको निम्ति हामीमाथि ठूलो कृपा गरेर यो विशुद्ध सत्त्वमयी शरीर धारण गरिराखेका छन् ॥ १० ॥ कुनै दीन अथवा पापी पुरुष अकस्मात् आफ्नो कष्ट निवारणका लागि अथवा ठट्टामै पनि जसले गान गरेका गुणको कीर्तन गर्दछ भने त्यो कीर्तन ती मनुष्यहरूका सबै पाप तत्काल नष्ट गरिदिन्छ, ती शेष भगवान्लाई छाडेर कोही पनि अर्को कुन पुरुषको आश्रय लेला ? ॥११॥ जुन सहस्रमूर्धा संकर्षण भगवान्को यौटा मस्तकमा पर्वत, नदी र समुद्रादिले पूर्ण भूमण्डल रजकण झैं राखिएको छ र अनन्त हुनाले जसका पराक्रमको वार-पार छैन, ती सर्वव्यापक शेषजीको

541

पराक्रम हुने हजार जिब्रो हुने पुरुष पनि कसरी वर्णन गर्नसक्छ ? ॥१२॥ उनका पराक्रमको सीमा छैन, जो अत्यधिक गुण-प्रभावले युक्त छन्, ती भगवान् अनन्त यस्ता प्रभावशाली छन् कि सबै लोकका स्थितिको निमित्त रसातलको मूलमा स्थित भएर स्वतन्त्रताको साथ लीलाले नै पृथ्वीलाई धारण गरिरहन्छन् ॥१३॥ शुकदेवजी भन्दछन्–हे राजन् ! भोगहरूका इच्छुक पुरुषहरूलाई आफ्नाफ्ना कर्मअनुसार प्राप्तव्य भगवान्द्वारा रचित इनै गतिहरू हुन् । यिनको विषयमा मैले आफ्ना गुरुको मुखबाट जति कुरा सुनेथें, त्यो सबै सुनाइदिएँ ॥१४॥ हे राजन् ! प्रत्येक मनुष्यको प्रवृत्तिरूपी धर्मको परिणाममा प्राप्त हुने अनेक थरिका उच्च-नीच गति नै गति छन्, यो तिम्रो प्रश्नानुसार मैले भनेर सुनाएँ । अब अरु के भनौं ? ॥१५॥ इति श्रीमद्भागवते महापुराणे पञ्चम स्कन्धे नेपाली भाषाटीकायां पंचविंशतितमोऽध्यायः ॥२५॥ ( मनुष्यका कर्मानुसार नरकका जाति-नजाति गति )–राजा परीक्षितले सोधे–हे महर्षे ! व्यक्तिलाई प्राप्त हुने यी राम्रा-नराम्रा गतिहरूमा यस्ता विचित्रता किन हुन्छन् ? ॥१॥ शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! सबै पुरुष सत्त्व, रज तथा तम यी

न्तव्या गतयो यथाकर्म विनिर्मिता यथोपदेशमनुवर्णिताः कामान्कामयमानैः ॥ १४ ॥ एतावतीर्हि राजन्पुंसः प्रवृत्तिलक्षणस्य धर्मस्य विपाकगतय उच्चावचा विसदृशा यथाप्रश्नं व्याचख्ये किमन्यत्कथयाम इति ॥ १५ ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे भूविवरविध्युपवर्णनं नाम पञ्चविंशतितमोऽध्यायः ॥ २५ ॥ राजोवाच ॥ महर्ष एतद्वैचित्र्यं लोकस्य कथमिति ॥ १ ॥ ऋषिरुवाच ॥ त्रिगुणत्वात्कर्तुः श्रद्धया कर्मगतयः पृथग्विधाः सर्वा एव सर्वस्य तारतम्येन भवन्ति ॥ २ ॥ अथेदानीं प्रतिषिद्धलक्षणस्याधर्मस्य तथैव कर्तुः श्रद्धया वैसादृश्यात्कर्मफलं विसदृशं भवति या ह्यनाद्यविद्यया कृतकामानां तत्परिणामलक्षणाः सृतयः सहस्रशः प्रवृत्तास्तासां प्राचुर्येणानुवर्णयिष्यामः ॥ ३ ॥ राजोवाच ॥ नरका नाम भगवन्किं देशविशेषा अथवा बहिस्त्रिलोक्या आहोस्विदन्तराल इति ॥ ४ ॥ ऋषिरुवाच ॥ अन्तराल एव त्रिजगत्यास्तु दिशि दक्षिण-स्यामधस्ताद्भूमेरुपरिष्टाच्च जलाशायाद्यस्यामग्निष्वात्तादयः पितृगणा दिशि स्वानां गोत्राणां परमेण समाधिना सत्या एवाशिष आशासाना निवसन्ति ॥ ५ ॥ यत्र ह वाव भगवान्पितृराजो वैवस्वतः स्वविषयं प्रापितेषु स्वपुरुषैर्जन्तुषु संपरेतेषु यथाकर्मावद्यं दोषमेवानुल्लङ्घितभगवच्छासनः

तीनै गुणाले युक्त रहन्छन् । यसै निम्ति तिनको श्रद्धा पनि सत्त्वादि गुणले युक्त रहन्छ र तिनका कर्मको सबै गतिहरू अनेक थरिका हुन्छन् र ती सबैको तारतम्यको अनुसार प्राप्त हुन्छन् ॥२॥ यसै प्रकार निषिद्ध कर्म गर्नेहरूको पनि श्रद्धाको विषमताले विषम फल नै भोग्नुपर्दछ । अतः अनादि अविद्याको चक्रमा अल्झेर कामना गरिएका निषिद्ध कर्मका परिणाममा जो हजारौं नरक प्राप्त हुन्छन्, अब तिनको म विस्तारले वर्णन गर्दछु । राजा परीक्षितले सोधे–हे भगवन् ! ती नरक के पृथ्वीको नै कुनै देश विशेष छन् ? अथवा ती त्रिलोकबाट बाहिर छन् अथवा यसको भित्रै छन् ? ॥३॥४॥ शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! ती नरक त्रिलोकको भित्र नै दक्षिण दिशामा पृथ्वीभन्दा तल तथा जलभन्दा माथि विद्यमान छन् । त्यहाँ दिशामा अग्निष्वात्ता आदि पितर आफ्ना वंशजलाई आशिर्वाद दिंदै समाधिमा लीन रहन्छन् ॥५॥ त्यहाँ भगवान्को आज्ञा कहिल्यै पनि उल्लंघन नगर्ने

द्वारा भोगाउँछन्॥६॥हे राजन् ! केही विद्वान् एक्काइस नरक भन्दछन् । अतः नाम,रूप, लक्षणअनुसार म तिमीलाई ती सबैको वर्णनसुनाउँछु । तिनको नाम हो—तामिस्र, अन्धतामिस्र, रौरव, महारौरव, कुम्भीपाक, कालसूत्र, असिपत्र वन, सूकरमुख, अन्धकूप, कृमिभोजन, सन्दंश, तप्तभूमि, वज्र समान काँडा हुने शाल्मली वृक्ष, वैतरणी, पूयोद, प्राणरोध, विशसन, लालाभक्ष, सारमेयादन, अवीचि तथा अयःपान । यी बाहेक क्षारकर्दम, रक्षोगणभोजन, शूलप्रोत, दन्तशूक, वटरोधन, पर्यावर्तन तथा सूचीमुख—यी सात मिलेर जम्मा अट्ठाइस नरक अनेक थरिका यातनाहरूको भोगस्थान छन् ॥७॥ जो पुरुष अर्काको धन, सन्तान अथवा स्त्रीहरूको अपहरण गर्दछ, त्यो अतिशय डरलाग्दा यमदूतद्वारा कालपाशमा बाँधिएर हठात् तामिस्र नरका फालिन्छ । त्यस अन्धकारमय नरकमा भोजन-पानी नपाइने, कुटाई खाने तथा डर देखाउने आदि विविध प्रकारका यातनाहरूले पीडित जीव सान्है दुःखी भएर मूर्च्छा पर्दछ ॥८॥ त्यसै गरी जो पुरुष कुनै अर्को व्यक्तिलाई धोखा दिएर त्यसकी स्त्रीसित भोग गर्दछ, त्यो अन्धतामिस्र नरकमा गएर जाकिन्छ । त्यहाँ

सगणो दमं धारयति ॥ ६ ॥ तत्र हैके नरकानेकविंशति गणयन्ति । अथ तांस्ते राजन्नामरूपलक्षणतोऽनुक्रमिष्यामस्तामिस्रोऽन्धतामिस्रो रौरवो महारौरवः कुम्भीपाकः कालसूत्रमसिपत्रवनं सूकरमुखमन्धकूपः कृमिभोजनः संदंशस्तप्तभूमिर्वज्रकण्टकशाल्मली वैतरणी पूयोदः प्राणरोधो विशसनं लालाभक्षः सारमेयादनमवीचिरयःपानमिति ॥ किञ्च क्षारकर्दमो रक्षोगणभोजनः शूलप्रोतो दन्दशूको वटनिरोधनः पर्यावर्तनः सूचीमुखमित्यष्टाविंशतिनरका विविधयातनाभूमयः ॥ ७ ॥ तत्र यस्तु परवित्तापत्यकलत्राण्यपहरति स हि कालपाशबद्धो यमपुरुषैरति भयानकैस्तामिस्रे नरके बलान्निपात्यते अनशनानुदपानदण्डताडनसंतर्जनादिभिर्यात्यमानो जन्तुर्यत्र कश्मलमासादित एकदैव मूर्च्छामुपयाति तामिस्रप्राये ॥ ८ ॥ एवमेवान्धतामिस्रे यस्तु वञ्चयित्वा पुरुषं दारादीनुपभुङ्क्ते यत्र शरीरो निपात्यमानो यातनास्थो वेदनया नष्टमतिर्नष्टदृष्टिश्च भवति यथा वनस्पतिर्वृश्च्यमानमूलस्तस्मादन्धतामिस्रं तमुपदिशन्ति ॥ ९ ॥ यस्त्विह वा एतदहमिति ममेदमिति भूतद्रोहेण केवलं स्वकुटुम्बमेवानुदिनं प्रपुष्णाति स तदिह विहाय स्वयमेव तदशुभेन रौरवे निपतति ॥ १० ॥ ये त्विह यथैवामुना विहिंसिता जन्तवः परत्र यमयातनामुपगतं त एव रुरवो भूत्वा तथा तमेव विहिंसन्ति तस्माद्रौरवमित्याहुः । रुरुरिति सर्पादतिक्रूरसत्त्वस्यापदेशः ॥ ११ ॥ एवमेव महारौरवो यत्र

फ्याँकिएपछि यातनामा परेका जीव जरैबाट काटिएको वृक्ष झैं वेदनाले गर्दा आफ्नो सारा सुद्धि-बुद्धि बिर्सन्छ र त्यसलाई केही पनि देखिन्न । यसै निम्ति त्यसलाई 'अन्धतामिस्र' नरक भन्दछन् ॥९॥ जो जन यमलोकमा शरीरलाई नै 'म' र धन तथा स्त्री आदिलाई 'मेरो' यस्तो बुद्धिले प्राणीहरूका साथ द्रोह गर्दै प्रतिदिन आफ्ना कुटुम्बको भरण-पोषणमा नै अल्झिरहन्छ, त्यो शरीर त्यागेर आफ्ना पापले रौरव नरकमा पर्दछ ॥१०॥ हे राजन् ! यस संसारमा कुटुम्बको पोषण गर्नका लागि उसले जुन जीवको जस्तो हिंसा गरेको हुन्छ, परलोकमा यम-यातनामा प्राप्त भएपछि त्यसलाई उनै जीव 'रुरु' भएर उसै गरी कष्ट दिन्छन् । अतएव त्यसलाई 'रौरव' नरक भन्दछन् । 'रुरु' नामका जीव सर्पभन्दा पनि अधिक क्रूर स्वभावका हुन्छन् ॥११॥ यसै गरी महारौरव नरक छ । त्यसमा त्यो पुरुष जान्छ, जो केवल आफ्नै शरीर पाल्दछ । त्यहाँ पडिरहेका जीवहरूलाई आममांसहारी 'रुरु'

नामका जीवले टोक्छन् ॥१२॥ जुन महान क्रूर पुरुष यस लोकमा जीवित पशुहरू तथा पक्षिहरूलाई मार्दछन्, राक्षस भन्दा पनि निन्दित त्यस निर्दयी प्राणीलाई परलोकमा यमराजका दूत कुम्भीपाक नरकमा लगेर पाकिरहेको तेलमा खुद्दछन् ॥१३॥ जो प्राणी यस लोकमा पिता, ब्राह्मण अथवा वेदसित द्रोह गर्दछ, उसलाई यमदूत कालसूत्र नामको नरकमा पुर्‍याउँछन् । जसको घेरा दस हजार योजनको छ, जो तामाको बनेको छ, जसमा तातो मैदान छ र जो माथि सूर्य तथा तल अग्निको तापले अत्यन्त सन्तप्त रहन्छ । उहाँ त्यो भोका-प्यासले व्याकुल हुन्छ र उसको शरीर भित्र-बाहिरबाट डढ्न थाल्दछ । यस प्रकार पशुका शरीरमा जति रौं हुन्छन्, उति नै हजार वर्षसम्म त्यो उसै नरकमा कहिले बस्ने, कहिले पल्टने, कहिले उठ्ने चेष्टा गर्ने, कहिले उभिने र कहिले यता-उता दगुर्न थाल्दछ ॥१४॥ जो पुरुष कुनै विपत्ति आइपरे पनि आफ्नो वैदिक धर्म छाडेर अन्य पाखण्डपूर्ण धर्मको आश्रय लिन्छ, उसलाई यमदूत असिपत्रवन नरकमा लगेर कोर्राले ठटाउँछन्, त्यहाँ यता-उता दगुर्नाले गर्दा उसका सबै अंग तालवनको तरवार झैं पातहरूले

निपतितं पुरुषं क्रव्यादा नाम रुरवस्तं क्रव्येण घातयन्ति यः केवलं देहंभरः ॥ १२ ॥ यस्त्विह वा उग्रः पशून्पक्षिणो वा प्राणत उपरन्धयति तमकरुणं पुरुषादैरपि विगर्हितममुत्र यमानुचराः कुम्भीपाके तप्ततैले उपरन्धयन्ति ॥ १३ ॥ यस्त्विह पितृविप्रब्रह्मध्रुक्स कालसूत्रसंज्ञके नरके अयुतयोजनपरिमण्डले ताम्रमये तप्तखले उपर्यधस्तादग्न्यर्काभ्यामतितप्यमानेऽभिनिवेशितः क्षुत्पिपासाभ्यां च दह्यमानान्तर्बहिः शरीर आस्ते शेते चेष्टतेऽवतिष्ठति परिधावति च यावन्ति पशुरोमाणि तावद्वर्षसहस्राणि ॥ १४ ॥ यस्त्विह वै निजवेदपथादनापद्यपगतः पाखण्डं चोपगतस्तमसिपत्रवनं प्रवेश्य कशया प्रहरन्ति तत्र हासावितस्ततो धावमान उभयतो धारैस्तालवनासिपत्रैश्छिद्यमानसर्वाङ्गो हा हतोऽस्मीति परमया वेदनया मूर्च्छितः पदे पदे निपतति स्वधर्महा पाखण्डानुगतं फलं भुङ्क्ते ॥ १५ ॥ यस्त्विह वै राजा राजपुरुषो वा अदण्ड्ये दण्डं प्रणयति ब्राह्मणे वा शरीरदण्डं स पापीयान्नरकेऽमुत्र सूकरमुखे निपतति तत्रातिबलैर्विनिष्पिष्यमाणावयवो यथैवेहेक्षुखण्ड आर्तस्वरेण स्वनयन्क्वचिन्मूर्च्छितः कश्मलमुपगतो यथैवेहादृष्टदोषा उपरुद्धाः ॥ १६ ॥ यस्त्विह वै भूतानामीश्वरोपकल्पितवृत्तीनामविविक्तपरव्यथानां स्वयं पुरुषोपकल्पितवृत्तिर्विविक्तपरव्यथो व्यथामाचरति स परत्रान्धकूपे तदभिद्रोहेण निपतति तत्र हासौ तैर्जन्तुभिः पशुमृगपक्षिसरीसृपैर्मशकयूकामत्कुणमक्षिकादिभिर्ये के चाभि-

जस्मा दुवैतिर धार हुन्थे, तिनले छिन्न-भिन्न पार्दछन् । अनि त्यो 'हरे ! म मारिएँ' यस्तो भनेर कराउँदै दुःखां वेदनाले व्याकुल भएर पाइलपिच्छे लड्दै-उठ्दै गर्दछ । जो पुरुष आफ्नो धर्म त्यागिदिन्छ, त्यसलाई पाखण्ड मार्गमा हिंडेको फल यसै गरी भोग्नु पर्दछ ॥१५॥ जो पुरुष राजा वा राजाको कर्मचारी भएर कुनै दण्डको अयोग्य पुरुषलाई दण्ड दिन्छ अथवा ब्राह्मणलाई शारीरिक दण्ड दिन्छ, त्यो पापी परलोकमा शूकरमुख नरकमा पर्दछ । त्यहाँ महाबली यमदूतहरू द्वारा आफ्नो अंग थिलथिलो पारिनाले त्यो तिल झैं कोलमा पेलिदो छँदो आर्तस्वरले कराउँछ र अत्यन्त पीडित भएर यस प्रकार अचेत हुन्छ, जस्तै यसलोकमा राजा द्वारा झ्यालखानमा थुनिएको अपराधी प्राणी कष्टले मूर्च्छा पर्दछ ॥१६॥ परमेश्वरले ब्राह्मणादि वर्ण तथा आश्रमको अनुसार जसको विधिनिषेधमय वृत्ति तोकिदिएको छ र जो विवेकपूर्वक अर्काको दुःख बुझ्ने खालको हुन्छ, त्यो पुरुष

पनि जसको परमेश्वरले नै रक्तपानादि वृत्ति बनाइदिएका छन् र जो अर्काको कष्ट बुझ्दैनन्, ती उडुस आदि जीवको यदि हिंसा गर्दछ भने त्यो द्रोह गरेको पापले अन्धकूप नरकमा
पर्दछ । यहाँ जसको द्रोह गरेको छ, ती पशु, मृग, पक्षी, सरीसृप, लामखुट्टे उडुस र माखा आदि जीवहरू द्वारा चारैतिरबाट त्यो घोर अन्धकारमा निद्रा र शान्ति भंग हुनाले गर्दा
त्यसलाई एकछिन पनि चैन वा शान्ति प्राप्त हुँदैन र त्यो यस प्रकार छटपटाउन थाल्दछ, जस्तै कुनै रोगग्रस्त शरीरमा जीव छटपटाउँछ ॥१७॥ यमलोकमा जो मनुष्य विना
पञ्चमहायज्ञ गरेरै तथा जे जति प्राप्त छ त्यो बालक, वृद्ध र अतिथि आदिलाई खान नदिईकन स्वयं खाइदिन्छ, त्यसलाई कागको समान कहिएको छ । त्यो महाअधम प्राणी पर-
लोकमा कृमिभोजन नामक भीषण नरकमा जाकिन्छ । त्यहाँ त्यो एक लाख योजन विस्तार भएको कीराहरूको कुण्डमा कीरा बन्दछ र जबसम्म त्यो हवन नगरी भोजन गर्ने भएको प्राणी
पूरा प्रायश्चित गरिसक्तैन, तबसम्म ती कीराहरूले टोकिइरहन्छ र करुण क्रन्दन गर्दो छँदो आफूलाई महान् कष्टमा पीडित पारिरहन्छ ॥१८॥ हे राजन् ! जो प्राणी यस लोकमा

द्रुग्धास्तैः सर्वतोऽभिद्रुह्यमाणस्तमसि विहतनिद्रानिर्वृतिरलब्धावस्थानः परिक्रामति यथा कुशरीरे जीवः ॥ १७ ॥ यस्त्विह वा असंविभज्याश्नाति
यत्किञ्चनोपनतमनिर्मितपञ्चयज्ञो वायससंस्तुतः स परत्र कृमिभोजने नरकाधमे निपतति । तत्र शतसहस्रयोजने कृमिकुण्डे कृमिभूतः स्वयं कृमिभिरेव
भक्ष्यमाणः कृमिभोजने यावत्तदप्रत्ताप्रहुतादोऽनिर्वेशमात्मानं यातयते ॥ १८ ॥ यस्त्विह वै स्तेयेन बलाद्वा हिरण्यरत्नादीनि ब्राह्मणस्य वाऽपहरत्य-
न्यस्य वाऽनापदि पुरुषस्तममुत्र राजन् यमपुरुषा अयस्मयैरग्निपिण्डैः संदंशैस्त्वचि निष्कुषन्ति ॥ १९ ॥ यस्त्विह वा अगम्यां स्त्रियमगम्यं वा पुरुषं
योषिदभिगच्छति तावमुत्र कशया ताडयन्तस्तिग्मया सूर्म्या लोहमय्या पुरुषमालिङ्गयन्ति स्त्रियं च पुरुषरूपया सूर्म्या ॥ २० ॥ यस्त्विह वै
सर्वाभिगमस्तममुत्र निरये वर्तमानं वज्रकण्टकशाल्मलीमारोप्य निष्कर्षन्ति ॥ २१ ॥ ये त्विह वै राजन्या राजपुरुषा वा अपाखण्डा धर्मसेतू-
न्भिन्दन्ति ते संपरेत्य वैतरण्यां निपतन्ति । भिन्नमर्यादास्तस्यां निरयपरिखाभूतायां नद्यां यादोगणैरितस्ततो भक्ष्यमाणा आत्मना न वियुज्यमाना-
श्चासुभिरुह्यमानाः स्वाघेन कर्मपाकमनुस्मरन्तो विण्मूत्रपूयशोणितकेशनखास्थिमेदोमांसवसावाहिन्यामुपतप्यन्ते ॥ २२ ॥ ये त्विह वै वृषलीपतयो

कुनै प्रकारको विपत्ति नआए पनि चोरी तथा बलात्कारले ब्राह्मण वा कुनै अन्य पुरुषको सुवर्ण तथा रत्नादिको अपहरण गर्दछ, त्यसलाई परलोकमा यमदूत फलामको तताएको
गोलाले पोल्दै र सँडासोले त्यसको छालार लुछ्दछन् ॥१९॥ यस लोकमा यदि कोही पुरुष अगम्य स्त्रीसित सम्भोग गर्दछ अथवा कोही स्त्री अगम्य पुरुषसित व्यभिचार गर्दछे भने
त्यसलाई यमदूत कोर्राले पिट्तछन् तथा तातो पारेको स्त्री-प्रतिमासित स्त्रीलाई र तताएको पुरुष-प्रतिमा पुरुषलाई आलिङ्गन गराउँछन् ॥२०॥ जो प्राणी यसलोकमा पशुआदिसित व्यभि-
चार गर्दछ भने त्यसलाई परलोकमा नरक प्राप्त भएपछि वज्रको समान कठोर काँढाले पूर्ण सीमलको वृक्षमाथि चढाएर तलतिर तान्दछन् ॥२१॥ जो राजा वा राजपुरुष यस
लोकमा कुनै श्रेष्ठ कुलमा जन्म पाएर पनि धर्ममर्यादको उच्छेद गर्दछन्, ती मरेपछि मर्यादाहीन भएर वैतरणीनदीमा पर्दछ, जुन कि नरकको खाल्डो झैं बनेको हुन्छ । त्यहाँ उसलाई
यता-उताबाट त्यहाँ भएका जलचर जीव लुछ्दछन्, तापनि त्यसको शरीरको अन्त्य हुन पाउन्न । त्यो आफ्ना पापले गर्दा विष्ठा, मूत्र, पीप, रगत, कपाल, नङ्, अस्थि, मेदा तथा मांसो

आदिले भरिएको त्यो घृणित नदीमा बग्दै पापी त्यसलाई अपना कर्मको फल मानेर अत्यन्त सन्तप्त हुन्छन् ॥२२॥ जो व्यक्ति शौच तथा आचारका नियमले भ्रष्ट भएर तथा लज्जा त्यागेर यस लोकमा शूद्राका पति बनेर पशुजस्तै आचरण गर्दछन्, ती पनि मरेपछि पीप, विष्ठा, मूत्र, कफ तथा मलले भरिएको समुद्रमा परेर ती अतिशय घृणित वस्तुहरूको नै भक्षण गर्दछन् ॥ २३ ॥ जो ब्राह्मणादि उच्चवर्गका व्यक्ति यस लोकमा कुकुर तथा गधा आदि निन्द्य जीव पाल्दछन् र शिकार खेल्नमा लागिरन्छन् तथा यज्ञादि विहित कर्मको अतिरिक्त अन्यत्र पनि पशुहरूको वध गर्दछन्, ती मरेपछि यमदूतले लक्ष्य बनाई बाणहरूले छेड्दछन् ॥२४॥ जो पाखण्डी पाखण्डपूर्ण यज्ञमा विहित कर्मको अतिरिक्त अन्यत्र तिनलाई परलोकमा वैशस नरकमा हालेर त्यहाँका अधिकारी तिनलाई ठूलो कष्ट दिएर काट्तछन् ॥२५॥ जो पुरुष द्विजाति भएर पनि कामातुर भई आफ्नै वर्णकी कुनै स्त्रीलाई वीर्यपान गराउछ भने त्यस पापीलाई परलोकमा यमदूत रेतकुल्या नामक नरकमा हालेर उसलाई पनि वीर्य नै ख्वाउछन्॥२६॥ जो चोर, राजा तथा राजपुरुष यस लोकमा कसैको घरमा आगो लगाइ-

नष्टशौचाचारनियमास्त्यक्तलज्जाः पशुचर्यां चरन्ति ते चापि प्रेत्य पूयविण्मूत्रश्लेष्ममलापूर्णार्णवे निपतन्ति तदेवातिबीभत्सितमश्नन्ति ॥ २३ ॥ ये त्विह वै श्वगर्दभपतयो ब्राह्मणादयो मृगयाविहारा अतीर्थे च मृगान्निघ्नन्ति तानपि संपरेताँल्लक्ष्यभूतान्यमपुरुषा इषुभिर्विध्यन्ति ॥ २४ ॥ ये त्विह वै दाम्भिका दम्भयज्ञेषु पशून्विशसन्ति तानमुष्मिँल्लोके वैशसे नरके पतितान्निरयपतयो यातयित्वा विशसन्ति ॥ २५ ॥ यस्त्विह वै सवर्णां भार्यां द्विजो रेतः पाययति काममोहितस्तं पापकृतममुत्र रेतःकुल्यायां पातयित्वा रेतः संपाययन्ति ॥ २६ ॥ ये त्विह वै दस्यवोऽग्निदा गरदा ग्रामान् सार्थान्वा विलुम्पन्ति राजानो राजभटा वा तांश्चापि हि परेत्य यमदूता वज्रदंष्ट्राः श्वानः सप्त शतानि विंशतिश्च सरभसं खादन्ति ॥२७ ॥ यस्त्विह वा अनृतं वदति साक्ष्ये द्रव्यविनिमये दाने वा कथञ्चित्स वै प्रेत्य नरकेऽवीचिमत्यधःशिरा निरवकाशे योजनशतोच्छ्रायाद्गिरिमूर्ध्नः संपात्यते । यत्र जलमिव स्थलमश्मपृष्ठमवभासते तदवीचिमत्तिलशो विशीर्यमाणशरीरो न म्रियमाणः पुनरारोपितो निपतति ॥ २८ ॥ यस्त्विह वै विप्रो राजन्यो वैश्यो वा सोमपीथस्तत्कलत्रं वा सुरां व्रतस्थोऽपि वा पिबति प्रमादतस्तेषां निरयं नीतानामुरसि पदाऽऽक्रम्यास्ये वह्निना द्रवमाणं कार्ष्णायसं निषिञ्चन्ति ॥ २९ ॥ अथ च यस्त्विह वा आत्मसंभावेन स्वयमधो जन्मतपोविद्याचारवर्णाश्रमवतो वरीयसो न

दिन्छ, कसैलाई विष ख्वाउँछन् अथवा गाउमा वा व्यापारीहरूको समूहलाई लुट्तछन्, तिनलाई पनि मरेपछि वज्र झैं दाँत हुने सात सय बीस कुकुरको रूप हुने यमदूतले चारैतिरबाट टोक्तछन् ॥ २७ ॥ जो प्राणी कसैको गवाही दिनमा, धनको आदान-प्रदान अथवा दान दिने बेलामा कुनै प्रकारको झूटो बोल्दछ, त्यो मरेपछि आधार शून्य अवीचिमन नरकमा पुग्याइन्छ र सय योजन अग्लो पर्वतको टाकुराबाट उँधो मुण्टो पारेर घुचेटिन्छ। जहाँ स्थलको ढुङ्गे जमीन नै जल जस्तै देखिन्छ, त्यो घोर अवीचिमन् नामको नरक कहिन्छ। उहाँ घुचेटिदिएपछि शरीरको टुक्रा-टुक्रा पार्दा पनि त्यो मर्दैन र उसलाई बारम्बार माथि लगेर फेरि तल खसालिदिन्छन् ॥ २८ ॥ जो सोमरस ( रक्सी ) पिउने ब्राह्मण-क्षत्रिय, वैश्य वा तिनका स्त्री यज्ञ-व्रत ग्रहण गरेर पनि प्रमादवश रक्सी खान्छे, उसलाई यमदूत नरकमा लैजान्छन् र त्यसको छातीमा खुट्टाले थिचेर उसको मुखमा आगोले

पगालेको तरल र तातो फलाम हालिदिन्छन् ॥२९॥ जो प्राणी यस लोकमा निम्न श्रेणीको भएर पनि आफूलाई ठूलो छान्दछ र जन्म, तप, विद्या, आचार, वर्ण वा आश्रममा आफू-मन्दा ठूलाको विशेष सत्कार गर्दैन, त्यो जीवित पनि मुर्दाकै समान छ। त्यो प्राणी मरेपछि क्षारकर्दम नामको नरकमा उँधो मुण्टो पारेर खसालिन्छ र त्यहाँ उसलाई धेरै पीडा भोगाउँछन् ॥ ३० ॥ यस लोकमा जो पुरुष नरमेधादि यज्ञद्वारा यजन गर्दछन् तथा जो स्त्रीहरू पुरुष-पशुलाई खान्छन्, उनलाई तिनको समान ती मारिएका जीवनै यमलोकमा राक्षस बनेर विविध प्रकारका यातना दिन्छन् र व्याधा जस्तै आफ्ना शस्त्रले काटेर उसको रगत पिउँछन्। जस्तै ती मनुष्यभोजी पुरुष यमलोकमा तिनको मांस खाएर आनन्दित हुन्थे, त्यसै गरी ती उनको रगत पिएर आनन्दित भई नाच-गान गर्दछन् ॥ ३१ ॥ जो पुरुष यसलोकमा वन या गाउँका निरपराध जीवलाई जो आफ्नो प्राणको रक्षा चाहन्छन् तिन-लाई अनेक उपायले विश्वास पारेर आफ्नो नजीक आएपछि धोखाले समातेर किला वा धागो आदिमा उनेर खेल गर्दै कष्ट दिन्छन्, ती मरेपछि यम-यातना भोग्दै शूलिमा रोपिन्छन्

बहु मन्येत स मृतक एव मृत्वा क्षारकर्दमे निरयेऽवाक्शिरा निपातितो दुरन्ता यातना ह्यश्नुते ॥ ३० ॥ ये त्विह वै पुरुषमेधेन पुरुषा यजन्ते याश्च स्त्रियो नृपशून्खादन्ति तांश्च ते पशव एव निहता यमसदने यातयन्तो रक्षोगणाः सौनिका इव स्वधितिनाऽवदार्यासृक् पिबन्ति नृत्यन्ति च गायन्ति च हृष्यमाणा यथेह पुरुषादाः ॥ ३१ ॥ ये त्विह वा अनागसोऽरण्ये ग्रामे वा वैश्रम्भकैरुपसृतानुपविश्रम्भय्य जिजीविषूञ्छूलसूत्रा-दिषूपप्रोतान्क्रीडनकतया यातयन्ति तेऽपि प्रेत्य यमयातनासु शूलादिषु प्रोतात्मानः क्षुत्तृड्भ्यां चाभिहताः कङ्कवटादिभिश्चेतस्ततस्तिग्मतुण्डैराह-न्यमाना आत्मशमलं स्मरन्ति ॥ ३२ ॥ ये त्विह वै भूतान्युद्वेजयन्ति नरा उल्बणस्वभावा यथा दन्दशूकास्तेऽपि प्रेत्य नरके दन्दशूकाख्ये निपतन्ति यत्र नृप दन्दशूकाः पञ्चमुखाः सप्तमुखा उपसृत्य ग्रसन्ति यथा बिलेशयान् ॥ ३३ ॥ ये त्विह वा अन्धावटकुसूलगुहादिषु भूतानि निरुन्धन्ति तथाऽमुत्र तेष्वेवोपवेश्य सगरेण वह्निना धूमेन निरुन्धति ॥ ३४ ॥ यस्त्विह वा अतिथीनभ्यागतान्वा गृहपतिरसकृदुपगतमन्यु-र्दिधक्षुरिव पापेन चक्षुषा निरीक्षते तस्य चापि निरये पापदृष्टेरक्षिणी वज्रतुण्डा गृध्राः कङ्ककाकवटादयः प्रसह्योरुबलादुत्पाटयन्ति ॥ ३५ ॥ यस्त्विह वा आढ्याभिमतिरहंकृतिस्तिर्यक्प्रेक्षः सर्वतोऽभिविशङ्की अर्थव्ययनाशचिन्तया परिशुष्यमाणहृदयवदनो निर्वृतिमनवगतो ग्रह इवार्थम-

भोक-प्यासले व्याकुल तथा चील-गिद्ध आदि तीखो चुच्चो हुने पक्षिहरूद्वारा लुछिएपछि ती आफ्ना पुराना पापहरू स्मरण गर्दछन्! जो यस लोकमा सर्प समान उग्र स्वभाव भएका प्राणीहरूलाई दुःख दिन्छन्, ती स्वयं पनि मरेपछि दन्दशूक नरकमा जाकिन्छन्। जहाँ पाँच-पाँच र सात-सात मुखका सर्प तिनको नगीच आएर तिनलाई मूसा जस्तै निलि-दिन्छन् ॥ ३३ ॥ जो व्यक्ति यहाँ अन्य प्राणीलाई अँध्यारो खाडल, कोठा वा ब्यालखानेमा थुनिदिन्छन्, तिनलाई यमदूत मरेपछि त्यस्तै नै स्थानमा थुनेर आगोबाट निस्कने धूवाँ-मा राख्दछन् ॥ ३४ ॥ जो गृहस्थ पुरुष यस लोकमा अतिथि तथा अभ्यागतहरूको तर्फ बारम्बार रिसाई-मानौं निलाई भस्म पार्ने खोज्दैछ—यस्तो कुटिल दृष्टिले हेर्दछ भने नरकमा गएपछि त्यस पाप दृष्टि गर्ने व्यक्तिका आँखा गृध्र, कंक तथा वक आदि वज्र समान तीखा चुच्चो हुने पक्षी बलपूर्वक झिकेर लिन्छन् ॥ ३५ ॥ यस लोकमा जो पुरुष आफूलाई धनाढ्य

मानेर अभिमानपूर्वक सबैलाई बाङ्गो नजरले हेर्दछ, जसको सबैमा सन्देह भनिरहन्छ, धनको व्यय र नाशको चिन्ताले जसको हृदय तथा मुख सुखिरहन्छ, अतएव केही पनि सुख नमानेर जो यक्ष जस्तै धनको सुरक्षामा नै तल्लीन रहन्छ, त्यो पनि मरेपछि उसको अर्जन, वर्धन तथा संरक्षणको चिन्ताले ग्रस्त हुँदै सूचीमुख नामको नरकमा जाकिन्छ। त्यहाँ त्यो पापी पुरुषका सबै अङ्ग यमदूतले दर्जीकार जस्तै सीयो र धागोले सिउँछन् ॥ ३६ ॥ हे राजन् ! त्यस यमलोकमा यस प्रकारका सयौं र हजारौं नरकहरू छन्। ती सबैमा, जसको यहाँ वर्णन गरियो र जसको विषयमा केही पनि भनिएको छैन, ती सबै अधर्मी जीव आफ्ना कर्म अनुसार यमलोक जान्छन्। यसै प्रकार सबै धर्मात्मा स्वर्गादि अन्य लोकमा जान्छन् र पाप-पुण्य क्षीण भएपछि ती फेरि यहा लोकमा फर्कन्छन् ॥३७॥ हे राजन् ! निवृत्ति मार्गको वर्णन त मैले द्वितीयस्कन्धमा नै गरिसकें। पुराणमा जसलाई चौध भुवन भनेर वर्णन गरिएको छ, त्यो ब्रह्माण्डकोश यति नै ठूलो छ। साक्षात् परम पुरुष भगवान् नारायण आफ्नो मायाका गुणले युक्त स्थूल रूप मैले भनिसकें। जो प्राणी यसलाई पढ्छन्,

भिरक्षति स चापि प्रेत्य तदुत्पादनोत्कर्षणसंरक्षणशमलग्रहः सूचीमुखे नरके निपतति यत्र ह वित्तग्रहं पापपुरुषं धर्मराजपुरुषा वायका इव सर्वतोऽङ्गेषु सूत्रैः परिवयन्ति ॥ ३६ ॥ एवंविधा नरका यमालये सन्ति शतशः सहस्रशस्तेषु च सर्वेषु सर्व एवाधर्मवर्तिनो ये केचिदिहोदिता अनुदिताश्चावनिपते पर्यायेण विशन्ति तथैव धर्मानुवर्तिन इतरत्र इह तु पुनर्भवे त उभयशेषाभ्यां निविशन्ति ॥ ३७ ॥ निवृत्तिलक्षणमार्ग आदावेव व्याख्यातः ॥ एतावानेवाण्डकोशो यश्चतुर्दशधा पुराणेषु विकल्पित उपगीयते यत्तद्भगवतो नारायणस्य साक्षान्महापुरुषस्य स्थविष्ठं रूपमात्ममायागुणमयमनुवर्णितमादृतः पठति शृणोति श्रावयति स उपगेयं भगवतः परमात्मनोऽग्राह्यमपि श्रद्धाभक्तिविशुद्धबुद्धिर्वेद ॥ ३८ ॥ श्रुत्वा स्थूलं तथा सूक्ष्मं रूपं भगवतो यतिः ॥ स्थूले निर्जितमात्मानं शनैः सूक्ष्मं धिया नयेदिति ॥ ३९ ॥ भूद्वीपवर्षसरिदद्रिनभःसमुद्रपातालदिङ्नरकभागणलोकसंस्था ॥ गीता मया तव नृपाद्भुतमीश्वरस्य स्थूलं वपुः सकलजीवनिकायधाम ॥ ४० ॥ इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां पञ्चमस्कन्धे नरकानुवर्णनं नाम षड्विंशतितोऽध्यायः ॥ २६ ॥

सुन्दछन्, वा सुनाउँछन् ती श्रद्धा-भक्तिले गर्दा शुद्ध बुद्धि भएर अनधिकारी भए पनि उपनिषद्हरू द्वारा वर्णन गरिएका भगवान्‌को स्वरूप चिन्न सक्दछन् ॥ ३८ ॥ यतिको कर्तव्य हो—भगवान्‌को स्थूल तथा सूक्ष्म दुवै रूपको श्रवण गरेर पहिले स्थूल रूपमा आफ्नो चित्त स्थिर पारोस्। अनि विस्तार-विस्तार मन हटाएर सूक्ष्म रूपमा लगाओस् ॥ ३९ ॥ हे राजन् ! मैले पृथ्वी, द्वीप, वर्ष, नदी, पर्वत, आकाश, समुद्र, पाताल, दिशा, नरक, ज्योतिर्गण तथा सबै लोकको स्थिति वर्णन गरिदिएँ। यही समस्त जीव-समुदायको आश्रय तथा भगवान्‌को अतिशय अद्भुत र स्थूल शरीर हो ॥ ४० ॥ इति श्रीमद्भागवते महापुराणे पञ्चमस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषाटीकायां षड्विंशतितमोऽध्यायः ॥ २६ ॥

समाप्तोऽयं पञ्चमः स्कन्धः।

इति 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते पञ्चमः स्कन्धः समाप्तः ।

अथ 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते षष्ठः स्कन्धः प्रारभ्यते।

श्रीहरिः ( अजामिलोपाख्यान )—यति कथा सुनिसकेपछि राजा परीक्षितले भने—हे भगवन् ! जुन बाटोबाट हिंडेर साधक क्रमशः अर्चि आदि मार्गबाट ब्रह्मलोकमा पुग्दछ र उहाँ ब्रह्माको सृष्टिबाट मोक्ष प्राप्त गर्दछ, त्यो निवृत्ति मार्ग हजुरले द्वितीय स्कन्धमै सुनाउनु भयो ॥१॥ हे मुने ! जसद्वारा प्राणीलाई त्रिगुणात्मक स्वर्गादि नै प्राप्त हुन्छन् र जसको कारण निवृत्तिका बन्धनमा बाँधिएको पुरुष पुनः पुनः जन्म-मरणको चक्रमा परिरहनु पर्दछ, त्यो प्रवृत्ति मार्गको पनि हजुरले तृतीयस्कन्धमा वर्णन गरिसक्नु भयो ॥२॥ यी सबको अतिरिक्त हजुरले अधर्मस्वरूप अनेक नरकको र जसको आदिमा स्वायम्भुव मनु भएका थिए,त्यो प्रथम मन्वन्तरको वृत्तान्त सुनाउनुभयो ॥३॥ प्रियव्रत र उत्तानपादको वंश, उनको चरित्र एवं द्वीप, वर्ष, पर्वत, नदी, उद्यान र वृक्षादिको पनि हजुरले निरूपण गरिदिनुभयो ॥४॥ विभाग, लक्षण र परिमाणसहित सबै भूमण्डलको स्थिति, नक्षत्रगण, अतलादि भूविवर

ॐ नमो भगवते वासुदेवाय ॥ राजोवाच ॥ निवृत्तिमार्गः कथित आदौ भगवता यथा ॥ क्रमयोगोपलब्धेन ब्रह्मणा यदसंसृतिः ॥ १ ॥
प्रवृत्तिलक्षणश्चैव त्रैगुण्यविषयो मुने । योऽसावलीनप्रकृतेर्गुणसर्गः पुनः पुनः ॥ २ ॥ अधर्मलक्षणा नाना नरकाश्चानुवर्णिताः ॥ मन्वन्तरश्च
व्याख्यात आद्यः स्वायम्भुवो यतः ॥ ३ ॥ प्रियव्रतोत्तानपदोर्वंशस्तच्चरितानि च ॥ द्वीपवर्षसमुद्राद्रिनद्युद्यानवनस्पतीन् ॥ ४ ॥ धरामंडलसंस्थानं
भागलक्षणमानतः ॥ ज्योतिषां विवराणां च यथेदमसृजद्विभुः ॥५॥ अधुनेह महाभाग यथैव नरकान्नरः ॥ नानोग्रयातनान्नेयात्तन्मे व्याख्यातुमर्हसि
॥ ६ ॥ श्रीशुक उवाच ॥ न चेदिहैवापचितिं यथांहसः कृतस्य कुर्यान्मनउक्तिपाणिभिः ॥ ध्रुवं स वै प्रेत्य नरकानुपैति ये कीर्तिता भवतस्तिग्मया-
तनाः ॥ ७ ॥ तस्मात्पुरैवाश्विह पापनिष्कृतौ यतेत मृत्योरविपद्यतात्मना ॥ दोषस्य दृष्ट्वा गुरुलाघवं यथा भिषक्चिकित्सेत रुजां निदानवित् ॥८॥
राजोवाच ॥ दृष्टश्रुताभ्यां यत्पापं जानन्नप्यात्मनोऽहितम् ॥ करोति भूयो विवशः प्रायश्चित्तमथो कथम् ॥ ९ ॥ क्वचिन्निवर्ततेऽभद्रात्क्वचिच्च-

तथा जसरी भगवान्‌ले यी सबैको रचना गरेका थिए, त्यो सबै पनि हजुरले मलाई सुनाउनुभयो ॥५॥ हे महाभाग ! अब हजुर यो उपाय भन्नुहवस् जसले विचित्र र डरलाग्दो यातनाले परिपूर्ण नरकमा मनुष्यले जान नपरोस् ॥६॥ शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! जो प्राणी मन, वचन र शरीरले गरेका *विषय भोगरूपी पापको प्रायश्चित्त यसै जन्ममा गरिसक्तैन भने त्यसले मरेपछि मैले भनेका डरलाग्दा यातनापूर्ण नरकहरूमा अवश्य जानुपर्दछ ॥७॥ अतः जस्तै रोगको निदान गर्न जान्ने वैद्य दोषको गौरव-लाघव हेरेर नै रोगीको चिकित्सा गर्दछ, त्यस्तै मनुष्य मृत्यु-मुखमा जानुभन्दा पहिल्यै जबसम्म उसको शरीर क्षीण हुँदैन, त्योभन्दा पहिल्यै पापबाट छुट्ने उपाय गरिहालोस् ॥८॥ राजाले सोधे—हे मुने ! प्रत्यक्ष देखेको र शास्त्रादि द्वारा सुनेको दुःखहरूबाट पापलाई आफ्नो परम शत्रु जानेर पनि जो पुरुष विवश भएर बराबर त्यसैमा प्रवृत्त भइरहन्छ, त्यसका पापको प्रायश्चित्त कसरी हुनसक्ला ॥९॥

* उदाहरण ( विषय भोग हैरान पार्छन् )—दुइ जना मित्र कतै गइरहेका थिए । तिनमा मोटा अन्धो र अर्को आँखा देख्ने थियो । अलि पर पुगेपछि ठूलो आँधी आयो, त्यसले केही पनि देख्न कठिन भयो । आँखामा धेरै धूलो भरियो, त्यसले गर्दा आँखा खुल्दैनथे । आँखा देख्ने मनुष्य पनि हैरान भयो । आँधी थामियो, अनि दुबैले शरीर र आँखामा परेको धूलो पानीले सफा गरे । अब आँखा देख्ने व्यक्ति त देख्न लाग्यो, तर अन्धो चाहिं आँधी समाप्त हुँदा पनि देख्न सकेन । यस दृष्टान्तलेले बुझ्नुपर्दछ—भक्त र अभक्त दुबै संसार-पथमा गइरहेका छन् । त्यसमा विषय भोगको आँधी आउँछ । त्यो दुबैमा समान रूपले प्रहार गर्दछ । विचारवान् भक्त पुरुषले आँधी शान्त भएपछि आत्मज्ञान भएर आउँछ, तर अभक्तलाई विषयभोग शान्त भइसकेर पनि आत्मज्ञान प्राप्त हुँदैन । अतः अज्ञानी मनुष्य विषयमै भुलिरहन्छ ।

५२१

यदि त्यो कहिले प्रायश्चित्तादि द्वारा त्यसबाट छुटकारा पाए पनि फेरि पाप गर्न थाल्दछ । अतः त्यसको प्रायश्चित्तलाई त म हात्तीको स्नान जस्तै व्यर्थ मान्दछु ॥१०॥
शुकदेवजी भन्दछन्–हे राजन् ! कृच्छ्रचान्द्रायण आदि व्रतहरू द्वारा प्रायश्चित्त गर्नाले पापकर्महरूको सधैंको निम्ति नाश हुन सक्तैन, किनकि तिनको अधिकारी अज्ञानी नै हुन्छ ।
अविद्याको नाश नहुनाले त्योसित फेरि पाप-कर्म हुँदै रहन्छन् । यसनिम्ति सच्चा प्रायश्चित्त केवल भगवत्स्वरूपको ज्ञान नै हो ॥११॥ जो पुरुष सदा पथ्यान्न नै खान्छ, त्यसमाथि रोग-
हरूको आक्रमण हुन सक्तैन । त्यसै प्रकार हे राजन् ! नियमानुसार आचरण गर्ने प्राणी बिस्तार-बिस्तार कल्याण प्राप्तगर्नमा समर्थ हुन्छ ॥१२॥ जस्तै बाँसको वनमा उठेको दावानल
सबै पोलेर भस्म पारिदिन्छ, त्यस्तै धर्मज्ञ तथा श्रद्धावान् धीर पुरुष तप, ब्रह्मचर्य, शम, दम, दान, सत्य, शौच, यम र नियम–यी नौ साधन द्वारा आफ्नो मन, वाणी तथा
शरीर द्वारा गरिएका ठूला-ठूला पापलाई पनि नष्ट पारिदिन्छ ॥१३॥१४॥ केही भगवत्परायण पुरुष एकमात्र भक्तिकै द्वारा आफ्ना सबै पापको उसै गरी ध्वंस गरिदिन्छन्

रति तत्पुनः ॥ प्रायश्चित्तमतोऽपार्थं मन्ये कुञ्जरशौचवत् ॥१०॥ श्रीशुक उवाच ॥ कर्मणा कर्मनिर्हारो न ह्यात्यन्तिक इष्यते ॥ अविद्वदधिकारित्वा-
त्प्रायश्चित्तं विमर्शनम् ॥ ११ ॥ नाश्नतः पथ्यमेवान्नं व्याधयोऽभिभवन्ति हि ॥ एवं नियमकृद्राजञ्छनैः क्षेमाय कल्पते ॥ १२ ॥ तपसा ब्रह्मचर्येण
शमेन च दमेन च ॥ त्यागेन सत्यशौचाभ्यां यमेन नियमेन च ॥ १३ ॥ देहवाग्बुद्धिजं धीरा धर्मज्ञाः श्रद्धयान्विताः ॥ क्षिपन्त्यघं महदपि
वेणुगुल्ममिवानलः ॥ १४ ॥ केचित्केवलया भक्त्या वासुदेवपरायणाः ॥ अघं धुन्वन्ति कार्त्स्न्येन नीहारमिव भास्करः ॥ १५ ॥ न तथा
ह्यघवान्राजन्पूयेत तपआदिभिः ॥ यथा कृष्णार्पितप्राणस्तत्पूरुषनिषेवया ॥ १६ ॥ सध्रीचीनो ह्ययं लोके पन्थाः क्षेमोऽकुतोभयः ॥ सुशीलाः साधवो
यत्र नारायणपरायणाः ॥ १७ ॥ प्रायश्चित्तानि चीर्णानि नारायणपराङ्मुखम् ॥ न निष्पुनन्ति राजेन्द्र सुराकुम्भमिवापगाः ॥ १८ ॥ सकृन्मनः
कृष्णपदारविन्दयोर्निवेशितं तद्गुणरागि यैरिह ॥ न ते यमं पाशभृतश्च तद्भटान्स्वप्नेऽपि पश्यन्ति हि चीर्णनिष्कृताः ॥ १९ ॥ अत्र चोदाहर-
न्तीममितिहासं पुरातनम् ॥ दूतानां विष्णुयमयोः संवादस्तं निबोध मे ॥ २० ॥ कान्यकुब्जे द्विजः कश्चिद्दासीपतिरजामिलः ॥ नाम्ना नष्टसदा-
चारो दास्याः संसर्गदूषितः ॥ २१ ॥ बन्द्यक्षकैतवैश्चौर्यैर्गर्हितां वृत्तिमास्थितः ॥ बिभ्रत्कुटुम्बमशुचिर्यातयामास देहिनः ॥ २२ ॥ एवं निवसतस्त-

जसरी सूर्यले कुहिरो नष्ट पारिदिन्छन् ॥१५॥ हे राजन् ! पापी पुरुष आफ्ना सबै इन्द्रिय भगवान्मा लगाएर तथा उनका भक्तजनको संगत गरेर जसरी शुद्ध हुन्छ, त्यस्तो तप
आदि अन्य उपायले शुद्ध हुँदैन ॥१६॥ संसारमा भक्तिमार्ग नै सर्वश्रेष्ठ कल्याणमय तथा भयरहित छ, जसमा नारायण-परायण, सुशील साधुपुरुष हिंड्दछन् ॥१७॥ हे राजेश्वर ! जस्तै
नदीहरू रक्सीको गाग्रो पवित्र पार्न सक्तैनन्, त्यस्तै भगवान्‌बाट विमुख पुरुषलाई उसले गरेका प्रायश्चित्तले कदापि शुद्ध पार्न सक्तैनन् ॥१८॥ जसले भगवद्गुणमा आसक्त
आफ्नो चित्तलाई एकपल्ट पनि श्रीकृष्णका चरण लगाइदिएको छ, त्यो यमराज र पाशयुक्त हात हुने यमदूतलाई सपनामा पनि देख्दैनन्, किनकि यस्तो गर्नाले नै उसका सबै पापको
प्रायश्चित्त होइजान्छ ॥१९॥ हे राजन् ! यस प्रसंगमा मानिस विष्णु भगवान् तथा यमराजका दूतहरूको संवादस्वरूप यौटा प्राचीन इतिहास भन्ने गर्दछन्, त्यो मसित सुन ॥२०॥

कान्यकुब्ज प्रदेशमा अजामिल नामको दासीपति ब्राह्मण बस्तथ्यो । दासीको संसर्गले दूषित हुनाले गर्दा त्यसका सारा सदाचार नष्ट भइसकेका थिए ॥ २१ ॥ त्यो सबै प्रकारले अपवित्र थियो र निन्दनीय वृत्तिको आश्रय लिएर पथिकलाई बाँध्नु, जूवा खेल्नु, धोका दिनु र चोरी गर्नु आदि गर्हित उपायले त्यो आफ्ना कुटुम्बको पालन गर्दै अन्य प्राणीलाई कष्ट दिइरहन्थ्यो ॥२२॥ हे राजन् ! यस प्रकार त्यहाँ बसेर दासीका छोरा-छोरीको लालन-पालन गर्दै त्यसको आयुको धेरै भाग अर्थात् अठासी वर्षको समय बितेर गयो ॥२३॥ त्यो वृद्ध र पापी अजामिलका दस छोरा थिए । तिनमा नारायण नामको जुन सबभन्दा कान्छो छोरो थियो, त्यो आफ्ना आमा बाबुको बर्ता प्यारो थियो ॥ २४ ॥ बूढो अजामिल त्यो मृदुभाषी बालकमा आसक्त भएर उसको खेलबाड देखेर प्रसन्न हुन्थ्यो ॥ २५ ॥ बालक नारायणमा साह्रै स्नेहबद्ध हुनाले गर्दा त्यो यस्तो तन्मय भएको थियो

स्य लालयानस्य वत्सुतान् ॥ कालोऽत्यगान्महान्राजन्नष्टाशीत्यायुषः समाः ॥ २३ ॥ तस्य प्रवयसः पुत्रा दश तेषां तु योऽवमः ॥ बालो नारायणो नाम्ना पित्रोश्च दयितो भृशम् ॥ २४ ॥ स बद्धहृदयस्तस्मिन्नर्भके कलभाषिणि ॥ निरीक्षमाणस्तल्लीलां मुमुदे जरठो भृशम् ॥ २५ ॥ भुञ्जानः प्रपिबन्खादन्बालकस्नेहयन्त्रितः ॥ भोजयन्पाययन्मूढो न वेदागतमन्तकम् ॥ २६ ॥ स एवं वर्तमानोऽज्ञो मृत्युकाल उपस्थिते ॥ मतिं चकार तनये बाले नारायणाह्वये ॥ २७ ॥ स पाशहस्तांस्त्रीन्दृष्ट्वा पुरुषान्भृशदारुणान् ॥ वक्रतुण्डानूर्ध्वरोम्ण आत्मानं नेतुमागतान् ॥ २८ ॥ दूरे क्रीडनकासक्तं पुत्रं नारायणाह्वयम् ॥ प्लावितेन स्वरेणोच्चैराजुहावाकुलेन्द्रियः ॥ २९ ॥ निशम्य म्रियमाणस्य ब्रुवतो हरिकीर्तनम् ॥ भर्तुर्नाम महाराज पार्षदाः सहसाऽपतन् ॥ ३० ॥ विकर्षतोऽन्तर्हृदयाद्दासीपतिमजामिलम् ॥ यमप्रेष्यान्विष्णुदूता वारयामासुरोजसा ॥ ३१ ॥ ऊचुर्निषेधितास्तांस्ते

कि जुनसुकै टोला केही खान-पिन लाउथ्यो तब ठूलो प्रेमले छोरोलाई पनि आफूसित अवश्य बसालेर खान-पिन दिन्थ्यो । यसरी त्यो नजीकै आएको मृत्युलाई पनि बिर्सिदियो ॥२६॥ यस प्रकार व्यवहारमा प्रवृत्त त्यस अज्ञानीले मृत्युकाल उपस्थित हुँदा आफ्नो 'नारायण' नामक पुत्रमा ध्यान लगायो ॥२७॥ यतिमै देख्यो—उसलाई लैजानको निमित्त तीन ठूला डरलाग्दा पुरुष हातमा पाश लिएर आएका छन् तिनको मुख बाङ्गो छ र रौं ठाडा-ठाडा छन् तिनलाई देखेर उसले खेल्नमा लागेको त्यस पुत्रलाई अत्यन्त विह्वलभावले अचिन्तन गरेर निकै उच्चस्वरले कराएर नारायणलाई डाक्यो ॥२८-२९॥ हे राजन् ! यसरी आफ्ना स्वामीको नाम सुनेर तथा मर्ने वेलामा उसले हरि-कीर्तन गरेको जानी सहसा त्यहाँ विष्णु भगवान्का पार्षद आइपुगे ॥३०॥ ती विष्णु पार्षदले दासीपति अजामिलको अन्तःकरणबाट प्राण खैंचने यमदूतलाई बलपूर्वक रोकिदिए ॥ ३१ ॥ तिनले रोकेपछि यमदूतले भने—

---

※ दृष्टान्त ( चिन्तनमा फरक )—यौटा महान् वैरागी महात्मा डुल्दाडुल्दै यौटा राजाको नगरमा पुगे । उनले विचार गरे—'यदि म कुनै धर्मशालामा बसौं भने त्यहाँ कतिले विघ्न पार्नेछन् र कुनै गृहस्थको घर बसौं भने त्यहाँ पनि उपाधिहरू आइलाग्लान्' यस्तो विचार गरेर ती यौटा कुम्हालको भाँडोनेर सुते । बर्ता जाडो थियो । प्रातःकाल हुनासाथ त्यहाँको राजा जंगल जानको निमित्त निस्क्यो, अनि उसले ती महात्मालाई देख्यो । तिनको आकृति देखेर नै राजाले थाहा पायो—यो कुनै पवित्र आत्मा हो । तर यस बखत बोल्नु उचित छैन, यस्तो विचारेर राजा गयो र कचहरीमा पुगेर सम्मानपूर्वक उनलाई डाक्यो राजसभामा राजाले तिनलाई उच्च आसनमा बसालेपछि उनले विनयपूर्वक सोधे—'महाराज ! रात कसरी बित्यो ?' महात्माले भने—अलिकति तिम्रो जस्तै र अलिकति तिम्रो भन्दा पनि राम्रो ।' राजाले सोधे—'त्यो कसरी ?' महात्माले भने—'जब निद्रा लाग्यो तब मभा र तिमीमा कुनै फरक थिएन । जबसम्म जागै थिएँ, तबसम्म म ईश्वर-चिन्तन गर्दै थिएँ, तिमी राज्यको चिन्तन गर्दै थियौ ।' महात्माको उत्तर सुनेर राजा निकै प्रसन्न भयो ।

553

'ए ! धर्मराजको आज्ञा लंघन गर्ने तिमी को हौ ? ॥३२॥ तिमी कसका दूत हौ ? कहाँबाट आइरहेका छौ ? अनि हामीलाई यसलाई लैजान किन रोकिरहेका छौ ? के तिमी कुनै देव वा उपदेव तथा सिद्ध श्रेष्ठ हौ ? ॥३३॥ किनकि तिमीहरूका नेत्र कमलदल झैं सुन्दर छन् । तिमीहरू रेशमी पीताम्बर, मुकुट, कुण्डल तथा कमल-पुष्पका हारले अलंकृत छौ ॥३४॥ तिमीहरू नवयौवनले युक्त छौ, तिमी सबैका चार-चार बाहु छन् र सबैका कर-कमलमा धनुष, ठांको, खड्ग, गदा, शङ्ख, चक्र तथा पद्मादि सुशोभित छन् ॥३५॥ अहो ! तिमीहरूले आफ्ना-आफ्ना कान्तिले सबै दिशाहरूको अन्धकार नष्ट पारेर उनलाई आलोकित पारेका पारेका छौ । हामी धर्मराजका किङ्कर हौं । हामीलाई तिमी किन रोकिरहेछौ ? ॥३६॥ शुकदेव भन्दछन्—हे राजन् ! यमदूतले यति भनेपछि भगवान् वासुदेवका आज्ञाकारी ती विष्णु-पार्षदले हाँसेर मेघ झैं गम्भीर वाणीमा भने—॥ ३७ ॥ विष्णुदूत भन्दछन्—हे यमदूत ! यदि वास्तवमा तिमीहरू धर्मराजका आज्ञाकारी दूत हौ भने धर्मको लक्षण र त्यसको तत्त्व हामीलाई बताऊ ॥ ३८ ॥ दण्ड कसरी दिइन्छ ? त्यसको योग्य पात्र को हो ? मनुष्यमा के

वैवस्वतपुरःसराः ॥ के यूयं प्रतिषेद्धारो धर्मराजस्य शासनम् ॥ ३२ ॥ कस्य वा कुत आयाताः कस्मादस्मान्निषेधथ ॥ किं देवा उपदेवा वा यूयं किं सिद्धसत्तमाः ॥ ३३ ॥ सर्वे पद्मपलाशाक्षाः पीतकौशेयवाससः ॥ किरीटिनः कुण्डलिनो लसत्पुष्करमालिनः ॥ ३४ ॥ सर्वे च नूत्नवयसः सर्वे चारुचतुर्भुजाः ॥ धनुर्निषङ्गासिगदाशङ्खचक्राम्बुजश्रियः ॥ ३५ ॥ दिशो वितिमिरालोकाः कुर्वन्तः स्वेन रोचिषा ॥ किमर्थं धर्मपालस्य किंकरान्नो निषेधथ ॥ ३६ ॥ श्रीशुक उवाच ॥ इत्युक्ते यमदूतैस्तैर्वासुदेवोक्तकारिणः ॥ तान्प्रत्यूचुः प्रहस्येदं मेघनिर्ह्रादया गिरा ॥३७॥ विष्णुदूता ऊचुः ॥ यूयं वै धर्मराजस्य यदि निर्देशकारिणः ॥ ब्रूत धर्मस्य नस्तत्त्वं यच्चाधर्मस्य लक्षणम् ॥ ३८ ॥ कथंस्विद्ध्रियते दण्डः किं वास्य स्थानमीप्सितम् ॥ दण्ड्याः किं कारिणः सर्वे आहोस्वित्कतिचिन्नृणाम् ॥ ३९ ॥ यमदूता ऊचुः ॥ वेदप्रणिहितो धर्मो ह्यधर्मस्तद्विपर्ययः ॥ वेदो नारायणः साक्षात्स्वयंभूरिति शुश्रुतम् ॥ ४० ॥ येन स्वधाम्न्यमी भावा रजःसत्त्वतमोमयाः ॥ गुणनामक्रियारूपैर्विभाव्यन्ते यथातथम् ॥ ४१ ॥ सूर्योऽग्निः खं मरुद्गावः सोमः सन्ध्याहनी दिशः ॥ कं कुः कालो धर्म इति ह्येते दैह्यस्य साक्षिणः ॥ ४२ ॥ एतैरधर्मो विज्ञातः स्थानं दण्डस्य युज्यते ॥ सर्वे कर्मानुरोधेन दण्डमर्हन्ति कारिणः ॥ ४३ ॥ सम्भवन्ति हि भद्राणि विपरीतानि चानघाः ॥ कारिणां गुणसंगोऽस्ति देहवान्न

सबै जना पापाचारी र दण्डनीय छन् ? अथवा ती मध्ये केही व्यक्ति नै यस्ता छन् ? ॥३९॥ यमदूतले भने—वेदविहित कर्म नै धर्म हो र त्यसको विपरीत कर्म अधर्म कहिन्छ, किनकि भगवानको श्वासरूपबाट उत्पन्न वेद साक्षात् नारायण नै हुन्, यस्तो मैले सुनिराखेको छु ॥ ४० ॥ त्यस वेदबाट नै भगवान्को स्वरूपमा स्थित सत्त्व, रज तथा तमोमय प्राणीहरूका सबै गुण, नाम, कर्म एवं रूपादिको क्रमले यथोचित विभाग हुन्छ ॥ ४१ ॥ जीवका शुभाशुभ कर्मको ज्ञान गराउनको निम्ति सूर्य, अग्नि, आकाश, वायुदेवता, चन्द्रमा, सन्ध्या, रात्रि, दिन, दसै दिशाहरू, जल, पृथ्वी, काल र धर्म—यी जीवका कर्मका साक्षी कहिन्छन् ॥ ४२ ॥ अधर्म गर्ने प्राणी यिनैद्वारा सूचित आफाफ्ना शुभाशुभ कर्मानुसार दण्डनीय-हुन्छन् ॥ ४३ ॥ हे निष्पाप ! कर्म गर्ने सबै प्राणी गुणहरूसित सम्बद्ध रहन्छन् । अतः सबैसित शुभ तथा अशुभ कर्म हुन सक्तछन् । कुनै पनि देहधारी जीव केही नगरी रहन

सक्तैन ॥४४॥ यस लोकमा जसको द्वारा जस्तो र जति धर्म वा अधर्म हुन्छ, त्यो परलोकमा त्यसको उतिनै र उस्तै फल भोग्दछ ॥४५॥ हे देवश्रेष्ठ ! गुणका विभिन्नताले जस्तै यस लोकमा जीवका तीन भेद देखिन्छन्, त्यस्तै नै परलोकमा पनि तिनका अस्तित्वको अनुमान गरिन्छ ॥४६॥ जस्तै वर्तमान काल नै भूत र भविष्य यी दुवैका गुणहरूको ज्ञापक हुन्छ, त्यस्तै नै वर्तमान जन्म पनि अघि पछिका जन्मको पाप-पुण्यको दिग्दर्शक हो ॥४७॥ भगवान् सबैका अन्तःकरणमा विराजमान रहन्छन् । यसै निम्ति मनले नै ती सबैको पूर्वरूप देख्दछन् । यसैले सबैका अपूर्व यमलाई पनि ती अजन्मा भगवान् मनले नै विचार गरिसक्छन् ॥४८॥ जस्तै निद्राले अभिभूत अज्ञानी पुरुष स्वप्नमा देखेको कल्पित देह-लाई नै साँच्चैको देह ठान्दछ, त्यस्तै नै जीव पूर्वजन्मको स्मृति नष्ट हुनाले वर्तमान शरीरको अतिरिक्त अरु अघि-पछिका कुनै पनि जन्मको विषयमा केही जान्दैन ॥४९॥ त्यो आफ्ना पाँच कर्मेन्द्रिय द्वारा ग्रहण-त्यागादिरूपी भिन्न-भिन्न थरिका कर्म गर्दै, पाँच ज्ञानेन्द्रियले पाँच विषय नै जान्दछ र सोह्रौं मनसित स्वयं मिलेर त्यो पाँच

ह्यकर्मकृत् ॥ ४४ ॥ येन यावान्यथाऽधर्मो धर्मो वेह समीहितः ॥ स एव तत्फलं भुङ्क्ते तथा तावदमुत्र वै ॥ ४५ ॥ यथेह देवप्रवरास्त्रैविध्यमुपल-भ्यते ॥ भूतेषु गुणवैचित्र्यात्तथाऽन्यत्रानुमीयते ॥ ४६ ॥ वर्तमानोऽन्ययोः कालो गुणाभिज्ञापको यथा ॥ एवं जन्मान्ययोरेतद्धर्माधर्मनिदर्शनम् ॥ ४७ ॥ मनसैव पुरे देवः पूर्वरूपं विपश्यति ॥ अनुमीमांसतेऽपूर्वं मनसा भगवानजः ॥ ४८ ॥ यथाऽज्ञस्तमसा युक्त उपास्ते व्यक्तमेव हि ॥ न वेद पूर्वमपरं नष्टजन्मस्मृतिस्तथा ॥ ४९ ॥ पञ्चभिः कुरुते स्वार्थान्पञ्च वेदाथ पंचभिः ॥ एकस्तु षोडशेन त्रीन्स्वयं सप्तदशोऽश्नुते ॥ ५० ॥ तदेतत्षोडशकलं लिंगं शक्तित्रयं महत् ॥ धत्तेऽनुसंसृतिं पुंसि हर्षशोकभयार्तिदाम् ॥ ५१ ॥ देह्यज्ञोऽजितषड्वर्गो नेच्छन्कर्माणि कार्यते ॥ कोश-कार इवात्मानं कर्मणाऽऽच्छद्य मुह्यति ॥ ५२ ॥ नहि कश्चित्क्षणमपि जातु तिष्ठत्यकर्मकृत् ॥ कार्यते ह्यवशः कर्म गुणैः स्वाभाविकैर्बलात् ॥५३॥ लब्ध्वा निमित्तमव्यक्तं व्यक्ताव्यक्तं भवत्युत ॥ यथायोनि यथाबीजं स्वभावेन बलीयसा ॥ ५४ ॥ एष प्रकृतिसंगेन पुरुषस्य विपर्ययः ॥ आसीत्स एव न चिरादीशसङ्गाद्विलीयते ॥ ५५ ॥ अयं हि श्रुतसम्पन्नः शीलवृत्तगुणालयः ॥ धृतव्रतो मृदुर्दान्तः सत्यवान्मन्त्रविच्छुचिः ॥ ५६ ॥

ज्ञानेन्द्रिय एवं कर्मेन्द्रियका विषयहरू उपभोग गर्दछ ॥५०॥ यस प्रकार सोह्र कला तथा सत्वादि तीन गुण हुने यो दारुण लिङ्ग देह नै उसलाई बारम्बार हर्ष, शोक, भय तथा पीडादायक जन्म मरणको चक्रमा पार्दछ ॥५१॥ जसले काम-क्रोधादि छ शत्रुलाई जित्न सकेको छैन, त्यो अज्ञानी जीव इच्छा नभए पनि लिंग-शरीर द्वारा विविध कर्महरूमा नियुक्त गरिइन्छ । यस्तो स्थितिमा त्यो कोशकार अर्थात् रेशमका कीरा जस्तै स्वयं आफूलाई कर्मरूपी जालमा बेर्न्हेर त्यसैमा मोहित भइजाने गर्दछ ॥५२॥ कर्म नगरीकन कुनै पनि प्राणी एक क्षण पनि रहन सक्तैन । प्रत्येक पुरुषका स्वाभाविक गुण नै उसको द्वारा बलपूर्वक काम गराउँछन् ॥५३॥ अदृष्टरूप कारणलाई पाएर कर्म वासनारूपी स्वभावद्वारा योनि अर्थात् माता र बीज अर्थात् पिताको अनुरूप स्थूल वा सूक्ष्म-शरीर प्रकट हुन्छ ॥५४॥ प्रकृतिको संसर्ग हुनाले नै पुरुषको यस्तो विपरीत भावना हुन्छ । यो विपरीत भावना भगवान्को सम्पर्कबाट चाँडै नै पर भइजान्छ ॥५५॥ हेर—यो अजामिल शास्त्रज्ञ, शील-सदाचार तथा सद्गुणको भण्डार व्रत-पालक, मृदु-स्वभाव, जितेन्द्रिय, सत्यपरायण,

मन्त्र वेत्ता, पवित्र आचरण भएको, गुरु, अग्नि, अतिथि तथा वृद्ध जनको सेवा गर्ने, अहङ्कार रहित, सबैको हितैषी, साधु स्वभाव, मितभाषी र असूया रहित अर्थात् अरूका गुणमा दोष-दृष्टि नराख्ने प्राणी थिए ॥५६॥५७॥ आफ्नो पिताको आज्ञा पालन गर्ने भएको यो ब्राह्मण एक दिन वनमा गयो र त्यहाँबाट फल-फूल, समिधा तथा कुश लिएर घर फर्क्यो ॥५८॥ बाटोमा उसले यौटा कामी, निर्लज्ज तथा आचारभ्रष्ट शूद्रलाई देख्यो, जो यौटी व्यभिचारिणी दासीसित रक्सी पिएर तथा उसको नजीकै बसेर नाच्तै, हाँस्तै विहार गरिरहेको थिई । रक्सी पिउनाले त्यस वेश्याका आँखा नाचिरहेका थिए र उन्मत्त हुनाले त्यसको सारीको गाँठो खस्केको थियो ॥५९॥६०॥ त्यस शूद्रको कामोद्दीपक अंगरागमा अनुलिप्त भुजाहरूद्वारा आलिंगित त्यस शूद्रालाई देखेर त्यो ब्राह्मण मोहवश कामदेवको वशीभूत भयो ॥६१॥ आफ्नो धैर्य र ज्ञानानुसार यसले कामवेग द्वारा चञ्चल आफ्नो चित्तलाई धेरै नै रोक्न खोज्यो, तर यो त्यसलाई शान्त पार्नमा समर्थ भएन ॥६२॥ त्यस स्त्रीको निमित्त कामरूपी ग्रहले ग्रस्त भएर यो स्मृतिशून्य भयो र मन-मनै उसैको सम्झना, ध्यान गर्दा गर्दा

गुर्वग्न्यतिथिवृद्धानां शुश्रूषुर्निरहंकृतः ॥ सर्वभूतसुहृत्साधुर्मितवागनसूयकः ॥ ५७ ॥ एकदाऽसौ वनं यातः पितृसंदेशकृद्द्विजः ॥ आदाय तत आवृत्तः फलपुष्पसमित्कुशान् ॥ ५८ ॥ ददर्श कामिनं कञ्चिच्छूद्रं सह भुजिष्यया ॥ पीत्वा च मधु मैरेयं मदाघूर्णितनेत्रया ॥ ५९ ॥ मत्तया विश्लथन्नीव्या व्यपेतं निरपत्रपम् ॥ क्रीडन्तमनु गायन्तं हसन्तमनयाऽन्तिके ॥ ६० ॥ दृष्ट्वा तां कामलिप्तेन बाहुना परिरम्भिताम् ॥ जगाम हृच्छयवशं सहसैव विमोहितः ॥ ६१ ॥ स्तम्भयन्नात्मनाऽऽत्मानं यावत्सत्त्वं यथाश्रुतम् ॥ न शशाक समाधातुं मनो मदनवेपितम् ॥६२॥ तन्निमित्तस्मरव्याजग्रहग्रस्तो विचेतनः ॥ तामेव मनसा ध्यायन्स्वधर्माद्विरराम ह ॥ ६३ ॥ तामेव तोषयामास पित्र्येणार्थेन यावता ॥ ग्राम्यैर्मनोरमैः कामैः प्रसीदेत यथा तथा ॥ ६४ ॥ विप्रां स्वभार्यामप्रौढां कुले महति लम्भिताम् ॥ विससर्जाचिरात्पापः स्वैरिण्याऽपांगविद्धधीः ॥ ६५ ॥ यतस्ततश्चोपनिन्ये न्यायतोऽन्यायतो धनम् ॥ बभारास्याः कुटुंबिन्याः कुटुम्बं मन्दधीरयम् ॥ ६६ ॥ यदसौ शास्त्रमुल्लंघ्य स्वैरचार्यविगर्हितः ॥ अवर्तत चिरं कालमघायुरशुचिर्मलात् ॥ ६७ ॥ तत एनं दण्डपाणेः सकाशं कृतकिल्बिषम् ॥ नेष्यामोऽकृतनिर्वेशं यत्र दण्डेन शुद्ध्यति ॥ ६८ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धेऽजामिलोपाख्याने प्रथमोऽध्यायः ॥ १ ॥ श्रीशुक उवाच ॥ एवं ते भगवद्दूता यमदूताभिभाषितम् ॥ उपधार्याथ

आफ्नो धर्म गुमायो ॥६३॥ त्यसपछि त्यो वेश्या जे गर्नाले मनोरम ग्राम्य विषयहरूले प्रसन्न हुन सक्थी, त्यसै गरी आफ्ना पिताको सम्पूर्ण धन अर्पण गरेर त्यसलाई प्रसन्न पार्ने चेष्टा गर्‍यो ॥ ६४ ॥ स्वैरिणी वेश्याका कटाक्षले नष्टबुद्धि भएर यस पापीले आफ्नी तरुणी तथा सत्कुलोत्पन्ना विवाहिता पत्नीलाई तुरुन्त त्यागिदियो ॥६५॥ अब यो मन्दमति जहाँ तहाँबाट न्याय अन्यायको विचार त्यागेर धन बटुलेर ल्याउँथ्यो र त्यस वेश्याका कुटुम्बीहरूको भरण-पोषण गर्दथ्यो ॥ ६६ ॥ हे विष्णु-पार्षद ! यस पापीले शास्त्राज्ञाको उल्लंघन गरेर सज्जनहरू द्वारा निन्दित स्वेच्छाचारको अवलम्बन गरेको छ । यसको सारा जीवन पापपूर्ण थियो । धेरै दिनसम्म वेश्याको अन्नरूपी मल खानाले यो अपवित्र भइसकेकोछ ॥६७॥ अतएव हामी यसलाई दण्डपाणि यमराजको साम्मुन्ने लैजान्छौं, किनकि यसले आफ्ना पापको प्रायश्चित्त गरेको छैन । यमराजले दिएको दण्डलाई भोगेर यो शुद्ध हुनेछ ॥ ६८ ॥ इति

श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नेपाली भाषाटीकायां प्रथमोऽध्यायः ॥ १ ॥ ( विष्णु-दूतहरू द्वारा भागवत-धर्मको निरूपण र अजामिलको परलोक-यात्रा )–श्रीशुकदेवजी भन्नुहुन्छ–हे राजन् ! यमदूतहरूका वचन सुनेर न्याय-निपुण-पार्षद उनीसित यस प्रकार भन्दछन् ॥ १ ॥ विष्णुदूतले भने–अहो ! यो ठूलो खेदको कुरा हो–धर्मात्माहरूको समाजमा पनि अधर्म गरिरहेको छ । यही कारण हो कि उनको द्वारा अदण्ड्य तथा निष्पाप व्यक्तिहरूलाई पनि अनाहक दण्ड दिइन्छ ।.२।। जो सज्जन प्रजाका मात-पिता, शिक्षक र समदर्शी छन्, यदि तिनमा पनि यस्तो विषम बुद्धि जागृत हुन्छ भने सबै प्रजा कसका शरणमा जानेछन् ? ॥ ३ ॥ सत्पुरुष जस्तै आचरण गर्दछन्, अरु व्यक्ति पनि उनैको अनुसरण गर्न थाल्दछन् । तो जो आदर्श जन साधारणका सामुन्ने राख्दछन्, त्यसैको सर्वजना अनुसरण गर्दछन् ॥ ४ ॥ जस्तै पशु आफ्ना स्वामीमा विश्वास गर्दछन्, त्यस्तै नै सारा जगत् स्वयं धर्म-अधर्मलाई केही जस्तो पनि नठानी जसको काखमा टाउको राखेर निर्भयभावले शयन गर्दछ–त्यो अन्य जीवहरूको विश्वासपात्र तथा दयालु भएर पनि मित्रभावले आफूमाथि विश्वास गरेर

तान्राजन्प्रत्याहुर्नयकोविदाः ॥ १ ॥ विष्णुदूता ऊचुः ॥ अहो कष्टं धर्मदृशामधर्मः स्पृशते सभाम् ॥ यत्रादण्ड्येष्वपापेषु दण्डो यैर्ध्रियते वृथा ॥२॥ प्रजानां पितरो ये च शास्तारः साधवः समाः ॥ यदि स्यात्तेषुवैषम्यं कं यान्ति शरणं प्रजाः ॥३॥ यद्यदाचरति श्रेयानितरस्तत्तदीहते ॥ स यत्प्रमाणं कुरुते लोकस्तदनुवर्तते ॥ ४ ॥ यस्यांके शिर आधाय लोकः स्वपिति निर्वृतः ॥ स्वयं धर्ममधर्मं वा न हि वेद यथा पशुः ॥ ५ ॥ स कथं न्यर्पितात्मानं कृतमैत्रमचेतनम् ॥ विश्रम्भणीयो भूतानां सघृणो द्रोग्धुमर्हति ॥ ६ ॥ अयं हि कृतनिर्वेशो जन्मकोट्यंहसामपि ॥ यद्व्याजहार विवशो नाम स्वस्त्ययनं हरेः ॥ ७ ॥ एतेनैव ह्यघोनोऽस्य कृतं स्यादघनिष्कृतम् ॥ यदा नारायणेति जगाद चतुरक्षरम् ॥ ८ ॥ स्तेनः सुरापो मित्रध्रुग्ब्रह्महा गुरुतल्पगः ॥ स्त्रीराजपितृगोहन्ता ये च पातकिनोऽपरे ॥ ९ ॥ सर्वेषामप्यघवतामिदमेव सुनिष्कृतम् ॥ नामव्याहरणं विष्णोर्यतस्तद्विषया मतिः ॥ १० ॥ न निष्कृतैरुदितैर्ब्रह्मवादिभिस्तथा विशुद्ध्यत्यघवान्व्रतादिभिः ॥ यथा हरेर्नामपदैरुदाहृतैस्तदुत्तमश्लोकगुणोपलम्भकम् ॥ ११ ॥ नैकान्तिकं तद्धि कृतेऽपि निष्कृते मनः पुनर्धावति चेदसत्पथे ॥ तत्कर्मनिर्हारमभीप्सतां हरेर्गुणानुवादः खलु सत्त्वभावनः

आत्मसमर्पण गर्न भएका ती अज्ञ जीवहरूको अनिष्ट त्यसै कसरी गर्न सक्ला ? ॥५-६ ॥ हे यमदूत ! यसले जो अहिले विवश नारायणको मङ्गलमय नाम लियो, त्यसैले यो आफ्ना करोडौं जन्मका पापको प्रायश्चित्त गरिसक्यो ॥७॥ जब यसले 'नारायण' यो चार अक्षर भएको नाम लियो, उसै बखत यस पापका सारा पापहरूको प्रायश्चित्त भइसक्यो ॥ ८ ॥ चोर, मद्यप, मित्रद्रोही, ब्रह्महत्यारा, गुरुपत्नीगामी, स्त्री, राजा, माता-पिता तथा गाईको हत्यारा एवं अरु पनि जति पापी छन्, ती सबै पापीहरूको निम्ति विष्णु भगवान्को नाम लिनु नै सर्वभन्दा ठूलो प्रायश्चित्त छ, किनकि यसले भगवान्का गुण, लीला र स्वरूपको विषयमा तिनको बुद्धि जागृत हुन्छ ॥ ९-१० ॥ वेदवादी मनु आदिले बताएका कृच्छ्र चान्द्रायणादि व्रतहरूका प्रायश्चित्तले पापी पुरुष त्यति पवित्र हुँदैन, जति भगवानका नामरूप पदहरूको उच्चारण गर्नाले हुन्छ, किनकि हरि नामको स्मरण पुण्यकीर्ति भगवान्का गुणहरूको ज्ञान गराउँछ ॥११॥ प्रायश्चित्त गरेर पनि चित्त यदि असन्मार्गतिर दगुर्‍यो भने त्यस चित्तलाई राम्रो गरी शुद्ध पार्न प्रायश्चित्त नै हुनसक्तैन । अतएव पापकर्महरूको

राम्रो प्रकारले निवृत्ति गर्न खोज्ने पुरुषले भगवान्‌को गुणानुवाद गराउनै पर्दछ, किनकि यो निश्चितरूपले चित्तलाई शुद्ध पार्दछ ॥ १२ ॥ अतएव हे यमदूत हो ! यस अजामिललाई अब तिमीहरू आकृसित नलैजाओ । यसले मन बेलामा 'नारायण' को नाम लिएको छ । यसले यसका सबै पापहरूको प्रायश्चित्त भइसकेको छ ॥१३॥ किनकि संकेतले, हाँसोले, गानाको आलाप पूर्ण पानको निम्ति अथवा अवहेलनापूर्वक लिइएको पनि भगवानको नाम मनुष्यका सबै पापहरू नष्ट पारिदिन्छ, यो कुरा महापुरुषहरू राम्ररी जान्दछन् ॥ १४॥ जुन प्राणी माथिबाट लड्ने, बाटोमा चिप्लने, अङ्गभङ्ग हुने, सर्पादिले गाँजिदिने ज्वरादिले सन्तप्त हुने अथवा लट्ठी आदिले चुटिने बेलामा विवश भएर पनि 'हरि' यसतो भन्दछ, भने त्यो दण्डको अधिकारी रहन्न ॥ १५॥ महर्षिहरूले पापहरूको न्यूनाधिकता बुझेर ठूला र साना पापहरूको निम्ति क्रमशः ठूला र साना प्रकारका प्रायश्चित्त बताएका छन् ॥१६॥ ती तप, दान र जप आदि प्रायश्चित्तद्वारा केवल पाप नष्ट हुन्छन्, पापीको पापले दूषित मन शुद्ध हुनसक्तैन, तर भगवान्‌का चरणको सेवाले मन पनि पवित्र हुन्छ ॥१७॥ जस्तै—अग्नि काठलाई

॥ १२ ॥ अथैनं माऽपनयत कृताशेषाघनिष्कृतम् ॥ यदसौ भगवन्नाम म्रियमाणः समग्रहीत् ॥ १३ ॥ सांकेत्यं पारिहास्यं वा स्तोभं हेलनमेव
वा ॥ वैकुण्ठनामग्रहणमशेषाघहरं विदुः ॥ १४ ॥ पतितः स्खलितो भग्नः संदष्टस्तप्त आहतः ॥ हरिरित्यवशेनाह पुमान्नार्हति यातनाम् ॥ १५ ॥
गुरूणां च लघूनां च गुरूणि च लघूनि च ॥ प्रायश्चित्तानि पापानां ज्ञात्वोक्तानि महर्षिभिः ॥ १६ ॥ तैस्तान्यघानि पूयन्ते तपोदानजपादिभिः ॥
नाधर्मजं तद्धृदयं तदपीशांघ्रिसेवया ॥ १७ ॥ अज्ञानादथवा ज्ञानादुत्तमश्लोकनाम यत् ॥ सङ्कीर्तितमघं पुंसो दहेदेधो यथाऽनलः ॥ १८ ॥ यथा·
गदं वीर्यतममुपयुक्तं यदृच्छया ॥ अजानतोऽप्यात्मगुणं कुर्यान्मंत्रोऽप्युदाहृतः ॥ १९ ॥ श्रीशुक उवाच ॥ त एवं सुविनिर्णीय धर्मं भागवतं
नृप ॥ तं याम्यपाशान्निर्मुच्य विप्रं मृत्योरमूमुचन् ॥ २० ॥ इति प्रत्युदिता याम्या दूता यात्वा यमान्तिके ॥ यमराज्ञे यथा सर्वमाचचक्षुररिन्दम
॥२१॥ द्विजः पाशाद्विनिर्मुक्तो गतभीः प्रकृतिं गतः ॥ ववन्दे शिरसा विष्णोः किङ्करान्दर्शनोत्सवः ॥ २२ ॥ तं विवक्षुमभिप्रेत्य महापुरुषकि
ङ्कराः ॥ सहसा पश्यतस्तस्य तत्रान्तर्दधिरेऽनघ ॥ २३ ॥ अजामिलोऽप्यथाकर्ण्य दूतानां यमकृष्णयोः ॥ धर्मं भागवतं शुद्धं त्रैविद्यं च गुणाश्रयम्

भस्म पारिदिन्छ, त्यस्तै नै उत्तमश्लोक भगवानका नामको कीर्तन जानेर अथवा नजानेर नै गरे पनि त्यस पुरुषका सबै पाप हरुलाई भस्म पारिदिन्छ ॥१८॥ जस्तै कुनै बलियो औषधि त्यसको गुण नजानेरै पनि सेवन गरेपछि लाभ नै गर्दछ त्यस्तै नामरूपी मन्त्र उच्चारण गरेपछि पापीको पाप नष्ट गरिदिन्छ ॥ १९ ॥ श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! यस प्रकार ती विष्णु-पार्षदहरूले भागवत धर्मको राम्ररी निरूपण गरेर त्यस ब्राह्मणलाई यमदूतहरूको पाशबाट मुक्त पारेर मृत्युको मुखबाट बाहिर झिके ॥२०॥ हे शत्रुदमन ! यस प्रकार विष्णु पार्षदहरूले भनेपछि यमदूतहरूले यमराजकहाँ गएर जस्ताको त्यस्तै सारा वृत्तान्त सुनाए ॥२१॥ यमदूतका पाशबाट छुटेर अजामिलले निर्भय र सावधान भएर भगवानका पार्षदको दर्शनले प्रसन्न भएर उनलाई टाउको न्यूराएर प्रणाम गरे ॥ २२ ॥ हे अनघ ! ती विष्णुका दूतले जब देखे कि यो केही भन्ने इच्छा गरिरहेको छ तब उनले देख्दै ती सहसा त्यहीं अन्तर्धान भए ॥ २३ ॥ यस प्रकार भगवान्‌का पार्षदद्वारा निर्गुण भागवत-धर्म तथा यमदूतका मुखबाट वेदत्रयीद्वारा प्रतिपादित सगुण धर्मको व्याख्या सुनेर

भगवान्‌को महात्म्य श्रवण गर्नाले अजामिलको हृदयमा भगवान्‌को भक्ति उत्पन्न भयो र उसलाई आफ्ना पूर्वकृत दुष्कर्महरूको स्मरण गरेर ठूलो सन्ताप भयो ॥२४॥२५॥ उसले विचार गऱ्यो–'अहो ! म ठूलो अजितेन्द्रिय हुँ । *पृथ्वीमा मेरो कस्तो राम्रो अस्तित्व थियो, तापनि अभिमानले दासीको गर्भबाट पुत्र उत्पन्न गरेर आफ्नो ब्राह्मणत्व बिगारें ॥ २६ ॥ सबै सत्पुरुषद्वारा निन्दित म कुल-कलङ्क र पापीलाई धिक्कार छ, किनकि मैले आफ्नी उमेरदार पतिव्रता पत्नीलाई त्यागेर रक्सी पिउने यौटी कुलटाको संसर्ग गरें ॥ २७ ॥ म कृतघ्नले नीच पुरुष जस्तै आफ्ना वृद्ध, अकिञ्चन तथा तपस्वी माता-पितालाई, जो सर्वथा असहाय थिए, कठिन समयमा त्यागिदिएँ ॥२८॥ अब म आफ्ना दुष्कर्मले अवश्य ती महाभयंकर नरकमा पर्नेछु, जहाँ गएर धर्मघाती तथा पापी पुरुष विविध यातनाहरू भोग्दछन् ॥२९॥ मैले जो अहिले यौटा अद्भुत दृश्य देखेको थिएँ, त्यो मेरो सपना थियो वा जाग्रत

॥ २४ ॥ भक्तिमान्भगवत्याशु माहात्म्यश्रवणाद्धरेः ॥ अनुतापो महानासीत्स्मरतोऽशुभमात्मनः ॥२५॥ अहो मे परमं कष्टमभूदविजितात्मनः ॥
येन विप्लावितं ब्रह्म वृषल्यां जायतात्मना ॥ २६ ॥ धिङ्मां विगर्हितं सद्भिर्दुष्कृतं कुलकज्जलम् ॥ हित्वा बालां सतीं योऽहं सुरापामसतीमगाम्
॥ २७ ॥ वृद्धावनाथौ पितरौ नान्यबन्धू तपस्विनौ ॥ अहो मयाऽधुना त्यक्तावकृतज्ञेन नीचवत् ॥ २८ ॥ सोऽहं व्यक्तं पतिष्यामि नरके भृश-
दारुणे ॥ धर्मघ्नाः कामिनो यत्र विन्दन्ति यमयातनाः ॥ २९ ॥ किमिदं स्वप्न आहोस्वित्साक्षाद्दृष्टमिहाद्भुतम् ॥ क्व याता अद्य ते ये मां व्यक-
र्षन्पाशपाणयः ॥ ३० ॥ अथ ते क्व गताः सिद्धाश्चत्वारश्चारुदर्शनाः ॥ व्यमोचयन्नीयमानं बद्ध्वा पाशैरधो भुवः ॥ ३१ ॥ अथापि मे दुर्भगस्य
विबुधोत्तमदर्शने ॥ भवितव्यं मङ्गलेन येनात्मा मे प्रसीदति ॥ ३२ ॥ अन्यथा म्रियमाणस्य नाशुचेर्वृषलीपतेः ॥ वैकुण्ठनामग्रहणं जिह्वा वक्तुमि-

अवस्थाको कुरा थियो । जो अहिले हातमा पाश लिएर मलाई तान्दै लगिरहेका थिए, ती कहाँ हराएर गए ॥३०॥ अब तिनीहरू मलाई बाँधेर पृथ्वीको तल लगिरहेका थिए, तब जसले मलाई तिनीहरूबाट छुटकारा पारेका थिए, ती देख्ता साह्रै राम्रा सिद्धपुरुष कता गए ॥ ३१ ॥ म त महापापी हुँ, तापनि मेरो कुनै जन्मको महान् पुण्य शेष रहेछ, जसले मलाई ती देव-श्रेष्ठहरूको दर्शन पाएँ । त्यसैले त उनको स्मरण गरेर अझसम्म मेरो चित्त गद्गद् भइरहेको छ ॥ ३२ ॥ यदि यो कुरा नभएको भए म अपवित्र एवं शूद्राका पतिको जिब्रो मन बेलामा

* दृष्टान्त–( पृथ्वीमा म को हुँ ! )—कुनै धनी सेठले यौटा संन्यासीलाई भोजन गराउन डाक्यो । आफ्नो समृद्धिको अभिमानमा तिनको पूजा वन्दना आदि न [illegible] र भन्न लाग्यो–हेर्नोस् महाराज ! यासुन्ने त्यो ढाकाबाट चन्द्रलालसम्म हाम्रो परका हद हो । नजीकै नै आफ्नो मिल छ । बेलुका बगैंचा [illegible] । जसलाई मैले नक्सार तयार गराएको हुँ । जसरैमा मेरो धर्मशाला पनि छ । तिमीहरू जस्ता गरीब साधु [illegible] नमकन, मनेर यौटा अन्नक्षेत्र पनि खोलिदिने विचार छ । तर यो विचार भविष्यका लागि हो । अहिले त म [illegible] जानु छ; किनकि सबैका देशहरूको कायदा कदर अति [illegible], उनिनै राम्रो छ [illegible] यो काम पहिले गरिदिन इच्छा छ । कदाचित् अन्नक्षेत्र नखुले काम चल्छ, किनकि तिमी जस्ता यता उता [illegible] [illegible] [illegible] त दिइदैछ, त्यो अन्न क्षेत्र नै त हो !' संन्यासीले विचार गरे–[illegible] अभिमान छुटाइदिनुपर्दछ । अतः उनले भित्तामा टाँगिएको नक्सा देखाएर सोधे–'सेठजी ! यस दुनियाको नक्सामा भारतवर्ष कहाँ छ ?' सेठले यौटा चिन्हमा औंला राख्यो । संन्यासीले फेरि सोधे–'उसो भए यसमा [illegible] कहाँ छ ?' सेठले यौटा सानो चिन्ह देखायो । संन्यासीले भने–'के यही बम्बई हो ? हुन्छ त अब यो बताऊ–यस बम्बईमा तिम्रो महल, बंगला र त्यसमा बस्ने कुटुम्बी कहाँ छन् ?' सेठले भन्यो—'यो सबै कुरा [illegible] पृथ्वीको मानचित्रमा कसरी अटाउन सक्छ ?' संन्यासीले भने—'जब पृथ्वीको नक्सामा तिम्रो समृद्धिको कुनै अस्तित्व नै छैन भने यो इच्छाहरू के काम लाग्दछ ? अब वृद्धावस्थाका दिन आए । माया-मोहबाट मुक्त [illegible] केही परलोकको पनि चिन्ता गर !' संन्यासीका कुराले सेठको मनमा धेरै प्रभाव पाऱ्यो । त्यसै दिन कारबार छोराहरूलाई सुम्पेर ती भगवद्भक्ति गर्नलागे ।

कुनै प्रकार पनि विष्णु भगवान्को नाम उच्चारण गर्न पाउन्नभ्यो ॥३३॥ हरे ! कहाँ महाकपटी, पापी, निर्लज्ज र ब्रह्मतेज नष्ट गर्ने भएको म र कहाँ भगवान्को 'नारायण' यो मङ्गल-मय नाम ॥३४॥ लौ, जे भयो-भयो, अब म मन, इन्द्रिय तथा प्राण आफ्नो वशमा पारेर यस्तो उपाय गर्नेछु—जसले आफूलाई अन्धतम नरकमा पर्नबाट बचाऊँ ॥३५॥ अब अविद्या, वासना तथा कर्मादिबाट उत्पन्न यस बन्धनलाई त्यागेर म सबै प्राणीको सुहृद, शान्त, मित्र, दयालु र जितेन्द्रिय बनेर, जसले म अधमलाई अहिलेसम्म क्रीडा-मृगको जस्तै इच्छित नाच नचाएको छ, त्यस स्त्रीरूपिणी भगवान्की मायाबाट आफूलाई मुक्त पार्दछु । अब म आफ्नो देहादिमा 'म' र 'मेरो'को असद्बुद्धि त्यागेर भगवान्का नाम कीर्तन द्वारा विशुद्ध पारिएको बुद्धि उनकै चरणमा लगाउँछु' ॥३६-३८॥ शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! यस प्रकार ती सिद्धहरूको क्षणिक सङ्गले तीव्र वैराग्य उत्पन्न भएपछि अजामिल सारा मोह त्यागेर हरिद्वार गयो ॥३९॥ त्यहाँ यौटा देवस्थानमा स्थिर आसनमा बसेर उसले योगमार्गको आश्रय लियो र आफ्ना सबै इन्द्रियलाई तिनका विषयबाट हटाएर मनमा र

द्गार्हति ॥ ३३ ॥ क चाहं कितवः पापो ब्रह्मघ्नो निरपत्रपः ॥ क्व च नारायणेत्येतद्भगवन्नाम मङ्गलम् ॥ ३४ ॥ सोऽहं तथा यतिष्यामि यतचित्ते-न्द्रियानिलः ॥ यथा न भूय आत्मानमन्धे तमसि मज्जये ॥ ३५ ॥ विमुच्य तमिमं बन्धमविद्याकामकर्मजम् ॥ सर्वभूतसुहृच्छान्तो मैत्रः करुण आत्मवान् ॥ ३६ ॥ मोचये ग्रस्तमात्मानं योषिन्मय्याऽऽत्ममायया ॥ विक्रीडितो ययैवाहं क्रीडामृग इवाधमः ॥ ३७ ॥ ममाहमिति देहादौ हित्वा मिथ्यार्थधीर्मतिम् ॥ धास्ये मनो भगवति शुद्धं तत्कीर्तनादिभिः ॥ ३८ ॥ श्रीशुक उवाच ॥ इति जातसुनिर्वेदः क्षणसङ्गेन साधुषु ॥ गङ्गाद्वारमुपे-याय मुक्तसर्वानुबन्धनः ॥ ३९ ॥ स तस्मिन्देवसदन आसीनो योगमाश्रितः ॥ प्रत्याहृतेन्द्रियग्रामो युयोज मन आत्मनि ॥ ४० ॥ ततो गुणेभ्य आत्मानं वियुज्यात्मसमाधिना ॥ युयुजे भगवद्धाम्नि ब्रह्मण्यनुभवात्मनि ॥ ४१ ॥ यर्ह्युपारतधीस्तस्मिन्नद्राक्षीत्पुरुषान्पुरः ॥ उपलभ्योपलब्धान्प्रा-ग्ववन्दे शिरसा द्विजः ॥ ४२ ॥ हित्वा कलेवरं तीर्थे गङ्गायां दर्शनादनु ॥ सद्यः स्वरूपं जगृहे भगवत्पार्श्ववर्तिनाम् ॥ ४३ ॥ साकं विहायसा विप्रो महापुरुषकिङ्करैः ॥ हैमं विमानमारुह्य ययौ यत्र श्रियः पतिः ॥ ४४ ॥ एवं स विप्लावितसर्वधर्मा दास्याः पतिः पतितो गर्ह्यकर्मणा ॥ निपात्यमानो निरये हतव्रतः सद्यो विमुक्तो भगवन्नाम गृह्णन् ॥ ४५ ॥ नातः परं कर्मनिबन्धकृन्तनं मुमुक्षतां तीर्थपदानुकीर्तनात् ॥ न यत्पुनः

आफ्नो मनलाई बुद्धिमा लीन गरिदियो ॥४०॥ त्यसपछि आत्मयोगद्वारा आत्मालाई शरीरादि दृश्यवर्गबाट पृथक् पारेर उसलाई ज्ञानमय स्वरूप परब्रह्ममा लीन पारिदियो॥४१॥ यस प्रकार जब उसको बुद्धि भगवान्को पवित्र स्वरूपमा स्थिर भयो तब विष्णुका दूतलाई फेरि देख्यो र तिनलाई चिह्नेर उसले नत-मस्तक भएर प्रणाम गर्‍यो ॥४२॥ तिनको दर्शन पाए-पछि उसले त्यहीं तीर्थमा पवित्र गङ्गातटमा आफ्नो देह त्यागिदियो र तत्काल भगवान्का पार्षद जस्तै राम्रो भयो ॥ ४३ ॥ त्यसपछि त्यो ब्राह्मण ती विष्णुका पार्षदहरूको साथै स्वर्णमय विमानमा बसेर आकाशमार्गबाट त्यो वैकुण्ठधाममा गयो, जहाँ साक्षात् लक्ष्मीपति विष्णु विराजमान रहने गर्छन् ॥ ४४ ॥ हे राजन् ! यस प्रकार उसले कि दासीको पति भएर आफ्ना सारा धर्म-कर्म त्यागिदिएको थियो, आफ्ना निन्दित कर्मले पतित, व्रतहीन तथा नरकमा जान अधिकारी त्यो ब्राह्मण भगवान्को नाम लिनाले भव-बन्धन बाट

मुक्त भयो ॥ ४५ ॥ यसले यो सिद्ध भयो—तीर्थपाद भगवानका नाम कीर्तन भन्दा ठूला मुमुक्षु पुरुषका कर्मको बन्धन काट्ने अरु कुनै पनि साधन छैन, किनकि भगवन्नामको कीर्तनले मनुष्यको मन कर्ममा आसक्त हुँदैन। यसको विपरीत अन्य प्रायश्चित्त गरेर पनि प्राणी रजोगुण तथा तमोगुणले ग्रस्त नै रहिरहन्छ ॥ ४६ ॥ जो प्राणी यस पापनाशक तथा परम गुह्यइतिहास श्रद्धापूर्वक सुन्दछ अथवा भक्तिभावसहित भन्दछ त्यो कहिल्यै नरकमा जाँदैन र त्यसलाई कहिल्यै यमदूत नैं देखिन्छन् । त्यो पुरुष महापापी भएर पनि वैकुण्ठलोक-मा पूजित हुन्छ ॥ ४७-४८ ॥ मरणकालमा पुत्रकै निहुँले पनि भगवान्‌को नाम लिने अजामिल भगवान्‌को परमधाममा गयो। अनि जो मानिस श्रद्धापूर्वक भगवान्‌का नामको कीर्तन गर्दछन्, तिनको विषयमा त भन्ने कुरै छैन ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नेपाली भाषाटीकायां द्वितीयोऽध्यायः ॥ २ ॥ ( यम र यमदूतको संवाद )—

कर्मसु सज्जते मनो रजस्तमोभ्यां कलिलं ततोऽन्यथा ॥ ४६ ॥ य एव परमं गुह्यमितिहासमघापहम् ॥ शृणुयाच्छ्रद्धया युक्तो यश्च भक्त्याऽनुकी-र्तयेत् ॥ ४७ ॥ न वै स नरकं याति नेक्षितो यमकिङ्करैः ॥ यद्यप्यमङ्गलो मर्त्यो विष्णुलोके महीयते ॥ ४८ ॥ म्रियमाणो हरेर्नाम गृणन्पुत्रोपचा-रितम् ॥ अजामिलोऽप्यगाद्धाम किं पुनः श्रद्धया गृणन् ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धेऽजामिलोपाख्याने द्वितीयोऽध्यायः ॥ २ ॥ राजोवाच ॥ निशम्य देवः स्वभटोपवर्णितं प्रत्याह किं तान्प्रति धर्मराजः ॥ एवं हताज्ञो विहतान्मुरारेर्नैदेशिकैर्यस्य वशे जनोऽयम् ॥ १ ॥ यमस्य देवस्य न दण्डभङ्गः कुतश्चनर्षे श्रुतपूर्व आसीत् ॥ एतन्मुने वृश्चति लोकसंशयं न हि त्वदन्यं इति मे विनिश्चितम् ॥ २ ॥ श्रीशुक उवाच ॥ भगवत्पुरुषै राजन्याम्याः प्रतिहतोद्यमाः ॥ पतिं विज्ञापयामासुर्यमं संयमनीपतिम् ॥ ३ ॥ यमदूता ऊचुः ॥ कति सन्तीह शास्तारो जीवलोकस्य वै प्रभो ॥ त्रैविध्यं कुर्वतः कर्म फलाभिव्यक्तिहेतवः ॥ ४ ॥ यदि स्युर्बहवो लोके शास्तारो दण्डधारिणः ॥ कस्य स्यातां न वा कस्य मृत्युश्चामृतमेव वा ॥ ५ ॥ किन्तु शास्तृबहुत्वे स्याद्बहूनामिव कर्मिणाम् ॥ शास्तृत्वमुपचारो हि यथा मण्डलवर्तिनाम् ॥ ६ ॥ अतस्त्वमेको भूतानां सेश्वराणामधीश्वरः ॥ शास्ता दण्डधरो नृणां शुभाशुभविवेचनः ॥ ७ ॥ यस्य ते विहितो दण्डो न लोके वर्ततेऽधुना ॥ चतुर्भिरद्भुतैः

यति कथा सुनेर राजा परीक्षित्‌ले सोधे—हे भगवन् ! यस प्रकार जसको आज्ञाको उल्लङ्घन भयो र जसको अधीन सारा संसार छ, ती देवश्रेष्ठ धर्मराजले आफ्ना दूतको मुखबाट जब सबै हाल सुनी विष्णु-दूतद्वारा लखेटिएका ती वीर यमदूतहरूले के भने ? ॥ १ ॥ ऋषे ! आजसम्म कुनै पनि कारणले यमदेवको आज्ञा भङ्ग भएको कुरा कहिल्यै सुनिएको थिएन। हे मुने ! मलाई विश्वास छ कि सबैको यस शंकालाई हजुर बाहेक अरु कसैले पनि काट्न सक्तैन ॥ २ ॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! भगवान्‌का पार्षदले जुन जनहरूको उद्योग विफल पारिदिएका थिए, ती यमदूतले आफ्ना स्वामी र संयमनीपुरीका अधीश्वर भगवान् यमसित गएर भने ॥ ३ ॥ यमदूत भन्दछन्–हे प्रभो ! संसारमा पाप, पुण्य र मिश्रित यी थरिका कर्म गर्ने जीवलाई तिनका कर्मको फल दिने शासक निश्चतरूपले कति छन् ? ॥४॥ यदि संसारमा अनेक शासक छन् भने कस-कसलाई सुख-दुःख मिल्नेछ र कस-कसलाई मिल्दैन ? ॥५॥ यदि काम गर्नेको अनेकताको अनुसार उनका शासक पनि अनेक मानिन्छन् भने माण्डलिक राजाहरू झैं तिनको शासक हुनु केवल उपचारमात्र रहने छ, किनकि ती

सदा परतन्त्र नै रहन्छन् ॥६॥ अतः हाम्रो विचारले त एकमात्र हजुरनै समस्त जीवका दण्डदाता शासक हुनुहुन्छ र सबै मनुष्यका शुभाशुभ कर्मको निर्णय गर्नुहुन्छ ॥७॥ यस्तो भएर पनि हजुरको विहित दण्ड यस बखत संसारमा चल्दैन । आज नै चार विचित्र सिद्धले हजुरको आज्ञालाई हुत्याइदिए ॥८॥ हे नाथ ! कुरा के भयो भने–हामीहरू सबै नियमानुसार यौटा पापीलाई समातेर यातनागृहमा लँजाँदै थियौं, त्यसै बखत ती चारैले बलपूर्वक हाम्रा पाश छिनालेर उसलाई बन्धन-मुक्त पारिदिए ॥९॥ यदि हजुरलाई बताउन बाधा पर्दैन भने भन्नुहवस्–ती को थिए ? हामी ती सिद्धको विषयमा जान्न खोज्दछौं । त्यस पापीले 'नारायण' भन्नासाथ 'नडराउ-नडराउ' भन्दै ती तत्काल आएर उपस्थित भएका थिए ॥१०॥ शुकदेवजी भन्नुहुन्छ–तिनले त्यसरी सोधेपछि प्रजाका शासक भगवान् यमराजले अतिशय प्रसन्न भएर श्रीहरिका चरण-कमलको ध्यान गरेर आफ्ना दूतहरूलाई यस प्रकार भने–॥११॥ यमराज भन्दछन्–हे दूत हो ! म बाहेक यौटा अरु पनि समस्त स्थावर–जङ्गम जगत्‌का प्रधान प्रभु छन् । जसमा यो सारा विश्व धागोमा वस्त्र झैं निर्मिएको छ । जसका

सिद्धैराज्ञा ते विप्रलम्भिता ॥ ८ ॥ नीयमानं तवादेशादस्माभिर्यातनागृहान् ॥ व्यमोचयन्पातकिनं छित्वा पाशान्प्रसह्य ते ॥ ९ ॥ तांस्ते वेदितु-
मिच्छामो यदि नो मन्यसे क्षमम् ॥ नारायणेत्यभिहिते मा भैरित्याययुर्द्रुतम् ॥१०॥ श्रीशुक उवाच ॥ इति देवः स आपृष्टः प्रजासंयमनो यमः ॥
प्रीतः स्वान्दूतान्प्रत्याह स्मरन्पादाम्बुजं हरेः ॥११॥ यम उवाच ॥ परो मदन्यो जगतस्तस्थुषश्च ओतं प्रोतं पटवद्यत्र विश्वम् ॥ यदंशतोऽस्य स्थिति-
जन्मनाशा नस्योतवद्यस्य वशे च लोकः ॥ १२ ॥ यो नामभिर्वाचि जनान्निजायां बध्नाति तन्त्यामिव दामभिर्गाः ॥ यस्मै वलिं त इमे नामकर्म-
निबन्धबद्धाश्चकिता वहन्ति ॥ १३ ॥ अहं महेन्द्रो निर्ऋतिः प्रचेताः सोमाग्निरीशः पवनोऽर्को विरिञ्चिः ॥ आदित्यविश्वे वसवोऽथ साध्या मरुद्गणा
रुद्रगणाः ससिद्धाः ॥ १४ ॥ अन्ये च ये विश्वसृजोऽमरेशा भृग्वादयोऽस्पृष्टरजस्तमस्काः ॥ यस्येहितं न विदुः स्पृष्टमायाः सत्त्वप्रधाना अपि किं
ततोऽन्ये ॥१५॥ यं वै न गोभिर्मनसाऽसुभिर्वा हृदा गिरा वाऽसुभृतो विचक्षते ॥ आत्मानमन्तर्हृदि सन्तमात्मनां चक्षुर्यथैवाकृतयस्ततः परम् ॥१६॥
तस्यात्मतन्त्रस्य हरेरधीशितुः परस्य मायाधिपतेर्महात्मनः ॥ प्रायेण दूता इह वै मनोहराश्चरन्ति तद्रूपगुणस्वभावाः ॥ १७ ॥ भूतानि विष्णोः

अंशस्वरूप ब्रह्मा, विष्णु र शिव इनका जन्म, स्थिति तथा नाशकारक हुन्छन् र सबै जना नाथिएका गोरु झैं जसको आधीन रहन्छन् ॥१२॥ जस्तै किसान गोरुलाई डोरीहरूमा बाँद्छन्, उसै गरी जो मनुष्यहरूलाई ब्राह्मणादि नामले वेदवाणीरूपी डोरीमा बाँधिएका छन् र जसलाई नाम-कर्मरूपी बन्धनमा बाँधिएका यी सबै जीव भयभीत भावले बलि अर्पण गर्दै रहन्छन् ॥१३॥ हे दूत हो ! जसको मायाको वश भएर म, इन्द्र, निर्ऋति, वरुण, चन्द्र, अग्नि, शिव, वायु, सूर्य, ब्रह्मा, विश्वेदेव, वसुगण, साध्यगण, मरुद्गण, सिद्धहरूसहित रुद्रगण र जसलाई रज तथा तमको स्पर्श पनि हुन सक्तैन, यस्ता भृगु आदि अन्य प्रजापति तथा देवता सत्वप्रधान भएर पनि जसको लीलाको केही मन जान्न सक्तैनन् ॥१४॥१५॥ जस्तै संसारी मानिस आफ्ना प्रदर्शक नेत्रलाई देख्न सक्तैनन्, यस्तैआफ्नो अन्तःकरणमा जीवका साक्षीस्वरूपले स्थित जुन ईश्वरलाई प्राणी इन्द्रिय, मन, प्राण, हृदय अथवा वाणी आदि कसैले पनि जान्न सक्तैनन् ॥१६॥ ती आत्मतन्त्र, जगदीश्वर एवं मायापति श्रीहरिका दूत को देखनामा सान्है राम्रा र उनै जस्ता रूप, गुण तथा स्वभाव भएका

छन्, तो प्रायः यस लोकमा नै डुलिरहन्छन् ॥१७॥ ती देवजन बन्दित, दुर्दर्श-लिङ्गस्वरूप र अतिअद्भुत विष्णुका दूत भगवद्भक्त मनुष्यलाई तिनका शत्रुबाट र सबै बाधाहरूबाट सुरक्षित राख्दछन् ॥१८॥ साक्षात् भगवान्ले भनेको यो धर्म विषयमा ऋषि, देवता तथा मुख्य-मुख्य सिद्धगणले पनि जान्न सकेनन्, भने असुर, मनुष्य, विद्याधर र चारण आदि के जान्न सक्लान् ? ॥१९॥ हे दूत हो ! ब्रह्मा, नारद, शिवजी, सनत्कुमार कपिलदेव, स्वायम्भुव मनु, प्रह्लाद, जनक,भीष्म,बलि,शुकदेव र म-यी बाह्र र्यो अत्यन्त गुह्य, गहन एवं दुर्बोध भागवत-धर्मको विषयमा अलि-अलि जान्दछन्, जसलाई जानिसकेपछि प्राणी अमरपद ( मुक्ति ) प्राप्त गर्दछ ॥२०॥२१॥ यस लोकमा भगवान्का नामोच्चारणादि गरिएको भक्तियोग नै मनुष्यको सबैभन्दा प्रधान धर्म हो ॥२२॥ हे पुत्र हो ! हेर, भगवान्को नामोच्चारणको महिमा यस्तो छ कि–जसको प्रभावले अजामिल जस्तो पनि मृत्यु पाशबाट मुक्त भयो ॥२३॥ अतएव सबै मनुष्यको पापका समूह नष्ट पार्नका लागि भगवान्का गुण-कर्मसित सम्बन्ध राख्ने नामहरूको कीर्तन गर्नु नै ठूलो वस्तु हो, किनकि त्यस महापापी

सुरपूजितानि दुर्दर्शलिङ्गानि महाद्भुतानि ॥ रक्षन्ति तद्भक्तिमतः परेभ्यो मत्तश्च मर्त्यानथ सर्वतश्च ॥ १८ ॥ धर्मं तु साक्षाद्भगवत्प्रणीतं न वै विदुर्ऋषयो नापि देवाः ॥ न सिद्धमुख्या असुरा मनुष्याः कुतश्च विद्याधरचारणादयः ॥ १९ ॥ स्वयंभूर्नारदः शम्भुः कुमारः कपिलो मनुः ॥ प्रह्लादो जनको भीष्मो बलिर्वैयासकिर्वयम् ॥ २० ॥ द्वादशैते विजानीमो धर्मं भागवतं भटाः ॥ गुह्यं विशुद्धं दुर्बोधं यं ज्ञात्वाऽमृतमश्नुते ॥ २१ ॥ एतावानेव लोकेऽस्मिन्पुंसां धर्मः परः स्मृतः ॥ भक्तियोगो भगवति तन्नामग्रहणादिभिः ॥ २२ ॥ नामोच्चारणमाहात्म्यं हरेः पश्यत पुत्रकाः ॥ अजामिलोऽपि येनैव मृत्युपाशादमुच्यत ॥ २३ ॥ एतावताऽलमघनिर्हरणाय पुंसां सङ्कीर्तनं भगवतो गुणकर्मनाम्नाम् ॥ विक्रुश्य पुत्रमघवान्यदजामिलोऽपि नारायणेति म्रियमाण इयाय मुक्तिम् ॥ २४ ॥ प्रायेण वेद तदिदं न महाजनोऽयं देव्या विमोहितमतिर्बत माययाऽलम् ॥ त्रय्यां जडीकृतमतिर्मधुपुष्पितायां वैतानिके महति कर्मणि युज्यमानः ॥ २५ ॥ एवं विमृश्य सुधियो भगवत्यनन्ते सर्वात्मना विदधते खलु भावयोगम् ॥ ते मे न दण्डमर्हन्त्यथ यद्यमीषां स्यात्पातकं तदपि हन्त्युरुगायवादः ॥ २६ ॥ ते देवसिद्धपरिगीतपवित्रगाथा ये साधवः समदृशो भगवत्प्रपन्नाः ॥ तान्नोपसीदत हरेर्गदयाऽभिगुप्तान्नैषां वयं न च वयः प्रभवाम दण्डे ॥ २७ ॥ तानानयध्वमसतो विमुखान्मुकुन्दपादारविन्दमकरन्दरसा-

अजामिलले मर्ने बेलामा अस्वस्थ चित्तले आफ्नो छोरोलाई 'नारायण' यस्तो भनेर डाक्नाले नै मुक्ति प्राप्त गर्‍यो ॥२४॥ ठूला-ठूला प्रायश्चित्त विधान बनाउने महापुरुषहरूको बुद्धि पनि भगवान्को मायाले मोहित हुन्छ । यसले हुन सक्तछ कि ती भगवन्नाम कीर्तनको माहात्म्य जान्न नसकेका भए पनि स्वर्गादि नाशवान् फलहरूको बढाइँ गर्न मनोहारी र लामा-लामा वेद वाक्यमा चित्त अल्झाई ती यज्ञ-यागादि ठूला-ठूला कर्ममा नै जीवनभरि लागिरहे ॥२५॥ हे दूत हो ! यो विचारेर बुद्धिमान् पुरुष सबै प्रकारले भगवान् अनन्तको नै भक्ति गर्दछन्, ती मेरो दण्डका पात्र कदापि होइनन् किनकि पहिले त उनीद्वारा पाप हुनै सक्तैन र यदि केही पाप हुन्छ भने त्यसलाई भगवद्गुणगान तत्कालनष्ट पारिदिन्छ ॥२६॥ उनको शरणागत तथा समदर्शी साधुजनका पवित्र चरित्रको देवता एवं सिद्धगण गान गरिरहन्छन् । ती भगवानको गदाले सदा सुरक्षित रहन्छन् । अतः उनीकहाँ तिमी कहिल्यै नजानू ।

उनलाई दण्ड दिन म तथा साक्षात् काल पनि समर्थ हुँदैन ॥२७॥ तिमीहरू यहाँ तिनै पापीलाई ल्याउन्, जो सर्वसंग परित्यागी र रसज्ञ परमहंसद्वारा सेवित श्रीहरिका चरण-कमल-मकरन्दको मीठो स्वाद त्यागेर नरकको द्वाररूपी आफ्नो घरमा आसक्त रहने हुन् ॥२८॥ जसको जिब्रो भगवान्‌का नामहरूको कीर्तन गर्दैनन्, जसको चित्त नारायणका चरण-कमलको स्मरण गर्दैनन् र जसको मस्तक एकपल्ट पनि भगवान् कृष्णको साम्नुन्ने न्युरन्न, य ता भगवत् परिचर्यादि शुभ कृत्यबाट विमुख अधम पुरुषलाई तिमी मनेर ल्याउन् ॥२९॥ आफ्ना भृत्यहरूद्वारा जुन अपराध भएको छ, त्यसलाई उनै पुराण-पुरुष भगवान् कृष्ण क्षमा गरून् । म उनको सेवामा हात जोरेर सदा उपस्थित रहन्छु । ती परम प्रभुलाई हामीजस्ता अज्ञानी जनको अपराध क्षमा गर्नु नै उचित छ । ती सर्वव्यापक पुरुषोत्तमलाई हाम्रो अनेकशः नमस्कार छ ॥३०॥ शुकदेवजी भन्नुहुन्छ–अतएव हे कुरुश्रेष्ठ ! विष्णु भगवान्‌को जगन्मङ्गलमय नाम सङ्कीर्तन नै ठूला-ठूला पापलाई समूल नष्ट पार्ने प्रायश्चित हो, यो निश्चित जान ॥३१॥ जिनकि भगवान्‌का उदार चरित्रको पुनः पुनः श्रवण तथा कीर्तन गरिरहने

दजस्रम् ॥ निष्किञ्चनैः परमहंसकुले रसज्ञैर्जुष्टन्गृहे निरयवर्त्मनि बद्धतृष्णान् ॥ २८ ॥ जिह्वा न वक्ति भगवद्गुणनामधेयं चेतश्च न स्मरति तच्चरणारविन्दम् ॥ कृष्णाय नो नमति यच्छिर एकदाऽपि तानानयध्वमसतोऽकृतविष्णुकृत्यान् ॥ २९ ॥ तत्क्षम्यतां स भगवान्पुरुषः पुराणो नारायणः स्वपुरुषैर्यदसत्कृतं नः ॥ स्वानामहो न विदुषां रचिताञ्जलीनां क्षान्तिर्गरीयसि नमः पुरुषाय भूम्ने ॥ ३० ॥ तस्मात्सङ्कीर्तनं विष्णो– र्जगन्मङ्गलमंहसाम् ॥ महतामपि कौरव्य विद्ध्यैकान्तिकनिष्कृतम् ॥ ३१ ॥ शृण्वतां गृणतां वीर्याण्युद्दामानि हरेर्मुहुः ॥ यथा सुजातया भक्त्या शुद्ध्येन्नात्मा व्रतादिभिः ॥ ३२ ॥ कृष्णाङ्घ्रिपद्ममधुलिण्न पुनर्विसृष्टमायागुणेषु रमते वृजिनावहेषु ॥ अन्यस्तु कामहत आत्मरजः प्रमार्ष्टुमीहेत कर्म यत एव रजः पुनः स्यात् ॥ ३३ ॥ इत्थं स्वभर्तृगदितं भगवन्महित्वं संस्मृत्य विस्मितधियो यमकिङ्करास्ते ॥ नैवाच्युताश्रयजनं प्रतिशङ्कमाना द्रष्टुं च बिभ्यति ततः प्रभृतिस्म राजन् ॥ ३४ ॥ इतिहासमिमं गुह्यं भगवान्कुम्भसम्भवः ॥ कथयामास मलय आसीनो हरिमर्चयन् ॥ ३५ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे तृतीयोऽध्यायः ॥ ३ ॥ राजोवाच ॥ देवासुरनृणां सर्गो नगानां मृगपक्षिणाम् ॥ सामासिकस्त्वया

पुरुषहरूको हृदय जसरी अनायास उत्पन्न भगवद्भक्तिले शुद्ध हुन्छ, त्यस्तो अरु व्रत-पूजादिले शुद्ध हुन सक्तैन ॥३२॥ जो प्राणी भगवान्‌का चरणारविन्दको रसास्वादन गर्ने भ्रमर सदृश हुन्छन्, ती एकपल्ट तुच्छ मानेर त्यागिएको पापोत्पादक मायाका गुणहरूमा फेरि अल्झन्नन्, तर अन्य विषयलोलुप व्यक्ति आफ्ना दोषको मार्जन गर्नका लागि प्रायश्चित्त स्वरूप कर्ममा नै प्रवृत्त हुन्छन्–जसबाट फेरि दोषको नै उत्पत्ति भइरहन्छ ॥३३॥ हे राजन् ! आफ्ना स्वामीले भनेको भगवान्‌को यस महिमालाई स्मरण गरेर यमदूतहरूलाई ठूलो विस्मय भयो । आफ्ना प्रभुको कथनमा विश्वास गरेर त्यसै वेलादेखि ती आफ्नो विनाशको शंकाले प्रभुका आश्रित पुरुषको नगीचै आँउदैनन्, ती उनलाई देख्तै डराउँछन् ॥३४॥ हे राजन् ! यो प्राप्त इतिहास भगवान् अगस्त्यले मलयाचलमा बसेर भगवान्‌को पूजा गर्दा भनित भन्नुभएको थियो ॥३५॥ इति श्रीमद्भागवतेमहापुराणे षष्ठस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां तृतीयोऽध्यायः ॥३॥ (हंसगुह्यस्तोत्र)–यति कथा सुनेर राजा परीक्षितले सोधे–हेभगवन् ! हजुरले स्वायम्भुव मन्वन्तरमा जुन देवता, असुर, मनुष्य, सर्प, मृग,

र पक्षिहरूको सृष्टिको संक्षिप्त वर्णन गर्नुभयो । अब म विस्तारपूर्वक त्यसको विवरण जान्न इच्छा गर्दछु । भगवान्ले आफ्नू जुन शक्तिद्वारा अगाडिको सृष्टि उत्पन्न गर्नुभयो, त्यो पनि जान्ने मेरो अभिलाषा छ ॥१॥२॥ सूतजी भन्दछन्–हे मुनिसत्तम ! राजर्षि परीक्षितको त्यो उत्तम प्रश्न सुनेर महायोगी शुकदेव उनको महिमा गर्दै भन्दछन् ॥३॥ शुकदेवजी भन्न लागे–हे राजन् ! जब राजा प्राचीनबर्हिका प्रचेता नामका छोराहरूले समुद्रबाट बाहिर निस्केर सारा भूमण्डललाई रूख-पातले भरिएको देखे तब उनको रिस चढेको थियो, यस्तु प्रचेताहरूले ती वृक्षमा अत्यन्त रिसाएर आफ्नू तपोबलले उनलाई भस्म पारिदिने इच्छा गरेर आफ्नू, मुखबाट वायु र अग्नि छाडे ॥४॥५॥ हे कुरुनन्दन ! ती प्रचेताले छाडेका वायु र अग्निले वन सबै दग्ध हुन लागेको देखेर महाराज सोमले तिनको क्रोध शान्त पार्दै यस प्रकार भने–॥६॥ हे महाभाग ! तिमीहरू प्रजाको वृद्धि गर्न हुनाले नै गर्दा प्रजापति कहिन्छौ । अतः तिमीले यी बिचरा वृक्षप्रति द्रोह गर्नु उचित छैन ॥७॥ अहो ! प्रजापतिहरूका स्वामी र अविनाशी भगवान् श्रीहरिले सबै वनस्पति तथा औषधिहरूलाई

प्रोक्तो यस्तु स्वायंभुवेऽन्तरे ॥ १ ॥ तस्यैव व्यासमिच्छामि ज्ञातुं ते भगवान्यथा ॥ अनुसर्गं यया शक्त्या ससर्ज भगवान्परः ॥२॥ सूत उवाच ॥ इति संप्रश्नमाकर्ण्य राजर्षेर्बादरायणिः ॥ प्रतिनन्द्य महायोगी जगाद मुनिसत्तमाः ॥ ३ ॥ श्रीशुक उवाच ॥ यदा प्रचेतसः पुत्रा दश प्राचीनबर्हिषः ॥ अन्तःसमुद्रादुन्मग्ना ददृशुर्गां द्रुमैर्वृताम् ॥ ४ ॥ द्रुमेभ्यः क्रुद्ध्यमानास्ते तपोदीपितमन्यवः ॥ मुखतो वायुमग्निं च ससृजुस्तद्दिधक्षया ॥ ५ ॥ ताभ्यां निर्दह्यमानांस्तानुपलभ्य कुरूद्वह ॥ राजोवाच महान्सोमो मन्युं प्रशमयन्निव ॥ ६ ॥ मा द्रुमेभ्यो महाभागा दीनेभ्यो द्रोग्धुमर्हथ ॥ विवर्धयिषवो यूयं प्रजानां पतयः स्मृताः ॥ ७ ॥ अहो प्रजापतिपतिर्भगवान्हरिरव्ययः ॥ वनस्पतीनोषधीश्च ससर्जोर्जमिषं विभुः ॥ ८ ॥ अन्नं चराणामचरा ह्यपदः पादचारिणाम् ॥ अहस्ता हस्तयुक्तानां द्विपदां च चतुष्पदः ॥ ९ ॥ यूयं च पित्राऽन्वादिष्टा देवदेवेन चानघाः ॥ प्रजासर्गाय हि कथं वृक्षान्निर्दग्धुमर्हथ ॥ १० ॥ आतिष्ठत सतां मार्गं कोपं यच्छत दीपितम् ॥ पित्रा पितामहेनापि जुष्टं वः प्रपितामहैः ॥ ११ ॥ तोकानां पितरो बन्धुर्दृशः पक्ष्म स्त्रियः पतिः ॥ पतिः प्रजानां भिक्षूणां गृह्यज्ञानां बुधः सुहृत् ॥ १२ ॥ अन्तर्देहेषु भूतानामात्माऽऽस्ते हरिरीश्वरः ॥ सर्वं तद्धिष्ण्यमीक्षध्वमेवं वस्तोषितो ह्यसौ ॥ १३ ॥ यः समुत्पतितं देह आकाशान्मन्युमुल्बणम् ॥ आत्मजिज्ञासया यच्छेत्स गुणानतिवर्तते ॥ १४ ॥

प्रजाको भक्ष्य तथा अन्नरूपमा उत्पन्न गरेको हो ॥८॥ संसारमा जङ्गम जीवहरूको भोजन स्थावर र खुट्टा हुनेको खुट्टा नहुने भक्ष्य हुन् । हात हुनेका हात नहुने दुइ खुट्टा हुनेको चार खुट्टा हुने जति भोजन हुन् ॥९॥ हे अनघ ! तिमीलाई तिम्रा पिता (राजा प्राचीनबर्हि) तथा देवाधिदेव श्रीविष्णुले प्रजा वृद्धि गर्न आज्ञा दिएका छन् । अनि यो कसरी उचित हुन सक्छ–तिमी सबै वृक्षलाई भस्म पारिदेओ ॥१०॥ यसनिम्ति अब आफ्नू बल्दो रिस शान्त पार र आफ्ना पिता, पितामह र प्रपितामहद्वारा सेवित सत्पुरुषहरूको बाटोको सहारा लेऊ ॥११॥ जसरी बालकहरूका शुभेच्छु माता-पिता, नेत्रका परेला, स्त्रीका सुहृद् पति, भिक्षुकहरूका पोषक गृहस्थ र अज्ञानीहरूका हितचिन्तक ज्ञानवान् हुन्छन् । त्यस्तै नै प्रजागणका सुहृद् राजा हुन्छन् ॥१२॥ सबै प्राणीका हृदयमा आत्मारूपले भगवान् विष्णु नै विराजमान रहन्छन् । अतएव तिमी सबैजना उनैको निवासस्थान बुझ यस्तो गरेर नै

तिमी भगवान्‌लाई प्रसन्न पार्न सक्दछौ ॥१३॥ जो प्राणी आफ्नू देहको हृदयाकाशमा उत्पन्न रिसलाई आत्मविचार द्वारा शान्त गरिदिन्छ, त्यसैले तीनैं गुणलाई पार गर्न सक्दछ— अरु होइन ॥१४॥ अतः अब तिमी यी दीनहरूमा रिस नगर, तिम्रो कल्याण होस् र तिमीहरू पक्षीद्वारा परिपालित यी श्रेष्ठ कन्या पत्नीरूपमा स्वीकार गर ॥१५॥ हे राजन् ! यसप्रकार प्रचेताहरूलाई बुझाएर राजा सोमले प्रम्लोचा नामकी अप्सरासित जायमान यौटी राम्रो कटि हुने कन्या उनलाई दिए र गए। त्यसपछि प्रचेताहरूले त्यस कन्यासित धर्मानुसार विवाह गरे ॥१६॥ कसैको कथन छ—उनैबाट तिनका प्राचेतस नामले विख्यात छोरा जन्मे, जसको प्रजा वृद्धिले तीनैं लोक भरिए ॥१७॥ ती पुत्रीवत्सल दक्षले आफ्नू वीर्य तथा मनले जुन-जुन जीवको रचना गरेका थिए, त्यो म भन्दछु। तिमी सावधान मनले सुन ॥१८॥ प्रजापति दक्षले पहिले आकाश, स्थल तथा जलचर बस्ने देवता, असुर तथा

अलं दग्धैर्द्रुमैर्दीनैः खिलानां शिवमस्तु वः ॥ वार्क्षी ह्येषा वरा कन्या पत्नीत्वे प्रतिगृह्यताम् ॥ १५ ॥ इत्यामन्त्र्य वरारोहां कन्यामाप्सरसीं नृप ॥
सोमो राजा ययौ दत्त्वा ते धर्मेणोपयेमिरे ॥ १६ ॥ तेभ्यस्तस्यां समभवद्दक्षः प्राचेतसः किल ॥ यस्य प्रजाविसर्गेण लोका आपूरितास्त्रयः ॥१७॥
यथा ससर्ज भूतानि दक्षो दुहितृवत्सलः ॥ रेतसा मनसा चैव तन्ममावहितः शृणु ॥ १८ ॥ मनसैवासृजत्पूर्वं प्रजापतिरिमाः प्रजाः ॥ देवासुर-
मनुष्यादीन्नभस्स्थलजलौकसः ॥ १९ ॥ तमोवृंहितमालोक्य प्रजासर्गं प्रजापतिः ॥ विन्ध्यपादानुपव्रज्य सोऽचरद्दुष्करं तपः ॥ २० ॥ तत्राघम-
र्षणं नाम तीर्थं पापहरं परम् ॥ उपस्पृश्यानुसवनं तपसाऽतोषयद्धरिम् ॥ २१ ॥ अस्तौषीद्धंसगुह्येन भगवन्तमधोक्षजम् ॥ तुभ्यं तदभिधास्यामि
कस्यातुष्यद्यतो हरिः ॥ २२ ॥ प्रजापतिरुवाच ॥ नमः परायावितथानुभूतये गुणत्रयाभासनिमित्तबन्धवे ॥ अदृष्टधाम्ने गुणतत्त्वबुद्धिभिर्निवृत्त-
मानाय दधे स्वयंभुवे ॥ २३ ॥ न तस्य सख्यं पुरुषोऽवैति सख्युः सखा वसन्संवसतः पुरेऽस्मिन् ॥ गुणो यथा गुणिनो व्यक्तदृष्टेस्तस्मै महेशाय

मनुष्यहरूतिको प्रजालाई आफ्नू मनबाट प्रकट गरे ॥१९॥ ती प्रजावर्गको वृद्धि नभएको देखेर दक्ष विन्ध्याचलको फेदीमा गए र त्यहाँ कठोर तपस्या गर्न लागे ॥२०॥ त्यहाँ बसेर सर्व पापका विनाशक अघमर्षण तीर्थमा सायं-प्रातः र मध्याह्न तीनै बेला स्नान गरेर उनले उग्र तपद्वारा भगवान्‌लाई प्रसन्न पारिलिए ॥२१॥ हे राजन् ! त्यसपछि दक्षले जुन हंसगुह्य स्तोत्रद्वारा श्रीअधोक्षज भगवान्‌को स्तुति गरेर जसले भगवान् तीमाथि प्रसन्न भए, त्यो म तिमीलाई भन्दछु ॥२२॥ दक्ष प्रजापतिले भने—जसको चेतनाशक्ति विशाल छ, जीव तथा मायाका ईश्वर छन्, प्रत्यक्षादि प्रमाणहरूको पहुँच नहुनाले जसको सच्चा स्वरूपको विषयमा परमार्थको कल्पना गर्ने पुरुष पनि केही जान्न सक्तैनन्, ती स्वयंप्रकाशशील परमात्मालाई नमस्कार छ ॥२३॥ जस्तै रूपादि विषय आफूलाई प्रकाश दिने नेत्र आदि *चोर इन्द्रियका प्रकाशकस्वरूपी गुण जान्न सक्तैनन्, त्यस्तै नै यस देहमा मित्रवत् रहने

* उदाहरण ( म तिम्रो चोर हुँ )—यौटा नगर बाहिर दुइ जना महात्मा बस्तथे। तिनीहरूलाई कहिले काहीं त्यहाँको राजा पनि पुग्दथ्यो। नगरको नजीकै यौटा विख्यात चोर बस्तथ्यो। [illegible] महात्मालाई हेर्न गर्दथ्यो। अतः केही समयपछि चोरको अन्तःकरण केही शुद्ध हुँदै गयो, त्यसैले उ पनि ती महात्माको पास बसेर भजन-ध्यान गर्नलाग्यो। एक दिन राजाले ध्यानमा बसेको चोरलाई [illegible] नमस्कार गर। त्यति मात्र होइन, उसलाई नयाँ आएको महात्मा जानेर रुपियाको थैली पनि चढाए। चोरले भन्यो—'यो रुपियाँ उठाउनोस्। म तिम्रा नगरको चोर हुँ। मैले अनेक पटक चोरी गरेको [illegible] ती महात्माको [illegible] परेर सुचित्ता पारक परिश्रम र अब यहाँ बसेर आफ्ना पापको प्रायश्चित्त गर्दैछु। म त तिम्रो दण्डको पात्र हुँ—नमस्कारको होइन।' राजाले भने— [illegible] दिइरहेको छु, त्यसलाई स्वीकार गर।' चोरले भन्यो—'म त तपस्या गरेर पुरानो भारी बिसाउन खोज्दैछु, अब म तिम्रो नयाँ भारी किन बोकूँ ? [illegible]'

मनको जीव भिन्न भावले सधैँ संगसँगै रहने जुन परमेश्वरको सद्भावलाई जान्न सक्तैन, तीं महेश्वरलाई म नमस्कार गर्दछु ॥२४॥ देह, ज्ञान, इन्द्रिय, अन्तःकरण, पञ्चभूत तथा तिनका तन्मात्राहरू यी सबै पृथक् इन्द्रिय र तिनका अधिष्ठाता देवताहरूको स्वरूपलाई पनि जान्न सक्तैनन्, तर जीव यी सबैसित र इनका कारणस्वरूप गुणहरूबाट परिचित छन्। तर यी सबैको ज्ञाता भएर पनि त्यो जुन सर्वज्ञ परमात्माको विषयमा केही जान्न सक्तैन, त्यस अनन्तको म स्तुति गरिरहेको छु ॥२५॥ दर्शन र स्मरण शक्तिको नाश भएपछि जब नाम-रूपको परिचायक मनको समाधि लाग्दछ, तब जुन एकमात्र आफ्नू स्वरूप स्थितिबाट नै ज्ञायमान हुन्छ र शुद्धचित्त नै जसको उपलब्धिस्थान छ, त्यो शुद्ध हंसस्वरूप परमात्मालाई प्रणाम छ ॥२६॥ जस्तै याज्ञिकगण सामिधेनि नामका पन्ध्र मन्त्रले काठमा लुकेको अग्निलाई उत्पन्न ( प्रकट ) गर्दछन्, त्यसै गरी सत्त्वाइस सत्त्वरूपिणी आफ्ना उपाधिबाट लुकेर अन्तः करणमा गूढभावले स्थित जुन परमात्मालाई विवेकशील पुरुष आफ्नू बुद्धिद्वारा देख्दछन् तीं मायाका सबै भेदलाई त्यागिदिएपछि मोक्ष सुखस्वरूपले अनुभूत, सर्वनामा,

नमस्करोमि ॥ २४ ॥ देहोऽसवोऽक्षा मनवो भूतमात्रा नात्मानमन्यं च विदुः परं यत् ॥ सर्वं पुमान्वेद गुणांश्च तज्ज्ञो न वेद सर्वज्ञमनन्तमीडे ॥ २५ ॥ यदोपरामो मनसो नामरूपरूपस्य दृष्टस्मृतिसंप्रमोषात् ॥ य ईयते केवलया स्वसंस्थया हंसाय तस्मै शुचिसद्मने नमः ॥ २६ ॥ मनीषिणोऽन्तर्हृदि संनिवेशितं स्वशक्तिभिर्नवभिश्च त्रिवृद्भिः ॥ वह्निं यथा दारुणि पांचदश्यं मनीषया निष्कर्षन्ति गूढम् ॥ २७ ॥ स वै ममाशेषविशेषमायानिषेधनिर्वाणसुखानुभूतिः ॥ स सर्वनामा स च विश्वरूपः प्रसीदतामनिरुक्तात्मशक्तिः ॥ २८ ॥ यद्यन्निरुक्तं वचसा निरूपितं धियाऽक्षभिर्वा मनसा वोत यस्य ॥ माभूत्स्वरूपं गुणरूपं हि यत्तत्स वै गुणापायविसर्गलक्षणः ॥ २९ ॥ यस्मिन्यतो येन च यस्य यस्मै यद्यो यथा कुरुते कार्यते च ॥ परावरेषां परमं प्राक्प्रसिद्धं तद्ब्रह्म तद्धेतुरनन्यदेकम् ॥ ३० ॥ यच्छक्तयो वदतां वादिनां वै विवादसंवादभुवो भवन्ति ॥ कुर्वन्ति चैषां मुहुरात्ममोहं तस्मै नमोऽनन्तगुणाय भूम्ने ॥ ३१ ॥ अस्तीति नास्तीति च वस्तुनिष्ठयोरेकस्थयोर्भिन्नविरुद्धधर्मयोः ॥ अवेक्षितं किंचन योगसांख्ययोः समं परं ह्यनुकूलं बृहत्तत् ॥ ३२ ॥ योऽनुग्रहार्थं भजतां पादमूलमनामरूपो भगवाननन्तः ॥ नामानि रूपाणि च जन्मकर्मभिर्भेजे स

विश्वरूप तथा अनिर्वचनीय प्रभावशाली भगवान् ममाथि प्रसन्न होउन् ॥२७॥२८॥ वाणीले जे कहिन्छ तथा बुद्धि, इन्द्रिय र मनले जो खोजिन्छ, त्यही उनको स्वरूप होइन । त्यो त गुणको कार्य मात्र हो । त्यो परमात्मा त गुणको उत्पत्ति तथा प्रयलरूपी कार्यले देखिन्छ ॥२९॥ जसमा, जहाँबाट, जसद्वारा, जसको, जसकानिम्ति,जुन कार्यको लागि र जो, जस प्रकार गर्दछ अथवा जसको प्रेरणाले त्यो ( जीव ) कार्यमा प्रवृत्त गर्न गरिन्छ, त्यो सबै एकमात्र ब्रह्म नै हो, किनकि त्यो सबै कार्य-कारणले पूर्वसिद्ध छ र सजातीय, विजातीय, भेदले रहित तथा सबैको एकमात्र हेतु छ ॥३०॥ जसका शक्तिहरू वाद-विवाद गर्न वादीहरूको विवाद तथा संवादको भूमिका बनेर उनलाई बारम्बार मोहमा पार्दै रहन्छन्, तीं अनन्त गुण-युक्त सर्वव्यापी परमात्मालाई प्रणाम छ ॥३१॥ योटै वस्तुको विषयमा अस्ति अर्थात् 'छ' र नास्ति अर्थात् 'छैन' यी दुइ विरुद्ध तथा विभिन्न धर्मका प्रतिपादक योग र सांख्यमा आफाफना तर्कको अनुकूल जो एकैनासे तथा श्रेष्ठ वस्तु छ, त्यही ब्रह्म हो ॥३२॥ प्राकृत नाम तथा रूपले हीन भएर पनि जुन अनन्त भगवान्ले आफ्ना चरणको

भजन गर्न पुरुषहरूमा कृपा गर्नका लागि आफ्नो जन्म तथा कर्मद्वारा विविधरूप र नाम धारण गरेका थिए, ती भगवान् ममाथि प्रसन्न होउन् ॥३३॥ जस्तै वायु पृथ्वीका गुण अर्थात् गन्धको सहायता पाएर उसकै जस्तो प्रतीयमान हुन्छ, त्यस्तै नै जो अन्तर्यामी परमात्मा प्राकृत ज्ञानमार्ग द्वारा मनुष्यका भावानुसार भिन्न-भिन्न देवताका रूपमा दृष्टिगोचर हुन्छन्, ती भगवान् मेरो मनोरथ पूर्ण गरुन् ॥३४॥ श्रीशुकदेव भन्नुहुन्छ–हे कुरुश्रेष्ठ ! त्यो अघमर्षण तीर्थमा यस प्रकार स्तुति गरिसकेपछि भक्तवत्सल भगवान् ती स्तुति गर्न प्राचेतसहरूका समक्ष हुनुभयो ॥३५॥ त्यस बखत उनले आफ्ना चरण गरुडको काँधमा राखेका थिए । उनका लामा-लामा आठ भुजा थिए, तिनमा शङ्ख, चक्र, ढाल, तरवार, धनुष, बाण, गदा र पाश धारण गरेका थिए ॥३६॥ उनको शरीर जलले भरिएको मेघ समान श्याम थियो, त्यसमाथि पीताम्बर सुशोभित थियो र उनको मुख तथा नेत्र प्रसन्न थिए । उनको सर्वाङ्ग वनमालाले ढाकिएको थियो । श्रीवत्स र कौस्तुभ मणिले गर्दा त्यो शरीर झन्है नै सुन्दर झात भइरहेको थियो ॥३७॥ ती विशाल मुकुट, कटक, हल्लिरहेका

मह्यं परमः प्रसीदतु ॥ ३३ ॥ यः प्राकृतैर्ज्ञानपथैर्जनानां यथाशयं देहगतो विभाति ॥ यथाऽनिलः पार्थिवमाश्रितो गुणं स ईश्वरो मे कुरुतान्मनो-
रथम् ॥ ३४ ॥ श्रीशुक उवाच ॥ इति स्तुतः संस्तुवतः स तस्मिन्नघमर्षणे ॥ आविरासीत्कुरुश्रेष्ठ भगवान्भक्तवत्सलः ॥ ३५ ॥ कृतपादः सुपर्णांसे
प्रलम्बाष्टमहाभुजः ॥ चक्रशङ्खासिचर्मेषुधनुःपाशगदाधरः ॥ ३६ ॥ पीतवासा घनश्यामः प्रसन्नवदनेक्षणः ॥ वनमालानिवीताङ्गो लसच्छ्रीवत्सकौ-
स्तुभः ॥ ३७ ॥ महाकिरीटकटकः स्फुरन्मकरकुण्डलः ॥ काञ्च्यङ्गुलीयवलयनूपुराङ्गदभूषितः ॥ ३८ ॥ त्रैलोक्यमोहनं रूपं बिभ्रत्त्रिभुवनेश्वरः ॥
वृतो नारदनन्दाद्यैः पार्षदैः सुरयूथपैः ॥ ३९ ॥ स्तूयमानोऽनुगायद्भिः सिद्धगन्धर्वचारणैः ॥ रूपं तन्महदाश्चर्यं विचक्ष्यागतसाध्वसः ॥ ४० ॥
ननाम दण्डवद्भूमौ प्रहृष्टात्मा प्रजापतिः ॥ न किञ्चनोदीरयितुमशकत्तीव्रया मुदा ॥ आपूरितमनोद्वारैर्ह्रदिन्य इव निर्झरैः ॥ ४१ ॥ तं तथाऽवनतं
भक्तं प्रजाकामं प्रजापतिम् ॥ चित्तज्ञः सर्वभूतानामिदमाह जनार्दनः ॥ ४२ ॥ श्रीभगवानुवाच ॥ प्राचेतस महाभाग संसिद्धस्तपसा
भवान् ॥ मच्छ्रद्धया मत्परया मयि भावं परं गतः ॥ ४३ ॥ प्रीतोऽहं ते प्रजानाथ यत्तेऽस्योद्बृंहणं तपः ॥ मनैष कामो भूतानां यद्भूयासुर्वि-

मकराकृति कुण्डल, कांची (करधनी), औंठी, कंकण, नूपुर तथा अङ्गदादि आभूषणहरूले विभूषित थियो ॥३८॥ यस प्रकार त्रिभुवनपति भगवान् तीनै लोकलाई मोहित पार्ने रूप धारण गरेर प्रकट हुनुभयो । ती नारद तथा नन्द-सुनन्दादि पार्षद र अनेक देवनायकहरूले घेरिएका थिए ॥३९॥ उनका पछि-पछि गुणगान गर्न सिद्ध, गन्धर्व र चारणादि उनको स्तुति गर्दै हिँडिरहेथे । भगवान्को त्यो अतिशय अद्भुत रूप देखेर प्रजापति दक्ष आत्तिए जस्ता भए र प्रसन्न मनले पृथ्वीमा लम्पसार परेर उनलाई प्रणाम गरे । जस्तै अनेक प्रपातका जल पाएर नदीहरू भरिन्छन् त्यस्तै नै परमानन्दको वेगले मन तथा इन्द्रियहरू रुद्ध हुनाले गर्दा ती केही बोल्न सकेनन् ॥४०॥४१॥ त्यस पछि सबै जीवका मनको कुरा जान्ने भएका भगवान् यस प्रकार साष्टाङ्ग प्रणाम गर्न एवं प्रजा उत्पन्न गर्नका इच्छुक प्रजापति दक्षसित भन्नुहुन्छ ।४२। भगवान् आज्ञाहुन्छ–हे प्रचेताकापुत्र महाभाग दक्ष ! तिमीलाई तप द्वारा उत्तम प्रकारको सिद्धि प्राप्त भएको छ, किनकि मप्रति श्रद्धा गर्नाले तिम्रो हृदयमा मेरो प्रति बलियो प्रेम उम्लेर आएको छ ॥४३॥ हे प्रजापते ! तिम्रो तपस्यामा विश्वको वृद्धि

गर्नेछ । अतएव म तिमीमाथि सार्है प्रसन्न छु । कारण यो हो—'प्राणीहरूको वृद्धि होस्' यही नै मेरो कामना छ ॥ ४४ ॥ ब्रह्मा, शिव, तिमी, मनु तथा इन्द्र—यी सबै मेरा नै विभूतिहरू हुन् र यीनै प्राणीहरूको उत्पत्तिका कारण हुन् ॥ ४५ ॥ हे ब्रह्मन् ! तप मेरो हृदय हो, विद्या मेरो शरीर हो, कर्म मेरो आकृति हो र देवता मेरो प्राण हुन् ॥४६॥ सृष्टि-को आरम्भमा चिन्मात्र, अव्यक्त तथा सर्वतोभावले निदाएको जस्तै एकमात्र म नै थिएँ । मेरो अतिरिक्त बाहिर भित्र अरु कोही पनि थिएन ॥ ४७ ॥ जब म अनन्त गुणशाली अनन्तबाट गुणमय ब्रह्माण्ड शरीर प्रकट भयो तब अयोनिज र आदिपुरुष ब्रह्माजी जायमान भए ॥ ४८ ॥ मेरो वीर्यबाट देवश्रेष्ठ ब्रह्मा जब सृष्टि कार्य गर्न प्रयत्न गर्न उद्यत भए तब उनले त्यस कार्यमा आफूलाई असमर्थ पाए ॥ ४९ ॥ अनि मेरै कथनानुसार देववर ब्रह्माले कठोर तप गरे र त्यसको प्रभावले उनले सर्वप्रथम तिमी नौ प्रजापति-हरूको सृष्टि गरे । हे तात ! यी पञ्चजन नामका प्रजापतिकी कन्या हुन् र असिक्नी इनको नाम हो । हे प्रजापते ! तिमी इनैलाई आफ्नी पत्नीको रूपमा स्वीकार गर ॥५०-५१॥तिमी

भूतयः ॥ ४४ ॥ ब्रह्मा भवो भवन्तश्च मनवो विबुधेश्वराः ॥ विभूतयो मम ह्येता भूतानां भूतिहेतवः ॥ ४५ ॥ तपो मे हृदयं ब्रह्मस्तनुर्विद्या क्रिया कृतिः ॥ अङ्गानि क्रतवो जाता धर्म आत्माऽसवः सुराः ॥ ४६ ॥ अहमेवासमेवाग्रे नान्यत्किंचान्तरं बहिः ॥ संज्ञानमात्रमव्यक्तं प्रसुप्तमिव विश्वतः ॥ ४७ ॥ मय्यनन्तगुणेऽनन्ते गुणतो गुणविग्रहः ॥ यदासीत्तत एवाद्यः स्वयंभूः समभूदजः ॥ ४८ ॥ स वै यदा महादेवो मम वीर्योपबृंहितः ॥ मेने खिलमिवात्मानमुद्यतः सर्गकर्मणि ॥ ४९ ॥ अथ मेऽभिहितो देवस्तपोऽतप्यत दारुणम् ॥ नव विश्वसृजो युष्मान् येनादाव-सृजद्विभुः ॥ ५० ॥ एषा पञ्चजनस्याङ्ग दुहिता वै प्रजापतेः ॥ असिक्नी नाम पत्नीत्वे प्रजेश प्रतिगृह्यताम् ॥ ५१ ॥ मिथुनव्यवायधर्मस्त्वं प्रजा-सर्गमिमं पुनः ॥ मिथुनव्यवायधर्मिण्यां भूरिशो भावयिष्यसि ॥ ५२ ॥ त्वत्तोऽधस्तात्प्रजाः सर्वा मिथुनीभूय मायया ॥ मदीयया भविष्यन्ति हरिष्यन्ति च मे बलिम् ॥ ५३ ॥ श्रीशुक उवाच ॥ इत्युक्त्वा मिषतस्तस्य भगवान्विश्वभावनः ॥ स्वप्नोपलब्धार्थ इव तत्रैवान्तर्दधे हरिः ॥ ५४ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे चतुर्थोऽध्यायः ॥ ४ ॥ श्रीशुक उवाच ॥ तस्यां स पाञ्चजन्यां वै विष्णुमायोपबृंहितः ॥ हर्यश्वसंज्ञानयुतं पुत्रानजनयद्विभुः ॥ १ ॥ अपृथग्धर्मशीलास्ते सर्वे दाक्षायणा नृप ॥ पित्रा प्रोक्ताः प्रजासर्गे प्रतीचीं प्रययुर्दिशम् ॥ २ ॥ तत्र नारायणसर-

दाम्पत्यभावले रति-धर्मलाई स्वीकार गरेर यी मैथुन-धर्म हुने भार्याबाट धेरै प्रजा उत्पन्न गर्नेछौ ॥ ५२ ॥ तिमीपछिका सारा प्रजा मेरी मायाले मैथुन-धर्म द्वारा नै उत्पन्न हुनेछन् र सदा मेरै सेवामा तत्पर रहने छन् ॥५३॥ शुकदेव भन्नुहुन्छ—हे राजन् ! प्रजापति दक्षसित त्यति भनेर विश्वभावन भगवान् उनले हेर्दाहेर्दै त्यहीं यस प्रकार अन्तर्धान भए, जस्तै निँउँझे पछि स्वप्नको संसार नष्ट भएर जान्छ ॥ ५४ ॥ इति श्री मद्भागवते महापुराणे षष्ठस्कन्धे नेपाली भाषाटीकायां चतुर्थोऽध्यायः ॥ ४॥ ( नारदजीको उपदेशले हर्यश्व र शबलाश्व नामका दक्षपुत्र विरक्त हुनु र नारदलाई दक्षको श्राप )—शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! विष्णु भगवान्को मायाले बृद्धिगत तथा समर्थ दक्षले पञ्चजनकी छोरीबाट हर्यश्व नामका दश हजार पुत्र उत्पन्न गरे ॥ १ ॥ हे भूपाल ! ती सबै दक्ष-पुत्र समान स्वभावका थिए । जब तिनका पिता प्रजापति दक्षले तिनलाई प्रजा ( सन्तान ) उत्पन्न गर्ने आज्ञा दिए तब

ती सबै तपस्या गर्न पश्चिम दिशातिर गए ॥ २ ॥ जहाँ–सिन्धुनद समुद्रमा गएर मिल्दछ, त्यहाँ 'नारायण-सरोवर' नामको यौटा धेरै ठूलो तीर्थ छ र अनेक ऋषि-मुनि तथा सिद्धजन त्यहाँ बस्तथे ॥ ३ ॥ त्यस तीर्थमा स्नान गर्नासाथ उनको अन्तःकरणको मल पखालियो र तिनको बुद्धि पारमहंस्य धर्ममा लाग्यो, तैपनि ती आफ्ना पिताको आज्ञामा आबद्ध रहनाले घोर तपस्या गर्न लागे। यस प्रकार प्रजाको वृद्धिका लागि उद्योगशील ती दक्षपुत्रहरूलाई नारदजीले देखे ॥ ४-५ ॥ तिनको नगीचै गएर नारदले भने–हे हर्यश्वगण, तिमी प्रजापालक भएर पनि ठूला मूर्ख रहेछौ। यस पृथ्वीको अन्त्य नदेखिकन तिमी प्रजालाई कसरी उत्पन्न गर्दछौ ? ॥ ६ ॥ एउटै पुरुष हुने राष्ट्रलाई निस्कने बाटो नदेखिने प्वाललाई, बहुरूपिणी स्त्रीलाई, व्यभिचारिणी स्त्रीको पतिलाई दुवै छेउबाट टाँसिएर बग्ने नदीलाई, पचीस पदार्थको संयोगले बनेको घरलाई, चित्र-विचित्र प्वाँख हुने कुनै हंसलाई, छुरा र वज्रले निर्मित तथा स्वयं घुमिरहने चक्रलाई नदेखेर तथा आफ्ना वास्तविक पिताको आज्ञालाई नबुझेर नै उनको अनुरूप सृष्टि कसरी गर्न सक्दछौ ? ॥ ७-९ ॥ शुकदेवजी भन्नुहुन्छ—

स्तीर्थं सिन्धुसमुद्रयोः ॥ संगमो यत्र सुमहन्मुनिसिद्धनिषेवितम् ॥ ३ ॥ तदुपस्पर्शनादेव विनिर्धूतमलाशयाः ॥ धर्मे पारमहंस्ये च प्रोत्पन्नमतयो-ऽप्युत ॥ ४ ॥ तेपिरे तप एवोग्रं पित्रादेशेन यन्त्रिताः ॥ प्रजाविवृद्धये यत्तान्देवर्षिस्तान्ददर्श ह ॥ ५ ॥ उवाच चाथ हर्यश्वाः कथं स्रक्ष्यथ वै प्रजाः ॥ अदृष्ट्वाऽन्तं भुवो यूयं बालिशा बत पालकाः ॥ ६ ॥ तथैकपुरुषं राष्ट्रं बिलं चादृष्टनिर्गमम् ॥ बहुरूपां स्त्रियं चापि पुमांसं पुंश्चलीपतिम् ॥ ७ ॥ नदीमुभयतोवाहां पञ्चपञ्चाद्भुतं गृहम् ॥ क्वचिद्धंसं चित्रपक्षं क्षौरपव्यं स्वयंभ्रमिम् ॥ ८ ॥ कथं स्वपितुरादेशमविद्वांसो विपश्चितः ॥ अनुरूपम-विज्ञाय अहो सर्गं करिष्यथ ॥ ९ ॥ श्रीशुक उवाच ॥ तन्निशम्याथ हर्यश्वा औत्पत्तिकमनीषया ॥ वाचःकूटं तु देवर्षेः स्वयं विमम्रृशुर्धिया ॥१०॥ भूक्षेत्रं जीवसंज्ञं यदनादि निजबन्धनम् ॥ अदृष्ट्वा तस्य निर्वाणं किमसत्कर्मभिर्भवेत् ॥ ११ ॥ एक एवेश्वरस्तुर्यो भगवान्स्वाश्रयः परः ॥ तमदृष्ट्वा भवं पुंसः किमसत्कर्मभिर्भवेत् ॥ १२ ॥ पुमान्नैवैति यद्गत्वा बिलस्वर्गं गतो यथा ॥ प्रत्यग्धामाविद इह किमसत्कर्मभिर्भवेत् ॥ १३ ॥ नानारू-

हे राजन् ! नारदजीका यी कूट वाक्य सुनेर हर्यश्वगण आफ्नो स्वाभाविक विचार शक्ति तथा बुद्धिले यस प्रकार विचार्न लागे—॥ १० ॥ जीव नामको लिङ्ग-शरीर छ भने नारदको निर्दिष्ट भूमि छ, जो आत्माको अनादि बन्धन स्वरूप छ। त्यसको अन्त्य नदेखेर नै सर्वथा जगत् कर्ममा संलग्न रहनाले के लाभ हुन सक्छ ? ॥११॥ सबै अवस्थाका साक्षी, आफ्नो नै भरमा रहने तथा प्रकृति आदि भन्दा पर यौटा ईश्वर नै छ। त्यस नित्यमुक्त परमात्मालाई नदेखेर नै पुरुषलाई अन्य कर्मले के लाभ होला ? ॥ १२ ॥ जसलाई पाएर पुरुष पाताल-निवासी जीव जस्तै फेरि फर्कर आउन्न, त्यस स्वयं-ज्योतिलाई नजानेर नै संसारमा अन्य व्यर्थ कर्महरूले के लाभ हुन सक्छ ? ॥ १३ ॥ विविध प्रकारका रूप धारण गर्न भएको *मन र त्यसकी चिरसंगिनी गुणमयी बुद्धि नै व्यभिचारिणी नारी जस्तै छ। त्यसको अन्त्य नजानेर नै

---

* त्यसैले यो मन नै बन्धन (र मोक्षको कारण हो)—भगवानले अर्जुनसित भन्नुभयो—'हे तात ! यदि तिमी मुक्ति प्राप्त गर्न चाहन्छौ भने विषयलाई विष सरी त्यागिदेऊ र क्षमा, सरलता, दया, सन्तोष तथा सत्यलाई अमृत जानेर ग्रहण गर।' कुनै समय राजा जनकले एउटा सभा गरेर त्यसमा अनेक विद्वान्हरूलाई डाकेर भने—'तपाईंहरूमध्ये कोही एक सज्जन, विद्वान् कुनै यस्तो

गा असत्कर्मले के लाभ होला ? ॥१४॥ जाति– कोही कुनै कुलटा भार्याको सङ्गतिमा परेर पतित भएर जानोस्, त्यसै गरी बहुरूपिणी बुद्धिको संसर्गले ऐश्वर्य भ्रष्ट भएर त्यसकी सुख-दुःख-रूपिणी गतिहरूलाई प्राप्त जीवलाई नजान्ने पुरुषको यस संसारमा विवेक-शून्य कर्मकलापले के लाभ हुने वाला छ ?' ॥१५॥ संसारको उत्पत्ति तथा संहार गर्ने भएकी, इहलोक तथा परलोकरूपी दुवै किनारासम्म फैलिएकी र ठूलो वेगले बग्ने यस मायारूपिणी नदीलाई जो जान्दैन, त्यस उन्मत्त पुरुषलाई अन्य असत्कर्मले के लाभ होला ? ॥१६॥ त्यो अन्तर्यामी परम पुरुष पचीस तत्वको अद्भुत ऐना छ । कार्य-कारण समुदायका अधिष्ठातास्वरूप त्यस पुरुषको रूप नजानिकन व्यक्तिको असत् कर्मले के लाभ होला ? ॥१७॥ बन्धन र मोक्षको विवेकले पूर्ण ईश्वर प्रतिपादक शास्त्रलाई छाडेर तथा जड-चेतनको ज्ञान प्राप्त नगरेर बहिर्मुख कर्मले के लाभ होला ? ॥१८॥ यसै प्रकार सारा जगत्‌लाई आफूतिर आकर्षित गर्नेवाला,

पात्मनो बुद्धिः स्वैरिणीव गुणान्विता ॥ तन्निष्ठामगतस्येह किमसत्कर्मभिर्भवेत् ॥ १४ ॥ तत्सङ्गभ्रंशितैश्वर्यं संसरन्तं कुभार्यवत् ॥ तद्गतीरबुधस्येह किमसत्कर्मभिर्भवेत् ॥ १५ ॥ सृष्ट्यप्ययकरीं मायां वेलाकूलान्तवेगिताम् ॥ मत्तस्य तामविज्ञाय किमसत्कर्मभिर्भवेत् ॥ १६ ॥ पञ्चविंशतितत्त्वानां पुरुषोऽद्भुतदर्पणम् ॥ अध्यात्ममबुधस्येह किमसत्कर्मभिर्भवेत् ॥ १७ ॥ ऐश्वरं शास्त्रमुत्सृज्य बन्धमोक्षानुदर्शनम् ॥ विविक्तपदमज्ञाय किमसत्कर्मभिर्भवेत् ॥ १८ ॥ कालचक्रं भ्रमिस्तीक्ष्णं सर्वं निष्कर्षयज्जगत् ॥ स्वतन्त्रमबुधस्येह किमसत्कर्मभिर्भवेत् ॥ १९ ॥ शास्त्रस्य पितुरादेशं यो न वेद निवर्तकम् ॥ कथं तदनुरूपाय गुणविश्रम्भ्युपक्रमेत् ॥ २० ॥ इति व्यवसिता राजन्हर्यश्वा एकचेतसः ॥ प्रययुस्तं परिक्रम्य पन्थानमनिवर्तनम् ॥ २१ ॥ स्वरब्रह्मणि निर्भातहृषीकेशपदाम्बुजे ॥ अखण्डं चित्तमावेश्य लोकाननुचरन्मुनिः ॥ २२ ॥ नाशं निशम्य पुत्राणां नारदाच्छीलशालि·

अतिशय स्वतन्त्र तथा कालचक्रको तीखो घुम्तीलाई नजान्ने पुरुषलाई अन्य व्यर्थ कर्महरूले के लाभ होला ? ॥१९॥ जो पुरुष पिता झैं शास्त्रको निवृत्ति परक आज्ञालाई मान्दैन, त्यो गुणमा आस्थावान् पुरुष निवृत्तिमा कसरी तत्पर होला ? ॥२०॥ हे राजन् ! यौटा मतले यस्तो निश्चित गरेर ती हर्यश्वहरूले नारदको परिक्रमा गरेर त्यो बाटो समाए–जहाँबाट प्राणीले फेरि फर्कनु पर्दैन ॥२१॥ त्यसपछि नारदजी पनि स्वरब्रह्ममा भासमान भगवान् कृष्णका चरण-कमलमा अखण्डरूपले आफ्नू चित्त स्थिर गरेर अन्य लोकमा विचरण

पनि बताउनोस् जसले दुइ घण्टामा ईश्वर प्राप्त होउन् । त्यस सभामा सबै विषयका विख्यात विद्वान् उपस्थित थिए, तर राजाको प्रश्नको उत्तर कसैले दिन सकेन । अष्टावक्र बाहिरतिर गएका थिए । ती घर आएपछि आफ्नी आमासित सोधे—'पिताजी कहाँ जानुभएको छ ?' माताले भनिन्–'राजा जनकले सभा डाकेका छन्, त्यहींमा जानु भएको छ ।' तत्काल अष्टावक्र पनि उहीं पुगे । तिनको शरीरमा आठ ठाउँमा ! बाँगो परेको देखेर सभासदहरू हाँस्न लागे । ती सभ्य जनको हाँसोले अष्टावक्रलाई अलिकति पनि ग्लानि भएन । बरु ती पनि उनैहरूसित हाँस्न लागे ! अष्टावक्रसित सभासदहरूले सोधे—'तिमी किन हाँसेका ?' अष्टावक्रले ती सभ्यहरूसित सोधे-'तिमीहरू किन हाँसेका ?' ती सभ्यजनले भने–'तिम्रो आठ ठाउँमा बाँगो शरीर देखेर हामीलाई हाँसो उठ्यो ।' अष्टावक्रले भने–'हाड मासुको दर्शकहरूको सभा देखेर मलाई पनि हाँस्न मन लाग्यो किनकि तिमीहरूले मेरो ज्ञान नहेरेर केवल शरीर हेर्यौ ।' यो कुरा सुनेर राजा जनकलाई आश्चर्य भयो र ती अष्टावक्रको निःस्पृहता देखेर तिनका पाउमा न्यूरिए । अष्टावक्रले भने–राजन् ! तिमी आफ्नो सबै भन्दा प्रिय वस्तु मलाई देऊ ।' राजाले सोधे– 'यो राज्य नै दिऊँ ?' अष्टावक्रले भने–राज्य दिने तिमी कुन मनले सङ्कल्प गर्दैछौ, त्यही मनलाई देऊ ।' राजा जनकले आफ्नो सङ्कल्पात्मक मन उनलाई सुम्पिदिए । मन दिएपछि बाँकी के रह्यो ? त्यसै बखतदेखि राजा जनक विदेह कहिन लागे ।

गर्नलागे ॥२२॥ यस्ता जब नारदजीको उपदेश पाएर आफ्ना शील सम्पन्न पुत्रलाइ कर्तव्यबाट च्युत सुनेर प्रजापति दक्षलाई ठूलो सन्ताप भयो । कहिले काहीं सत्सन्तान पनि शोकका कारण बन्दछन् ॥२३॥ त्यसपछि ब्रह्माजीले निकै समझाई-बुझाई गरेपछि दक्षले पत्नी पञ्चजनीबाट शबलाश्व नामका एक हजार छोरा अरु उत्पन्न गरे ॥२४॥ ती पनि पिताको आज्ञा मानेर प्रजोत्पत्तिको सङ्कल्प गरी उही नारायण-सरोवरमा गए, जहाँ गएर उनका पूर्वजहरुले सिद्धि पाएका दिए ॥२५॥ त्यस सरोवरमा मात्र नुहाउनाले पनि तिनका मनको सम्पूर्ण मयल पखालियो र ती परब्रह्म अर्थात् ॐ कारको जप गर्दै घोर तपस्या गर्नलागे ॥२६॥ ती सबैले केही महीना केवल जल र त्यसपछि केवल वायु पिएर यस मन्त्रको जप गर्दै मन्त्राधिपति विष्णु भगवान्‌को आराधना गरे ॥२७॥ 'ॐ परम पुरुष र महान आत्मा स्वरूप नारायणलाई नमस्कार छ । ती विशुद्ध सत्वगुणका आधार तथा परमहंसस्वरूप परमेश्वरको हामी चिन्तन गर्दछौं' ॥२८॥ हे राजेन्द्र ! यस प्रकार सृष्टि वृद्धिका इच्छुक ती शबलाश्वहरुको पनि नगीचै गएर एक दिन देवर्षि नारदले पहिले

नाम् ॥ अन्वतप्यत कः शोचन्सुप्रजस्त्वं शुचां पदम् ॥ २३ ॥ स भूयः पाञ्चजन्यायामजेन परिसान्त्वितः ॥ पुत्रानजनयद्दक्षः शबलाश्वान्सह-
स्रशः ॥२४॥ तेऽपि पित्रा समादिष्टाः प्रजासर्गे धृतव्रताः ॥ नारायणसरो जग्मुर्यत्र सिद्धाः स्वपूर्वजाः ॥ २५ ॥ तदुपस्पर्शनादेव विनिर्धूतमला-
शयाः ॥ जपन्तो ब्रह्म परमं तेपुस्तेऽत्र महत्तपः ॥ २६ ॥ अब्भक्षाः कतिचिन्मासान्कतिचिद्वायुभोजनाः ॥ आराधयन्मन्त्रमिमभ्यस्यन्त इडस्प-
तिम् ॥ २७ ॥ ॐ नमो नारायणाय पुरुषाय महात्मने ॥ विशुद्धसत्त्वधिष्ण्याय महाहंसाय धीमहि ॥ २८ ॥ इति तानपि राजेन्द्र प्रतिसर्गधियो
मुनिः ॥ उपेत्य नारदः प्राह वाचःकूटानि पूर्ववत् ॥ २९ ॥ दाक्षायणाः संशृणुत गदतो निगमं मम ॥ अन्विच्छतानुपदवीं भ्रातॄणां भ्रातृवत्सलाः
॥३०॥ भ्रातॄणां प्रायणं भ्राता योऽनुतिष्ठति धर्मवित् ॥ स पुण्यबन्धुः पुरुषो मरुद्भिः सह मोदते ॥ ३१ ॥ एतावदुक्त्वा प्रययौ नारदोऽमोघद-
र्शनः ॥ तेऽपि चान्वगमन्मार्गं भ्रातॄणामेव मारिष ॥ ३२ ॥ सध्रीचीनं प्रतीचीनं परस्यानुपथं गताः ॥ नाद्यापि ते निवर्तन्ते पश्चिमा यामिनीरिव
॥३३॥ एतस्मिन्काल उत्पातान्बहून्पश्यन्प्रजापतिः ॥ पूर्ववन्नारदकृतं पुत्रनाशमुपाशृणोत् ॥ ३४ ॥ चुक्रोध नारदायासौ पुत्रशोकविमूर्छितः ॥
देवर्षिमुपलभ्याह रोषाद्विस्फुरिताधरः ॥ ३५ ॥ दक्ष उवाच ॥ अहो असाधो साधूनां साधुलिङ्गेन नस्त्वया ॥ असाध्वकार्यर्भकाणां भिक्षो-

कै समान कूटवाक्यमा यस प्रकार भने–॥२९॥ 'हे दक्षपुत्र हो ! मैले भनेको सुन । हे भ्रातृवत्सल हो ! तिमीले आफ्ना दाजूहरूकै बाटोमा चल्नु उचित छ ॥३०॥ जुन धर्मज्ञ भ्राता आफ्ना दाजूहरूको बाटो समाउँछन्, त्यो पुण्य बन्धु पुरुष परलोकमा मरुद्गणहरूसित सुख भोग्दछ' ॥३१॥ हे राजन् ! शबलाश्वहरूसित त्यति भनेर अमोघ दर्शन नारदजी त्यहाँबाट हिंडी गए र ती दक्ष कुमारहरूले पनि आफ्ना दाजूहरूको बाटो समाए ॥३२॥ ती आफ्नो अन्तर्मुखी वृत्ति द्वारा प्राप्त हुने योग्य समीचीन तथा परमेश्वरलाई प्राप्त गराउने बाटोमा हिंड्न लागे, असले अतीत रात्रि जस्तै ती फेरि फर्कर आएनन् ॥ ३३ ॥ त्यसै अवसरमा अनेक थरिका उत्पात हुन लागेको देखेर जब प्रजापति दक्षले नारदजीको प्रेरणाले पहिले जस्तै आफ्ना अरू पुत्रहरूलाई पनि कर्तव्यबाट च्युत भएको सुनेर पुत्र शोकले मूर्च्छित भई नारदजी माथि सान्है रिसाए र जब ती भेटिए तब दक्षले भने ।

यस बखत वर्ता रिसले उनको अधरोष्ठ कामिरहेको थियो ॥३४-३५॥ दक्षले भने—अरे दुष्ट ! तैंले माथिबाट साधु जस्तै भेष बनाएर मसित यो क्रूर व्यवहार गरिस्, जो मेरा धर्मपरायण छोराहरूलाई संन्यास मार्गको उपदेश दिई तिनलाई सृष्टि कर्मबाट विमुख पारिदियो ॥ ३६ ॥ हे पापी ! जो अहिले देव, ऋषि तथा पितृऋणबाट मुक्त भएको थिएन, तिनले कर्मको विषयमा केही पनि विचार गरेका थिएनन्, ती मेरा पुत्रको इहलोक र परलोक दुवै लोक प्राप्त हुने श्रेयलाई तैंले नष्ट पारिस ॥ ३७ ॥ तँ बालकहरूको बुद्धि बिगान घेरै ठूलो निर्दयी होस् । यस प्रकार भगवानका यशलाई कलङ्कित पार्ने भएर पनि तँ निर्लज्जता साथ भगवान्का पार्षदहरूमा रहन्छस् ॥ ३८ ॥ हे धूर्त ! तँबाहेक अरु सबै भगवद्भक्त सबदा सबै प्राणीहरूमा कृपा गर्न कातर रहन्छन् । तँ त सौहार्दको नाशक र शत्रुता नगर्नेको पनि शत्रु होस् ॥ ३९ ॥ के तँलाई थाहा छ—तिनले संन्यास वेश धारण गर्नमात्रले नै स्नेहको बन्धन काटिदिने भएको शान्ति तिनलाई प्राप्त हुन सक्छ ! तेरो यो विचार उचित होइन किनकि ज्ञानी नभैकन केवल तैंले मनपरी शिक्षा दिनाले नै तिनलाई वैराग्य प्राप्त हुनेछ

मार्गः प्रदर्शितः ॥ ३६ ॥ ऋणैस्त्रिभिरमुक्तानाममीमांसितकर्मणाम् ॥ विघातः श्रेयसः पाप लोकयोरुभयोः कृतः ॥ ३७ ॥ एवं त्वं निरनुक्रोशो बालानां मतिभिद्धरेः ॥ पार्षदमध्ये चरसि यशोहा निरपत्रपः ॥ ३८ ॥ ननु भागवता नित्यं भूतानुग्रहकातराः ॥ ऋते त्वां सौहृदघ्नं वै वैरङ्करमवैरिणाम् ॥ ३९ ॥ नेत्थं पुंसां विरागः स्यात्त्वया केवलिना मृषा ॥ मन्यसे यद्युपशमं स्नेहपाशनिकृन्तनम् ॥ ४० ॥ नानुभूय न जानाति पुमान्विषयतीक्ष्णताम् ॥ निर्विद्येत स्वयं तस्मान्न तथा भिन्नधीः परैः ॥ ४१ ॥ यन्नस्त्वं कर्मसंधानां साधूनां गृहमेधिनाम् ॥ कृतवानसि दुर्मर्षं विप्रियं तव मर्षितम् ॥४२॥ तन्तुकृन्तन यन्नस्त्वमभद्रमचरः पुनः ॥ तस्माल्लोकेषु ते मूढ न भवेद्भ्रमतः पदम् ॥ ४३ ॥ श्रीशुक उवाच ॥ प्रतिजग्राह तद्बाढं नारदः साधुसंमतः ॥ एतावान्साधुवादो हि तितिक्षेतेश्वरः स्वयम् ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नारदशापो नाम पञ्चमोऽध्यायः ॥ ५ ॥ श्रीशुक उवाच ॥ ततः प्रचेतसोऽसिक्न्यामनुनीतः स्वयंभुवा ॥ षष्टिं सञ्जनयामास दुहितॄः पितृवत्सलाः ॥ १ ॥ दश धर्माय कायेन्दोर्द्विषट् त्रिणव दत्तवान् ॥ भूताङ्गिरः कृशाश्वेभ्यो द्वे द्वे तार्क्ष्याय चापराः ॥ २ ॥ नामधेयान्यमूषां त्वं सापत्यानां च मे शृणु ॥

॥४०॥ कुनै पनि मनुष्य जबसम्म विषयको अनुभव गर्दैन, तबसम्म त्यसलाई तिनको कटुता ज्ञात हुन सक्तैन । तिनको दुःखरूपताको स्वयं अनुभव गरेपछि प्राणीलाई जस्तो वैराग्य प्राप्त हुन्छ, त्यस्तो वैराग्य अर्काले मनपरि दिएको शिक्षाले हुँदैन ॥ ४१ ॥ धर्म मर्यादाका प्रतिपालक हामी जो स्वधर्मगृहस्थलाई तैंले जुन पहिले कटु अप्रिय गरिस्, त्यो मैले सहन गरेकै थिएँ ॥ ४२ ॥ तर हे मेरा सन्तानको उच्छेदन गर्ने पापी ! फेरि पनि तैंले हाम्रो अहित गरिस ! अतः हे मूढ ! सबै लोकहरूमा डुलिरहने तेरो कहिले पौटा अडिने निश्चित स्थान हुने छैन ( तँ यता उता ठक्कर खाइरहनेछस् ) ॥ ४३ ॥ शुकदेवजी भन्नहुन्छ—हे राजन ! अनि साधु-सम्मानित नारदजीले 'असल कुरा हो' भनेर दक्षको त्यो आप स्वीकार गरे, किनकि संसारमा साधु त्यही हो जो शक्तिशाली भएर पनि अर्काको अपराध सहन गरोस् ॥४४॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषा टीकायां पञ्चमोऽध्यायः ॥ ५ ॥ ( प्रजापतिदक्षका साठी छोरीहरू र तिनको वंश विस्तार )—शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! त्यसपछि ब्रह्माजीले बुझाएपछि प्रजापति दक्षले आफ्नी

भार्या असिक्नीबाट साठी कन्याहरू उत्पन्न गरे ॥ १ ॥ ती सबै पितृवत्सला थिए । तीमध्ये दसवटी धर्मलाई, तेह्र छोरी कश्यपलाई, सत्ताइस चन्द्रमालाई, दुई-दुई छोरी भूत, अङ्गिरा र कृशाश्वलाई र शेष-चार कन्या तार्क्ष्य ( कश्यप ) लाई दिए ॥ २ ॥ हे राजन् ! ती दस कन्या र तिनका सन्ततिको नाम सुन । तिनै सन्तानहरूले ( स्वर्ग, मर्त्य तथा पाताल ) यी तीनै लोक भरिए ॥ ३ ॥ भानु, लम्बा, ककुभ, जामि, विश्वा, साध्या, मरुत्वती, वसु, मुहूर्ता र सङ्कल्पा—यी दस धर्मका भार्या थिए । अब तिनका छोराहरूको नाम भन्दछु, सुन ॥ ४ ॥ हे नृप ! भानुका छोरा देवऋषभ र उनका पुत्र इन्द्रसेन भए । लम्बाको पुत्र विद्योत र उसका स्तनयित्नु नामका पुत्र भयो ॥ ५ ॥ ककुभको पुत्र संकट र उसको कीकट तथा कीकटका सबै छोरा दुर्गाभिमानी देवता भए । यसै प्रकार जामिबाट स्वर्ग तथा उसको नन्दि उत्पन्न भए ॥६॥ विश्वाका विश्वदेव भए । लोकको भनाइ छ—तिनका सन्तान भएनन् । साध्याबाट साध्यगण तथा तिनीबाट अर्थसिद्धिको जन्म भयो ॥ ७ ॥ मरुत्वतीबाट मरुत्वान र जयन्त दुइ छोरा उत्पन्न भए । जयन्त साक्षात् वासुदेवका

यासां प्रसूतिप्रसवैर्लोका आपूरितास्त्रयः ॥ ३ ॥ भानुर्लम्बा ककुब्जामिर्विश्वा साध्या मरुत्वती ॥ वसुर्मुहूर्ता संकल्पा धर्मपत्न्यः सुताञ्छृणु ॥ ४ ॥ भानोस्तु देवऋषभ इन्द्रसेनस्ततो नृप ॥ विद्योत आसील्लम्बायास्ततश्च स्तनयित्नवः ॥ ५ ॥ ककुभः संकटस्तस्य कीकटस्तनयो यतः ॥ भुवो दुर्गाणि जामेयः स्वर्गो नन्दिस्ततोऽभवत् ॥ ६ ॥ विश्वेदेवास्तु विश्वाया अप्रजांस्तान्प्रचक्षते ॥ साध्यो गणस्तु साध्याया अर्थसिद्धिस्तु तत्सुतः ॥७॥ मरुत्वाँश्च जयन्तश्च मरुत्वत्यां बभूवतुः ॥ जयन्तो वासुदेवांश उपेन्द्र इति यं विदुः ॥ ८ ॥ मौहूर्तिका देवगणा मुहूर्तायाश्च जज्ञिरे ॥ ये वै फलं प्रयच्छन्ति भूतानां स्वस्वकालजम् ॥ ९ ॥ संकल्पायाश्च संकल्पः कामः संकल्पजः स्मृतः ॥ वसवोऽष्टौ वसोः पुत्रास्तेषां नामानि मे शृणु ॥ १० ॥ द्रोणः प्राणो ध्रुवोऽर्कोऽग्निर्दोषो वसुर्विभावसुः ॥ द्रोणस्याभिमतेः पत्न्या हर्षशोकभयादयः ॥ ११ ॥ प्राणस्योर्जस्वतो भार्या सह आयुः पुरोजवः ॥ ध्रुवस्य भार्या धरणिरसूत विविधाः पुरः ॥ १२ ॥ अर्कस्य वासना भार्या पुत्रास्तर्षादयः स्मृताः ॥ अग्नेर्भार्या वसोर्धारा पुत्रा द्रविणकादयः ॥ १३ ॥ स्कन्दश्च कृत्तिकापुत्रो ये विशाखादयस्ततः ॥ दोषस्य शर्वरीपुत्रः शिशुमारो हरेः कला ॥ १४ ॥ वसोराङ्गिरसी

अंश थिए, उनलाई उपेन्द्र भन्ने नामले पनि जान्दछन् ॥ ८ ॥ मुहूर्ता द्वारा मुहूर्तका अभिमानी देवता जन्मे—जो जीवलाई बेला-बेलामा उनको कर्मानुसार शुभाशुभ फल दिने गर्दछन् ॥ ९ ॥ सङ्कल्पाबाट सङ्कल्पको उत्पत्ति भयो । यिनै संकल्पका पुत्र 'काम' नामले विख्यात भए । वसुका पुत्र आठै वसु भए । तिनको नाम भन्दछु, सुन—॥१०॥ द्रोण, प्राण, ध्रुव, अर्क, अग्नि, दोष, वसु र विभावसु । तिनमा द्रोणकी अभिमति नामकी पत्नीबाट हर्ष, शोक भय-आदि उत्पन्न भए ॥ ११ ॥ प्राणकी पत्नी ऊर्जस्वतीबाट सह, आयु र पुरोजव नामका तीन पुत्र उत्पन्न भए र ध्रुवकी पत्नी धरणीले अनेक नगरहरू उत्पन्न गरिन् ॥ १२ ॥ अर्ककी पत्नी वासनाबाट तर्ष आदि पुत्र जन्मे । अग्नि नामका वसुका पत्नी धाराबाट द्रविणकादि अनेक छोरा भए । कृत्तिका-पुत्र स्कन्द पनि अग्निबाटै उत्पन्न भएका थिए । ती स्कन्दका विशाख आदि छोरा भए । दोषका भार्या शर्वरीका गर्भबाट

भगवान्‌का अंशस्वरूप शिशुमार उत्पन्न भए ॥१३॥१४॥ वसुकी पत्नी आङ्गिरसीबाट शिल्पीहरूका प्रधान विश्वकर्मा जन्मे। तीबाट चाक्षुषमनु र उनका विश्वेदेव र साध्यगण जन्मे ॥१५॥ विभावसुकी पत्नी उषाका व्युष्ट, रोचिष र आतप तीन पुत्र भए। इनमा आतपका पञ्चयाम वा पाँच प्रहरको दिन पुत्ररूपमा उत्पन्न भए। यिनैले गर्दा जनहरू कर्ममा प्रवृत्त हुन्छन् ॥१६॥ दक्षका अरु कन्यामध्ये भूतकी भार्या सरूपाबाट कोटिशः रुद्र उत्पन्न भए। तीमध्ये रैवत, अज, भव, भीम, वाम, उग्र, वृषाकपि, अजैकपाद, अहिर्बुध्न्य, बहुरूप र महान् यी एघार रुद्र मुख्य मानिन्छन्। यसै प्रकार अनेक भूत तथा विनायकहरूको उत्पत्ति भयो, जुन ती रुद्रका मित्र भए ॥१७॥१८॥ अंगिरा प्रजापतिकी जेठी स्त्री स्वधाले पितृगणलाई र कान्छी पत्नीले अथर्वाङ्गिरस नामको एक वेदलाई पुत्ररूपमा प्राप्त गरे ॥१९॥ यसै प्रकार कृशाश्वले आफ्नी भार्या अर्चिबाट धूम्रकेश तथा धिषणाबाट वेदशिरा, देवल, वयुन एवं मनु यी चार पुत्र उत्पन्न गरे ॥२०॥ तार्क्ष्यकी विनता, कद्रू, पतंगी तथा यामिनी नामका चार स्त्री थिए। तिनमा पतङ्गीले पक्षिहरू र यामिनीले फतिङ्गाहरू उत्पन्न गरे ॥२०॥

पुत्री विश्वकर्माऽऽकृतीपतिः ॥ ततो मनुश्चाक्षुषोऽभूद्विश्वे साध्या मनोः सुताः ॥ १५ ॥ विभावसोरसूतोषा व्युष्टं रोचिषमातपम् ॥ पञ्चयामोऽथ भूतानि येन जाग्रति कर्मसु ॥ १६ ॥ सरूपाऽसूत भूतस्य भार्या रुद्रांश्च कोटिशः ॥ रैवतोऽजो भवो भीमो वाम उग्रो वृषाकपिः ॥ १७ ॥ अजैकपादहिर्बुध्न्यो बहुरूपो महानिति ॥ रुद्रस्य पार्षदाश्चान्ये घोरा भूतविनायकाः ॥ १८ ॥ प्रजापतेरङ्गिरसः स्वधा पत्नी पितॄनथ ॥ अथर्वाङ्गिरसं वेदं पुत्रत्वे चाकरोत्सती ॥ १९ ॥ कृशाश्वोऽर्चिषि भार्यायां धूम्रकेशमजीजनत् ॥ धिषणायां वेदशिरो देवलं वयुनं मनुम् ॥ २० ॥ तार्क्ष्यस्य विनता कद्रूः पतङ्गी यामिनी इति ॥ पतङ्ग्यसूत पतगान्यामिनी शलभानथ ॥ २१ ॥ सुपर्णाऽसूत गरुडं साक्षाद्यज्ञेशवाहनम् ॥ सूर्यसूतमनूरुं च कद्रूर्नागाननेकशः ॥ २२ ॥ कृत्तिकादीनि नक्षत्राणीन्दोः पत्न्यस्तु भारत ॥ दक्षशापात्सोऽनपत्यस्तासु यक्ष्मग्रहार्दितः ॥ २३ ॥ पुनः प्रसाद्य तं सोमः कला लेभे क्षयोदिताः ॥ शृणु नामानि लोकानां मातॄणां शङ्कराणि च ॥ २४ ॥ अथ कश्यपपत्नीनां यत्प्रसूतमिदं जगत् ॥ अदितिर्दितिर्दनुः काष्ठा अरिष्टा सुरसा इला ॥ २५ ॥ मुनिः क्रोधवशा ताम्रा सुरभिः सरमा तिमिः ॥ तिमेर्यादोगणा आसन् श्वापदाः सरमा सुताः ॥ २६ ॥ सुरभेर्महिषा गावो ये चान्ये द्विशफा नृप ॥ ताम्रायाः श्येनगृध्राद्या मुनेरप्सरसां गणाः ॥ २७ ॥ दन्दशूकादयः सर्पा राजन् क्रोधवशात्मजाः ॥

यसै प्रकार सुपर्णा अर्थात् विनताबाट साक्षात् विष्णु भगवान्‌का वाहन गरुड तथा सूर्यका सारथि अरुण जायमान भए र कद्रूबाट अनेक नागको उत्पत्ति भयो ॥२२॥ हे भरतनन्दन ! कृत्तिका आदि सत्ताइस तारागण चन्द्रमाका भार्या थिए। कुनै समय दक्षको श्रापले चन्द्रमालाई क्षयरोग लाग्यो। अतएव ती पत्नीहरूबाट उनका कुनै सन्तान भएनन् ॥२३॥ प्रजापति दक्षलाई पुनः प्रसन्न पारेपछि उनलाई कृष्णपक्षमा नष्ट कलाहरू शुक्ल पक्षमा पूर्ण हुने वरदान मिल्यो। तैपनि तिनका सन्तान भएनन्। त्यसपछि जसद्वारा सारा जगत् उत्पन्न भएको छ, ती कश्यप-पत्नीहरूको नाम सुन। ती थिए—अदिति, दिति, दनु, काष्ठा, अरिष्टा, सुरसा, इला, मुनि, क्रोधवशा, ताम्रा, सरमा र तिमी। तीमध्ये तिमिका छोरा जलचरगण र सरमाका व्याघ्रादि श्वापदगण उत्पन्न भए ॥२४-२६॥ हे नृप ! सुरभिबाट महिष गाई र अन्य दुइ खुरे पशु उत्पन्न भए। ताम्राबाट बाज र गिद्ध आदि पक्षी जन्मिए।

दक्षकी मुनि नामकी पत्नीबाट अप्सराहरूका समुदाय उत्पन्न भए ॥२७॥ हे राजन ! क्रोधवशाबाट दन्दशूक आदि सर्पगण उत्पन्न भए, उसै गरी सबै वृक्ष इलाबाट र सबै राक्षस सुरसाबाट उत्पन्न भए ॥२८॥ अरिष्टाबाट गन्धर्वगण र काष्ठाबाट एक खुर हुने पशु उत्पन्न भए । कश्यपकी पत्नी दनुबाट एकसट्ठी छोरा जन्मिए । तीमध्ये ठूला-ठूला दानवका नाम हरू सुन–॥२९॥ ती थिए–द्विमूर्धा, शम्बर, अरिष्ट, हयग्रीव, विभावसु, अयोमुख, शंकुशिरा, स्वर्भानु, कपिल, अरुण, पुलोमा, वृषपर्वा, एकचक्र, धूम्रकेश, विरूपाक्ष, विप्रचिति, तथा दुर्जन ॥३०॥३१॥ स्वर्भानु दानवकी कन्या सुप्रभासित नमुचिको र वृषपर्वाकी छोरी शर्मिष्ठासित महाबली नहुषनन्दन ययातिको बिवाह भएको थियो ॥३२॥ वैश्वानर दानवकी चार सुन्दरी छोरीहरू उपदानवी, हयशिरा, पुलोमा र कालका नामले विख्यात भए । तीमध्ये उपदानवीसित हिरण्याक्षको र हयशिरासित क्रतुको विवाह भयो । पुलोमा तथा कालका ती दुवै वैश्वानर-पुत्रीको भगवान् ब्रह्माको आज्ञाले कश्यपजीसित विवाह भयो । तिनैद्वारा पौलोमा तथा कालकेय नामका एक हजार रणवीर दानव उत्पन्न

इलाया भूरुहाः सर्वे यातुधानाश्च सौरसाः ॥ २८ ॥ अरिष्टायाश्च गन्धर्वाः काष्ठाया द्विशफेतराः ॥ सुता दनोरेकषष्टिस्तेषां प्राधानिकाञ्छृणु
॥ २९ ॥ द्विमूर्धा शम्बरोऽरिष्टो हयग्रीवो विभावसुः ॥ अयोमुखः शंकुशिराः स्वर्भानुः कपिलोऽरुणः ॥ ३० ॥ पुलोमा वृषपर्वा च एकचक्रोऽनु-
तापनः ॥ धूम्रकेशो विरूपाक्षो विप्रचित्तिश्च दुर्जयः ॥ ३१ ॥ स्वर्भानोः सुप्रभां कन्यामुवाह नमुचिः किल ॥ वृषपर्वणस्तु शर्मिष्ठां ययातिर्नाहुषो
बली ॥ ३२ ॥ वैश्वानरसुता याश्च चतस्रश्चारुदर्शनाः ॥ उपदानवी हयशिरा पुलोमा कालका तथा ॥ ३३ ॥ उपदानवीं हिरण्याक्षः क्रतुर्हयशिरां
नृप ॥ पुलोमां कालकां च द्वे वैश्वानरसुते तु कः ॥ ३४ ॥ उपयेमेऽथ भगवान्कश्यपो ब्रह्मचोदितः ॥ पौलोमाः कालकेयाश्च दानवा युद्धशालिनः
॥ ३५ ॥ तयोः षष्टिसहस्राणि यज्ञघ्नांस्ते पितुः पिता ॥ जघान स्वर्गतो राजन्नेक इन्द्रप्रियङ्करः ॥ ३६ ॥ विप्रचित्तिः सिंहिकायां शतं चैकमजीज-
नत् ॥ राहुज्येष्ठं केतुशतं ग्रहत्वं य उपागताः ॥ ३७ ॥ अथातः श्रूयतां वंशो योऽदितेरनुपूर्वशः ॥ यत्र नारायणो देवः स्वांशेनावतरद्विभुः
॥ ३८ ॥ विवस्वानर्यमा पूषा त्वष्टाऽथ सविता भगः ॥ धाता विधाता वरुणो मित्रः शक्र उपक्रमः ॥ ३९ ॥ विवस्वतः श्राद्धदेवं संज्ञाऽसूयत वै
मनुम् ॥ मिथुनं च महाभागा यमं देवं यमीं तथा ॥ सैव भूत्वाऽथ वडवा नासत्यौ सुषुवे भुवि ॥४०॥ छाया शनैश्चरं लेभे सावर्णिं च मनुं ततः ॥

भए ॥३३-३५॥ ती दानव सबैका यज्ञमा विघ्न पार्दै रहन्थे । यस कारण हे राजन् ! इन्द्रको भलो गर्न भएका तिम्रा पितामह अर्जुनले जब ती स्वर्गमा बस्तथे, त्यसै बखत एक्लै गएर तिनीहरूलाई मारेका थिए ॥३६॥ विप्रचित्ति दानवले सिंहिकाको गर्भबाट एक सय पुत्र उत्पन्न गर्‍यो, जसमा सबभन्दा जेठो राहु थियो र शेष सय पुत्र केतु कहिन्थे । पछि गएर ती सबै ग्रहत्वमा प्राप्त भए ॥ ३७ ॥ अब म क्रमशः अदितिका वंशको वर्णन गर्दछु, सुन–त्यस वंशमा सर्वव्यापक साक्षात् नारायण आफ्ना अंशले अवतीर्ण भएका थिए ॥३८॥ विवस्वान, अर्यमा, पूषा, त्वष्टा, सविता, भग, धाता, विधाता, वरुण, मित्र, इन्द्र र उपक्रम–यी बाह्र आदित्य अदितिका नै छोरा थिए ॥३९॥ विवस्वान्ले आफ्नी भार्या महाभागा श्रद्धादेवीबाट श्राद्धदेव मनु, यम र यमी यी दुवैलाई उत्पन्न गरे, अनि तिनै संज्ञादेवीले घोडीको रूप धारण गरेर दुवै अश्विनीकुमारलाई उत्पन्न गरिन् ॥४०॥ विवस्वान्की

अर्का भार्या छायाबाट शनैश्चर तथा सावर्णि मनु नामका दुई पुत्र एवं तपती नामकी कन्या यी तीन सन्तान जन्मे । विवस्वान्‌की कन्या तपतीले संवरणलाई आफ्नो पति रोजिन् ॥४१॥ अर्यमा र उनकी पत्नी मातृकाका पुत्र चर्षणी अर्थात् कृताकृत ज्ञानसम्पन्न मनुष्य भए । तिनैद्वारा ब्रह्माजीले मनुष्य जातिका ब्राह्मण आदि चारै वर्णको कल्पना गरे ॥ ४२ ॥ पूषा निःसन्तान थिए । तिनका दाँत थिएनन्, त्यसै कारण ती पिंधेको अन्न खान्थे । पूर्वसमयमा ती दक्षमाथि कुपित महादेवतिर झिच्च दाँत पारेर हाँसेथे, त्यसै कारण तिनका दाँत भाँचिदिएथे ॥४३॥ दैत्यहरूकी अनुजा ( बहिनी ) रचना त्वष्टाकी पत्नी थिइन् । ती दुवैद्वारा सन्निवेश र महापराक्रमी विश्वरूप उत्पन्न भए ॥ ४४ ॥ यद्यपि विश्वरूप देवताहरूका शत्रु ( दैत्य ) का दौहित्र ( नाति ) थिए, तापनि जब इन्द्रद्वारा अपमानित भएर देवगुरु बृहस्पतिले देवताहरूको पौरोहित्य त्यागिदिए, तब देवताले उनलाई ( विश्वरूप ) लाई आफ्नो पुरोहित तुल्याए ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नेपाली भाषाटीकायां षष्ठोऽध्यायः ॥ ६ ॥ ( देवताले बृहस्पतिको अपमान गर्नाले ऐश्वर्यहीन हुनु र विश्वरूपलाई पुरोहित तुल्याउनु )—यति कथा सुनेर परीक्षित्‌ले सोधे—हे भगवन् ! आचार्य बृहस्पतिले आफ्ना प्रिय देवतालाई किन त्यागेथे ? ती द्वारा आफ्ना

कन्यां च तपती या वै वव्रे संवरणं पतिम् ॥ ४१ ॥ अर्यम्णो मातृका पत्नी तत्श्चर्षणयः सुताः ॥ यत्र वै मानुषी जातिर्ब्रह्मणा चोपकल्पिता ॥ ४२ ॥ पूषाऽनपत्यः पिष्टादी भग्नदन्तोऽभवत्पुरा ॥ योऽसौ दक्षाय कुपितं जहास विवृतद्विजः ॥ ४३ ॥ त्वष्टुर्दैत्यानुजा भार्या रचना नाम कन्यका ॥ संनिवेशस्तयोर्जज्ञे विश्वरूपश्च वीर्यवान् ॥ ४४ ॥ तं वव्रिरे सुरगणा दौहित्रं द्विषतामपि ॥ विमतेन परित्यक्ता गुरुणाऽऽङ्गिरसेन यत् ॥ ४५ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे षष्ठोऽध्यायः ॥ ६ ॥ राजोवाच ॥ कस्य हेतोः परित्यक्ता आचार्येणात्मनः सुराः ॥ एतदाचक्ष्व भगवञ्छिष्याणामक्रमं गुरौ ॥ १ ॥ श्रीशुक उवाच ॥ इन्द्रस्त्रिभुवनैश्वर्यमदोल्लङ्घितसत्पथः ॥ मरुद्भिर्वसुभी रुद्रैरादित्यैर्ऋभुभिर्नृप ॥ २ ॥ विश्वेदेवैश्च साध्यैश्च नासत्याभ्यां परिश्रितः ॥ सिद्धचारणगन्धर्वैर्मुनिभिर्ब्रह्मवादिभिः ॥ ३ ॥ विद्याधराप्सरोभिश्च किन्नरैः पतगोरगैः ॥ निषेव्यमाणो मघवान्स्तूयमानश्च भारत ॥ ४ ॥ उपगीयमानो ललितमास्थानाध्यासनाश्रितः ॥ पाण्डुरेणातपत्रेण चन्द्रमण्डलचारुणा ॥ ५ ॥ युक्तश्चान्यैः पारमेष्ठ्यैश्चामरव्यजनादिभिः ॥ विराजमानः पौलोम्या सहार्धासनया भृशम् ॥ ६ ॥ स यदा परमाचार्यं देवानामात्मनश्च ह ॥ नाभ्यनन्दत संप्राप्तं

गुरुको के व्यतिक्रम भयो, त्यो भन्नुहवस् ॥ १ ॥ शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! एक समय त्रिभुवनको ऐश्वर्य-मदले मत्त भएर सन्मार्ग छाड्ने इन्द्र प्रसन्नतापूर्वक इन्द्राणीसित आफ्नो सभामा उच्च सिंहासनमा बसेका थिए । मरुत् वसु, रुद्र, आदित्य, ऋभु, विश्वेदेव, साध्यगण र अश्विनीकुमार तिनको सेवा गर्दै थिए । सिद्ध, चारण, गन्धर्व, अनेक ब्रह्मवादी मुनि, विद्याधर, अप्सरा, किन्नर, पक्षी र नाग तिनको सेवा र स्तुति गरिरहेथे । सबैतिर ललित स्वरमा उनको गुण गाइरहेको थियो । तिनको माथितिर चन्द्रमण्डल हैं राम्रो र सेतो छत्र लगाइएको थियो र उत्तम चमर व्यजन आदि राजोचित चिह्न त्यहाँ विद्यमान थिए ॥ २-६ ॥ त्यसै बखत आफ्ना र देवताहरूका गुरु तथा सुरासुर वन्दित मुनिश्रेष्ठ बृहस्पतिलाई सभामा उपस्थित देखेर पनि जब इन्द्रले उनको प्रत्युत्थान अर्थात् आएका देखेर स्वागत तथा उठेर आसनादि दिई सत्कार गरेनन् र ती आफ्नो आसनबाट उठेनन्

अनि परम समर्थ तथा त्रिकालदर्शी विद्वान् बृहस्पति तत्काल सभाबाट फर्किए। यतिले नै उनले बुझिहाले–यो ऐश्वर्यमदको विकार हो, ती नबोली आफ्नो घर गए ॥ ७-९ ॥ जब इन्द्रलाई सम्झना र विचार भयो––मैले आफ्नो *सफलताको साँचो स्वरूप गुरुको अपमान गरें, तब ती भरिएको सभामा स्वयं आफूलाई धिक्कार्न लागे ॥ १० ॥ उनले भने––म तुच्छबुद्धि द्वारा यो धेरै ठूलो अपराध भयो, ऐश्वर्यमदमा अन्धो भएर यस देवसभामा आएका गुरुको अवज्ञा गरें ॥ ११ ॥ जसले मोहग्रस्त भएर देवताहरूको अधिपति भएर पनि मेरो मनमा यस्तो आसुरी भाव जागृत भयो, तब इन्द्र-लक्ष्मीको पनि कुन बुद्धिमान व्यक्ति इच्छा गर्ला ? ॥ १२ ॥ जसको यस्तो विचार छ कि सार्वभौम राजा जब सिंहासनमा बस्तछ उस बखत कोही आए पनि नउठोस्, ती व्यक्ति उत्तम धर्मको मर्यादा जान्दैनन् ॥ १३ ॥ यस्ता कुमार्गका उपदेशक र घोर नरकगामी मूर्खका वचन–

प्रत्युत्थानासनादिभिः ॥ ७ ॥ वाचस्पतिं मुनिवरं सुरासुरनमस्कृतम् ॥ नोच्चचालासनादिन्द्रः पश्यन्नपि सभागतम् ॥ ८ ॥ ततो निर्गत्य सहसा कविराङ्गिरसः प्रभुः ॥ आययौ स्वगृहं तूष्णीं विद्वाञ्छ्रीमदविक्रियाम् ॥९॥ तर्ह्येव प्रतिबुद्धयेन्द्रो गुरुहेलनमात्मनः ॥ गर्हयामास सदसि स्वयमात्मा-नमात्मना ॥ १० ॥ अहो बत मयाऽसाधु कृतं वै दभ्रबुद्धिना ॥ यन्मयैश्वर्यमत्तेन गुरुः सदसि कात्कृतः ॥ ११ ॥ को गृध्येत्पण्डितो लक्ष्मीं त्रिविष्टपपतेरपि ॥ ययाऽहमासुरं भावं नीतोऽद्य विबुधेश्वरः ॥ १२ ॥ ये पारमेष्ठ्यं धिषणमधितिष्ठन्नकञ्चन ॥ प्रत्युत्तिष्ठेदिति ब्रूयुर्धर्मं ते न परं विदुः ॥ १३ ॥ तेषां कुपथदेष्टॄणां पततां तमसि ह्यधः ॥ ये श्रद्दध्युर्वचस्ते वै मज्जन्त्यश्मप्लवा इव ॥ १४ ॥ अथाहममराचार्यमगाधधिषणं द्विजम् ॥ प्रसादयिष्ये निशठः शीर्ष्णा तच्चरणं स्पृशन् ॥ १५ ॥ एवं चिन्तयतस्तस्य मघोनो भगवान्गृहात् ॥ बृहस्पतिर्गतोऽदृष्टां गतिमध्यात्ममायया ॥ १६ ॥ गुरोर्नाधिगतः संज्ञां परीक्षन्भगवान्स्वराट् ॥ ध्यायन्धिया सुरैर्युक्तः शर्म नालभतात्मनः ॥ १७ ॥ तच्छ्रुत्वैवासुराः सर्व आश्रित्यौशनसं मतम् ॥ देवान्प्रत्युद्यमं चक्रुर्दुर्मदा आततायिनः ॥ १८ ॥ तैर्विसृष्टेषुभिस्तीक्ष्णैर्निर्भिन्नाङ्गोरुबाहवः ॥ ब्रह्माणं शरणं जग्मुः

मा जो विश्वास गर्दछन्, ती ढुङ्गाले बनेको डुङ्गामा चढेका पुरुषहरू झैं बीच जलमा डुब्दछन् ॥ १४ ॥ अतः अब म शठता त्यागेर अगाध बुद्धि गुरुलाई उनका चरणमा शिर राखेर खुसी पार्छु ॥ १५ ॥ जब इन्द्र यस प्रकार आफ्नू अकर्तव्यमा पछितो गर्दै थिए, त्यसै बखत भगवान् बृहस्पति आफ्नो योगबलले अलक्षित भए ॥ १६ ॥ धेरै खोज्दा पनि गुरुको केही पत्तो लागेन, अनि भगवान् इन्द्र अन्य देवताहरू सहित कुनै अन्य उपाय विचार्न लागे, किन्तु आफ्नो बुद्धिले ती केही पनि निश्चय गर्न समर्थ भएनन् र उनको चित्त शान्त भएन ॥ १७ ॥ यो समाचार पाएर मदोन्मत्त तथा आततायी असुर, असुरगुरु शुक्राचार्यको अनुमति पाएर शस्त्रास्त्रले सुसज्जित भएर देवता माथि आइलागे ॥ १८ ॥ दैत्यले

*दृष्टान्त ( सफलताको साँचो ) –जॉन हण्टर यौटा प्रसिद्ध डाक्टर भएको थियो। त्यो ठूलो विद्वान् थियो। डाक्टरी विद्यामा उसले अनेक खोजी गरेको थियो। विद्याभ्यासमा [illegible] केवल चार घण्टा र दिनमा खाइसकेपछि एक घण्टा विश्राम गर्दथ्यो। त्योसित कसैले सोध्यो—'तिमीलाई यत्रो ठूलो काममा कसरी सफलता प्राप्त भयो ?' उत्तरमा डाक्टरले भन्यो—'मेरो सिद्धान्त [illegible] भन्दा पहिले राम्ररी विचार गर्दछु—कि यो काम गरित हुन सक्छ कि सक्दैन। यदि हुन सक्छ भने त्यसको पछिलागेर काम पूरा [illegible] सिद्धान्तमा हिँडेर मलाई सफलता प्राप्त हुन्छ।'

छाडेका तीखा बाणले तिम्रा र बाहु आदि अंग छिन्न-भिन्न हुनाले टाउको निहुराएर इन्द्रसमेत सबै देवता ब्रह्माजीको शरणमा पुगे ॥ १९ ॥ देवताहरूलाई अत्यन्त पीडित देखेर भगवान् ब्रह्माजीले अतिशय कृपापूर्वक उनलाई धैर्य दिंदै यस प्रकार भन्नुभयो ॥ २० ॥ ब्रह्माजी भन्नुहुन्छ–हे देवता हो ! साह्रै खेदको कुरा हो ! तिमीले निकै ठूलो अनर्थ गर्‍यौ, ऐश्वर्यमदले मत्त भएर ती जितेन्द्रिय तथा ब्रह्मज्ञानी ब्राह्मणको सत्कार गरेनौ ॥ २१ ॥ यो तिम्रो त्यही कर्मको फल हो—तिमीहरू समृद्धिशाली भएर पनि आफूभन्दा दुर्बल शत्रुसित हार्‍यौ ॥ २२ ॥ हे इन्द्र ! आफ्ना गुरुको अपमान गर्नाले क्षीण-बल हुने आफ्ना शत्रुहरूतिर नै हेर ( पहिले तिनको के दशा थियो तर ) आज ती आफ्ना गुरु शुक्राचार्यको भक्तिपूर्वक आराधना गर्नाले कति उन्नत भएका छन् । हेर, कयै दिनमा यी आफ्ना गुरु शुक्रका भक्त दैत्य मेरो लोक पनि खोस्ने छन् ॥ २३ ॥ गुरु शुक्राचार्यबाट अर्थसिद्धिको शिक्षा पाएका यी अभेद्य मन्त्र हुने दैत्य जाबो स्वर्गलाई के ठान्दछन् ? जसका सहायक गाई, ब्राह्मण र भगवान् हुन्छन्, ती श्रेष्ठ पुरुषको कहिल्यै पनि अमङ्गल हुन सक्तैन ॥ २४ ॥

सहेन्द्रा नतकन्धराः ॥ १९ ॥ तांस्तथाऽभ्यर्दितान्वीक्ष्य भगवानात्मभूरजः ॥ कृपया परया देव उवाच परिसान्त्वयन् ॥ २० ॥ ब्रह्मो-
वाच ॥ अहो बत सुरश्रेष्ठा ह्यभद्रं वः कृतं महत् ॥ ब्रह्मिष्ठं ब्राह्मणं दान्तमैश्वर्यान्नाभ्यनन्दत ॥ २१ ॥ तस्यायमनयस्यासीत्परेभ्यो
वः पराभवः ॥ प्रक्षीणेभ्यः स्ववैरिभ्यः समृद्धानां च यत्सुराः ॥ २२ ॥ मघवन्द्विषतः पश्य प्रक्षीणान्गुर्वतिक्रमात् ॥ सम्प्रत्युपचिता-
न्भूयः काव्यमाराध्य भक्तितः ॥ आददीरन्निलयनं ममापि भृगुदेवताः ॥ २३ ॥ त्रिविष्टपं किं गणयन्त्यभेद्यमन्त्रा भृगूणामनुशिक्षि-
तार्थाः ॥ न विप्रगोविन्दगवीश्वराणां भवन्त्यभद्राणि नरेश्वराणाम् ॥ २४ ॥ तद्विश्वरूपं भजताशु विप्रं तपस्विनं त्वाष्ट्रमथात्मवन्तम् ॥
सभाजितोऽर्थान्स विधास्यते वो यदि क्षमिष्यध्वमुतास्य कर्म ॥ २५ ॥ श्रीशुक उवाच ॥ त एवमुदिता राजन्ब्रह्मणा विगतज्वराः ॥
ऋषिं त्वाष्ट्रमुपव्रज्य परिष्वज्येदमब्रुवन् ॥ २६ ॥ देवा ऊचुः ॥ वयं तेऽतिथयः प्राप्ता आश्रमं भद्रमस्तु ते ॥ कामः सम्पाद्यतां
तात पितॄणां समयोचितः ॥ २७ ॥ पुत्राणां हि परो धर्मः पितृशुश्रूषणं सताम् ॥ अपि पुत्रवतां ब्रह्मन्किमुत ब्रह्मचारिणाम् ॥ २८ ॥
आचार्यो ब्रह्मणो मूर्तिः पिताः मूर्तिः प्रजापतेः ॥ भ्राता मरुत्पतेर्मूर्तिर्माता साक्षात्क्षितेस्तनुः ॥ २९ ॥ दयाया भगिनी मूर्तिर्धर्मस्या-

अतएव तिमी छिटै त्वष्टाका छोरा विश्वरूपकहाँ जाऊ । ती ब्राह्मण तपस्वी तथा आत्मज्ञानी छन् । यदि तिमी तिनका कटुशब्द सहन सक्छौ भने तिमीबाट आदर पाएर ती तिम्रा सबै मनोरथ पूर्ण पारिदिन्छन् ॥ २५ ॥ शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! ब्रह्माजीले यस्तो भनेपछि देवगणको सन्ताप हरायो । तत्काल ती विश्वरूप ऋषिकहाँ पुगे र उनलाई अंकमाल गरेर यस प्रकार भन्न लागे ॥ २६ ॥ देवता भन्दछन्––हे तात ! तिम्रो मङ्गल होस् । हामीहरू तिम्रो आश्रममा नडाकिकन आएका अतिथि हौं । अतः तिमी आफ्ना पितृहरूको समयोचित इच्छा पूर्ण गर ॥ २७ ॥ असल सन्तानको सबैभन्दा ठूलो धर्म आफ्ना गुरुजनको सेवा गर्नु नै हुन्छ । त्यसमाथि ब्रह्मचारीको त कुरै के भन्नु छ ? ॥२८॥ आफ्नो आचार्य ( मन्त्र सुनाउने गुरु ) वेदलाई पिता प्रजापति ब्रह्मालाई, भाइ मरुत्पति इन्द्रको र माता साक्षात् पृथ्वीकी मूर्ति मानिन्छिन् ॥ २९ ॥ यसै प्रकार बहिनि दयालाई, अतिथि धर्मलाई

579

अभ्यागत अग्निलाई तथा सबै जीव आफ्नाआफ्ना आ माका मूर्ति हुन्छन् ॥ ३० ॥ हे तात ! हामी तिम्रा पित् हौं । आफना शत्रुहरूसित पराजित हुनाले हामा ठूलो कष्टमा परेका छौं । अतः आफ्नो तपोबलले हाम्रो महान् संकट निवारण गर्न तिमी हाम्रो कुरा मान ॥ ३१ ॥ तिमी ब्रह्मज्ञानी ब्राह्मण हुनाले हाम्रा गुरु हौ । हामी तिमीलाई आफ्ना आचार्य तुल्याउँछौं । केही यस्तो गर कि तिम्रो प्रभावले हामी आफ्ना शत्रुमा विजय प्राप्तगरौं ॥ ३२ ॥ यो मनिरहने कुरा नै होइन–म हजुरको बालक हुँ, अनि गुरु कसरी बन्नसक्छु ! कुरा के भने प्रयोजन सिद्धिका लागि सानाको चरण-वन्दना गर्नमा पनि कुनै निन्दाको कुरा हुँदैन । हे ब्रह्मन् ! केवल अवस्था नै सम्माननीय बन्ने कारण हुन सक्तैन । सम्मान त वेदको ज्ञानले आउँछ ॥३३॥ शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! ती देवताहरूद्वारा पौरोहित्यको निम्ति प्रार्थित तपस्वी विश्वरूप प्रसन्न भएर तीमित मधुर वाणीमा यसरी भन्न लागे ॥३४॥ विश्वरूपले भने–पौरोहित्य कर्मले ब्रह्मतेज क्षीण भएर जान्छ, अतः धर्मात्मा पुरुष त्यसको निन्दा नै गरेरआएका छन् । हे देवगण हो ! जब हजुर सबै जना मलाई यो स्वीकार गर्न प्रार्थना गरिरहनु

त्माऽतिथिः स्वयम् ॥ अग्नेरभ्यागतो मूर्तिः सर्वभूतानि चात्मनः ॥ ३० ॥ तस्मात्पितॄणामार्तानामार्तिं परपराभवम् ॥ तपसाऽपनयंस्तात सन्देशं कर्तुमर्हसि ॥ ३१ ॥ वृणीमहे त्वोपाध्यायं ब्रह्मिष्ठं ब्राह्मणं गुरुम् ॥ यथाऽञ्जसा विजेष्यामः सपत्नांस्तव तेजसा ॥ ३२ ॥ न गर्हयन्ति ह्यर्थेषु यविष्ठाङ्घ्र्यभिवादनम् ॥ छन्दोभ्योऽन्यत्र न ब्रह्मन्वयो ज्यैष्ठ्यस्य कारणम् ॥ ३३ ॥ ऋषिरुवाच ॥ अभ्यर्थितः सुरगणैः पौरोहित्ये महातपाः ॥ स विश्वरूपस्तानाह प्रसन्नः श्लक्ष्णया गिरा ॥ ३४ ॥ विश्वरूप उवाच ॥ विगर्हितं धर्मशीलैर्ब्रह्मवर्चउपव्ययम् ॥ कथं नु मद्विधो नाथा लोकेशैरभियाचितम् ॥ प्रत्याख्यास्यति तच्छिष्यः स एव स्वार्थ उच्यते ॥ ३५ ॥ अकिञ्चनानां हि धनं शिलोञ्छनं तेनेह निर्वर्तितसाधुसत्क्रियः ॥ कथं विगर्ह्यं नु करोम्यधीश्वरा पौरोधसं हृष्यति येन दुर्मतिः ॥ ३६ ॥ तथापि न प्रतिब्रूयां गुरुभिः प्रार्थितं कियत् ॥ भवतां प्रार्थितं सर्वं प्राणैरर्थैश्च साधये ॥ ३७ ॥ श्रीशुक उवाच ॥ तेभ्य एवं प्रतिश्रुत्य विश्वरूपो महातपाः ॥ पौरोहित्यं वृतश्चक्रे परमेण समाधिना ॥ ३८ ॥ सुरद्विषां श्रियं गुप्तामौशनस्यापि विद्यया ॥ आच्छिद्यादान्महेन्द्राय वैष्णव्या विद्यया विभुः ॥ ३९ ॥ यथा गुप्तः सहस्राक्षो जिग्येऽसुरचमूर्विभुः ॥ तां प्राह स महेन्द्राय विश्वरूप उदारधीः ॥ ४० ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे सप्तमोऽध्यायः ॥ ७ ॥ राजोवाच ॥ यथा गुप्तः

भएको छ, तब हजुरको शिष्य मजस्तो व्यक्ति त्यसको अवहेलना कसरी गर्न सक्छु ? शिष्यको सबै भन्दा ठूलो स्वार्थ यही हो–गुरुजनको आज्ञा पालन गर्दै रहोस् ॥३५॥ हे देवता हो ! अकिञ्चन मुनिहरूको सबैभन्दा ठूलो धन शिलोञ्छवृत्ति नै हो । त्यस द्वारा साधु पुरुषका सबै गृहस्थोचित सत्कर्महरूको पालन गर्न म अतिशय निन्दनीय पौरोहित्य कर्म कसरी गर्न सकौंला ? जसले केवल दुष्ट बुद्धि हुनेलाई नै प्रसन्नता प्राप्त हुन्छ ॥ ३६ ॥ तैपनि अब म अरु केही पनि भन्दिन किनकि हजुर गुरुजनले के माग्नुभएको छ र ? हजुरका सबै कामनाहरू म आफ्नो प्राण र धन गुमाएर पनि सिद्ध गर्नछु ॥ ३७ ॥ शुकदेवजी भन्दछन्–हे राजन् ! ती देवताहरूसित त्यस्तो प्रतिज्ञा गरेर तपस्वी विश्वरूप ठूलो तत्परताले उनीहरूको पौरोहित्य गर्नथाले ॥ ३८ ॥ परम समर्थ विश्वरूपले आफ्नी वैष्णवी विद्याको प्रभावले शुक्राचार्यको विद्याबलले सुरक्षित भए पनि दैत्यहरूको राज्यलक्ष्मी तीसित

खोसेर इन्द्रलाई सुम्पिदिए॥३९॥ जुन नारायण-कवचरूपिणी विद्याको बलले सुरक्षित भएर इन्द्रले दैत्य-सेनालाई जितेका थिए, त्यो इन्द्रलाई उदारबुद्धि विश्वरूपले नै दिएका हुन् ॥४०॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे सप्तमो ध्यायः ॥ ७ ॥ ( नारायण-कवच )—यति कथा सुनेर राजा परीक्षित्ले शुकमुनिलाई सोधे हे भगवन् ! जसको द्वारा सुरक्षित भएर इन्द्रले हात्ती, घोड़ा आदि अनेक वाहनले युक्त शत्रुदलका सबै सेनालाई ख्याल-ख्यालमै जितेर तीनै लोकका राज्यलक्ष्मीको भोग गरे त्यो नारायण-कवचरूपिणी वैष्णवी विद्या हजुर मलाई आज्ञा हवस् । यसको सँगसँगै जसरी त्यसद्वारा रक्षित भएर इन्द्रले आततायी शत्रुलाई युद्धमा पराजित गरे, त्यो प्रसङ्ग पनि हजुर मलाई सुनाउनोस् ॥१॥२॥ शुकदेवजी भन्नलागे—हे राजन् ! जब विश्वरूप पुरोहित भए, तब इन्द्रले सोधेपछि उनले जुन नारायण-कवचको उपदेश दिएका थिए—त्यो एकाग्र मनले सुन ॥ ३ ॥ विश्वरूप भन्दछन्—हे इन्द्र ! जब कहिले कुनै प्रकारको कष्ट भयो भने आफ्नो शरीरमा नारायण-कवच धारणको कर्तव्य हो——पहिले हात-पाउ धोएर आचमन गरोस्, अनि दुवै अनामिका औंलामा कुशको पवित्र

सहस्राक्षः सवाहान्रिपुसैनिकान् ॥ क्रीडन्निव विनिर्जित्य त्रिलोक्या बुभुजे श्रियम् ॥ १ ॥ भगवंस्तन्ममाख्याहि वर्म नारायणात्मकम् ॥ यथाऽऽत-
तायिनः शत्रून्येन गुप्तोऽजयन्मृधे ॥ २ ॥ श्रीशुक उवाच ॥ वृतः पुरोहितस्त्वाष्ट्रो महेन्द्रायानुपृच्छते ॥ नारायणाख्यं वर्माह तदिहैकमनाः
शृणु ॥ ३ ॥ विश्वरूप उवाच ॥ धौतांघ्रिपाणिराचम्य सपवित्र उदङ्मुखः ॥ कृतस्वाङ्गकरन्यासो मन्त्राभ्यां वाग्यतः शुचिः ॥ ४ ॥ नारायणमयं
वर्म सन्नह्येद्भय आगते ॥ पादयोर्जानुनोरूर्वोरुदरे हृद्यथोरसि ॥ ५ ॥ मुखे शिरस्यानुपूर्व्यादोङ्कारादीनि विन्यसेत् ॥ ॐ नमो नारायणायेति
विपर्ययमथापि वा ॥ ६ ॥ करन्यासं ततः कुर्याद्द्वादशाक्षरविद्यया ॥ प्रणवादियकारान्तमङ्गुल्यङ्गुष्ठपर्वसु ॥ ७ ॥ न्यसेद्धृदय ओङ्कारं विकारमनु
मूर्धनि ॥ षकारं तु भ्रुवोर्मध्ये णकारं शिखया दिशेत् ॥ ८ ॥ वेकारं नेत्रयोर्युञ्ज्यान्नकारं सर्वसन्धिषु ॥ मकारमस्त्रमुद्दिश्य मन्त्रमूर्तिर्भवेद्बुधः
॥ ९ ॥ सविसर्गं फडन्तं तत्सर्वदिक्षु विनिर्दिशेत् ॥ ॐ विष्णवे नम इति ॥ १० ॥ आत्मानं परमं ध्यायेद्ध्येयं षट्शक्तिभिर्युतम् ॥ विद्यातेजस्त-
पोमूर्तिमिमं मन्त्रमुदाहरेत् ॥ ११ ॥ ॐ हरिर्विदध्यान्मम सर्वरक्षां न्यस्ताङ्घ्रिपद्मः पतगेन्द्रपृष्ठे ॥ दरारिचर्मासिगदेषुचापपाशान्दधानोऽष्टगुणो-

लगाई उत्तरतिर फर्केर बसोस् र वाणीलाई संयत पारी पवित्रतासाथ अष्टाक्षर वा द्वादशाक्षर मन्त्रद्वारा अङ्गन्यास र करन्यास गरोस् पहिले 'ॐ नमो नारायणाय' यो अष्टाक्षर मन्त्रले ॐकार आदि आठ अक्षरले क्रमशः चरण, जानु, ऊरु, उदर, वक्षस्थल, मुख तथा शिरमा न्यास गरोस् । यकारदेखि ओंकार पर्यन्त विपरीत क्रमले पनि शिर आदिमा न्यास गर्नसकिन्छ ॥४-६॥ त्यसपछि द्वादशाक्षर मन्त्रका ॐकार आदि बाह्र अक्षरहरूले क्रमशः औंला तथा दुवै अंगुष्ठका पर्वमा न्यास गर्नुपर्छ ॥ ७ ॥ त्यसपछि 'ॐ विष्णवे नमः ।' यस मन्त्रको ॐकारलाई हृदयमा, 'वि' लाई मस्तकमा, 'ष' लाई आँखीभौंको माझमा, 'ण' लाई शिखामा 'वे' लाई नेत्रमा तथा 'न' लाई सबै सन्धिहरूमा स्थिर गरोस् । यसै क्रममा 'म' लाई अस्त्ररूपले चिन्तन गर्दा-गर्दै स्वयं मन्त्ररूप बनोस् । अनि फडन्त विसर्गसित अर्थात् 'मः अस्त्राय फट्' यसो भनेर दिग्बन्धन विधान गरोस् ॥८-१०॥ त्यसपछि आफ्नो ध्येय अर्थात् षट्शक्ति सम्पन्न परमात्माको ध्यान गरोस् र विद्या, तेज तथा तपःस्वरूप यस मन्त्रलाई जपोस् ॥११॥ ॐ भगवान् आफ्ना चरण गरुडको पिठिउँमा राखेका छन् र जसले शंख, चक्र

ढाल, खड्ग, गदा, धनुष, बाण र पाश यी आठ आयुध धारण गरेका छन्, ती अणिमादि आठ ऐश्वर्य तथा आठ भुजाहरूले सुशोभित भगवान् सबै प्रकारले मेरो रक्षा गरुन् ॥१२॥ मत्स्यमूर्ति भगवान् जलमा जलजन्तुरूपी वरुण-पाशले मेरो रक्षा गरुन् । वटुवामन रूप धारण गर्न भएका श्रीहरि आफ्नी मायाशक्तिले स्थलमा मेरो रक्षा गरुन् । आकाशमा विश्वरूप धारी त्रीविक्रम भगवान् मेरो रक्षा गरुन् ॥१३॥ दुर्ग, वन तथा युद्धस्थलादिमा नृसिंह भगवान् मेरो रक्षा गरुन् । जो हिरण्यकशिपु आदि दैत्यपतिका शत्रु छन् जसको घनघोर अट्टहासहले गुञ्जायमान भएका तथा गर्भवती दैत्यवधुहरूका गर्भपात भएका थिए ॥१४॥ जसले आफ्ना दाह्रामा पृथ्वीलाई धारण गरेका थिए ती यज्ञमूर्ति वाराह भगवान् बाटोमा मलाई बचाउन् यसै प्रकार पर्वतका टाकुरामा परशुराम तथा विदेशमा लक्ष्मण सहित भरताग्रज भगवान् रामचन्द्र मेरो रक्षा गरुन् ॥१५॥ भगवान् नारायण उग्र धर्म तथा प्रमादबाट नर भगवान गर्वबाट, योगेश्वर दत्तात्रयजी कुयोगबाट तथा गुणाधिपति कपिल मुनि सबै प्रकारका कर्म-बन्धनबाट मेरो रक्षा गरुन् ॥ १६ ॥ सनत्कुमारजी कामदेवबाट, बाटोमा हिड्दा देवताहरूको

ऽष्टबाहुः ॥ १२ ॥ जलेषु मां रक्षतु मत्स्यमूर्तिर्यादोगणेभ्यो वरुणस्य पाशात् ॥ स्थलेषु मायावटुवामनोऽव्यात्त्रिविक्रमः खेऽवतु विश्वरूपः
॥ १३ ॥ दुर्गेष्वटव्याजिमुखादिषु प्रभुः पायान्नृसिंहोऽसुरयूथपारिः ॥ विमुञ्चतो यस्य महाट्टहासं दिशो विनेदुर्न्यपतंश्च गर्भाः ॥ १४ ॥ रक्ष-
त्वसौ माऽध्वनि यज्ञकल्पः स्वदंष्ट्रयोन्नीतधरो वराहः ॥ रामोऽद्रिकूटेष्वथ विप्रवासे सलक्ष्मणोऽव्याद्भरताग्रजोऽस्मान् ॥ १५ ॥ मामुग्रधर्माद-
खिलात्प्रमादान्नारायणः पातु नरश्च हासात् ॥ दत्तस्त्वयोगादथ योगनाथः पायाद्गुणेशः कपिल कर्मबन्धनात् ॥ १६ ॥ सनत्कुमारोऽवतु
कामदेवाद्धयशीर्षा मां पथि देवहेलनात् ॥ देवर्षिवर्यः पुरुषार्चनान्तरात्कूर्मो हरिर्मां निरयादशेषात् ॥ १७ ॥ धन्वन्तरिर्भगवान्पात्वपथ्याद्द्वन्द्वा-
द्भयादृषभो निर्जितात्मा ॥ यज्ञश्च लोकादवताज्जनान्ताद्बलो गणात्क्रोधवशादहीन्द्रः ॥ १८ ॥ द्वैपायनो भगवानप्रबोधाद्बुद्धस्तु पाखण्डगणात्प्र-
मादात् ॥ कल्किः कलेः कालमलात्प्रपातु धर्मावनायोरुकृतावतार ॥ १९ ॥ मां केशवो गदया प्रातरव्याद्गोविन्द आसङ्गवमात्तवेणुः ॥ नारा-
यणः प्राह्ण उदात्तशक्तिर्मध्यन्दिने विष्णुररीन्द्रपाणिः ॥ २० ॥ देवोऽपराह्णे मधुहोग्रधन्वा सायं त्रिधामाऽवतु माधवो माम् ॥ दोषे हृषीकेश उतार्ध-
रात्रे निशीथ एकोऽवतु पद्मनाभः ॥ २१ ॥ श्रीवत्सधामाऽपररात्र ईशः प्रत्यूष ईशोऽसिधरो जनार्दनः ॥ दामोदरोऽव्यादनुसन्ध्यं प्रभाते विश्वेश्वरो

अवहेलनाबाट हयग्रीव भगवान्, देवर्षि नारद भगवान्को पूजामा अकस्मात् हुन गएका अपराधबाट तथा नरकबाट कच्छप भगवान् मेरो रक्षा गरुन् ॥१७॥ कुपथ्यबाट भगवान् धन्वन्तरि, परमजितेन्द्रिय ऋषभदेवजी सुख दुःखादिका द्वन्द्वबाट, यज्ञ भगवान् लोकापवादबाट, बलभद्रजी मनुष्यद्वारा प्राप्त कष्टहरूबाट तथा शेष भगवान् अत्यन्त रिसाहा सर्पहरूबाट मलाई बचाउन् ॥१८॥ अज्ञानबाट व्यासदेव, पाखण्ड प्रमादबाट बुद्धदेव र धर्म-रक्षार्थ अवतार लिने श्रीकल्कि भगवान् कलिकालका सबै दोषहरूबाट मलाई रक्षा गरुन् ॥१९॥ प्रातःकाल सूर्योदय हुने बेलामा केशव भगवान् आफ्नो गदाले मेरो रक्षा गरुन् । सूर्योदयपछि वेणुधर गोविन्द, पूर्वाह्णको बेला उदात्त-शक्तिधारी नारायण, मध्याह्नमा विष्णु भगवान्, अपराह्णमा धनुधारी मधुसूदन, सायंकालमा ब्रह्मादि त्रिमूर्ति धारण गर्ने माधव प्रदोषकालमा हृषीकेश आधा रातमा अथवा निशामा भगवान् पद्मनाभ, रातको पछिल्लो भागमा श्रीवत्सलाञ्छन हरि, उषाकालमा

खड्गधारी जनार्दन भगवान्, प्रातःकाल श्रीदामोदर तथा सबै संध्याहरूमा कालमूर्ति विश्वेश्वर भगवान् मेरो रक्षा गरून् ॥२०-२२॥ हे सुदर्शन ! तिम्रो आकार चक्रजस्तै छ। तिम्रो नेमी (दन्ता) प्रलयकालको आगो जस्तै अत्यन्त तीक्ष्ण छ। तिमी भगवान्‌को संकेतले सबैं पट्टितिर घुमिरहन्छौ। जस्तै वायुको सहायताले दन्केको अग्नि सुकेका घाँसको थुप्रोलाई भस्म पारिदिन्छ, त्यसै गरी तिमी हाम्रा शत्रुहरूलाई समूल भस्म पारिदेऊ॥२३॥हे गदे ! तेरो शरीरको झिल्काहरूको स्पर्श वज्र जस्तै कठोर हुन्छ। तँ भगवान् अजितको मनपरेको छस् र म पनि उनैं नारायणको सेवक हुँ। अतएव तँ कूष्माण, विनायक, यक्ष, राक्षस, भूत तथा ग्रहहरूलाई धूलो पारेर राखिदे। तँ मेरा शत्रुहरूलाई कुल्चिदे ॥२४॥ हे शंख ! तिमी भगवान्‌ले फुकेपछि भयंकर शब्द गर्दछौ। तिमी मेरा शत्रुको हृदय कम्पित पार्दैं यातुधान, प्रमथ, प्रेत, मातृका पिशाच एवं विप्रग्रह (ब्रह्मराक्षस) आदि घोरदर्शन जीवहरूलाई चुटेर धपाऊ ॥२५॥ हे तीक्ष्ण धार हुने खड्ग श्रेष्ठ ! तिमी भगवान्‌द्वारा प्रेरित भएर मेरा शत्रुहरूलाई धमाधम काट-तिनलाई छिन्न-भिन्न पार ! हे शतचन्द्र ढाल ! तिमी उग्रदृष्टि हुनाले मेरा पापी शत्रु-

भगवान्कालमूर्तिः ॥ २२ ॥ चक्रं युगान्तानलतिग्मनेमि भ्रमत्समन्ताद्भगवत्प्रयुक्तम् ॥ दन्दग्धि दन्दग्ध्यरिसैन्यमाशु कक्षं यथा वातसखो हुताशः
॥ २३ ॥ गदेऽशनिस्पर्शनविस्फुलिङ्गे निष्पिण्ढि निष्पिढ्यजितप्रियाऽसि ॥ कूष्माण्डवैनायकयक्षरक्षोभूतग्रहांश्चूर्णय चूर्णयारीन् ॥ २४ ॥ त्वं
यातुधानप्रमथप्रेतमातृपिशाचविप्रग्रहघोरदृष्टीन् ॥ दरेन्द्र विद्रावय कृष्णपूरितो भीमस्वनोऽरेर्हृदयानि कम्पयन् ॥२५॥ त्वं तिग्मधाराऽसि वरारिसै-
न्यमीशप्रयुक्तो मम छिन्धि छिन्धि ॥ चक्षूंषि चर्मञ्छतचन्द्र छादय द्विषामघोनां हर पापचक्षुषाम् ॥ २६ ॥ यन्नो भयं ग्रहेभ्योऽभूत्केतुभ्यो नृभ्य एव
च ॥ सरीसृपेभ्यो दंष्ट्रिभ्यो भूतेभ्योऽंहोभ्य एव वा ॥ २७ ॥ सर्वाण्येतानि भगवन्नामरूपास्त्रकीर्तनात् ॥ प्रयान्तु संक्षयं सद्यो ये नः श्रेयः प्रतीपकाः
॥ २८ ॥ गरुडो भगवान्स्तोत्रस्तोभश्छन्दोमयः प्रभुः ॥ रक्षत्वशेषकृच्छ्रेभ्यो विष्वक्सेनः स्वनामभिः ॥ २९ ॥ सर्वापद्भ्यो हरेर्नामरूपयानायुधानि
नः ॥ बुद्धीन्द्रियमनःप्राणान्पान्तु पार्षदभूषणाः ॥ ३० ॥ यथा हि भगवानेव वस्तुतः सदसच्च यत् ॥ सत्येनानेन नः सर्वे यान्तु नाशमुपद्रवाः
॥ ३१ ॥ यथैकात्म्यानुभावानां विकल्परहितः स्वयम् ॥ भूषणायुधलिङ्गाख्या धत्ते शक्तीः स्वमायया ॥ ३२ ॥ तेनैव सत्यमानेन सर्वज्ञो भगवा-
न्हरिः ॥ पातु सर्वैः स्वरूपैर्नः सदा सर्वत्र सर्वगः ॥ ३३ ॥ विदिक्षु दिक्षूर्ध्वमधः समन्तादन्तर्बहिर्भगवान्नारसिंहः ॥ प्रहापयँल्लोकभयं स्वनेन

हरूका नेत्र धुनिदेउ अथवा ज्योति नै हरिलेऊ ॥२६॥ सूर्य आदि ग्रह, उल्कापात आदि केतु, मनुष्य सरीसृप (सर्प), दाह्रा हुने जीव, भूत, प्रेत आदि पापी प्राणीहरूद्वारा मलाई जुन-जुन भय प्राप्त हुन्छ, हाम्रो कल्याण-मार्गका अवरोधक ती सबै दोष भगवान्‌का नाम, रूप तथा आयुधको कीर्तन गर्नाले तत्काल नष्ट होऊन् ॥२७॥२८॥ बृहद्रथन्तर आदि अनेक स्तोत्रहरूले स्तुयमान वेदमूर्ति भगवान् गरुड र आफ्नो नामोच्चारणको प्रभावले विष्वक्सेन भगवान् सबै आपत्तिबाट हाम्रो रक्षा गरून् ॥२९॥ भगवानका नाम, रूप आयुध र उनका श्रेष्ठ पार्षदगण हाम्रो बुद्धि, इन्द्रिय, मन र प्राणलाई सबै आपत्तिबाट बचाउन् ॥३०॥ जति पनि सत् अर्थात् सूक्ष्म र असत् स्थूल प्रपञ्च विद्यमान छन्, ती सबै वास्तवमा ईश्वर नै हुन्–यस सत्यले हाम्रा सबै विघ्न नष्ट होउन् ॥३१॥ यौटा आत्माको नै सर्वत्र भावना गर्नेहरूको दृष्टिमा विकल्प शून्य भए पनि भगवान् आफ्नी माया द्वारा भूषण, आयुध र नाम-

रूपका आफ्ना विभिन्न शक्तिहरू धारण गर्दछन्–ती सत्य, सर्वज्ञ र सर्वव्यापक भगवान् हरि आफ्ना सब रूपले सर्वदा मेरो रक्षा गरुन् ॥३२॥३३॥ आफ्नो डरलाग्दो अट्टहासले सबै लोकको भय निवारण गर्ने र आफ्नू तेजले सबैको तेज ग्रसित गर्ने नृसिंह भगवान् दिशा-विदिशा, तल-माथि र बाहिर-भित्र सबैतिर हाम्रो रक्षा गर्दै रहुन् ॥३४॥ विश्वरूप भन्दछन्–हे इन्द्र ! मैले तिमीलाई यो 'नारायण कवच' बताइदिएँ, यसकै भरले तिमी अनायास सबै दैत्य यूथपतिहरूलाई जित्ने छौ ॥३५॥ यो कवच धारण गर्ने प्राणी जसलाई पनि आफ्ना नेत्रले हेरिदिन्छ वा खुट्टाले छोइदिन्छ, त्यो पनि तुरुन्त भय रहित भइजान्छ ॥३६॥ यो विद्या धारण गर्ने पुरुषलाई राजा, चोर, ग्रह तथा व्याघ्रादि कसैबाट पनि केही डर-भय रहन्न ॥३७॥ हे देवराज ! कौशिक गोत्रीय यौटा ब्राह्मणले पूर्वकालमा यही विद्या धारण गरेर योग-धारणाले भूमिमा आफ्नो शरीर त्यागेका थिए ॥३८॥ जुन स्थानमा ती ब्राह्मणले शरीर त्यागेका थिए, त्यसै माथिबाट एक दिन चित्ररथ गन्धर्व आफ्नी पत्नीहरू सहित विमानमा बसेर यात्रा गरे ॥३९॥ त्यहाँ पुग्नासाथ विमानसमेत तलतिर टाउको गरेर

स्वतेजसा ग्रस्तसमस्ततेजाः ॥ ३४ ॥ मघवन्निदमाख्यातं वर्म नारायणात्मकम् ॥ विजेष्यस्यञ्जसा येन दंशितोऽसुरयूथपान् ॥ ३५ ॥ एतद्धारयमाणस्तु यं यं पश्यति चक्षुषा ॥ पदा वा संस्पृशेत्सद्यः साध्वसात्स विमुच्यते ॥ ३६ ॥ न कुतश्चिद्भयं तस्य विद्यां धारयतो भवेत् ॥ राजदस्युग्रहादिभ्यो व्याघ्रादिभ्यश्च कर्हिचित् ॥ ३७ ॥ इमां विद्यां पुरा कश्चित्कौशिको धारयन्द्विजः ॥ योगधारणया स्वाङ्गं जहौ स मरुधन्वनि ॥३८॥ तस्योपरि विमानेन गन्धर्वपतिरेकदा ॥ ययौ चित्ररथः स्त्रीभिर्वृतो यत्र द्विजक्षयः ॥३९॥ गगनान्न्यपतत्सद्यः सविमानो ह्यवाक्शिराः ॥ स वालखिल्यवचनादस्थीन्यादाय विस्मितः ॥ प्रास्य प्राचीसरस्वत्यां स्नात्वा धाम स्वमभ्यगात् ॥ ४० ॥ श्रीशुक उवाच ॥ य इदं शृणुयात्काले यो धारयति चादृतः ॥ तं नमस्यन्ति भूतानि मुच्यते सर्वतो भयात् ॥ ४१ ॥ एतां विद्यामधिगतो विश्वरूपाच्छतक्रतुः ॥ त्रैलोक्यलक्ष्मीं बुभुजे विनिर्जित्य मृधेऽसुरान् ॥ ४२ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नारायणवर्मकथनं नामाष्टमोऽध्यायः ॥ ८ ॥ श्रीशुक उवाच ॥ तस्यासन्विश्वरूपस्य शिरांसि त्रीणि भारत ॥ सोमपीथं सुरापीथमन्नादमिति शुश्रुम ॥ १ ॥ स वै बर्हिषि देवेभ्यो भागं प्रत्यक्षमुच्चकैः ॥ अददद्यस्य पितरो देवाः सप्र-

आकाशबाट पृथ्वीमा झरे । बालखिल्यादि मुनीश्वरहरूले भनेपछि उसले ती ब्राह्मणका अस्थिहरू लगेर पूर्ववाहिनी सरस्वती नदीमा प्रवाहित गरे र स्वयं स्नान गरेर अति चकित भावले आफ्नो लोक फर्के ॥४०॥ श्रीशुकदेव भन्नुहुन्छ–हे राजन् ! कुनै पनि पुरुष यो नारायणकवच यथा समय सुन्दछ र सादर धारण गर्दछ, त्यस व्यक्तिलाई समस्त प्राणी नमस्कार गर्दछन् र त्यो सबै प्रकारका भयबाट मुक्त हुन्छ ॥४१॥ विश्वरूपबाट यो विद्या प्राप्त गरेर इन्द्रले युद्धमा दैत्यहरूलाई जिते र त्रैलोक्यको राज्यलक्ष्मीको भोग गरे ॥४२॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नेपाली भाषाटीकायां अष्टमोऽध्यायः ॥८॥ ( वृत्रासुरको जन्म )–शुकदेवजी भन्दछन्–हे राजन् ! मैले सुनेको छु–देवगुरु विश्वरूपका सोमपीथ, सुरापीथ र अन्नाद नामका तीन मस्तक थिए ॥१॥ हे राजन् ! ती शिर प्रत्यक्षमा त यज्ञको बेला *उच्चस्वरले मिथ्या बोल्दै बडो विनीत भावले देवताहरूलाई यज्ञभाग दिन्थे किनकि

* उदाहरण ( मिथ्या बोल्नाले हानि )–यौटा पठानले यौटा नोकर यस प्रतिज्ञामा राखेको थियो कि कहिल्यै झूटो नबोल्नू, तर नोकरी रहेनभने उसले वर्षमा एक झूटो बोल्न पाउने आज्ञा लियो । नोकरी गरेको केही दिन बितेपछि पठानले उसलाई धेरै गहना र लुगा दिएर भन्यो–'यो लगेर अमुक गाउँमा मेरी पत्नीलाई दिएर आऊ ।' त्यो गएर उसको घरमा त्यो गहना-लुगा पठानको पत्नीको अभिलिखित राखेर गन लाग्यो ।

5/359

देवता तिनका पितृपक्षका थिए ॥२॥ तर गुरुरूपले ती मातृस्नेहवश यज्ञको बेला दैत्यलाई नै हविर्भाग दिने गर्दथे ॥३॥ देवताहरू सहित देवराज इन्द्रले तिनले गरेका यस अपराध तथा धर्म-मर्यादाको उल्लङ्घन देखेर मनमनै भयभीत भई अतिशय रिसको आवेगले तिनका तीनै मस्तक, काटेर घुम्याइदिए ॥ ४ ॥ अतएव विश्वरूपको सोमपीथ नामक मस्तक कपिञ्जल, सुरापीथ नामक मस्तक कलविङ्क तथा अन्नाद नाम हुने मस्तक तित्रा भयो ॥ ५ ॥ त्यसको निवारण गर्न समर्थ भएर पनि विश्वरूपको वध गर्नाले उत्पन्न ब्रह्महत्यालाई इन्द्रले अंजलिमा थापे र एक वर्षपछि जन साधारणको सामुन्ने आफ्नो शुद्धि गर्नका लागि त्यस पापको चार भाग पारेर पृथ्वी, जल, वृक्ष तथा स्त्री—यी चारैमा बाँडिदिए ॥ ६ ॥ आफ्नो

श्रयं नृप ॥ २ ॥ स एव हि ददौ भागं परोक्षमसुरान्प्रति ॥ यजमानोऽवहद्भागं मातृस्नेहवशानुगः ॥ ३ ॥ तद्देवहेलनं तस्य धर्मालीकं सुरेश्वरः ॥ आलक्ष्य तपसा भीतस्तच्छीर्षाण्यच्छिनद्रुषा ॥ ४ ॥ सोमपीथं तु यत्तस्य शिर आसीत्कपिञ्जलः ॥ कलविङ्कः सुरापीथमन्नादं यत्स तित्तिरिः ॥ ५ ॥ ब्रह्महत्यामञ्जलिना स जग्राह यदीश्वरः ॥ संवत्सरान्ते तदघं भूतानां स विशुद्धये ॥ भूम्यम्बुद्रुमयोषिद्भ्यश्चतुर्धा व्यभजद्धरिः ॥ ६ ॥ भूमिस्तुरीयं जग्राह खातपूरवरेण वै ॥ ईरिणं ब्रह्महत्याया रूपं भूमौ प्रदृश्यते ॥ ७ ॥ तुर्यं छेदविरोहेण वरेण जगृहुर्द्रुमाः ॥ तेषां निर्यासरूपेण ब्रह्महत्या प्रदृश्यते ॥ ८ ॥ शश्वत्कामवरेणांहस्तुरीयं जगृहुः स्त्रियः ॥ रजोरूपेण तास्वंहो मासि मासि प्रदृश्यते ॥ ९ ॥ द्रव्यभूयोवरेणापस्तुरीयं जगृहुर्मलम् ॥ तासु बुद्बुदफेनाभ्यां दृष्टं तद्धरति क्षिपन् ॥ १० ॥ हतपुत्रस्ततस्त्वष्टा जुहावेन्द्राय शत्रवे ॥ इन्द्रशत्रो विवर्धस्व मा चिरं जहि विद्विषम् ॥११॥

पिठिउँमा भएको खाडल स्वयं पुरिनको साटो त्यस ब्रह्महत्याको एक भाग पृथ्वीले लिइन् । त्यसैले पृथ्वीको बाँझो भूमिको रूपमा कहींकहीं अझ पनि त्यो ब्रह्महत्याको स्वरूप देखिन्छ एकपल्ट काटिए फेरि पलाउने वर पाएर ब्रह्महत्याको एकभाग वृक्षले ग्रहण गरे । त्यो ब्रह्महत्या तिनमा निर्यास ( चोप ) को रूपमा देखिन्छ ॥७-८॥ सधैं सम्भोग गर्न सक्ने शक्ति रहिरहने वर पाएर ब्रह्महत्याको एक चतुर्थांश स्त्रीहरूले स्वीकार गरे । त्यो ब्रह्महत्या स्त्रीहरूमा रजोधर्मको रूपमा प्रतिमास प्रत्यक्ष देखिन्छ ।.९॥ कुवा-इनार आदिमा खर्च भइरहेर पनि बराबर जल बढिरहने वर पाएर ब्रह्महत्याको एक चतुर्थांश जलले स्वीकारे । त्यो जलमा ब्रह्महत्या फींज र बुलबुलाको रूपमा देखिन्छ । यसैले फींज पन्छाएर मानिसहरू जल भर्दछन् ।

---

त्यसले सोधी—'ए, तँ किन रोएको ?' नोकरले भन्यो—'मियाँजी मरे ।' अब पठानी पनि रुन लागी । त्यति बेरसै गाउँका मानिस पनि जम्मा भए । सबैले नोकरसित सोधे अनि उसले भन्यो—"मियाँ साहेब मरे । अब ती भूत भएर मानिसलाई दुःख दिइरहेछन् । तिमीहरू सावधान भएर बस्नु । कसैलाई काँनै लाइदिने स्थिति आउन नपाओस् ।' गाउँमा सबै चना रुन लागे । यता नोकर त्यहाँबाट फर्केर पठानकहाँ पुग्यो । पठानले घरमा बोटा ऊँट र बोटा कुकुर पालेको थियो । जब नोकर फर्केर आयो तब पठानले सोध्यो— मेरो कुकुर ठीक छ ?' नोकरले भन्यो—'त्यो त मरिसक्यो ।' पठानले सोध्यो—'कसरी ?' नोकरले भन्यो—'तिम्रो ऊँटको हाड त्यसको घाँटीमा अड्केको थियो ।' पठानले सोध्यो—'ऊँट कसरी मर्‍यो ?' नोकरले भन्यो—'तिम्री बीबीको श्राद्धमा त्यसको खुट्टा अड्केको थियो ।' पठानले सोध्यो—'बीबी कसरी मरी ?' नोकरले भन्यो—पुत्र-शोकले ।' अब के बाँकी रह्यो ! पठानले विचार गर्‍यो मेरो घरका सबै जना मरेपछि म नै बाँचेर के गर्ने । अनि पठानले सबै लुगा फुकालेर फ्याँकिदियो । शरीरमा खरानी घसेर टाउकोमा कालो बाँधी घरतिर हिँड्यो । नोकर अगाडि नै पुगेर गाउँलेहरूलाई भनि दियो—'हेर है, पठान भूत बनेर आइरहेको छ । सतर्क भएर बस्नु ।' गाउँलेहरू ढोकामा आगो बालेर मासिएको तमाशा भएर बसे । जब पठान गाउँमा आइपुग्यो तब माथिबाट ढुङ्गा फाल्न लागे । बर्खा चोट लागेर पठान पनि त्यहीं मर्‍यो र नोकर सबै माल-ताल बोकेर बेपत्ता भयो ।' 'अपि प्रतिष्ठा लोकेऽस्मिन् अधमाः पुरुषादि वै । अधम प्रथमस्तेषु, योऽन्नते वक्ति नित्यशः । संसारमा यति अधम पुरुष छन्, तिनमा त्यो सबभन्दा अधम पुरुष हुन्छ, जो सदा झूठो बोल्दछ । 'नहि असत्य सम पातक पुंजा । गिरिसम होहिं कि कोटिक गुंजा ।'

यस प्रकार पुत्र विश्वरूप मारिएपछि त्वष्टाले–'हे इन्द्रशत्रो ! तिमी बढ र मेरो शत्रुलाई मार' यस्तो भनेर इन्द्रको शत्रु उत्पन्न गर्ने कामनाले अग्निमा हवन गरे ॥ १०॥११ ॥ हवन गर्नासाथ अन्वाहार्यपचन नामक अग्निबाट एक ठूलो भयङ्कर दैत्य उत्पन्न भयो । त्यो प्रलयकाल उपस्थित भएपछि सर्वलोक संहारक कालको समान भीषण थियो ॥ १२ ॥ हे राजन् ! त्यो प्रतिदिन चारैतिर एक-एक बाण बढ्दथ्यो । त्यो दग्ध पर्वत समान कालो र विशालकाय थियो । सन्ध्याकालको मेघमाला सदृश देदीप्यमान त्यसको कान्ति थियो । त्यसका दाह्री र जुँघा तामाका जस्ता राता थिए र नेत्र मध्यान्हकालका सूर्य जस्तै उग्र थिए । त्यो आफ्ना तीन टुप्पा हुने अतिशय टल्कने त्रिशूलमा पृथ्वी आकाशलाई उचालेर नाच्तै घोर गर्जन गर्दथ्यो र आफ्नो पाद प्रहारले पृथ्वीलाई थर्काइरहेको थियो । त्यसको मुख गिरिकन्दरा समान गम्भीर थियो, त्यसले ऊ आकाशलाई पिए झैं गर्दथ्यो । आफ्नो जिब्रोले मानो नक्षत्रहरूलाई चाटिरहेको थियो र आफ्नो विशाल तथा विकराल दान्हाले तीनै लोकलाई चपाएर निले झैं गर्दै थियो । त्यो बारम्बार आफ्नो विकराल मुख

अथान्वाहार्यपचनादुत्थितो घोरदर्शनः ॥ कृतान्त इव लोकानां युगान्तसमये यथा ॥ १२ ॥ विष्वग्विवर्धमानं तमिषुमात्रं दिने दिने ॥ दग्धशैल-प्रतीकाशं सन्ध्याभ्रानीकवर्चसम् ॥ १३ ॥ तप्तताम्रशिखाश्मश्रुं मध्याह्नार्कोग्रलोचनम् ॥ १४ ॥ देदीप्यमाने त्रिशिखे शूल आरोप्य रोदसी ॥ नृत्यन्तमुन्नदन्तं च चालयन्तं पदा महीम् ॥ १५ ॥ दरीगम्भीरवक्त्रेण पिबता च नभस्तलम् ॥ लिहता जिह्वयर्क्षाणि ग्रसता भुवनत्रयम् ॥ १६ ॥ महता रौद्रदंष्ट्रेण जृम्भमाणं मुहुर्मुहुः ॥ वित्रस्ता दुद्रुवुर्लोका वीक्ष्य सर्वे दिशो दश ॥ १७ ॥ येनावृता इमे लोकास्तमसा त्वाष्ट्रमूर्तिना ॥ स वै वृत्र इति प्रोक्तः पापः परमदारुणः ॥ १८ ॥ तं निजघ्नुरभिद्रुत्य सगणा विबुधर्षभाः ॥ स्वैर्दिव्यास्त्रशस्त्रौघैः सोऽग्रसत्तानि कृत्स्नशः ॥ १९ ॥ ततस्ते विस्मिताः सर्वे विषण्णा ग्रस्ततेजसः ॥ प्रत्यञ्चमादिपुरुषमुपतस्थुः समाहिताः ॥ २० ॥ देवा ऊचुः ॥ वाय्वम्बराग्न्यप्क्षितयस्त्रिलोका ब्रह्मादयो ये वयमुद्विजन्तः ॥ हराम यस्मै बलिमन्तकोऽसौ बिभेति यस्मादरणं ततो नः ॥ २१ ॥ अविस्मितं तं परिपूर्णकामं स्वेनैव लाभेन समं प्रशान्तम् ॥ विनोपसर्पत्यपरं हि बालिशः श्वलाङ्गुलेनातितितर्ति सिन्धुम् ॥ २२ ॥ यस्योरुशृङ्गे जगतीं स्वनावं मनुर्यथाऽऽबध्य ततार

उघारेर 'हाई' गर्दथ्यो । त्यसको डरलाग्दो रूप देखेर सबैजना सार्है डराए र दशै दिशातिर भाग्नलागे ॥ १३-१७ ॥ हे राजन् ! त्यो अतिशय तमोगुणी त्वष्टाको पुत्रले सबै लोकलाई ढाकिलियो । अतः पापी तथा परम दारुण त्यो असुर 'वृत्र' यस नामले विख्यात भयो ॥ १८ ॥ अनि सबै देवता आफाफ्ना अनुयायीहरूका साथै त्यसमाथि सहसा झम्टे र आफ्ना दिव्य शस्त्रास्त्रले मार्न लागे, तर त्यो वीर असुर ती सबै शस्त्रलाई एकै पल्ट सलक्क निलिदियो ॥ १९ ॥ अनि ती सबै देवता तेज-हीन र खिन्न भएर ठूलो विस्मय सहित आफ्नो अन्तःकरणमा बसेका आदिपुरुष भगवानको एकाग्र मनले आराधना गर्न लागे ॥ २० ॥ देवता भन्नलागे–वायु, आकाश, अग्नि, जल, पृथ्वी–यी पाँच तत्त्व, तीनै लोक तथा हामी ब्रह्मादिक देवता भयातुर भएर जसलाई बलि अर्पण गर्दछौं, त्यो काल पनि जोसित डराउँछ ती परमात्मा हामीलाई यस विपत्तिबाट रक्षा गरून् ॥२१॥ ती नारायण अहङ्कार शून्य आत्मलाभले नै परिपूर्ण, सर्वत्र समान र राग-द्वेषले हीनछन् । जो तुच्छ बुद्धि मनुष्य उनलाई त्यागेर कुनै अरूको भर पर्दछ, त्यो मानो कुकुरको पुछर समातेर समुद्र तर्न अगफल उद्योग गरिरहेछ। ॥।

586

॥२२॥ जसका विशाल शृङ्गमा पृथ्वीरूपिणी डुङ्गा बाँधेर सत्यव्रत मनु अनायास दुस्तर क्लेशबाट मुक्त भएथे, ती मत्स्य भगवान् हामी आफ्ना आश्रित दुःखीहरूको वृत्रासुरको आतिङ्क भयबाट अवश्य रक्षा गर्छन् ॥ २३ ॥ पूर्वसमयमा प्रचण्ड वायुको झोक्काले उठेका तरङ्गले गर्दा निकै भयानक प्रलयकालको जलमा विष्णु भगवान्‌को नाभि कमलबाट उत्पन्न भएका ब्रह्माजी एक्लै भएर पनि जसको कृपाले त्यो महासङ्कटबाट पारी पुगेका थिए, ती परमात्मा हामीलाई पनि यस विपत्तिबाट उद्धार गरुन् ॥२४॥ जुन एकमात्र महाप्रभुले आफ्नो मायाले हाम्रो रचना गरे, जसको कृपाले म संसारको रचना गर्दछु र आफूलाई स्वतन्त्र ईश्वर मानी अभिमानी गर्नाले नै सबै प्राणीहरूको अन्तःकरणमा विराजमान भएर पहिलेदेखि नै प्रेरक जुन परमात्माको स्वरूपलाई जान्न सकिन्न ॥२५॥ जुन भगवान मलाई शत्रुहरुद्वारा पीडित देखेर वस्तुतः निर्विकार भएर पनि मायाको सहयोगले देवता, ऋषि, मुनी तिर्यक् र मनुष्यादि

दुर्गम् ॥ स एव नस्त्वाष्ट्रभयाद्दुरन्तात्त्राताऽऽश्रितान्वारिचरोऽपि नूनम् ॥ २३ ॥ पुरा स्वयम्भूरपि संयमाम्भस्युदीर्णवातोर्मिरवे कराले ॥
एकोऽरविन्दात्पतितस्ततार तस्माद्भयाद्येन स नोऽस्तु पारः ॥ २४ ॥ य एक ईशो निजमायया नः ससर्ज येनानुसृजाम विश्वम् ॥ वयं न
यस्यापि पुरः समीहतः पश्याम लिङ्गं पृथगीशमानिनः ॥ २५॥ यो नः सपत्नैर्भृशमर्द्यमानान्देवर्षितिर्यङ्नृषु नित्य एव ॥ कृतावतारस्तनुभिः
स्वमायया कृत्वाऽऽत्मसात्पाति युगे युगे च ॥ २६ ॥ तमेव देवं वयमात्मदैवतं परं प्रधानं पुरुषं विश्वमन्यम् ॥ व्रजाम सर्वे शरणं शरण्यं स्वानां
स नो धास्यति शं महात्मा ॥ २७ ॥ श्रीशुक उवाच ॥ इति तेषां महाराज सुराणामुपतिष्ठताम् ॥ प्रतीच्यां दिश्यभूदाविः शङ्खचक्रगदाधरः
॥ २८ ॥ आत्मतुल्यैः षोडशभिर्विना श्रीवत्सकौस्तुभौ ॥ पर्युपासितमुन्निद्रशरदम्बुरुहेक्षणम् ॥ २९ ॥ दृष्ट्वा तमवनौ सर्व ईक्षणाह्लादविक्लवाः ॥

योनिहरूमा अवतार लिएर हामीमाथि *न्यायसंगत अपनत्वको भाव राखेर युग-युगमा हाम्रो रक्षा गर्दै आउनुभएको छ ॥२६॥ जुन भगवान् सबैका आत्मा र परमदेव छन्, जो प्रकृति तथा पुरुषरूपले अखिल विश्वका कारण छन् र जो यस विश्वबाट भिन्न भएर पनि विश्वरूप छन्, म ती शरणागतवत्सल नारायणको शरणमा छु। ती भगवान् अवश्य हामीजस्ता आफ्ना भक्तहरूको कल्याण गर्नेछन् ॥२७॥ त्यसपछि शुकदेवजी भन्नुहुन्छ—हे महाराज ! यस प्रकार देवताहरूले स्तुति गरेपछि ती शङ्ख, चक्र, गदा, पद्मधारी भगवान पश्चिम दिशामा प्रकट भए ॥२८॥ हे राजन् ! त्यस बखत तिनका चारैतिर श्रीवत्सलाञ्छन तथा कौस्तुभमणि छाडेर बाँकी सबै भगवल्लक्षणहरूले युक्त नन्द-सुनन्द आदि सोह्र पार्षद उपस्थित थिए। तिनका नेत्र शरत्कालमा विकसित कमल समान मनोहर थिए। ती श्रीहरिलाई देखेर तथा उनको दर्शनानन्दले विह्वल भएर सबै देवताहरूले भूमिमा दण्ड झैं लम्पसार परेर प्रणाम गरे

* दृष्टान्त—( प्रभुको न्याय )—चोटी ग्वालिनी थिई। त्यो दिनहुँ नजीकैको चोटा शहरमा दूध बेच्न जान्थी। पहिले त्यो राम्रो दूध दिन्थी। यसले त्यसको राम्रो विश्वास भइसकेको थियो र त्यसका धेरै ग्राहक बने। त्यो सबैले मागे जति दूध दिन असमर्थ थिई। अब उसको ईमान बिग्रियो। गाउँको बाटैमा चोटा नदी पर्दथ्यो। त्यहींबाट पानी मिलाएर दूध बेच्न थाली। एक पल्ट त्यो नदीको पारी घर जाँदै थिई। नदीमा आइपुगेपछि पोटलीमा बाँधेको पैसा उसले छेउमा राखि दिई र भाँडा माज्न लागी। त्यसै बखत चोटा चील उड्दै आयो र पैसाको पोको चुच्चामा च्यापेर उड्यो। तर त्यसबाट केही पैसा झरिए। ग्वालिनी रुन थाली। त्योसित अर्की ग्वालिनी पनि थिई। त्यसले दूधमा पानी मिलाएको बराबर देखेकी थिई। उसले भनी—'बहिनी ! तिमी व्यर्थै रोइरहेकी छौ। दूधको पैसा दूधमा र पानीको पैसा पानीमा गयो। तिमी लोभमा परेर दूधमा पानी मिलाउँथ्यौ त्यसैको यो फल हो।' पहिली ग्वालिनीले पोकोबाट झरेको पैसा गन्दा जति दूधको पैसा थियो, त्यति मात्र रहेको थियो। जति पापको वा पानी मिलाएको पैसा थियो चीलले लगिदियो। यसरी धोका दिएर आएको धन पुनै प्रकारले नष्ट नभइ रहन्न।

५८७

अनि विस्तारै उठेर ती यस प्रकार प्रसन्न चित्तले स्तुति गर्दै विन्ती गर्न लागे ॥२९-३०॥ देवगण भन्दछन्–हे प्रभो ! जसको यज्ञ नै वीर्य हो, जो यज्ञफल दिनका लागि काल समान छन्, ती महाप्रभुलाई हामी सबैको नमस्कार छ । जो दैत्यहरूमाथि आफ्नो चक्र चलाउँदछन् तथा जसका अगणित नाम छन् त्यस्ता हजुरलाई हामीहरूको प्रणाम छ ॥३१॥ हे धात ! हजुर राजसिक, तामसिक र सात्त्विक यी तीनै थरिका बुद्धिहरूको प्रधान हुनुहुन्छ । हजुरका निर्गुण परमपदलाई कार्य-कारणात्मक जगत्को कुनै पनि आधुनिक जीव राम्रो प्रकारले जान्न सक्तैन ॥३२॥ ॐ हे भगवन् ! नारायण ! हे नारायण ! हे परब्रह्म ! हे आदिपुरुष ! हे महापुरुष ! हे महानुभाव ! हे परममङ्गल ! हे परम कल्याण ! हे परम कारुणिक ! हे केवल जगदाधार ! हे लोकैकनाथ ! हे सर्वेश्वर ! हे लक्ष्मीपते ! परमहंस तथा परिव्रजन आत्मसंयमरूपी परम समाधिद्वारा राम्रो प्रकारले अनुशीलन गरिएर मात्र प्रकाशित परमरहस्य धर्म द्वारा आफ्नो हृदयको अज्ञानरूपी कपाट खोलेर आत्मलोकमा प्रविष्ट निजानन्दद्वारा जसलाई आफ्नो अनुभवको मुख्य विषय मान्दछन्, ती एक मात्र हजुर नै हुनुहुन्छ । त्यस्ता र

दण्डवत्पतिता राजञ्छनैरुत्थाय तुष्टुवुः ॥ ३० ॥ देवा ऊचुः ॥ नमस्ते यज्ञवीर्याय वयसे उत ते नमः ॥ नमस्ते ह्यस्तचक्राय नमः सुपुरुहूतये ॥ ३१ ॥ यत्ते गतीनां तिसृणामीशितुः परमं पदम् ॥ नार्वाचीनो विसर्गस्य धातर्वेदितुमर्हति ॥ ३२ ॥ ॐ नमस्तेऽस्तु भगवन्नारायण वासुदेवादि-पुरुष महापुरुष महानुभाव परममङ्गल परमकल्याण परमकारुणिक केवलजगदाधार लोकैकनाथ सर्वेश्वर लक्ष्मीनाथ परमहंसपरिव्राजकैः परमेणा-त्मयोगसमाधिना परिभावितपरिस्फुटपारमहंस्यधर्मेणोद्घाटिततमः कपाटद्वारे चित्तेऽपावृत आत्मलोके स्वयमुपलब्धनिजसुखानुभवो भवान् ॥ ३३॥१॥ दुरवबोध इव तवायं विहारयोगो यदशरणोऽशरीर इदमनपेक्षितास्मत्समवाय आत्मनैवाक्रियमाणेन सगुणमगुणः सृजसि पासि हरसि ॥ ३४ ॥ २ ॥ अथ तत्रभवान्किं देवदत्तवदिह गुणविसर्गपतितः पारतंत्र्येण स्वकृतकुशलाकुशलं फलमुपाददात्यात्माराम उपशमशीलः समञ्जसदर्शन उदास्त इति ह वाव न विदामः ॥ ३५ ॥ ३ ॥ न हि विरोध उभयं भगवत्यपरिगणितगुणगण ईश्वरेऽनवगाह्यमाहात्म्येऽर्वाचीनविकल्पवितर्कविचा-र प्रमाणाभासकुतर्कशास्त्रकलिलान्तःकरणाश्रयदुरवग्रहवादिनां विवादानवसर उपरतसमस्तमायामये केवल एवात्ममायामन्तर्धाय को न्वर्थो दुर्घट

महापुरुषलाई प्रणाम छ ॥३३॥१॥ हे नाथ ! हजुरको यो विहार-योग दुर्विज्ञेय छ । हजुर निराधार अशरीर सहायताको उपेक्षाले रहित निर्गुण भएर पनि सविकार नभइकन नै सगुण जगत्को रचना, पालन र संहार गर्दछन् ॥३४-२॥ हे नाथ ! गुणहरूका कार्यरूपी यस संसारमा प्रकट भएर हजुर देवदत्त नामको कुनै व्यक्तिको समान स्वचरित शुभाशुभ कर्मको फल परतन्त्रभावले भोग्नुहुन्छ वा आफ्नो चैतन्य-शक्तिबाट च्युत भएर नै आत्माराम र उपशमशील भएर उदासीनभावले रहनुहुन्छ–यी कुरा हाम्रो बुद्धिले भेट्न सकिरहेको छैन ॥३५-३॥ हामी त बुझ्दछौं हजुरमा यी दुवै कुरा विद्यमान भएर पनि विरोधाभास छैन । हजुर भगवान् होइन र ? हजुरका गुण अगणित र माहात्म्य दुर्विज्ञेय छन्, आधुनिक विकल्प प्रमाणाभास र कुतर्कहरूले युक्त–जसको हजुरसित स्पर्श हुँदैन, ती शास्त्रहरूले व्याकुल अन्तःकरण नै जसको आधार छ, त्यस दुराग्रहवश विवादमान पुरुषहरूको विवाद जहाँ एकदम पुग्न सक्तैन र जो सारा मायामय प्रपञ्चबाट पृथक् छ, त्यो हजुरको कैवल्य स्वरूपबाट आफ्नी मायाको आवरण हटाएपछि कर्तृत्व र भोक्तृत्व आदि कुन व्यापार सम्भव छ ? वस्तुतः हजुरमा

दुवै स्वरूपको अभाव विद्यमान रहन्छ ॥३६॥४॥ जस्तै-थोरै डोरीको टुक्रा अज्ञानी पुरुषलाई डोरी र भ्रान्तबुद्धि हुने व्यक्तिलाई सर्पादिको रूपमा देखिन्छ, त्यस्तै नै हजुर पनि ज्ञानी र अज्ञानी पुरुषका बुद्धिको अनुसरण गर्दै रहनु हुन्छ ॥३७॥५॥ वास्तवमा हजुरनै सबै वस्तुहरूको सार, हजुर नै सर्वेश्वर हुनुहुन्छ। हजुर यस जगत्का कारणस्वरूप महत्तत्वादिका कारण हुनुहुन्छ। अन्तर्यामी हुनाले हजुर नै सबै विषयमा प्रतीतिले लक्षित हुनुहुन्छ। श्रुति पनि हजुरलाई नै सबैका अधिष्ठान स्वरूप अवशिष्ट मान्दछन् ॥३८॥६॥ हे मधुसूदन! हजुरका महिमामृतरूपी रसले भरिएका समुद्रको थोटा थोपा मात्र एकपल्ट आस्वादन गरेर आफ्नो हृदयमा सधैं बगिरहने सुख-प्रवाहले जसका दृष्ट र श्रुत विषयजनित लक्षमात्र सुखाभास विस्मृत भइसकेका छन् र जसको मन सबै प्राणीहरूका सुहृद् एवं सर्वात्मा हजुरमै पूर्णरूपले लागिरहन्छ, त्यस्ता साधुजन आफ्नो स्वार्थसाधनामा निपुण तथा आफ्ना प्रिय सुहृद्

इव भवति स्वरूपद्वयाभावात् ॥ ३६ ॥ ४ ॥ समविषममतीनां मतमनुसरसि यथा रज्जुखण्डः सर्पादिधियाम् ॥ ३७ ॥ ५ ॥ स एव हि पुनः सर्वं वस्तुनि वस्तुस्वरूपः सर्वेश्वरः सकलजगत्कारणकारणभूतः सर्वप्रत्यगात्मत्वात्सर्वगुणाभासोपलक्षित एक एव पर्यवशेषितः ॥ ३८ ॥ ६ ॥ अथ ह वाव तव महिमामृतरससमुद्रविप्रुषा सकृदवलीढया स्वमनसि निष्यन्दमानानवरतसुखेन विस्मारितदृष्टश्रुतविषयसुखलेशाभासाः परमभागवता एकान्तिनो भगवति सर्वभूतप्रियसुहृदि सर्वात्मनि नितरां निरन्तरं निर्वृतमनसः कथमु ह वा एते मधुमथन पुनः स्वार्थकुशला ह्यात्मप्रियसुहृदः साधवस्त्वच्चरणाम्बुजानुसेवां विसृजन्ति न यत्र पुनरयं संसारपर्यावर्तः ॥ ३९ ॥ ७ ॥ त्रिभुवनात्मभवन त्रिविक्रम त्रिनयन त्रिलोकमनोहरानुभाव तवैव विभूतयो दितिजदनुजादयश्चापि तेषामनुपक्रमसमयोऽयमिति स्वात्ममायया सुरनरमृगमिश्रितजलचराकृतिभिर्यथापराधं दण्डं दण्डधर दधर्थ एवमेनमपि भगवञ्जहि त्वाष्ट्रमुत यदि मन्यसे ॥ ४० ॥ ८ ॥ अस्माकं तावकानां तव नतानां पिता पितामह तव चरणनलिनयुगल-

भएर पनि हजुरका चरण-कमलको सेवालाई कसरी त्याग्न सक्छन्? यसैं कारण तिनलाई फेरि यस संसार चक्रमा पर्ने डर रहन्न ॥३९॥७॥ हे अखिल त्रैलोक्यका आत्मा तथा आधार! हे त्रिनयन! हे त्रिभुवनको मन हरण गर्ने महानुभाव! यद्यपि यी दैत्य दानवादि जीव हजुरकै विभूति हुन्, तापनि अहिले इनको उपक्रम (अकर्म) को समय आएको छैन। अतएव हे दण्डधर! जस्तै हजुर आफ्नी मायाद्वारा देवता, मनुष्य, मृग, मिश्रित तथा जलचरादिको रूप धारण गरेर इनलाई इनको अपराध अनुसार पहिले दण्ड दिनुहुन्छ: त्यस्तै नै

※ दृष्टान्त (ज्ञानी र अज्ञानीमा फरक)—थोटा विरक्त महात्मा डुल्दै-फिर्दै कुनै गाउँमा पुगे। त्यहाँ तिनको प्रभावले धेरै व्यक्ति धर्मात्मा हुन थाए। बिस्तार-बिस्तार यो कुरा राजासम्म पुग्यो। यसले राजालाई पनि तीभाभि श्रद्धा उत्पन्न भयो र त्यो पनि दैनिक सत्संग गर्न लाग्यो। केही दिनपछि राजाले ती महात्माको निम्ति पनि थोटा बगैचा तयार पार्न लगाए र आफ्नो महल जस्तै महल पनि बनाउन लगाए। आधुनिक सुख, आनन्द र भोग-भवाका अति वस्तुहरू थिए त्यति नै उनको निम्ति पनि जम्मा पार्न लगाए। एक दिन ती महात्मा र राजा संगसंगै डुल्न निस्के। बाटोमा राजाले भने—"महित अति सामग्री छ, उती नै तपाईंसित पनि छ। अब तपाईं र ममा के फरक छ?" महात्माले भने—'अलि पर जाऔं, अनि भन्दछु। अलि पर पुगेपछि महात्माले भने—'महाराज! सवारी होस्, हामी कुनै अर्को देशतिर जाऔं'। अब हजुरले घर फर्कने काम छैन। फेरि घरमा काम पनि के छ र!' राजाले भने—'म त यस्तो गर्न समर्थ छैन। घरमा स्त्री-पुत्र आदि बाटो हेरिरहेका होलान्। म अर्को देशतिर हिंडिदिएँ भने मेरो राज्यको केहालत होला?' महात्माले भने—'ठीक हजुरमा र ममा यही फरक छ।' राजाले कुरा बुझिहाले र गद्गद् भावले महात्मालाई बिदा गरेर आफू महलमा आए।

हे भगवन् ! यदि हजुर उचित मान्नुहुन्छ भने यस त्वष्टाको छोरो वृत्रासुरलाई मारिदिनोस् ॥४०॥८॥ हे पिता ! हे पितामह ! हामी हजुरका चरण-सेवक हौं, सर्वदा हजुरका सम्मुख नतमस्तक रहन्छौं । हजुरका चरण-युगलको ध्यानले हाम्रो हृदय हजुरका प्रेम-शृङ्खलामा बाँधिएको छ । हाम्रो साम्मु आफ्नो सगुण मूर्तिले प्रकट भएर हजुरले हामीलाई आफ्नो तुल्याउनु भयो । अतः हे अनघ ! अब हजुरले दयायुक्त, विशद, सुन्दर र शीतल हास्ययुक्त हेराइले आफ्नो मुखारविन्दबाट निःसृत मनोहर वाणीरूपिणी सुधा धाराले हाम्रो मनको ताप शान्त पार्नुस् ॥४१॥९॥ सारा जगत्को उत्पत्ति, स्थिति र लयका कारणरूप दिव्य मायाका साथै रहदा गर्ने हजुर समस्त जीव-समुदायका हृदयमा अन्तर्यामीरूपले र बाहिर प्रधानरूपले रहेर उपादान एवं प्रकाशरूपले देश, काल, शरीर र अवस्था अनुसार तिनको अनुभव गर्न, सबै प्रतीतिका साक्षी र आकाश-शरीर हुने परब्रह्म परमात्मा हुनुहुन्छ । हे भगवन् ! जस्तै— आगोका झिल्का अग्नि प्रकाशित पार्न सक्तैनन्, त्यसै गरी हामी हजुरलाई कुनै पनि अर्थ-विशेषको ज्ञान गराउन असमर्थ छौं ॥४२॥१०॥ हे प्रभो ! हजुर अचिन्त्य ऐश्वर्ययुक्त तथा

ध्यानाबद्धहृदयनिगडानां स्वलिङ्गविवरणेनात्मसात्कृतानामनुकम्पानुरञ्जितविशदरुचिरशिशिरस्मितावलोकेन विगलितमधुरमुखरसामृतकलया चान्तस्तापमनघार्हसि शमयितुम् ॥ ४१ ॥ ९ ॥ अथ भगवंस्तवास्माभिरखिलजगदुत्पत्तिस्थितिलयनिमित्तायमानदिव्यमायाविनोदस्य सकल-जीवनिकायानामन्तर्हृदयेषु बहिरपि च ब्रह्मप्रत्यगात्मस्वरूपेण प्रधानरूपेण च यथादेशकालदेहावस्थानविशेषं तदुपादानोपलम्भकतयाऽनुभवतः सर्वप्रत्ययसाक्षिण आकाशशरीरस्य साक्षात्परब्रह्मणः परमात्मनः कियानिह वा अर्थविशेषो विज्ञापनीयः स्याद्विस्फुलिङ्गादिभिरिव हिरण्यरेतसः ॥ ४२ ॥ १० ॥ अत एव स्वयं तदुपकल्पयास्माकं भगवतः परमगुरोस्तव चरणशतपलाशच्छायां विविधवृजिनसंसारपरिश्रमोपशमनीमुप-सृतानां वयं यत्कामेनोपसादिताः ॥ ४३ ॥ ११ ॥ अथो ईश जहि त्वाष्ट्रं ग्रसन्तं भुवनत्रयम् ॥ ग्रस्तानि येन नः कृष्ण तेजांस्यस्त्रायुधानि च ॥ ४४ ॥ हंसाय दह्रनिलयाय निरीक्षकाय कृष्णाय मृष्टयशसे निरुपक्रमाय ॥ सत्संग्रहाय भवपान्थनिजाश्रमाप्तावन्ते परीष्टगतये हरये नमस्ते ॥ ४५ ॥ श्रीशुक उवाच ॥ अथैवमीडितो राजन्सादरं त्रिदशैर्हरिः ॥ स्वमुपस्थानमाकर्ण्य प्राह तानभिनन्दितः ॥ ४६ ॥ श्रीभगवानुवाच ॥ प्रीतोऽहं वः सुरश्रेष्ठा मदुपस्थानविद्यया ॥ आत्मैश्वर्यस्मृतिः पुंसां भक्तिश्चैव यथा मयि ॥ ४७ ॥ किं दुरापं मयि प्रीते तथापि विबुधर्षभाः ॥ मय्येकान्तम-

संसारका परम गुरु हुनुहुन्छ । अतः जुन कामनाले हामी अगणित पापहरूका परिणाम स्वरूप संसार-श्रमलाई मेटिदिने हजुरका चरण-कमलको छायामा आएका छौं, हजुर हामी शरणागतका कामना पूर्ण गरिदिनुहवस् ॥४३॥११॥ हे ईश ! कृष्ण ! तीनै लोकलाई ग्रसिरहेको यो वृत्रासुरलाई कसले हाम्रो तेज तथा सबै शस्त्रास्त्र निलिसकेको छ हजुर शीघ्र मानुहवस् ॥४४॥ जुन शुद्ध स्वरूप, हृदयकाशचारी, निरीक्षक, कृष्ण, विमल कीर्ति, अनादि तथा साधुजन सेवित हुनुहुन्छ, जो कुनै संसारी पथिक शरणमा आयो भने त्यसलाई उत्तमगति प्रदान गर्नुहुन्छ, त्यस्ता श्रीहरिलाई प्रणाम छ ।४५॥ शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! यस प्रकार आदरपूर्वक देवगणले स्तुति गरेपछि आफ्नो स्तोत्र सुनेर प्रसन्न भगवान् बोल्नुभयो ॥४६॥ भगवान भन्नुहुन्छ–हे श्रेष्ठ देवता हो ! मेरो स्तुतिले पूर्ण जुन तिम्रो **ज्ञान छ,** त्यसले म तिमीहरूदेखि साह्रै प्रसन्न छु, किनकि यसले आत्माको प्रभावलाई स्मृति र मेरो भक्ति प्राप्त हुन्छ

॥४७॥ हे विबुध श्रेष्ठ ! म प्रसन्न भएपछि के दुर्लभ रहन सक्छ ? तापनि मेरो अनन्य र तत्त्ववेत्ता भक्त मेरो अतिरिक्त अरु केही पनि इच्छा गर्दैन ।४८॥ जुन मन्दमति प्राणी विषयादिलाई नै सर्वस्व ठान्दछ, त्यसलाई आफ्नो वास्तविक कल्याणको ज्ञान हुन सक्तैन । यदि कोही अभीष्ट पदार्थ प्रदान गर्छ भने त्यो पनि उजस्तै मूर्ख हो ॥४९॥ जुन प्राणी मुक्ति-मार्गको ज्ञाता छ, त्यो कुनै अज्ञ व्यक्तिलाई पनि कर्म अर्थात् प्रवृत्ति मार्गमा उपदेश दिन सक्तैन । जस्तै कोही श्रेष्ठ वैद्य रोगीले मागे पनि त्यसलाई कुपथ्य वस्तु दिँदैन ॥५०॥ हे इन्द्र ! तिम्रो कल्याण होस् । तिमी शीघ्र मुनिवर दधीचिकहाँ जाऊ र विद्या, व्रत एवं तपस्याको प्रभावले तिनको अत्यन्त दृढ शरीर लिएर आओ ॥५१॥ महर्षि दधीचिलाई अश्वशिरा नामको शुद्ध ब्रह्मको ज्ञान प्राप्त छ । उनले अश्विनीकुमारलाई यसको उपदेश दिएका थिए । त्यसै ज्ञानको प्रभावले अश्विनीकुमारलाई अमरपद प्राप्त भएको थियो ॥५२॥ अथर्ववेदीय महर्षि दधीचिले नै सर्वप्रथम साक्षात् मेरो स्वरूप नारायण-कवच त्वष्टालाई बताएका थिए । त्यही त्वष्टाले विश्वरूपलाई अर्पण गरे, अब विश्वरूपबाट तिमीलाई प्राप्त भएको छ ॥५३॥

तिर्नान्यन्मत्तो वाञ्छति तत्त्ववित् ॥ ४८ ॥ न वेद कृपणः श्रेय आत्मनो गुणवस्तुदृक् ॥ तस्य तामिच्छतो यच्छेद्यदि सोऽपि तथाविधः ॥४९॥ स्वयं निःश्रेयसं विद्वान् वक्त्यज्ञाय कर्म हि ॥ न राति रोगिणोऽपथ्यं वाञ्छतो हि भिषक्तमः ॥ ५० ॥ मघवन् यात भद्रं वो दध्यञ्चमृषिसत्तमम् ॥ विद्याव्रततपःसारं गात्रं याचत मा चिरम् ॥ ५१ ॥ स वा अधिगतो दध्यङ्ङश्विभ्यां ब्रह्म निष्कलम् ॥ यद्वा अश्वशिरो नाम तयोरमरतां व्यधात् ॥ ५२ ॥ दध्यङ्ङाथर्वणस्त्वष्ट्रे वर्माभेद्यं मदात्मकम् ॥ विश्वरूपाय यत्प्रादात्त्वष्टा यत्त्वमधास्ततः ॥ ५३ ॥ युष्मभ्यं याचितोऽश्विभ्यां धर्मज्ञोऽङ्गानि दास्यति ॥ ततस्तैरायुधश्रेष्ठो विश्वकर्मविनिर्मितः ॥ येन वृत्रशिरो हर्ता मत्तेजउपबृंहितः ॥ ५४ ॥ तस्मिन्विनिहते यूयं तेजोऽस्त्रायुधसम्पदः ॥ भूयः प्राप्स्यथ भद्रं वो न हिंसन्ति च मत्परान् ॥ ५५ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नवमोऽध्यायः ॥ ९ ॥ श्रीशुक उवाच ॥ इन्द्र- मेवं समादिश्य भगवान्विश्वभावनः ॥ पश्यतामनिमेषाणां तत्रैवान्तर्दधे हरिः ॥ १ ॥ तथाऽभियाचितो देवैर्ऋषिराथर्वणो महान् ॥ मोदमान उवा- चेदं प्रहसन्निव भारत ॥ २ ॥ अपि वृन्दारका यूयं न जानीथ शरीरिणाम् ॥ संस्थायां यस्त्वभिद्रोहो दुःसहश्चेतनापहः ॥ ३ ॥ जिजीविषूणां

महर्षि दधीचि ठूला धर्मात्मा छन् । तिमीहरू र विशेष गरेर अश्विनीकुमारले मागेपछि ती आफ्नो अङ्ग तिमीलाई अवश्य दिन्छन् । ती अंगले विश्वकर्माले बनाएको वज्रास्त्र तयार हुनेछ । त्यस अस्त्रले देवराज इन्द्र मेरो तेजले युक्त भएर वृत्रासुरको मस्तक काट्ने छन् ॥ ५४ ॥ जब त्यो मर्दछ तब तिमी आफ्नो गइसकेको तेज, अस्त्र-शस्त्र र सम्पत्ति फेरि प्राप्त गर्न सक्ने छौ । कोही पनि मेरा भक्तलाई दुःखदिन सक्तैन । यस कारण अवश्य तिम्रो कल्याण हुनेछ ॥ ५५ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषाटीकायां नवमोऽध्यायः ॥ ९ ॥ (देवताहरू दधीचि ऋषिकहाँ गएर उनको हाड मागेर ल्याउनु र वृत्रासुरसित लडाई गर्नु)—शुकदेवजी भन्दछन्—हे राजन् ! यस प्रकार इन्द्रलाई आज्ञा दिएर विश्वभावन विष्णु भगवान् देवताहरूले हेर्दाहेर्दै अन्तर्धान भए ॥१॥ हे भारत ! ती देवताहरूले जब भगवान्को सल्लाह अनुसार दधीचि ऋषिसित याचना गरे तब उनले सान्है प्रसन्न भएर हाँस्तै भने ॥२॥ हे देवता हो ! शरीरीहरूलाई आफ्नो शरीर त्याग्नमा चेतना नष्ट पारिदिने जुन दुःसह कष्ट हुन्छ, के तिमीहरू त्यसलाई जान्दैनौ ? ॥३॥ यस संसारमा

जीवित रहनाको इच्छुक पुरुषहरूको शरीर अत्यन्त प्रिय हुन्छ । यदि साक्षात् विष्णु भगवान् भएर माग्ने पनि आफ्नो शरीर दिने गर्दैन ॥४॥ देवगणले भन—हे ब्रह्मन् ! पुण्य-कीर्ति-शाली सत्पुरुष पनि जसका कार्यको प्रशंसा गर्दछन्, सबै प्राणीहरूमा कृपालु हजुर जस्ता महापुरुष कुन वस्तुको त्याग गर्न सक्तैनन् र ? ॥५॥ हे भगवन् ! संसार हुलो स्वार्थी छ । यो अर्काको दुःखलाई बुझ्दैन । यदि उसले अर्काको कष्ट बुझिदिने भए नमाग्ने पनि अर्कासित माग्ला र नदिनमा समर्थ भएर पनि कुनै प्राणी दिन अस्वीकार गर्नेछ ॥ ६ ॥ दधीचिले भने—यहाँ सबैको मुखबाट धर्मको कुरा सुन्नको लागि नै मैले यति कुरा गरेको हुँ । यो मेरो प्रिय शरीर एक दिन स्वयं मलाई छाड्ने नै छ भने यसलाई म आजै छाडिदिन्छु ॥७॥ हे स्वामीहरू हो ! जुन प्राणी आफ्नो अनित्य शरीरले सबै जीवमा दया गर्दै धर्म तथा यशको उपार्जनको उद्योग गर्दैन त्यो वृक्षादिहरूको निम्ति पनि शोचनीय हुन्छ ॥८॥ जो व्यक्ति अर्काको दुःखमा दुःखी तथा सुखमा सुखी हुन्छ, त्यसको पुण्यकीर्ति पुरुषहरूद्वारा सेवित यो अविनाशी धर्म हो ॥ ९ ॥ अहो ! मानव जातिको यो कस्तो कृपणता हो, कति दुःखको

जीवानामात्मा प्रेष्ठ इहेप्सितः ॥ क उत्सहेत तं दातुं भिक्षमाणाय विष्णवे ॥ ४ ॥ देवा ऊचुः ॥ किंनु तद्दुस्त्यजं ब्रह्मन्पुंसां भूतानुकम्पिताम् ॥ भवद्विधानां महतां पुण्यश्लोकेड्यकर्मणाम् ॥ ५ ॥ ननु स्वार्थपरो लोको न वेद परसङ्कटम् ॥ यदि वेद न याचेत नेति नाह यदीश्वरः ॥ ६ ॥ ऋषिरुवाच ॥ धर्मं वः श्रोतुकामेन यूयं मे प्रत्युदाहृताः ॥ एष वः प्रियमात्मानं त्यजन्तं संत्यजाम्यहम् ॥ ७ ॥ यो ध्रुवेणात्मना नाथा न धर्मं न यशः पुमान् ॥ ईहेत भूतदयया स शोच्यः स्थावरैरपि ॥ ८ ॥ एतावानव्ययो धर्मः पुण्यश्लोकैरुपासितः ॥ यो भूतशोकहर्षाभ्यामात्मा शोचति हृष्यति ॥ ९ ॥ अहो दैन्यमहो कष्टं पारक्यैः क्षणभङ्गुरैः ॥ यन्नोपकुर्यादस्वार्थैर्मर्त्यः स्वज्ञातिविग्रहैः ॥ १० ॥ श्रीशुक उवाच ॥ एवं कृतव्यवसितो दध्यङ्ङाथर्वणस्तनुम् ॥ परे भगवति ब्रह्मण्यात्मानं सन्नयञ्जहौ ॥ ११ ॥ यताक्षासुमनोबुद्धिस्तत्त्वदृग्ध्वस्तबन्धनः ॥ आस्थितः परमं योगं न देहं बुबुधे गतम् ॥१२॥ अथेन्द्रो वज्रमुद्यम्य निर्मितं विश्वकर्मणा ॥ मुनेः शक्तिभिरुत्सिक्तो भगवत्तेजसाऽन्वितः ॥ १३ ॥ वृतो देवगणैः सर्वैर्गजेन्द्रोपर्यशोभत ॥ स्तूयमानो मुनिगणैस्त्रैलोक्यं हर्षयन्निव ॥ १४ ॥ वृत्रमभ्यद्रवच्छेत्तुमसुरानीकयूथपैः ॥ पर्यस्तमोजसा राजन्क्रुद्धो रुद्रमिवान्तकम्

कुरा छ कि जसको द्वारा मनुष्यको कहीं पनि वास्तविक साधन हुँदैन, जो अर्कालि नै भोग्ने योग्य र क्षणभंगुर छन्, ती धन, जन एवं शरीरादिले त्यो अर्काको कहीं पनि भलो गर्न सक्तैन ॥१०॥ शुकदेवजी भन्नुहुन्छ—हे राजन् ! यस प्रकारको निश्चय गरेर अथर्ववेदी दधीचि ऋषिले आफ्नो मन परमात्मामा लीन गरेर आफ्नो देह त्यागिदिए ॥११॥ महर्षि दधीचिका इन्द्रिय, मन तथा प्राण संयत थिए र दृष्टि तत्त्वदर्शिनी थिई । यस निम्ति शरीर त्यागेर ती सबै बन्धनबाट मुक्त भए । जब तिनले परमयोगमा स्थिर भएर आफ्नो प्राण त्यागिदिए तब उनलाई यस देहको अलिकति पनि ज्ञान रहेन ॥१२॥ भगवान्को तेजले युक्त हुनाले जसको बल बढिगयो, जुन चारैतिर देवताहरूले घेरिएका थिए र मुनिजन जस्ता स्तुति गरिरहेका थिए, ती इन्द्र सारा त्रिलोकलाई प्रसन्न पार्दै दधीचि मुनिको हाडले विश्वकर्माद्वारा बनाइएको वज्र लिएर गजराज ऐरावतमा सुशोभित देखिए ॥१३-१४॥ हे राजन् ! पूर्वकालमा भगवान् रुद्रले जस्तै सबै लोकको संहार गर्न भएको त्रिपुरासुर माथि क्रोधले आक्रमण गरेका थिए, त्यस्तै नै ती असुरसेना रक्षित वृत्रासुरको वध गर्नका लागि उनि

592

ठूलो वेगले प्रस्थान गरे ॥१५॥ त्यसपछि प्रथम चतुर्युगीय त्रेतायुगको आरम्भमा नर्मदा नदीको किनारमा दैत्यगणसित देवताहरूको भयङ्कर युद्ध हुन लाग्यो ॥१६॥ हे राजन्! रुद्र, वसु, आदित्य, अश्विनीकुमार, पितृगण, अग्नि, मरुद्गण, ऋभु, साध्य र विश्वेदेव आदिसित आफ्नो शोभाले शोभायमान वज्रधर इन्द्रलाई युद्धभूमिमा सामुन्ने देखेर वृत्रासुरआदि दैत्यहरूलाई सहिनसक्नु भयो ॥१७॥१८॥ यसै निम्ति नमुचि, शम्बर, अनर्वा द्विमूर्धा, ऋषभ, अम्बर, हयग्रीव, शंकुशिरा, विप्रचित्ति, अयोमुख, पुलोमा, वृषपर्वा, प्रहेति र उत्कल आदि दैत्य, दानव, यक्ष र सुमाली आदि सुवर्णका गहनाले सुसज्जित हजारौं राक्षस मृत्युको निम्ति पनि दुष्प्राप्य इन्द्रका सेनालाई रोकेर उन्मत्त भई क्रोधपूर्वक सिंहनाद गर्दै ती देवताहरूमा सर्वतिरबाट गदा, परिघ, बाण, प्रास, मुद्गर, तोमर, शूल, परशु, खड्ग, शतघ्नी तथा भुशुण्डी आदि शस्त्रास्त्र बर्साउन लागे ॥१९–२३॥ यस प्रकार पुङ्खानु-

॥ १५ ॥ ततः सुराणामसुरै रणः परमदारुणः ॥ त्रेतामुखे नर्मदायामभवत्प्रथमे युगे ॥ १६ ॥ रुद्रैर्वसुभिरादित्यैरश्विभ्यां पितृवह्निभिः ॥ मरुद्भि-
र्ऋभुभिः साध्यैर्विश्वेदेवैर्मरुत्पतिम् ॥ १७ ॥ दृष्ट्वा वज्रधरं शक्रं रोचमानं स्वया श्रिया ॥ नामृष्यन्नसुरा राजन्मृधे वृत्रपुरःसराः ॥ १८ ॥ नमुचिः
शम्बरोऽनर्वा द्विमूर्धा ऋषभोऽम्बरः ॥ हयग्रीवः शंकुशिरा विप्रचित्तिरयोमुखः ॥ १९ ॥ पुलोमा वृषपर्वा च प्रहेतिर्हेतिरुत्कलः ॥ दैतेया दानवा
यक्षा रक्षांसि च सहस्रशः ॥ २० ॥ सुमालिमालिप्रमुखाः कार्तस्वरपरिच्छदाः ॥ प्रतिषिध्येन्द्रसेनाग्रं मृत्योरपि दुरासदम् ॥ २१ ॥ अभ्यर्दयन्नसं-
भ्रान्ताः सिंहनादेन दुर्मदाः ॥ गदाभिः परिघैर्बाणैः प्रासमुद्गरतोमरैः ॥ २२ ॥ शूलैः परश्वधैः खड्गैः शतघ्नीभिर्भुशुण्डिभिः ॥ सर्वतोऽवाकिरन्
शस्त्रैरस्त्रैश्च विबुधर्षभान् ॥ २३ ॥ न तेऽदृश्यन्त संछन्नाः शरजालैः समन्ततः ॥ पुङ्खानुपुङ्खपतितैर्ज्योतींषीव नभोघनैः ॥ २४ ॥ न ते शस्त्रास्त्र-
वर्षौघा ह्यासेदुः सुरसैनिकान् ॥ छिन्नाः सिद्धपथे देवैर्लघुहस्तैः सहस्रधा ॥ २५ ॥ अथ क्षीणास्त्रशस्त्रौघा गिरिशृङ्गद्रुमोपलैः ॥ अभ्यवर्षन्सुरबलं
चिच्छिदुस्तांश्च पूर्ववत् ॥ २६ ॥ तानक्षतान्स्वस्तिमतो निशाम्य शस्त्रास्त्रपूगैरथ वृत्रनाथाः ॥ द्रुमैर्दृषद्भिर्विविधाद्रिशृङ्गैरविक्षतांस्तत्रसुरिन्द्रसैनि-
कान् ॥ २७ ॥ सर्वे प्रयासा अभवन्विमोघाः कृताः कृता देवगणेषु दैत्यैः ॥ कृष्णानुकूलेषु तथा महत्सु क्षुद्रैः प्रयुक्ता उशती रूक्षवाचः ॥ २८ ॥
ते स्वप्रयासं वितथं निरीक्ष्य हरावभक्ता हतयुद्धदर्पाः ॥ पलायनायाजिमुखे विसृज्य पतिं मनस्ते दधुरात्तसाराः ॥ २९ ॥ वृत्रोऽसुरांस्ताननुगा-

पुङ्खका क्रमले छुटेका बाणद्वारा सर्वतिरबाट आच्छादित भएर देवता मेघमालाले ढाकिएका नारायण झैं अदृश्य भए ॥२४॥ तर ती दैत्यका शस्त्रास्त्रको देव-सैनिकलाई छुन पनि सकेन। लघु प्रहारमा कुशल देवताहरूले तिनका शस्त्रहरूको हजारौं टुक्रा पारेर आकाशमै छिन्न-भिन्न पारिदिए ॥२५॥ शस्त्रास्त्र सकिएपछि दैत्य देवसेनामा पर्वत-शिखर, वृक्षहरू तथा ढुङ्गा बर्साउन लागे। तर देवताहरूले पहिलेकै समान तिनलाई पनि काटिदिए ॥२६॥ हे राजन्! इन्द्रका सेनाहरू आफ्ना शस्त्रास्त्रले अक्षत र वृक्ष, ढुङ्गा, अगणित पर्वतका प्रहारले पनि जस्ताको त्यस्तै सकुशल उभिएका देखेर वृत्रासुरका अनुगामी दैत्यगण निकै डराए ॥२७॥ जस्तै क्षुद्र मनुष्यद्वारा महापुरुषप्रति कहिएका कठोर एवं अमङ्गलमय वाक्य उनको केही पनि हानि गर्न सक्तैन, त्यस्तै नै भगवत्कृपापात्र देवताप्रति तिनको विनाशार्थ बारम्बार गरिएका दैत्यका सबै प्रयत्न व्यर्थ भएर गए ॥२८॥ यस्तो दशामा भगवद्भक्तिरहित दैत्यगणको सारा

593

युद्धोत्साह भङ्ग भयो । देवताहरुले तिनको धैर्य हरण गरिलिए । आफ्नो उद्योग व्यर्थ भएको देखेर आफ्ना प्रभु वृत्रासुरलाई युद्ध भूमिमै छाडेर सबै दशै दिशातिर भाग्नलागे ॥ २९ ॥ अनि आफ्ना अनुगत दैत्यहरू भाग्न लागेका र सेना डरले चारैतिर छरिएका देखी वृत्रासुर भन्न लाग्यो ॥३०॥ त्यो वीर वृत्रासुरले मनस्विहरूको योग्य र सामयिक वाणीमा यस प्रकार भन्यो–हे विप्रचित्ते ! हे नमुचे ! हे मय ! हे अनर्वन् ! हे सम्बर ! मेरो कुरा सुन ॥३१॥ हे भाई ! संसारमा जो उत्पन्न भएको छ, त्यसको मृत्यु निश्चित छ । त्यसलाई रोक्नको निम्ति विधाताले कुनै उपाय बताएनन् । तब यदि मृत्युले परलोकमा सद्गति र यसलोकमा सुयश मिल्दछ भने यस्तो उत्तम मृत्युलाई कसले अङ्गीकार नगर्ला ? ॥३२॥ यस संसारमा दुइ प्रकारको मृत्यु निकै दुर्लभ र श्रेष्ठ मानिएको छ–पौटा ब्रह्म-चिन्तनमा लागेर प्राणलाई जितेर शरीर त्यागिदिनु र अर्को युद्धभूमिमा सेनाको सम्मुख अडिएर खुट्टा पछि न-

न्मनस्वी प्रधावतः प्रेक्ष्य बभाष एतत् ॥ पलायितं प्रेक्ष्य बलं च भग्नं भयेन तीव्रेण विहस्य वीरः ॥ ३० ॥ कालोपपन्नां रुचिरां मनस्विनामुवाच वाचं पुरुषप्रवीरः ॥ हे विप्रचित्ते नमुचे पुलोमन् मयानर्वञ्शम्बर मे शृणुध्वम् ॥ ३१ ॥ जातस्य मृत्युर्ध्रुव एव सर्वतः प्रतिक्रिया यस्य न चेह क्लृप्ता ॥ लोके यशश्चाथ ततो यदि ह्यमुं को नाम मृत्युं न वृणीत युक्तम् ॥ ३२ ॥ द्वौ संमताविह मृत्यु दुरापौ यद्ब्रह्म संधारणया जितासुः ॥ कलेवरं योगरतो विजह्याद्यदग्रणीर्वीरशयेऽनिवृत्तः ॥ ३३ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे इन्द्रवृत्रासुरयुद्धवर्णनं नाम दशमोऽध्यायः ॥ १० ॥ श्रीशुक उवाच ॥ त एवं संशतो धर्मं वचः पत्युरचेतसः ॥ नैवागृह्णन्भयत्रस्ताः पलायनपरा नृप ॥ १ ॥ विशीर्यमाणां पृतनामासुरीमसुरर्षभः ॥ कालानुकूलैस्त्रिदशैः काल्यमानामनाथवत् ॥२॥ दृष्ट्वाऽतप्यत संक्रुद्ध इन्द्रशत्रुरमर्षितः ॥ तान्निवार्यौजसा राजन्निर्भर्त्स्येदमुवाच ह ॥३॥ किं वा उच्चरितैर्मातुर्धावद्भिः पृष्ठतो हतैः ॥ न हि भीतवधः श्लाघ्यो न स्वर्ग्यः शूरमानिनाम् ॥ ४ ॥ यदि वः प्रधने श्रद्धा सारं वा क्षुल्लका हृदि ॥

फर्केर प्राण त्यागिदिनु–यी दुवै मृत्यु अप्राप्य छन् ॥३३॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां दशमोऽध्यायः॥१०॥ ( वृत्रासुरको बीरोचित वचन )–शुकदेव भन्नुहुन्छ–हे नृप ! वृत्रासुरका धर्मसंगत वचन सुनेर पनि डरले भागिरहेका असुरले त्यसमा केही ध्यान दिएनन् ॥१॥ हे राजन् ! जब समय उनको अनुकूल थियो ती देवताद्वारा लखेटिएका दैत्य सेना अनाथ झैं छिन्न-भिन्न भएका देखेर इन्द्र-शत्रु वृत्रासुर रिस र असहिष्णुताले सन्तप्त भयो । उसले देवसेनालाई रोकेर भर्त्सना भरिएका वाणीमा तिनका *अवगुण बयान गर्दै भन्यो–॥२॥ ए देवता हो ! आमाको पिठ्ठा झैं निकृष्ट र रणभूमिबाट भागेका दैत्यहरूको पिठिउँमा प्रहार गर्नाले तिमीलाई के लाभ हुनसक्ला ?

* दृष्टान्त ( अर्काको अवगुण नहेर )–यौटा साधु कुनै शिवालयमा बस्तथे । त्यसको साम्ने नै यौटी वेश्याको घर थियो । नित्य अनेक लठुवा आउने गर्दथे । तिनलाई देखेर साधुलाई बेसरी रिस उठ्दथ्यो । एक दिन वेश्यालाई डाकेर साधुले बेसरी हप्काए र भने–ए पापिनी ! तँ घेरै पाप गर्दछेस् । तेरो के गति होला ?' अति सुनेर वेश्यालाई निकै पश्चात्ताप भयो र स्वयं आफूलाई धिक्कार दिंदै त्यो प्रभुसित प्रार्थना गर्नलागी र बिस्तार बिस्तार त्यसले कुकर्म छाडिदिई । तर त्यो बदनाम भइसकेकी थिई, यसै निमित्त मानिस त्यसको घर आउँदै रहन्थे । साधु ती आउने व्यक्तिलाई गन्दथ्यो र तीमध्ये एकेकको नाममा यौटा-यौटा ढुङ्गा पर्याँक्दथ्यो । यस्तो गर्दा-गर्दा ढुङ्गाको थुप्रो लाग्यो । अनि उसले वेश्यालाई डाकेर फेरि हप्कायो र भन्यो–'ओ हेर, आफ्नो पापको थुप्रो ! यसको फल तँ कहिलेसम्म भोग्छेस् !' त्यस दिन वेश्यालाई आफूमाथि धन्दै घृणा भएर आयो । अब त्यो दुःखका ईश्वरको स्मरण गर्दै भन्न लागी–'हे दीनदयालो ! हे प्रभो ! म पापिनी हुँ । तिमी मेरो उद्धार गर ।' यस्तो भन्दै त्यो नित्य ईश्वरको स्मरण गर्दथी र आफ्नो मन राम्रो काममा लगाउँदै गर्दथी । केही दिनपछि

574

आफूलाई वीर ठान्ने पुरुषहरूको निम्ति कापुरुषको वध गर्नु प्रशंसनीय तथा स्वर्गप्रद भन्न सकिन्न ॥४॥ अतएव हे क्षुद्र हो ! यदि तिम्रो हृदयमा युद्ध गर्ने उत्साह तथा गा... र विषय-भोगको अभिलाषा छैन भने केवल एक छिन मेरो सामुन्ने उभिराख ॥५॥ आफ्ना शत्रु देवताहरूलाई त्यसरी हप्काएर विकटतम शरीरले तिनलाई भयभीत पार्दै त्यस महाबलवान् दैत्यले भयङ्कर गर्जना गर्‍यो, त्यसले सबैका चेतना नष्ट भएर ॥ ६ ॥ वृत्रासुरको भयानक सिंह-गर्जनले नै सबै देवता वज्राहत जस्तै अचेत भएर युद्धभूमिमा लम्पसारपरे । पछि जस्तै मतवाला गजराज स्याउलाको वनलाई भलो पीठो पार्दछ त्यस्तै नै रणरंगको मतवाला वृत्रासुर हातमा त्रिशूल लिएर आफ्नो बलले पृथ्वीलाई कम्पित पार्दै डरले नेत्र बन्द पारेर ढलेका देव-सेनालाई खुट्टाले किचि-मिचो पार्दै हिँड्न लाग्यो ॥८॥ त्यसको त्यो धृष्टता देखेर इन्द्रले निकै अमर्षयुक्त भई आफूतिर आइलागेको शत्रु वृत्रासुरमाथि गदाको यौटा प्रचण्ड प्रहार गरे । त्यस असह्य गदालाई आफूमाथि आएको देखेर वृत्रासुरले त्यसलाई ख्याल-ख्यालमै बायाँ हातले समात्यो ॥ ५ ॥ हे राजन् ! इन्द्रको त्यो महापराक्रमी शत्रु वृत्रले युद्धमा

अग्रे तिष्ठत मात्रं मे न चेद्ग्राम्यसुखे स्पृहा ॥ ५ ॥ एवं सुरगणान्क्रुद्धो भीषयन्वपुषा रिपून् ॥ व्यनदत्सुमहाप्राणो येन लोका विचेतसः ॥ ६ ॥ तेन देवगणाः सर्वे वृत्रविस्फोटनेन वै ॥ निपेतुर्मूर्छिता भूमौ यथैवाशनिना हताः ॥ ७ ॥ ममर्द पद्भ्यां सुरसैन्यमातुरं निमीलिताक्षं रणरङ्गदुर्मदः ॥ गां कम्पयन्नुद्यतशूल ओजसा नालं वनं यूथपतिर्यथोन्मदः ॥ ८ ॥ विलोक्य तं वज्रधरोऽत्यमर्षितः स्वशत्रवेऽभिद्रवते महागदाम् ॥ चिक्षेप तामापततीं सुदुःसहां जग्राह वामेन करेण लीलया ॥ ९ ॥ स इन्द्रशत्रुः कुपितो भृशं तया महेन्द्रवाहं गदयोग्रविक्रमः ॥ जघान कुम्भस्थल उन्नदन्मृधे तत्कर्म सर्वे समपूजयन्नृप ॥१०॥ ऐरावतो वृत्रगदाभिमृष्टो विघूर्णितोऽद्रिः कुलिशाहतो यथा ॥ अपासरद्भिन्नमुखः सहेन्द्रो मुञ्चन्नसृक्सप्तधनुर्भृशार्तः ॥ ११ ॥ न सन्नवाहाय विषण्णचेतसे प्रायुङ्क्त भूयः स गदां महात्मा ॥ इन्द्रोऽमृतस्यन्दिकराभिमर्शवीतव्यथः क्षतवाहोऽवतस्थे ॥ १२ ॥ स तं नृपेन्द्राहवकाम्यया रिपुं वज्रायुधं भ्रातृहणं विलोक्य ॥ स्मरंश्च तत्कर्म नृशंसमंहः शोकेन मोहेन हसञ्जगाद ॥ १३ ॥ वृत्र उवाच ॥ दिष्ट्या

अतिशय कुपित भएर भयङ्कर गर्जना गर्दै त्यही गदाले इन्द्रको वाहन ऐरावतको मस्तकमा प्रहार गरिदियो । वृत्रको त्यस कार्यको सबैले सन्हनी गरे ॥ १० ॥ वृत्रासुरको गदाले आहत पर्वतको समान इन्द्रको वाहन ऐरावत हस्ती सहसा तिलमिलायो र मुख चिरिनाले रगतको वमन गर्दै अत्यन्त व्याकुल भएर इन्द्रलाई बोकेर नै सात धनु जति पछिसर्‍यो॥११॥यस प्रकार आफ्नो वाहन ऐरावत व्यथित भएको देखेर स्वयं पनि व्याकुल इन्द्रमाथि वृत्रासुरले प्रहार गरेन । त्यसपछि अमृतवर्षी हातको स्पर्शले घायल ऐरावतको पीडा शान्त पारेर इन्द्र फेरि संग्राममा डटे ॥१२॥ हे राजन् ! भाइ विश्वरूपको वध गर्ने भएका इन्द्रलाई युद्धको इच्छाले वज्र लिएर फेरि सामुन्ने उपस्थित देखेर त्यस निष्ठुर पाप-कर्मको सम्झना गरी वृत्रासुर शोक र

साधु र वेश्या दुवै एक साथै मरे । परन्तु वेश्यालाई विष्णु-दूत र साधुलाई यमदूत लिन भनेर आए । यमदूतलाई देखेर साधुले भने— 'तिमी बिर्सिरहेका छौ, तिमीलाई त्यो वेश्यालाई लिन पठाएका होला ।' यम दूतले भने— हामी यस्तो भूल गर्दैनौं । साधु भएर पनि तिमीले एक क्षणको लागि पनि ईश्वरको स्मरण गर्‍यौ ? यसको विपरीत यस वेश्याले तिमी द्वारा धिक्कारेपछि आफ्नो बाटो सपारी र त्यो विष्णु-दूतसित भगवान्को वैकुण्ठधाम गइरहेकी छ ।'

मोहले अभिमत भएर हाँस्तै बोल्यो–॥१३॥ वृत्रासुरले भन्यो–अहो ! यो ठूलो सौभाग्यको कुरा हो–जुन ब्रह्महत्याकारी, गुरुद्रोही तथा मेरो दाजूको हत्यारा मेरो मुख्य शत्रु आज मेरो सामुन्ने उभिएको छ । ए महाअधम ! अहिल्यै तेरो पाषाणनिभ हृदयलाई आफ्नो त्रिशूलले फोरेर सदाको निम्ति भ्रातृ-ऋणबाट अऋणी हुनेछु ॥१४॥ जसै स्वर्गको इच्छा गर्ने व्यक्ति याज्ञिक पशुको शिर काट्दछन् त्यसै गरी तैंले विश्वासघात गरेर विप्रवंशमा उत्पन्न, आफ्ना गुरु, आत्मज्ञानी, निर्दोष तथा यज्ञकर्ममा दीक्षित मेरा दाजूको मस्तक काटिदिस् ॥१५॥ लज्जा, लक्ष्मी, दया तथा कीर्ति आदिले तँलाई पहिल्यै छाडिसकेका छन् । तेरो यस कुकर्मलाई देखेर मनुष्याहारी राक्षस पनि निन्दा गरिरहेका छन् । अब मेरो त्रिशूलद्वारा ठूलो कष्टले छिन्न-भिन्न तेरो देहलाई गिद्ध खानेछन् । यसलाई अग्निको स्पर्श पनि हुनेछैन ॥१६॥ जुन मूर्ख देवता तँ महाक्रूरको मदत गर्दै ममाथि अनेक थरिका शस्त्रास्त्र प्रहार गरिरहेका छन्, म आफ्नो तीखो त्रिशूलले ती पशुहरूको घाँटी काटेर उनकैद्वारा भैरवादि गणसमेत भूत भावनको पूजा गर्नेछु ॥१७॥ हे इन्द्र ! यसको विपरीत यदि यस युद्धमा मेरा-

भवान्मे समवस्थितो रिपुर्यो ब्रह्महा गुरुहा भ्रातृहा च ॥ दिष्ट्याऽनृणोऽद्याहमसत्तम त्वया मच्छूलनिर्भिन्नदृषद्धृदाऽचिरात् ॥ १४ ॥ यो नोऽग्रजस्यात्मविदो द्विजातेर्गुरोरपापस्य च दीक्षितस्य ॥ विश्रभ्य खड्गेन शिरांस्यवृश्चत् पशोरिवाकरुणः स्वर्गकामः ॥ १५ ॥ ह्रीश्रीदयाकीर्तिभिरुज्झितं त्वां स्वकर्मणा पुरुषादैश्च गर्ह्यम् ॥ कृच्छ्रेण मच्छूलविभिन्नदेहमस्पृष्टवह्निं समदन्ति गृध्राः ॥ १६ ॥ अन्येऽनु ये त्वेह नृशंसमज्ञा ये ह्युद्यतास्त्राः प्रहरन्ति मह्यम् ॥ तैर्भूतनाथान्सगणान्निशातत्रिशूलनिर्भिन्नगलैर्यजामि ॥१७॥ अथो हरे मे कुलिशेन वीर हर्ता प्रमथ्यैव शिरो यदीह ॥ यत्रानृणो भूतबलिं विधाय मनस्विनां पादरजः प्रपत्स्ये ॥ १८ ॥ सुरेश कस्मान्न हिनोषि वज्रं पुरः स्थिते वैरिणि मय्यमोघम् ॥ मा संशयिष्ठा न गदेव वज्रं स्यान्निष्फलं कृपणार्थेव याञ्चा ॥ १९ ॥ नन्वेष वज्रस्तव शक्र तेजसा हरेर्दधीचेस्तपसा च तेजितः ॥ तेनैव शत्रुं जहि विष्णुयन्त्रितो यतो हरिर्विजयः श्रीर्गुणास्ततः ॥ २० ॥ अहं समाधाय मनो यथाऽऽह सङ्कर्षणस्तच्चरणारविन्दे ॥ त्वद्वज्ररंहोलुलितग्राम्यपाशो गतिं मुनेर्याम्यपविद्धलोकः ॥ २१ ॥ पुंसां किलैकान्तधियां स्वकानां याः सम्पदो दिवि भूमौ रसायाम् ॥ न राति यद्द्वेष उद्वेग आधिर्मदः कलिर्व्यसनं संप्रयासः ॥ २२ ॥

बललाई पराजित पारेर तिमीले आफ्नो वज्रले मेरो शिर काट्यौ भने पनि म कर्मबन्धनबाट मुक्त हुनेछु र सबै भूतलाई आफ्नो देहको बलि अर्पण गरेर महापुरुषको पद पाउँछु ॥१८॥ हे देवराज ! आफ्नो सम्मुख उभिएको म आफ्नो शत्रुमाथि तिमी अमोघ वज्र किन छाड्दैनौ ? तिमी यो सन्देह नगर–कृपण मनुष्यको अगाडि हात पसारेर गरिएको याचनाजस्तै तिम्रो गदा जस्तै वज्र बनि निष्फल नहोओस् ! ॥१९॥ हे इन्द्र ! यो तिम्रो वज्र भगवान्को तेज र महर्षि दधीचिको तपोबलले तेजोमय छ । भगवान् विष्णुले नै तिमीलाई यो काम सुम्पेका छन् । अतः तिमी यसैले आफ्नो शत्रुलाई मार । जता भगवान् रहन्छन्, उतै विजय, लक्ष्मी तथा सबै गुण विद्यमान रहन्छन् ॥२०॥ जस्तो कि भगवान् सङ्कर्षणले मलाई उपदेश दिएका थिए, त्यस्तै नै उनका चरण-कमलमा मन लगाएर तिम्रो वज्रको प्रहारले विषय-बन्धन काटिइजानाले शरीर त्यागेपछि म योगिहरूको गति पाउनेछु ॥ २१ ॥ जो व्यक्ति अनन्य प्रभुमित प्रेम गर्छन् र उनका दास कहिन्छन्, तिनलाई भगवान् स्वर्ग, पृथ्वी र रसातल कहींको पनि केही सम्पत्ति दिन्नन् । किनकि भक्तलाई यसैतिले द्वेष, उद्वेग, पीडा, अभिमान,

कलह, व्यसन तथा श्रम नै मिल्दछन् ॥२२॥ हे शक्र ! ती परमप्रभु आफ्ना भक्तको त्रैवर्णिक अर्थात् धर्म, अर्थ, कामसम्बन्धी प्रयास नष्टपारिदिन्छन् । यो पनि भगवानको कृपा हो,
केवल अकिञ्चन भक्तजनलाई नै प्राप्त हुने योग्य भगवत् कृपा अन्य व्यक्तिका लागि साह्रै दुर्लभ रहन्छ ॥२३॥ अब वृत्रासुर भगवानूसित प्रार्थना गर्दै भन्न लाग्यो–'हे हरे ! जो हजुरका
चरण-कमलको नै मानेर रहन्छन्, ती बारम्बार हजुरका ती दासहरूको पनि दास बनौं । मेरो मन हजुर प्राणपतिको नै चिन्तन गरिरहोस् । मेरो वाणी हजुरकै गुण गाउन् र शरीर
हजुरको नै काम गरिरहोस् ॥२४॥ हे नाथ ! हजुरबाट विमुख भएर मलाई स्वर्ग, ब्रह्मपद, सार्वभौम राज्य, रसातलको प्रभुता र मोक्ष आदि कुनै पनि वस्तुको कामना छैन ॥२५॥
हे कमल-नयन ! जसका पंख हुँदैनन्, ती पक्षिशावक जस्तै आफ्नी आमाको बाटो हेरिरहन्छन्, जस्तै भोकले पीडित बाछो आमाको दूध पिउन आतुर रहन्छन् र जस्तै कुनै विरह व्यथित
नारी आफ्नो परदेशी प्रियतमको बाटो हेरिरहन्छन्, त्यस्तै नै मेरो मन पनि हजुरलाई हेरिरहन खोज्दछ ॥२६॥ हे भगवन् ! प्रारब्धवश यदि मलाई संसारचक्रमा डुलिरहनु पर्‍यो भने

त्रैवर्गिकायासविघातमस्मत्पतिर्विधत्ते पुरुषस्य शक्र ॥ ततोऽनुमेयो भगवत्प्रसादो यो दुर्लभोऽकिञ्चनगोचरोऽन्यैः ॥ २३ ॥ अहं हरे तव पादैकमूल-
दासानुदासो भविताऽस्मि भूयः ॥ मनः स्मरेतासुपतेर्गुणांस्ते गृणीत वाक्कर्म करोतु कायः ॥ २४ ॥ न नाकपृष्ठं न च पारमेष्ठ्यं न सार्वभौमं न
रसाधिपत्यम् ॥ न योगसिद्धीरपुनर्भवं वा समञ्जस त्वा विरहय्य काङ्क्षे ॥ २५ ॥ अजातपक्षा इव मातरं खगाः स्तन्यं यथा वत्सतराः क्षुधार्ताः ॥
प्रियं प्रियेव व्युषितं विषण्णा मनोऽरविन्दाक्ष दिदृक्षते त्वाम् ॥ २६ ॥ ममोत्तमश्लोकजनेषु सख्यं संसारचक्रे भ्रमतः स्वकर्मभिः ॥ त्वन्माययाऽऽत्मा-
त्मजदारगेहेष्वासक्तचित्तस्य न नाथ भूयात् ॥ २७ ॥ इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे वृत्रस्येन्द्रोपदेशो नाम एकादशोऽध्यायः
॥ ११ ॥ ऋषिरुवाच ॥ एवं जिहासुर्नृप देहमाजौ मृत्युं वरं विजयान्मन्यमानः ॥ शूलं प्रगृह्याभ्यपतत्सुरेन्द्रं यथा महापुरुषं कैटभोऽप्सु
॥ १ ॥ ततो युगान्ताग्निकठोरजिह्वमाविध्य शूलं तरसाऽसुरेन्द्रः ॥ क्षिप्त्वा महेन्द्राय विनद्य वीरो हतोऽसि पापेति रुषा जगाद ॥ २ ॥
ख आपतत्तद्विचलद्ग्रहोल्कवन्निरीक्ष्य दुष्प्रेक्ष्यमजाततिक्लवः ॥ वज्रेण वज्री शतपर्वणाऽच्छिनद्भुजं च तस्योरगराजवेगम् ॥ ३ ॥ छिन्नैकबाहुः

पवित्र कीर्ति सम्पन्न हजुर परमेश्वरका भक्तहरूसित नै मेरो प्रीतिरहोस् । हजुरकी विश्वमोहिनी मायाबाट विद्धुख पुत्र, कलत्र र घर-गृहस्थ आसक्त रहने संसारी मनुष्यमा मेरो अनुराग
कहिले पनि नहोओस्' ॥२७॥इति श्रीमद्भागवते महापुराणे षष्ठस्कन्धे नेपाली भाषाटीकायामेकादशोऽध्यायः॥११॥ (इन्द्रद्वारा वृत्रासुरको वध) शुकदेवजी भन्नुहुन्छ–हे राजन् ! विजयको
अपेक्षा मृत्युलाई नै उत्तम मान्ने वृत्रासुर युद्धमा शरीर त्याग्ने इच्छाले आफ्नो त्रिशूल उचाली प्रचण्ड वेग सहित यसरी झम्टियो, जस्तै प्रलयको जलमा भगवान् र मधुकैटभासुर
झम्टिएको थिए ॥१॥ त्यसपछि त्यस वीर दैत्यले इन्द्रमाथि प्रलयाग्निको समान तीखो टुप्पा भएको आफ्नो त्रिशूल वेगसित फ्याँक्यो र क्रोधपूर्वक गर्जना गर्दै भन्न लाग्यो–'हे पापी !
अब तँ मरिस्' ॥२॥ घुमिरहेका ग्रह तथा उल्काको समान त्यस त्रिशूललाई आफूतिर वेगले आएको देखेर इन्द्रले धैर्यपूर्वक त्यसलाई र त्यसको साथको नागराजको समान लामा वृत्रा-
सुरका विशाल भुजालाई आफ्नो शतपर्वा वज्रले काटेर खुट्याइदिए ॥३॥ यौटा हात काटिएपछि वृत्रासुरले अतिशय क्रोधित भई परिघले वज्रधर इन्द्रको चिउँडोमा तथा ऐरावतमाथि

प्रहार गर्‍यो—त्यसले देवराज इन्द्रको हातबाट बज्र भूमिमा झर्‍यो ॥४॥ वीर वृत्रासुरको त्यो अति अद्भुत कार्यको देवता, असुर, चारण तथा सिद्धगणादि सबै जनाले महिमा गरे तथा इन्द्रको शिरमा ठूलो सङ्कट आइपरेको देखेर ती सबै अत्यन्त हाहाकार गर्नलागे॥५॥तर आफ्नो हातबाट छुटेर शत्रुको नजीकै गिरेको बज्रलाई इन्द्रले मान्है लाज मानी फेरि उठाएनन् । अनि वृत्रासुरले इन्द्रलाई भन्यो—"हे इन्द्र ! तिमी आफ्नो वज्र सम्हालेर म आफ्नो शत्रुलाई मार । यो विषादको समय होइन ॥६॥सारा जगत्‌को उत्पत्ति, स्थिति र लयकार्यमा समर्थ सर्वज्ञ तथा सनातन आदिपुरुषको बाहेक अन्य देहाभिमानी एवं युद्धोत्सुक आततायीहरूको सदैव जयनै हुने गर्दैन । ती कहिले विजयी हुन्छन् भने कहिले हार्दछन् पनि ॥७॥ समस्त लोकपालहरू सहित यी सबै लोक जालमा अल्झेका पक्षिहरू झैं विवश भावले उसको अधीन रहेर काम गर्दछन्, वास्तवमा त्यो काल नै यस लोकमा जय र पराजयको कारण हो ॥८॥ काल नै मनुष्यको मनोबल इन्द्रियबल, शरीरबल, प्राण, जीवन तथा मृत्युको रूपमा स्थित रहन्छ । त्यसलाई चिह्न नसक्नाले नै मनुष्य आफ्नो जड शरीरलाई जय र पराजयको

परिघेण वृत्रः संरब्ध आसाद्य गृहीतवज्रम् ॥ हनौ तताडेन्द्रमथामरेभं वज्रं च हस्तान्न्यपतन्मघोनः ॥ ४ ॥ वृत्रस्य कर्मातिमहाद्भुतं तत्सुरासुराश्चारणसिद्धसंघाः ॥ अपूजयंस्तत्पुरुहूतसंकटं निरीक्ष्य हाहेति विचुक्रुशुर्भृशम् ॥ ५ ॥ इन्द्रो न वज्रं जगृहे विलज्जितश्च्युतं स्वहस्तादरिसन्निधौ पुनः ॥ तमाह वृत्रो हर आत्तवज्रो जहि स्वशत्रुं न विषादकालः ॥ ६ ॥ युयुत्सतां कुत्रचिदाततायिनां जयस्तदैकत्र न वै परात्मनाम् ॥ विनैकमुत्पत्तिलयस्थितीश्वरं सर्वज्ञमाद्यं पुरुषं सनातनम् ॥ ७ ॥ लोकाः सपाला यस्येमे श्वसन्ति विवशा वशे ॥ द्विजा इव शिचा बद्धाः स काल इह कारणम् ॥ ८ ॥ ओजः सहो बलं प्राणममृतं मृत्युमेव च ॥ तमज्ञाय जनो हेतुमात्मानं मन्यते जडम् ॥ ९ ॥ यथा दारुमयी नारी यथा मन्त्रमयो मृगः ॥ एवं भूतानि मघवन्नीशतन्त्राणि विद्धि भोः ॥१०॥ पुरुषः प्रकृतिर्व्यक्तमात्मा भूतेन्द्रियाशयाः ॥ शक्नुवंत्यस्य सर्गादौ न विना यदनुग्रहात् ॥११॥ अविद्वानेवमात्मानं मन्यतेऽनीशमीश्वरम् ॥ भूतैः सृजति भूतानि ग्रसते तानितः स्वयम् ॥१२॥ आयुः श्रीःकीर्ति रैश्वर्यमाशिषः पुरुषस्य याः ॥ भवन्त्येव हि तत्काले यथानिच्छोर्विपर्ययः ॥ १३ ॥ तस्मादकीर्तियशसोर्जयापजययोरपि ॥ समः स्यात्सुखदुःखाभ्यां मृत्युजीवितयोस्तथा ॥ १४ ॥ सत्त्वं रजस्तम इति प्रकृतेर्नात्मनो गुणाः ॥ तत्र साक्षिणमात्मानं यो वेद न स बध्यते ॥ १५ ॥ पश्य मां निर्जितं

आदिको ठान्न थाल्दछ ॥९॥ हे इन्द्र ! काठका पुतली र यन्त्रचालित जस्तै तिमी सम्पूर्ण प्राणीहरूलाई भगवान्‌को अधीन जान ॥१०॥ उनको इच्छा विना पुरुष, प्रकृति, महत्तत्त्व, अहङ्कार, पञ्चभूत, इन्द्रियहरू तथा अन्तःकरण यिनीहरूमा कोही पनि यस विश्वको उत्पत्ति आदिको काममा समर्थ हुनसक्तैनन्॥११॥जो भगवान्‌का नियम र गुण जान्दैनन्, तिनै प्राणी यस परतन्त्र जीवलाई ईश्वर अर्थात् स्वतन्त्र मान्दछन् । साँच्चै भन्ने हो भने—भगवान् नै सबै प्राणीहरू द्वारा प्राणीहरूको रचना गराउँछन् र प्राणीहरू द्वारा नै प्राणीहरूको संहार पनि गराउँछन् ॥१२॥ हे इन्द्र ! जस्तै इच्छा नभएर पनि कालको विपरीत गतिले मनुष्यलाई मृत्यु र अपयश आदि प्राप्त हुन्छ,त्यस्तै गरी उसको अनुकूलता हुँदा उसलाई आयु, लक्ष्मी, यश तथा ऐश्वर्य आदि भोग पनि सुलभ भएर आउँछन् ॥१३॥ यसै निम्ति यश, अपयश, जय-पराजय, सुख-दुःख तथा जीवन-मरणमा सदैव समान भावले रहनु नै उत्तम छ

॥१४॥ सत्व, रज, तम यी तीनै गुण प्रकृतिका मानिएका छन्, आत्माको होइन । यसै निम्ति जो पुरुष आत्मालाई नै गुणहरूको साक्षी मान्दछ, त्यो उनका गुण दोषबाट बाँधित हुन सक्तैन ॥१५॥ हे इन्द्र ! मलाई हेर यद्यपि तिमीले मेरो हात तथा शस्त्र काटेर मलाई एक प्रकारले जितिसकेका छौ तथापि तिम्रो प्राण लिने म यथाशक्ति प्रयत्न गरिरहेकैछु ॥१६॥ युद्ध जूआको खेल हो। यसमा प्राणको बाजी थपिन्छ। बाण नै पासा र वाहन नै थर्की हुन्छन् । यस खेलमा अमुक वीर विजयी हुन्छ र अमुक वीर पराजय हुन्छ, यो निश्चितरूपले भन्न कसैले पनि सक्तैन ॥१७॥शुकदेवजी भन्दछन्–हे राजन् ! वृत्रासुरका यस्ता निष्कपट वचनहरू सुनेर इन्द्रले मनमनै उनको आदर गरे र आफ्नो वज्र सम्हालेर विस्मय रहित भावले प्रशंसा गर्दै यस प्रकार भने–॥१८॥ इन्द्र भन्दछन्–हे दानव ! तिमी अवश्य कुनै सिद्ध पुरुष हौ, त्यसैले त तिमीलाई यस्तो विमल बुद्धि मिलेको छ । आफ्नो पूर्वजन्ममा तिमीले अवश्य सबै जीवहरूको आत्मा तथा सुहृद् श्रीजगदीश्वरको उपासना गरेका छौ ॥१९॥ तिमीले अवश्य विष्णु भगवानकी विश्वमोहिनी मायालाई जितिसकेका छौ । यसै कारण

शक्र वृक्णायुधभुजं मृधे ॥ घटमानं यथाशक्ति तव प्राणजिहीर्षया ॥ १६ ॥ प्राणग्लहोऽयं समर इष्वक्षो वाहनासनः ॥ अत्र न ज्ञायते-ऽमुष्य जयोऽमुष्य पराजयः ॥ १७ ॥ श्रीशुक उवाच ॥ इन्द्रो वृत्रवचः श्रुत्वा गतालीकमपूजयत् ॥ गृहीतवज्रः प्रहसंस्तमाह गतविस्मयः ॥ १८ ॥ इन्द्र उवाच ॥ अहो दानव सिद्धोऽसि यस्य ते मतिरीदृशी ॥ भक्तः सर्वात्मनाऽऽत्मानं सुहृदं जगदीश्वरम् ॥ १९ ॥ भवानतार्षीन्मायां वै वैष्णवीं जनमोहिनीम् ॥ यद्विहायासुरं भावं महापुरुषतां गतः ॥ २० ॥ खल्विदं महदाश्चर्यं यद्रजःप्रकृतेस्तव ॥ वासुदेवे भगवति सत्त्वात्मनि दृढा मतिः ॥ २१ ॥ यस्य भक्तिर्भगवति हरौ निःश्रेयसेश्वरे ॥ विक्रीडतोऽमृताम्भोधौ किं क्षुद्रैः खातकोदकैः ॥ २२ ॥ श्रीशुक उवाच ॥ इति ब्रुवाणावन्योन्यं धर्मजिज्ञासया नृप ॥ युयुधाते महावीर्याविन्द्रवृत्रौ युधांपती ॥ २३ ॥ आविध्य परिघं वृत्रः कार्ष्णायसमरिन्दमः ॥ इन्द्राय प्राहिणोद्घोरं वामहस्तेन मारिष ॥ २४ ॥ स तु वृत्रस्य परिघं करं च करभोपमम् ॥ चिच्छेद युगपद्देवो वज्रेण शतपर्वणा ॥ २५ ॥ दोर्भ्यामुत्कृत्तमूलाभ्यां बभौ रक्तस्रवोऽसुरः ॥ छिन्नपक्षो यथा गोत्रः खाद्भ्रष्टो वज्रिणा हतः ॥२६॥ कृत्वाऽधरां हनुं भूमौ दैत्यो दिव्युत्तरां हनुम् ॥ नभोगम्भीर

तिमी आसुरीभाव त्यागेर महापुरुषहरूको सुष्ठुभावमा प्राप्त भएका छौ ॥ २० ॥ ठूलो आश्चर्यको कुरा त यो हो कि रजोगुणी प्रकृतिको भएर पनि तिम्रो बुद्धि सत्त्वस्वरूप भगवान् वासुदेवमा यस्तो बलिले डुबिरहेको छ ॥ २१ ॥ मोक्षपति भगवानमा जसको प्रेम छ, सुधा-समुद्रमा विहार गर्ने ती महात्मा पुरुषलाई विषय-भोगरूपी क्षुद्र खाल्डोमा मलीन जलको के आवश्यकता छ ? ॥२२॥ श्रीशुकदेवजी भन्दछन्–हे राजन् ! धर्मको जिज्ञासाले यस प्रकार वार्तालाप गर्दागर्दै संग्रामभूमिका अधिनायक परम पराक्रमी इन्द्र तथा वृत्रासुर परस्पर युद्ध गर्नलागे ॥२३॥ हे राजन ! अनि वृत्रासुरले एक अतिकाय तथा डरलाग्दो फलामको परिघ उठाएर आफ्नो बायाँ हातले घुमाउँदै इन्द्रमाथि प्रहार गरिदिए ॥२४॥ तर त्यो लाग्नु मन्दा अगावै देवराज इन्द्रले वृत्रासुरको त्यो परिघ र हात्तीको सुँड जस्तै मोटो त्यसको भुजा आफ्नो शतपर्वा वज्रले एकसाथै काटेर छुट्याइदिए ॥२५॥ यस प्रकार जरैदेखि काटिएका दुवै भुजाका मूलबाट रगत बगाउँदै त्यो दानव यस्तो देखिइरहेथ्यो, जस्तै इन्द्रको वज्र प्रहारले आहत कुनै पर्वत पृथ्वीमा आएर ढलेको छ ॥२६॥ अनि खुट्टाले हिंड्ने पर्वत जस्तै